नामहरू हुन् । सुप पचाउन हलुका हुन्छ । यसको स्वाद तिक्खर र केही परपन्याउने हुन्छ । यसले पित्त बढाउँदछ, पाचकाग्निलाई बाल्दछ र शरीरलाई गर्मी गर्दछ । जरो, वातरोग, कफजन्य रोग, खटिरा, शूल र नेत्ररोगमा यो लाभदायक हुन्छ । वनसुपमा पनि सुपकै गुण हुन्छन् । तर वनसुपमा योनी-सुन्निने रोग ठिक गर्ने विशेष गुण हुन्छ । यसबाहेक यसले नपच्ने रोग, पेटमा पर्ने कीरा र वीर्यलाई समेत नाश गर्दछ । मुटुरोगमा लाभकारी, दिसालाई कस्ने, रुखो, गर्मी गर्ने, पचाउने, वाकवाकी हटाउने, खोकी कम गर्ने, कफ फुकाल्ने र वायुलाई सोस्ने गुण भने दुबै सुपका समान हुन्छन् । (सुपको रस अवस्था र रोग हेरी ५-१० तोलासम्म र यसको धुलो २.९१-५.८३ ग्रामसम्म मात्र प्रयोग गर्नुपर्दछ ।)

## मेथी र बनमेथी

**मेथिका मेथिनी मेथी दीपनी बहुपत्रिका ॥९२॥**
**बोधिनी बहुबीजा च जातीगन्धफला तथा ।**
**वल्लरी चन्द्रिका मन्था मिश्रपुष्पा च कैरवी ॥९३॥**
**कुञ्चिका बहुपर्णी च पीतबीजा मुनिच्छदा ।**
**मेथिका वातशमनी श्लेष्मघ्नी ज्वरनाशिनी ॥९४॥**
**ततः स्वल्पगुणा वन्या वाजिनां सा तु पूजिता ।**

मेथिका, मेथिनी, मेथी, दीपनी, बहुपत्रिका, बोधिनी, बहुवीजाजाति, गन्धफला, बल्लरी, चन्द्रिका, मन्था, मिश्रपुष्पा, कैरवी, कुञ्चिका र बहुपर्णी-यी मेथिका संस्कृत पर्यायवाची नामहरू हुन् । मेथीका मुख्यतः दुई गुण हुन्छन्-पहिलो यसले पित्तलाई नष्ट गर्दछ भने दोश्रो वायुलाई सोस्दछ वा हर्दछ । यसबाहेक मेथीले कफ र जरोलाई नाश गर्दछ । वनमेथीमा पनि मेथीकै जस्ता तर केही कम गुणहरू हुन्छन् । विशेषगरी वनमेथी वातरोगले पीडित भएको घोडाका लागि हितकर हुन्छ । (सुत्केरीलाई मेथी खुवाउनु हितकर मानिन्छ । योनीबाट सेतो पानी बगिरहने स्त्रीले मेथीको धुलोलाई पानीमा भिजाई त्यो पानीमा सफा कपडा भिजाएर त्यो कपडा योनीपथमा राख्दा लाभ गर्दछ । कुनै घाउखटिरा पकाउनु पर्दा सानो मुख बनाई त्यस वरिपरि मेथी पिँधेर त्यसको लेप लगाउनाले पीपरगत सोहोरिएर मुखतिर आउँदछ) ।

## चम्सुर

**चन्द्रिका चर्महन्त्री च पशुमेहनकारिका ॥९५॥**
**नन्दिनी कारवी भद्रा वासपुष्पा सुवासरा ।**
**चन्द्रशूरं हितं हिक्कावातश्लेष्मातिसारिणाम् ॥९६॥**
**असृग्वातगदद्वेषि बलपुष्टिविवर्द्धनम् ।**

चन्द्रिका, चर्महन्त्री, पशुमेहनकारिका, नन्दिनी, कारवी, भद्रा, वासपुष्पा र सुवासरा-यि चम्सुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो बाडुली लाग्दा, वात र कफजन्य विकारमा, दिसा लाग्दा, वात र रक्तविकारमा हितकारी तथा बल-पुष्टिवर्धक हुन्छ ।

## चतुर्बीज

**मेथिका चन्द्रशूरश्च कालाऽजाजी यवानिका ॥९७॥**
**एतच्चतुष्टयं युक्तं चतुर्बीजमिति स्मृतम् ।**
**तच्चूर्णं भक्षितं नित्यं निहन्ति पवनामयम् ॥९८॥**
**अजीर्णं शूलमाध्मानं पार्श्वशूलं कटिव्यथाम् ।**

मेथी (मेथिका), चम्सूर (चन्द्रशूर), कालोजीरा (कालाऽजाजी) र ज्वानू (यवानिका) का गेडा बराबर मात्रामा (तौल) मिसाएर बनाइएको धुलोलाई "चतुर्बीज" नामले चिनिन्छ । नियमितरूपमा मात्रा मिलाएर (आधा चिया चम्चा तातो पानीसँग सुत्ने बेलामा) यो धुलो खाने गर्नाले वायुसम्बन्धी रोग, अजीर्ण, शूल, पेट फुल्ने रोग, करङ दुख्ने रोग र कमर दुख्ने रोग निको हुन्छ ।

## हिँग

**सहस्रवेधि जतुकं बाह्लीकं हिङ्गु रामठम् ॥९९॥**
**हिङ्गूष्णं पाचनं रुच्यं तीक्ष्णं वातबलासहृत् ।**
**शूलगुल्मोदरानाहकृमिघ्नं पित्तवर्द्धनम् ॥१००॥**

सहस्रवेधि, जतुक, बाह्लीक, हिङ्गु, रामठ : यी हिँगका संस्कृत पर्यायवाची नाम हुन् । हिँगमा-गर्मी गर्ने, पचाउन मद्दत गर्ने, रुची जगाउने र तिक्खर स्वाद हुने गुण हुन्छ । यो वातविकार, कफसम्बन्धी रोग, शूल, गुल्म, पेटसम्बन्धी रोगमा, आनाह रोगमा र पेटमा पर्ने कीरा मार्नमा रामबाण औषधि हुन्छ । तर, यसले पित्त बढाउँछ (त्यसैले न्यून मात्रामा सेवन गर्नु पर्दछ) ।

## बोजो वा बोधो वा बोझो

**वचोग्रगन्धा षड्ग्रन्था गोलोमी शतपर्विका ।**
**क्षुद्रपत्री च मङ्गल्या जटिलोग्रा च लोमशा ॥१०१॥**
**वचोग्रगन्धा कटुका तिक्तोष्णा वान्तिवह्निकृत् ।**
**विबन्धाध्मानशूलघ्नी शकृन्मूत्रविशोधनी ॥१०२॥**
**अपस्मारकफोन्मादभूतजन्त्वनिलान् हरेत् ।**

वचा, उग्रगन्धा, षड्ग्रन्था, गोलोमी, शतपर्विका, क्षुद्रपत्री, मांगल्या, जटिला, उग्रा र लोमशा-यी बोजोका संस्कृत पर्यायवाची नामहरू हुन् । वोजोको तीक्ष्ण गन्ध हुन्छ ।यो अती परपन्याउने र केही तीतो स्वादको हुन्छ । यसले गर्मी बढाउने, वान्ता रोक्ने र पाचकाग्नि बढाउने काम गर्दछ । दिसा एवं पिसाबलाई सफा गर्ने, दिसा रोक्न, पेट फुल्ने रोगमा, सोला रोप्ने रोगमा, छारेरोग (अपस्मार) मा, जमेको कफ फुकाल्नमा र भ्रम हुने रोगमा यो औषधी हुन्छ भने भूतप्रेत, कीरा र दूषित वायु नाश गर्न पनि यसको प्रयोग हुन्छ ।

## पारसी बोझो

**पारसीकवचा शुक्ला प्रोक्ता हैमवतीति सा ॥१०३॥**

**हैमवत्युदिता तद्वद्वातं हन्ति विशेषतः ।**

पारसीक वचा, शुक्ला र हैमवती-यी पारसी बोझोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको गुण पनि सामान्य बोझोको जस्तै हुन्छ । विशेष गरी यसले वात नाश गर्दछ ।१०४। (नोट-यो बोझो सेतो हुन्छ । हालको इरान र त्यस आसपासको विशाल भूभागमा प्राचीन कालमा हिन्दुहरुकै एउटा छुट्टै राज्य थियो, जसलाई पारस भनिन्थ्यो । पछि यसलाई फारस भन्न थालियो । त्यस देशमा हुने वा बन्ने कुराहरूलाई प्राचीन ग्रन्थहरूमा "पारसीक" शब्दको प्रयोग हुने गरेको देखिन्छ) ।

## महाभरी बोझो

**सुगन्धाऽप्युग्रगन्धा च विशेषात्कफकासनुत्॥१०४॥**
**सुस्वरत्वकरी रुच्या हृत्कण्ठमुखशोधिनी ।**

यो पनि एक किसिमको बोझो हो । कुलिंजनका सुगन्धा र उग्रगन्धा संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफ तथा खोकी निको पार्दछ । स्वर खुलाउँदछ, खानमा रुची पैदा गर्दछ, हृदय, घाँटी र मुख सफा गर्दछ ।

**(अपरा सुगंधा स्थूलग्रन्थिः यस्या लोके महाभरीति नाम)**
**स्थूलग्रन्थिः सुगन्धा स्यात्ततो हीनगुणा स्मृता ॥१०५॥**

अर्कोथरी बोझो हुन्छ जो सुगन्धी र मोटो गाँठाको हुन्छ, जसलाई महाभरी भनिन्छ । यो बोझो सुगन्धित भएपनि कुलिंजन भन्दा कम गुणशाली हुन्छ । (कुलिंजनको लहरा अंगूरको लहराजस्तै फैलन्छ । पात पानका जस्तै हुन्छन् । जरा गाँठा परेका, राता र सुगन्धित हुन्छन्, तर यो पानको जरा होइन । यो प्रायः जंगलमा पाइए पनि घरबारीमा पनि रोप्न सकिन्छ र कफ फुकाल्न प्रयोग गरिन्छ) ।

## चोपचीनी

**द्वीपान्तरवचा किञ्चित् तिक्तोष्णा वह्निदीप्तिकृत् ।**
**विबन्धाध्मानशूलघ्नी शकृन्मूत्रविशोधनी ॥१०६॥**
**वातव्याधीनपस्मारमुन्मादं तनुवेदनाम् ।**
**व्यपोहति विशेषेण फिरङ्गामयनाशिनी ॥१०७॥**

अर्थः-चोपचिनी केही तीतो, केही गर्मी गर्ने, अग्निवर्धक, मलमूत्र खुलाउने गुणको हुन्छ । यसले दिसा गोटा परेको, पेट फुल्ने रोग, शूल रोग, वायु रोग, छारेरोग, उन्माद र शरीरको दुखाईलाई नष्ट गर्दछ । विशेषगरी यसले फिरङ्गरोग (भिरङ्गी) मा आराम गर्दछ ।

## हपुषा (हि.हाऊबेर)

**तन्मध्ये प्रथमफलं मत्स्यवद्विस्रगंधकम् ।**

**द्वितीयमश्वत्थफलसदृशं मत्स्यगंधि च ॥१०८॥**
**हपुषा हबुषा विस्रा पराऽश्वत्थफला मता ।**
**मत्स्यगन्धाप्लीहहन्त्री विषघ्नी ध्वांक्षनाशिनी ॥१०९॥**
**हपुषा दीपनी तिक्ता मृदूष्णा तुवरा गुरुः ।**
**पित्तोदरसमीरार्शोग्रहणीगुल्मशूलहृत् ॥११०॥**
**पराऽप्येतद्गुणा प्रोक्ता रूपभेदो द्वयोरपि ।**

हपुषा दुई किसिमको हुन्छ, एउटा माछा जस्तो गनाउने र अर्को पिपलको फलजस्तो र माछा जस्तो गनाउने । हपुषा, हबुषा र विस्रा यी पहिलो हपुषाका पर्यायवाची नाम हुन् । अश्वत्थफला, मस्यगन्धा, प्लीहहंत्री, विषघ्नी र ध्वांक्षनाशिनी यी दोश्रो थरी हपुषाका पर्यायवाची नाम हुन् । हपुषा अग्निदीपक, पिरो, कोमल, गर्मी गर्ने, दिसा आदि कस्ने र पचाउन कठिन हुने गुणको हुन्छ । यसले पित्त, पेट र वायुसम्बन्धी रोग ठिक गर्दछ । अल्काई, गोटा परेको, गानुगोला र शूलरोग पनि नाश गर्दछ । दुबैका गुण यिनै हुन् रूप मात्र फरक हो ।

## वायविडङ्ग

**पुंसि क्लीवे विडङ्गः स्यात्कृमिघ्नो जन्तुनाशनः ॥१११॥**
**तण्डुलश्च तथा वेल्लममोघा चित्रतण्डुलः ।**
**विडङ्गं कटु तीक्ष्णोष्णं रूक्षं वह्निकरं लघु ॥११२॥**
**शूलाध्मानोदरश्लेष्मकृमिवातविबन्धनुत् ।**

विडंग, क्रिमिघ्न, जन्तुनाशन, तंडुल, वेल्ल, अमोघा र चित्रतंडुला वायविंडगका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तिक्खर, गर्मी गर्ने, रुखो, अग्निवर्धक र पचाउन सरल हुने गुणको हुन्छ । यसले शूल, पेट फुल्ने रोग, पेटका अन्य रोग, पेटमा पर्ने कीरा, वात र दिसा गोटापर्ने समस्या हटाउँदछ ।

## टिमुर

**तुम्बरुः सौरभः सौरो वनजः सोऽणुजोऽन्धकः ॥११३॥**
**तुम्बरु कथितं तिक्तं कटुपाकेऽपि तत्कटु ।**
**रूक्षोष्णं दीपनं तीक्ष्णं रुच्यं लघु विदाहि च ॥११४॥**
**वातश्लेष्माक्षिकर्णौष्ठशिरोरुग्गुरुताकृमीन् ।**
**कुष्ठशूलारुचिश्वासप्लीहकृच्छ्राणि नाशयेत् ॥११५॥**

तुम्बुरू, सौरभ, सौर, वनज, अणुज र अन्धक : यी टिमुरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तितो, पिरो र पचेपछि परपर्‍याउने स्वादको हुन्छ । यो रुखो हुन्छ । यसले शरीरलाई गर्मी गर्दछ, पाचकाग्नि बाल्दछ, रुचि जगाउँदछ, पचाउन हलुका हुन्छ र भित्र हलुका पोल्दछ । यसले वातपीडा, आँखा-कान-ओठ-शिरका रोग नाश गर्दछ । शरीर भारी हुने, पेटमा कीरा पर्ने, कुष्ठरोग, शूल, अरुचि, श्वासप्रश्वास रोग,

फियोका रोग र मूत्र अवरोध नाश गर्दछ । (यसका अन्य कुरा धनियाँकै जस्ता हुन्छन् । यसको दाना धनियाँको भन्दा बढी गोलो र सानो हुन्छ) ।

## वंशलोचन

**स्याद्वंशरोचना वांशी तुगाक्षीरी तुगा शुभा ।**
**त्वक्क्षीरी वंशजा शुभ्रा वंशक्षीरी च वैणवी ॥११६॥**
**वंशजा वृंहणी वृष्या बल्या स्वाद्वी च शीतला ।**
**तृष्णाकासज्वरश्वासक्षयपित्तास्रकामलाः ॥११७॥**
**हरेत्कुष्ठं व्रणं पाण्डुं कषाया वातकृच्छ्रजित् ।**

वंशरोचना, वांशी, तुगाक्षीरी, तुगा, शुभा, त्वक्क्षीरी, वंशजा, शुभ्रा, वंशक्षीरी र वैणवी :यी वंशलोचनका संस्कृत पर्यायवाची नामहरू हुन् । वंशलोचनले धातु र वीर्य बढाउँदछ, स्वादिष्ट हुन्छ, शितल गर्दछ, तिर्खा-खोकी-जरो-श्वासप्रश्वास रोग, क्षयरोग, पित्तरोग, रगतका विकार, कमलपित्त, कुष्ठ, घाउ, पाण्डुरोग, वायुरोग र मूत्रकृच्छ्र नाश गर्दछ भने दिसा चाहीँ कस्दछ । (वंशलोचन बाँस भित्र उत्पन्न हुन्छ । यी बाँस मोटा, ठूला र पहेँला हुन्छन् र पहाडी भेगमा पाइन्छन् । यिनको रसको प्राकृतिक सङ्कलन नै वंशलोचन हो । बाँसका आँख्लामा जम्मा हुने सेतो दूधजस्तो तरल पदार्थ जुन जमेपछि धुलो बन्दछ त्यही नै वंशलोचन हो । विशिष्ट खालको किराले गर्दा यो उत्पन्न हुन्छ पनि भनिन्छ । पोथी बाँसको गुदीमा जम्ने औषधीका रूपमा प्रयोग हुने चिनीजस्तो पदार्थ । मेघ गर्जने अवस्थामा स्वाती नक्षत्र परेका बेलामा बाँसभित्र पानी जमेपछि वंशलोचन बन्छ भन्ने लोकविश्वास पनि छ) ।

## समुद्रफेन

**समुद्रफेनः फेनश्च हिण्डीरोऽब्धिकफस्तथा ॥११८॥**
**समुद्रफेनश्चक्षुष्यो लेखनः शीतलश्च सः ॥**
**कषायो विषपित्तघ्नः कर्णरुक्कफहृल्लघुः ॥११९॥**

समुद्रफेन, फेन, हिण्डीर र अब्धिकफ : यी समुद्रफेनका संस्कृत पर्यायवाची शब्द हुन् । समुद्रफेन आँखाका लागि लाभदायक, लेखन, शितल गर्ने, कसिलो, विष र पित्त शान्त गर्ने, कान र कफरोग हरण गर्ने गुणको हुन्छ र पचाउन सहज हुन्छ । (समुद्रमा जम्मा हुने पानीको फिँजलाई समुद्री जीव खानेकुरा सम्झी खाने गर्दछन् । फेरी फिँज भनी जानी उकेली दिन्छन् । यस्तो फिँज धेरै दिन समुद्रको लहरसँग जुधेर एक ठाउँमा जम्मा हुन्छ र जम्दछ, यसैलाई समुद्रफेनकारूपमा लेराइने गरिन्छ ।

## अष्टवर्ग

**जीवकर्षभकौ मेदे काकोल्यौ ऋद्धिवृद्धिके । अष्टवर्गोऽष्टभिर्द्रव्यैः कथितश्चरकादिभिः ॥१२०॥**
**अष्टवर्गो हिमः स्वादुर्बृंहणः शुक्रलो गुरुः । भग्नसन्धानकृत्कामबलासबलवर्द्धनः ॥१२१॥**
**वातपित्तास्रतृड्दाहज्वरमेहक्षयापहः ।**

जीवक, ऋषभक, मेदा, महामेदा, काकोली, क्षीरकाकोली, ऋद्धि र वृद्धि : यी औषधीको समूहलाई अष्टवर्ग भनिन्छ । यस्तो चरकादि ऋषिले भनेका छन् । यो अष्टवर्गले शरीरलाई ठण्डी गर्दछ, पकाएर खाँदा मिठो हुन्छ, पुष्टिकारक, वीर्यवर्धक, ढिलो पच्ने, भाँचिएका मर्किएका भाग जोड्ने, काम-कफ-बल बढाउने तथा वात-पित्त-रक्त दोष, तिर्खा, जलन, जरो, प्रमेह र क्षय रोगलाई नष्ट गर्दछ ।

## जीवक र ऋषभ

**जीवकर्षभकौ ज्ञेयौ हिमाद्रि शिखरोद्भवौ ॥१२२॥**
**रसोनकन्दवत्कन्दौ निःसारौ सूक्ष्मपत्रकौ ।**
**जीवकः कूर्चिकाकारः ऋषभो वृष शृङ्गवत् ॥१२३॥**
**जीवको मधुरः शृङ्गी ह्रस्वाङ्गो कूर्चशीर्षकः ।**
**ऋषभो वृषभो धीरो विषाणाद्राक्ष इत्यपि ॥१२४॥**
**जीवकर्षभकौ बल्यौ शीतौ शुक्रकफप्रदौ ।**
**मधुरौ पित्तदाहास्रकार्श्यवातक्षयापहौ ॥१२५॥**

जीवक र ऋषभ नाउँ भएका दुई बुटी हिमालयको शिखरमा उत्पन्न हुन्छन् । यिनको लसुनको जस्तो कन्द ( गाँठो) हुन्छ र भित्र खाली हुन्छ (गुदी हुन्न) । निर्बलिया ससाना पात हुन्छन् । जीवकको बोट हेर्दा कुचोजस्तो र ऋषभको बोट गोरुको सिङ्गजस्तो हुन्छ । जीवकका संस्कृत पर्यायवाची शब्दहरू :- मधुर, श्रृङ्गी, ह्रस्वाङ्ग, कूर्चशीर्षक । ऋषभका संस्कृत पर्यायवाची शब्दहरू :-वृषभ, धीर, विषाणी, द्राक्ष । यी दुबै कन्द बल प्रदायक, शीतलता प्रदायक , बीर्यवर्द्धक र कफवर्द्धक हुन्छन् । खानमा मिठा हुन्छन् । यिनले पित्तले गर्ने डाह, रगतसम्बन्धि विकार, दुर्बलता, वायुविकार र क्षयरोग हरण गर्दछन् ।

## मेदा र महामेदा

**महामेदाऽभिधः कन्दो मोरङ्गादौ प्रजायते ।**
**महामेदा वनीमेदा स्यादित्युक्तं मुनीश्वरैः ॥१२६॥**
**शुक्लार्द्रकनिभः कन्दो लताजातः सपाण्डुरः ।**
**महामेदाभिधो ज्ञेयो मेदालक्षणमुच्यते ॥१२७॥**
**शुक्लकन्दो नखच्छेद्यो मेदोधातुमिव स्रवेत् ।**
**यः स मेदेति विज्ञेयो जिज्ञासातत्परैर्जनैः ॥१२८॥**
**स्वल्पपर्णी मणिच्छिद्रा मेदा मेदाभवाधरा ।**
**महामेदा वसुच्छिद्रा त्रिदन्ती देवतामणिः ॥१२९॥**
**मेदायुगं गुरु स्वादु वृष्यं स्तन्यकफावहम् ।**
**बृंहणं शीतलं पित्तरक्तवातज्वरप्रणुत् ॥१३०॥**

महामेदा कन्दमूल मोरंग प्रदेश (बलौटे जमिन ?) आदि स्थानमा हुन्छ । यसका महामेदा, वनीमेदा संस्कृत पर्यौयवाची नामहरू हुन् भनी मुनिश्रेष्ठहरूले बताएका छन् । महामेदाको कन्द सुकेको अदुवा जस्तो हुन्छ भने यसको लहरा पहेँलो रङको हुन्छ । यो महामेदाको लक्षण हो अब मेदाको लक्षण बताउँदछु । मेदाको कन्द पनि यस्तै सेतो रङको हुन्छ । यसलाई नङले कोतर्दा यसबाट बोसो जस्तै रस निस्कन्छ, यसलाई मेदा भनिन्छ । स्वल्पपर्णी, मणिच्छिद्रा, मेदोभवा र धरा : यी मेदाका तथा वसुच्छिद्रा, त्रिदन्ती र देवतामणी : यी महामेधाका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै मेदा पचाउन कठिन हुने, स्वादिष्ट, वीर्यवर्द्धक, दूध र कफ बढाउने, पुष्टिकारक, शीतलता प्रदान गर्ने तथा रक्तपित्त र वातजरो नाशक हुन्छन् । (मेदाका पात सिधा नबाङ्गिएका हुन्छन् भने महामेधाका पछिल्तिर बाङ्गिएका पात हुन्छन् । यी दुवैका अदुवाजस्ता कन्द हुन्छन् । मेदाको फेद ठूलो र महामेदाको सानो वा पातलो हुन्छ । यी जीवन बढाउने र बुढ्यौली रोक्ने औषधी हुन् । यिनका कन्दलाई सुकाएर त्यसको धुलोलाई औषधीकारूपमा लिइन्छ । यो शक्तिवर्धक हुन्छ, कमजोरीलाई हटाउँदछ । यसले खोकी पनि निको हुन्छ । भनिन्छ च्यवन ऋषि यिनै औषधी खाएर तरुनो भएका थिए । यसले यौनजन्य विकृति नाश गर्दछ र रोगप्रतिरोधी क्षमता अति बढाउँदछ । यसको कन्द सुकाई त्यती नै मिश्री मिसाएर नित्य २-३ ग्राम दूधसँग खाने गरे बुढ्यौलीका रोग लाग्दैनन्) ।

## काकोली र क्षीरकाकोली

**जायते क्षीरकाकोली महामेदोद्भवस्थले ।**
**यत्र स्यात्क्षीरकाकोली काकोली तत्र जायते ॥१३१॥**
**पीवरीसदृशः कन्दः क्षीरं स्रवति गन्धवान् ।**
**सा प्रोक्ताक्षीरकाकोली काकोलीलिङ्गमुच्यते ॥१३२॥**
**यथा स्यात्क्षीरकाकोली काकोल्यपि तथा भवेत् ।**
**एषा किञ्चिद्भवेत्कृष्णा भेदोऽयमुभयोरपि ॥१३३॥**

जहाँ महामेदा उत्पन्न हुन्छ त्यहाँ काकोली र क्षीरकाकोली पनि उत्पन्न हुन्छ । क्षीरकाकोलीको कन्द कुरिलो (पीवरी) को जस्तो हुन्छ र यसबाट गन्धयुक्त दूध निस्कन्छ । यी क्षीरकाकोलीका लक्षण हुन् । काकोली पनि क्षीरकाकोली जस्तै हुन्छ तर यसको रङ केही कालो हुन्छ । यी दुईमा फरक यही हो ।

**काकोली वायसोली च वीरा कायस्थिका तथा ।**
**सा शुक्ला क्षीरकाकोली वयःस्था क्षीरवल्लिका ॥१३४॥**
**कथिता क्षीरिणी धीरा क्षीरशुक्ला पयस्विनी ।**
**काकोलीयुगलं शीतं शुक्रलं मधुरं गुरु ॥१३५॥**
**बृंहणं वातदाहास्रपित्तशोषज्वरापहम् ।**

काकोलीका वायसोली, वीरा र कायस्थिका संस्कृत पर्यायवाची नामहरू हुन् । सेता वर्णको काकोलीलाई क्षीरकाकोली भनिन्छ र यसका वयस्था, क्षीरवल्लिका, क्षीरिणी, धारा, क्षीरशुक्ला र पयस्विनी संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै खाले काकोलीले शरीरलाई ठण्डी गर्दछन् । शुक्र बढाउँदछन् र खानमा मिठा हुन्छन् । तर पचाउन कठिन हुन्छन् । शरीरका धातु बढाउँदछन् तथा वायुजन्य रोग, डाह, रगतका विकार, पित्तका विकार, शरीर सुन्निने रोग र जरोलाई नाश गर्दछन् ।

## ऋद्धि र वृद्धि

**ऋद्धिर्वृद्धिश्च कन्दौ द्वौ भवतः कोशयामले ॥१३६॥**
**श्वेतलोमान्वितौ कन्दौ लताजातौ सरन्ध्रकौ ।**
**स एव ऋद्धिर्वृद्धिश्च भेदमप्येतयोर्ब्रुवे ॥१३७॥**
**तूलग्रन्थिसमा ऋद्धिर्वामावर्त्तफला च सा ।**
**वृद्धिस्तु दक्षिणावर्त्तफला प्रोक्ता महर्षिभिः ॥१३८॥**
**ऋद्धियुग्मं सिद्धिलक्ष्म्यौ वृद्धेरप्याह्वया इमे ।**
**ऋद्धिर्बल्या त्रिदोषघ्नी शुक्रला मधुरा गुरुः ॥१३९॥**
**प्राणैश्वर्यकरी मूर्च्छारक्तपित्तविनाशिनी ।**
**वृद्धिर्गर्भप्रदा शीता बृंहणी मधुरा स्मृता ॥१४०॥**
**वृष्या पित्तास्रशमनी क्षतकासक्षयापहा ।**

ऋद्धि र वृद्धि दुबै कोशयामल प्रदेश (?) मा पाइन्छन् । यी दुबै कन्दमूल सेता भुस र ससाना प्वालले युक्त हुन्छन् । यिनको भिन्नता बताइन्छ । ऋद्धि देब्रेतिर बटारिएको हुन्छ र कपासको गाँठाजत्रो फल लाग्दछ । वृद्धिको कन्द दाहिनेतिर बटारिएको हुन्छ । यस्तो महर्षिहरूले बताएका छन् । दुबैको पर्यायवाची शब्द सिद्धि र लक्ष्मी हुन् । ऋद्धि बलकारी, त्रिदोष हर्ने, वीर्यवर्धक, स्वादिष्ट, पचाउन कठिन, आयु र ऐश्वर्य बढाउने तथा बेहोसी र रक्तपित्त नाशक हुन्छ । वृद्धिले गर्भधारण गराउन मद्दत गर्दछ । शरीरलाई ठण्डी गराउँदछ । यो गुलियो, पौष्टिक र वीर्यवर्धक हुन्छ । यसले रक्तपित्त, घाउ, खोकी र क्षयरोग निको पार्दछ । (ऋद्धि र वृद्धिलाई नेपालीमा पातेभुला नाम दिइएको छ । धेरै लामो समयदेखि यी बूटीका बारेमा कसैले खोजिनीति गरेको प्रमाण पाइन्न) ।

## अष्टवर्गको विकल्प

**राज्ञामप्यष्टवर्गस्तु यतोऽयमतिदुर्लभः ॥१४१॥**
**तस्मादस्य प्रतिनिधिं गृह्णीयात्तद्गुणं भिषक् ।**
**मेदा जीवक काकोली वृद्धिद्वन्द्वेऽपि चासति ॥१४२॥**
**वरीविदार्यश्वगन्धावाराहींश्च क्रमात् क्षिपेत् ।**
**मेदामहामेदास्थाने शतावरीमूलम् ।**
**जीवकर्षभस्थानेऽपि विदारीमूलम् ।**
**काकोलीक्षीरकाकोलीस्थाने अश्वगन्धामूलम् ।**
**ऋद्धिवृद्धिस्थाने वाराहीकन्दगुणैस्तत्तुल्यं क्षिपेत् ॥१४३॥**

यी आठ प्रकारका औषधी जतिसुकै सम्पन्न राजाका लागि पनि दुर्लभ छन् । अतः यी जस्तै गुण भएका वैकल्पिक औषधीको प्रयोग गर्नु उचित हुन्छ । जस्तै :- मेदा र महामेदाको साटो कुरिलाको कन्द, जीवक र ऋषभको साटो भुईंकुभिण्डाको कन्द, काकोली र क्षीरकाकोलीको साटो अश्वगन्धाको गानु तथा ऋद्धि र वृद्धिको साटो गिठोको जराको गानु ।

## जेठीमधु

**यष्टीमधु तथा यष्टीमधुकं क्लीतकं तथा ।**
**अन्यत्क्लीतनकं तत्तु भवेत्तोये मधूलिका ॥१४४॥**
**यष्टी हिमा गुरुः स्वाद्वी चक्षुष्या बलवर्णकृत् ।**
**सुस्निग्धा शुक्रला केश्या स्वर्या पित्तानिलास्रजित् ॥१४५॥**
**व्रणशोथविषच्छर्दितृष्णाग्लानिक्षयापहा ।**

जेठीमधुका यष्टीमधु, यष्टीमधुक, क्लीतक, क्लीतनक र मधूलिका : यी संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतल, पचाउन कठिन, स्वादिलो, नेत्रका लागि लाभदायक, बल र वर्णका लागि हीतकारी, चिल्लो, वीर्यवर्धक र कपाल तथा स्वरका लागि लाभदायक हुन्छ । यसले पित्त-वात तथा रगतका विकार, सुन्निएको घाउ, विष, बान्ता, तिर्खा, ग्लानि र क्षयरोग नाश गर्दछ ।

## सिँदुरे वृक्ष

**काम्पिल्लः कर्कशश्चन्द्रो रक्ताङ्गो रेचनोऽपि च ॥१४६॥**
**काम्पिल्लः कफपित्तास्रकृमिगुल्मोदरव्रणान् ।**
**हन्ति रेची कटूष्णश्च मेहानाहविषाश्मनुत् ॥१४७॥**

सिँदुरे वृक्षका काम्पिल्य, कर्कश, चन्द्र, रक्ताङ्ग र रेचन संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफ र रक्तपित्त, पेटका कीरा, गानुगोला, पेटसम्बन्धी रोग र घाउखटिरा ठिक गर्दछ । यसले पेट सफा गर्दछ ( रेची) । यसको स्वाद पिरो हुन्छ र गर्मी गर्दछ । यसले मधुमेह आदि प्रमेह, पेट फुल्ने रोग, विषको असर र पत्थरीलाई पनि निको पार्दछ । (सिंदुरे-ससाना गाढा, राता भुुप्पा भएका फल फल्ने, खैरो मञ्जरीका रूपमा फूल फुल्ने एक वृक्ष, त्यसैको फूल, नेपाली बृहत् शब्दकोश)

## राजवृक्ष

**आरग्वधो राजवृक्षः शम्पाकश्चतुरङ्गुलः ।**
**आरेवतो व्याधिघातः कृतमालः सुवर्णकः ॥१४८॥**
**कर्णिकारो दीर्घफलः स्वर्णाङ्गः स्वर्णभूषणः ।**
**आरग्वधोगुरुःस्वादुः शीतलः स्रंसनोत्तमः ॥१४९॥**
**ज्वरहृद्रोगपित्तास्रवातोदावर्त्तशूलनुत् ।**
**तत्फलं स्रंसनं रुच्यं कुष्ठपित्तकफापहम् ॥१५०॥**
**ज्वरे तु सततं पथ्यं कोष्ठशुद्धिकरं परम् ।**

आरग्वध, राजवृक्ष, शम्पाक, चतुरङ्गुल, आरेवत, व्याधिघात, कृतमाल, सुवर्णक, कर्णिकार, दीर्घफल, स्वर्णाङ्ग र स्वर्णभूषण- यी राजवृक्षका संस्कृत पर्यार्यवाची नामहरू हुन् । राजवृक्ष पचाउन कठिन र स्वादिलो हुन्छ, यसले शरीरलाई ठण्डी गर्दछ । यसको पाकेको फल गुलियो हुन्छ । यसले दिसा खुलाउँदछ । जरो,

मुटुका रोग, रक्तपित्त, वातजन्य रोग, पेटको हावा वा ग्याँस मुखबाट आउने रोग (उदावर्त) र शूलरोगलाई निको पार्दछ । यसको फलले कसिएको दिसालाई नरम बनाई बाहिर निकाल्दछ, रुची बढाउँदछ, तथा कुष्ठरोग, पित्तरोग एवं कफरोगलाई नाश गर्दछ । यो जरोमा सधैं नै हितकारी हुन्छ । यो मिठो, मलाशय सफा गर्ने र शरीरका मललाई खुकुल्याएर शरीर बाहिर निकाल्ने गुण (रेचक) को हुन्छ । (राजवृक्ष-चिल्ला लामा पात हुने, छिनछिनेका जस्ता पहेंला झुप्पादार फूल फुल्ने, अनेक औषधीका निम्ति उपयुक्त एक वृक्ष वा त्यसैका गुलिया, बाटुला, काला चक्की हुने लौरीदार फल; अमलतास; बन्दरलौरी-नेपाली बृहत् शब्दकोश) ।

व्याख्या: यसको बोट त्यत्तिकै पनि उम्रेर हुर्कीरहेको पाइन्छ । यसका पात चिल्ला र जामुनुमा जस्तै हुन्छन् । पात ३ देखि ६ जोरसम्म हुन्छन् र दुबैतिर चिल्ला हुन्छन् । यसको फूल पाँचपाँच पत्ती भएका र पहेंला एवं झुप्पादार हुन्छन् । पात झरेपछि फूल फुल्दछ र यतिखेर यो वृक्षको शोभा अपूर्व देखिन्छ । तर फूलको बास्ना आउँदैन । फूल झरीसकेपछि त्यसमा हरियो रङ्गको फल लाग्दछ र भित्र पहेंलो हुन्छ । यो १ देखि ३ फिटसम्म लामो हुन्छ । पाकेपछि यो फल कालो रङ्गमा रगत मिसिएको जस्तो रङ्गको हुन्छ र बाहिरी भाग दाउरो जस्तो कडा हुन्छ । फल भित्रको गुदी अफीम जस्तो रङ्गको, लेस्याइलो र कालो हुन्छ । शिरीषको जस्तै मालाकार ढङ्गले बीउ बीचबीचमा हुन्छ । राजवृक्षको पात र बोक्रा पिँधेर बनाइएको मलम पोश्चुल नामक खटिरा विशेषको औषधी हुन्छ । जरा र फलको गुदीले दिसा खुलाउँदछ । मूल जराको काँडापानी खाँदा नित्य बिहान ५ देखि १० तोलासम्म खानु पर्दछ । दिसा खुलाउन वा अरु प्रयोजनको लागि फलको गुदी खाँदा १ देखि २ तोलासम्म खानु पर्दछ । (एक तोलामा ११.६६३८०३८ ग्राम हुन्छ) ।

## पिर्रे

**कट्वी तु कटुका तिक्ता कृष्णभेदा कटम्भरा ॥१५१॥**
**अशोका मत्स्यशकला चक्राङ्गी शकुलादनी ।**
**मत्स्यपित्ता काण्डरुहा रोहिणी कटुरोहिणी ॥१५२॥**
**कट्वी तु कटुका पाके तिक्ता रूक्षा हिमा लघुः ।**
**भेदिनी दीपनी हृद्या कफपित्तज्वरापहा ॥१५३॥**
**प्रमेहश्वासकासास्रदाहकुष्ठकृमिप्रणुत् ।**

कट्वी, कटुका, तिक्ता, कृष्णभेदा, कटम्भरा, अशोका, मत्स्यशकला, चक्राङ्गी, शकुलादनी, मत्स्यपित्ता, काण्डरुहा, रोहिणी र कटुरोहिणी-यी पिर्रेका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको रस पिरो हुन्छ । पचेपछि यो तीतो हुन्छ । यो रुखो, ठण्डी गर्ने, पचाउन सहज, दिसा खुकुलो पार्ने, पाचकाग्नि बाल्ने र मुटुका लागि लाभदायक हुन्छ । यो कफविकार, पित्तविकार, जरो, मूत्रमा धातु मिसिएर आउने प्रमेह रोग, श्वासप्रश्वास रोग, खोकी, रगतविकार, डाह, कुष्ठरोग र पेटका कीरा मार्न औषधी हुन्छ ।

## चिराइतो

**किराततिक्तः कैरातः कटुतिक्तः किरातकः ॥१५४॥**
**काण्डतिक्तोऽनार्यतिक्तो भूनिम्बो रामसेनकः ।**
**किरातकोऽन्यो नैपालः सोर्द्धतिक्तो ज्वरान्तकः ॥१५५॥**
**किरातः सारको रूक्षः शीतलस्तिक्तको लघुः ।**

**सन्निपातज्वरश्वासकफपित्तास्रदाहनुत् ॥१५६॥**
**कासशोथतृषाकुष्ठज्वरव्रणकृमिप्रणुत् ।**

किराततिक्त, कैरात, कटुतिक्त, किरातक, काण्डतिक्त, अनार्यतिक्त, भूनिम्ब र रामसेनक : यी चिराइतोका संस्कृत पर्यायवाची नामहरू हुन् । नेपाली चिराइतो पनि करिब करिब यस्तै हुन्छ । तर, यो अलि कम तितो हुन्छ । यसका पर्यायवाची नाम अर्द्धतिक्त वा ज्वरान्तक हुन् । चिराइतोले शरीरका दिसा आदि मललाई सार्ने वा निकाल्ने काम गर्दछ । यो रुखो, शीतल गर्ने, तीतो र पचाउन हलुका हुन्छ । यसले सन्निपात जरो, खोकी, श्वासप्रश्वासका रोग, कफ, पित्त, रगतका विकार, डाह, रुघाखोकी, सुन्निने रोग, तिर्खा, कुष्ठ, घाउ र कीरा परेको नाश गर्दछ । (व्याख्याः- चिराइतो दुई किसिमको हुन्छ । गुलियो र तितो । यसका सबै भाग औषधीमा प्रयोग हुन्छन् । यो सामान्यतः शक्ति बढाउनका लागि प्रयोग गरिन्छ । यसले दिसा खुलाउँदछ र जरो नाश गर्दछ । शरीर भतभती पोल्ने, छालाका रोग र पेटमा परेका कीरा नाश गर्न यो खुवाइने गरिन्छ । यसले गर्भवती स्त्रीमा हुने बान्तालाई समेत रोक्दछ । यसको धुलो खाने हो भने २ देखि ६ माशासम्म र काँडापानी पकाएर खाने हो भने १ देखि २ तोलासम्म खानु पर्दछ प्रेसर लो वा हाई हुनेले वैद्यको परामर्श नलिई आफूखुशी यसलाई खान हुन्न) ।

## इन्द्रजौ (ठूलो कुरो)

**उक्तं कुटजबीजं तु यवमिन्द्रयवं तथा ॥१५७॥**
**कलिङ्गं चापि कालिङ्गं तथा भद्रयवं स्मृतम् ।**
**क्वचिदिन्द्रस्य नामैव भवेत्तदभिधायकम् ॥१५८॥**
**फलानीन्द्रयवास्तस्य तथा भद्रयवा अपि ।**
**इन्द्रयवं त्रिदोषघ्नं संग्राहि कटु शीतलम् ॥१५९॥**
**ज्वरातीसाररक्तार्शः कृमिवीसर्पकुष्ठनुत् ।**
**दीपनं गुदकीलास्रवातास्रश्लेष्मशूलजित् ॥१६०॥**

कुटजबीज, इन्द्रयव, यव, कलिङ्ग, कालिङ्ग र भद्रयव : यी इन्द्रजौका संस्कृत पर्यायवाची नामहरु हुन् । कसै कसैले इन्द्रको नामले इन्द्रजौलाई पनि बुझाउँदछ पनि भनेका छन् । ती नामका पछाडि फल शब्द जोडिएपछि त्यो इन्द्रजौको नाम हुन्छ भन्दछन् । इन्द्रजौले त्रिदोष नाश गर्दछ र कब्जियत पनि गर्दछ । यो पिरो स्वादको हुन्छ र छाम्दा शीतल हुन्छ । यसले जरो, छेरपटी, रगत बहने खालको अलकाई, किरा, सुकेलुतो र कुष्ठरोग नाश गर्दछ । साथै, यो पाचकाग्नि बाल्ने, अल्काईका गिर्खा नाशक, रक्तविकार नाशक, वातविकार नाशक, कफविकार नाशक र शूल नाशक (जित्ने) हुन्छ । राम्ररी हुर्केपछि यसका पात कदमका जस्तै ठूला हुन्छन्, पात चुँड्दा सेतो दूध आउँदछ, गेडा जौ जस्तै हुन्छ, वर्षा ऋतुमा फूल फुल्दछ । (ठूलो कुरो :- लाम्चा पात हुने, लामा कोसा फल्ने र सेता फूल फुल्ने एक जातको वृक्ष वा त्यसैको फल, कटज-नेपाली बृहत् शब्दकोश) ।

## मदनफल (मैदल, मैनकाँडो) :

**मदनश्छर्दनः पिण्डी राठः पिण्डीतकस्तथा ।**
**करहाटो मरुवकः शल्यको विषपुष्पकः ॥१६१॥**

**मदनो मधुरस्तिक्तो वीर्य्योष्णो लेखनो लघुः ।**
**वान्तिकृद्विद्रधिहरः प्रतिश्यायव्रणान्तकः ॥१६२॥**
**रूक्षः कुष्ठकफानाहशोथगुल्मव्रणापहः ।**

मदन, छर्दन, पिण्डी, राठ, पिण्डीतक, करहाट, मरुवक, शल्यक र विषपुष्पक : यी मैदलका संस्कृत पर्यायवाची नामहरू हुन् । मैदल गुलियो र तितो स्वादको हुन्छ । यसले गर्मी गर्दछ र शरीरका धातुलाई घटाउँदछ । पचाउन सहज हुन्छ, वान्ता गराउँदछ, सुकेलुतो नाश गर्दछ, पिनास निको पार्दछ, घाउ ठिक गर्दछ । यो रुखो हुन्छ । यसले कुष्ठ, कफविकार, मलमूत्र रोकिने रोग (आनाह), शरीर सुन्निएको (शोथ), गानुगोला (गुल्म) र घाउ (व्रण) निको पार्दछ ।

## गाईतिहारे (रास्ना)

**रास्ना युक्तरसा रस्या सुवहा रसना रसा ॥१६३॥**
**एलापर्णी च सुरसा सुगन्धा श्रेयसी तथा ।**
**रास्नामपाचिनी तिक्ता गुरूष्णा कफवातजित् ॥१६४॥**
**शोथश्वाससमीरास्रवातशूलोदरापहा ।**
**कासज्वरविषाशीतिवातिकामयसिध्महृत् ॥१६५॥**

रास्ना, युक्तरसा, रस्या, सुवहा, रसना, रसा, एलापर्णी, सुरसा, सुगन्धा र श्रेयसी : यी गाईतिहारेका संस्कृत पर्यायवाची नामहरू हुन् । गाईतिहारेले पाचकको काम गर्दछ । यो तीतो, पचाउन कठिन, गर्मी गर्ने, कफ र वातविकार नाशक, शरीर सुन्निएको बसाउने, दम निका पार्ने, वातरक्त र वातशूल ठिक गर्ने, पेटका रोग निको पार्ने, खोकी र जरो नाशक, विषको असर नाश गर्ने र अस्सी प्रकारका वायुरोग नाश गर्ने गुणको हुन्छ । यसले दुबी समेत निको पार्दछ ।

## प्याक्सेकन्द (नाकुली)

**नाकुली सुरसा नागसुगन्धा गन्धनाकुली ।**
**नकुलेष्टा भुजङ्गाक्षी सर्पाक्षी विषनाशिनी ॥१६६॥**
**नाकुली तुवरा तिक्ता कटुकोष्णा विनाशयेत् ।**
**भोगिलूतावृश्चिकाखुविषज्वरकृमिव्रणान् ॥१६७॥**

नाकुली, सुरसा, नागसुगन्धा, गन्धनाकुली, नकुलेष्टा, भुजङ्गाक्षी, सर्पाक्षी र विषनाशिनी : यी प्याक्सेकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, तितो र पिरो स्वादको हुन्छ । यसले गर्मी गर्दछ तथा सर्प, माकुरो, बिच्छी, मूसा (आदि) को विषको असर घटाउँदछ । साथै यसले जरो, कीरा र घाउ समेत ठिक गर्दछ । (यो लहरा हो । यसको फेदमा गाण्टो वा कन्द हुन्छ र यो कन्द सर्प गनाए जसरी गनाउँदछ । यो न्याउरीमुसोले बढी खान्छ ।)

## अमारो (माचिका)

**माचिकाप्रस्थिकाम्बष्ठा तथाम्बाम्बालिकाम्बिका ।**
**मयूरविदला केशी सहस्रा बालमूलिका ॥१६८॥**
**माचिकाम्ला रसे पाके कषाया शीतला लघुः ।**
**पक्वातीसारपित्तास्रकफकण्ठामयापहा ॥१६९॥**

माचिका, प्रस्थिका, अम्बष्ठा, अम्बा, अम्बालिका, अम्बिका, मयूरविदला, केशी, सहस्रा र बालमूलिका : यी अमारोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रसमा अमिलो र पचेपछिको रसमा टर्रो हुन्छ । यसले शीतल गर्दछ, पचाउन हलुका हुन्छ, यसले पक्वातिसार, रक्तपित्त, कफविकार र घाँटीको रोग नाश गर्दछ । पक्वातिसार :- गाढा पहेंलो र पातलो दिसा हुने रोग (ब्लोस डाएरिया) ।

## तेजस्विनी

**तेजस्विनी तेजवती तेजोह्वा तेजनी तथा ।**
**तेजस्विनी कफश्वासकासास्यामयवातहृत् ॥१७०॥**
**पाचन्युष्णा कटुस्तिक्ता रुचिवह्निप्रदीपिनी ।**

तेजस्विनी, तेजवती, तेजोह्वा र तेजनी : यी तेजस्विनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफविकार, दम, खोकी, मुखका रोग र वातविकार नाश गर्दछ । यो पाचन, गर्मी गर्ने, पिरो, तितो, रुची जगाउने र जठराग्नि बाल्ने गुणको हुन्छ ।

## मालकागुनु (ज्योतिष्मती)

**ज्योतिष्मती स्यात्कटभी ज्योतिष्का कङ्गुनीति च ॥१७१॥**
**पारावतपदी पिण्या लता प्रोक्ता ककुन्दनी ।**
**ज्योतिष्मती कटुस्तिक्ता सरा कफसमीरजित् ॥१७२॥**
**अत्युष्णा वामनी तीक्ष्णा वह्निबुद्धिस्मृतिप्रदा ।**

ज्योतिष्मती, कटभी ज्योतिष्का, कङ्गुनी, पारावतपदी, पिण्या, लता र ककुन्दनी : यी मालकागुनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तितो हुन्छ । यसले दिसा खुलाउँदछ तथा कफविकार र वातविकार नाश गर्दछ । यसले अती गर्मी गर्दछ र बान्ता गराउँदछ । यो तिक्खर हुन्छ । यसले जठराग्नि, बुद्धि र स्मरणशक्ति बढाउँदछ ।

## कूट (कुष्ठ)

**कुष्ठं रोगाह्वयं वाप्यं पारिभव्यं तथोत्पलम् ॥१७३॥**
**कुष्ठमुष्णं कटु स्वादु शुक्रलं तिक्तकं लघु ।**

**हन्ति वातास्रवीसर्पकासकुष्ठमरुत्कफान्॥१७४॥**

कुष्ठ, रोगाह्वय, वाप्य, पारिभव्य र उत्पल : यी कूटका संस्कृत पर्यायवाची नामहरू हुन् । कूट उष्णवीर्य, पिरो, स्वादिलो, शुक्रवर्धक, तितो र पचाउन हलुका हुन्छ । यसले वातरक्त, विसर्प, खोकी, कुष्ठ, वातविकार र कफविकार नाश गर्दछ ।

## पुष्करमूल (कूटको एक प्रकार)

**उक्तं पुष्करमूलं तु पौष्करं पुष्करञ्च तत् ।**
**पद्मपत्रञ्च काश्मीरं कुष्ठभेदमिमं जगुः॥१७५॥**
**पौष्करं कटुकं तिक्तमुक्तं वातकफज्वरान् ।**
**हन्ति शोथारुचिश्वासान्विशेषात्पार्श्वशूलनुत्॥१७६॥**

पुष्करमूल, पौष्कर, पुष्कर, पद्मपत्र र काश्मीर : यी पुष्करमूलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कूटकै एक भेद हो । यो पिरो र तीतो हुन्छ । यसले वातजरो र कफजरो, शरीर सुन्निएको, अरुचि, दम र विशेष गरी कोखाको शूल नाश गर्दछ ।

## बनकाँडे थाकल

**कटुपर्णी हैमवती हेमक्षीरी हिमावती ।**
**हेमाह्वा पीतदुग्धा च तन्मूलं चोकमुच्यते॥१७७॥**
**हेमाह्वा रेचनी तिक्ता भेदिन्युत्क्लेशकारिणी ।**
**कृमिकण्डूविषानाहकफपित्तास्रकुष्ठनुत्॥१७८॥**

कटुपर्णी, हैमवती, हेमक्षीरी, हिमावती, हेमाह्वा र पीतदुग्धा बनकाँडे थाकलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको जरालाई चोकम् भनिन्छ । यसमा रेचन, तितो स्वाद, भेदी र ग्लानिकारक गुण हुन्छ । यसले कीरा, शरीर चिलाउने रोग, विषको असर, आनाह, कफविकार, रक्तपित्त र कुष्ठरोग नाश गर्दछ ।

## कर्कटश्रृङ्गी

**शृङ्गी कर्कटशृङ्गी च स्यात्कुलीरविषाणिका ।**
**अजशृङ्गी च वक्रा च कर्कटाख्या च कीर्तिता॥१७९॥**
**शृङ्गी कषाया तिक्तोष्णा कफवातक्षयज्वरान् ।**
**श्वासोर्ध्ववाततृट्कासहिक्कारुचिवमीहरेत्॥१८०॥**

शृङ्गी, कर्कटशृङ्गी, कुलीर, विषाणिका, अजशृङ्गी, वक्रा र कर्कटा : यी कर्कटश्रृङ्गीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र तितो हुन्छ । यसले गर्मी गर्दछ तथा कफविकार-वातविकार-क्षयरोग-जरो-दम-धेरै डकार आउने रोग (ऊर्ध्ववात)-तिर्खारोग-खोकी-बाडुली रोग-अरुची र वाकवाकी निको पार्दछ ।

व्याख्या : - कर्कटशृङ्गी : लाम्चा पात, खैरा रङका लाम्चिला फल फल्ने, अर्को कुनै वृक्षका साथ जोडिएर फस्टाउने एक प्रकारको परजीवि वृक्ष (नेपाली बृहद् शब्दकोश) । चालीस-पैंतालीस फीट अग्लो सेतो बोक्रा हुने एक रुख । यसको पातमा एफिस नामक नामको कीराले पित्तको थैली जस्तो गुँड बनाउँदछ । यो टाढाबाट हेर्दा सिङ्भैंं देखिन्छ । यो गुँड फोर्दा रातो देखिन्छ र त्यहाँ कीराको मल पनि देखिन्छ ( वनौषधिचन्द्रोदयः) । यस भित्र हुने धुलो मरेको कीरा हुन् -आचार्य डिमक ।

## काफल

**कट्फलः सोमवल्कश्च कैटर्य्यः कुम्भिकाऽपि च ।**
**श्रीपर्णिका कुमुदिका भद्रा भद्रवतीति च ॥१८१॥**
**कट्फलस्तुवरस्तिक्तः कटुर्वातकफज्वरान् ।**
**हन्ति श्वासप्रमेहार्शः कासकण्ठामयारुचीः ॥१८२॥**

कट्फल, सोमवल्क, कैटर्य्य, कुम्भिका, श्रीपर्णिका, कुमुदिका, भद्रा र भद्रवती : यी काफलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो केही टर्रो, केही तितो र केही पिरो हुन्छ । यसले वातविकार, कफविकार-जरो-दम-प्रमेह-अल्काइ- खोकी-घाँटीका रोग र अरुची निको पार्दछ ।

## भारङ्गी (चिण्डे)

**भार्ङ्गी भृगुभवा पद्मा फञ्जी ब्राह्मणयष्टिका ।**
**ब्राह्मण्यङ्गारवल्ली च खरशाकश्च हञ्जिका ॥१८३॥**
**भार्गी रूक्षा कटुस्तिक्ता रुच्योष्णा पाचनी लघुः ।**
**दीपनी तुवरा गुल्मरक्तनुन्नाशयेद् ध्रुवम् ॥१८४॥**
**शोथकासकफश्वासपीनसज्वरमारुतान् ।**

भार्ङ्गी, भृगुभवा, पद्मा, फञ्जी, ब्राह्मणयष्टिका, ब्राह्मणी, अङ्गारवल्ली, खरशाक र हञ्जिका चिण्डेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुखो, पिरो र तितो हुन्छ । यसले रुची बढाउँदछ र गर्मी गर्दछ । यसमा पाचनी र पचाउन हलुका हुने गुण हुन्छन् । यो दीपन र धातु एवं मल कस्ने गुणको हुन्छ ।  यसले गुल्म, रगतका विकार, सुजन, खोकी, कफविकार, दम, पिनास, जरो र वातविकार नाश गर्दछ ।

## पाषाणभेद

**पाषाणभेदकोऽश्मघ्नो गिरिभिद्भिन्नयोजनी ॥१८५॥**
**अश्मभेदो हिमस्तिक्तः कषायो बस्तिशोधनः ।**

**भेदनो हन्ति दोषार्शोगुल्मकृच्छ्राश्मह्रद्रुजः ॥१८६॥**
**योनि रोगान्प्रमेहांश्च प्लीहशूलव्रणानि च ।**

पाषाणभेद, अश्मघ्न, गिरिभित् र भिन्नयोजनी पाखनभेदका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतल, तीतो र टर्रो हुन्छ । यो तल्लो पेट सफा गर्ने र भेदन गुणको हुन्छ । यसले अल्काई, गुल्म, कृच्छ्र, पत्थरी, मुटुका रोग, योनिका रोग, प्रमेह, फियोका रोग, शूल तथा घाउखटिरा निको पार्दछ ।

विवरणः यसका पात मोटामोटा र हरिया तथा किनारा करौंतीको धार जसरी काटिएका हुन्छन् । यो वानस्पतिक र खनिज गरी दुई किसिमको हुन्छ । वानस्पतिकका पनि सानो र ठूलो गरी दुई प्रकार हुन्छन् । ठूलो तीन-चार फुटसम्म अग्लो हुन्छ भने सानो लहराजसरी जमिनमा फैलन्छ । पाखनभेदका पाँचै अङ्ग ओखतीमा प्रयोग हुन्छ । ठूलोको जरो बढी प्रयोग हुन्छ । यो दुई मासादेखि चार मासासम्म र यसको काँढापानी चारदेखि दश तोलासम्म खाइन्छ । यो पत्थरीको अचूक ओखती हो । पेटको शूलमा यसका दुई वा तीन पात नुन वा तातोपानीसँग खाने गरिन्छ । छातीको रोग हुने र पित्त प्रकृतिको शरीर हुनेलाई यो खानु हानिकारक हुन्छ । यसको साटो पुनर्नवा प्रयोग गर्न सकिन्छ ।

## धयैँरो

**धातकी धातुपुष्पी च ताम्रपुष्पी च कुञ्जरा ॥१८७॥**
**सुभिक्षा बहुपुष्पी च वह्निज्वाला च सा स्मृता ।**
**धातकी कटुका शीता मृदुकृत्तुवरा लघुः ॥१८८॥**
**तृष्णातीसारपित्तास्रविषकृमिविसर्पजित् ।**

धातकी, धातुपुष्पी, ताम्रपुष्पी, कुञ्जरा, सुभिक्षा, बहुपुष्पी र वह्निज्वाला धयैँराका संस्कृत पर्यायवाची नामहरू हुन् ।
धयैँराको फूल पिरो, शीतल गर्ने , कोमलता प्रदायक, दिसा कस्ने र पचाउन सहज हुन्छ । यसले तिर्खा, अतिसार, पित्तरोग, रगतका विकार, विषविकार, कीरा र विसर्प नाश गर्दछ ।

विवरणः पर्वततिर बढी पाइने हुनाले यसलाई पार्वती पनि भनिन्छ । यसका पात दारिमका जस्तै तर पहेँला र पछाडितिर चिल्ला हुन्छन् । पातमा भेट्नु हुँदैन । पातको तलबाट फूलका डाँठ निस्कन्छन् र हरेक डाँठमा पाँचदेखि पन्ध्र वटासम्म फूल फुल्दछन् । फूल राता हुन्छन् र यसमा प्रायः छ वटा दल (पत्ती) हुन्छन् । यो जाडोमा वा वसन्तमा फुल्दछ र यसका गेडा वर्षामा पाक्दछ । यसको फूलमात्र ओखतीमा प्रयोग हुन्छ । सामान्य मात्रा दुईदेखि चार मासासम्म हुन्छ ।

## मजिठो

**मञ्जिष्ठा विकसा जिङ्गी समङ्गा कालमेषिका ॥१८९॥**
**मण्डूकपर्णी भण्डीरी भण्डी योजनवल्ल्यपि ।**
**रसायन्यरुणा काला रक्ताङ्गी रक्तयष्टिका ॥१९०॥**
**भण्डीतकी च गण्डीरी मञ्जूषा वस्त्ररञ्जिनी ।**

**मञ्जिष्ठा मधुरा तिक्ता कषाया स्वरवर्णकृत्॥१९१॥**
**गुरुरुष्णा विषश्लेष्मशोथयोन्यक्षिकर्णरुक्।**
**रक्तातीसार कुष्ठास्रवीसर्पव्रणमेहनुत्॥१९२॥**

मञ्जिष्ठा, विकसा, जिङ्गी, समङ्गा, कालमेषिका, मण्डूकपर्णी, भण्डीरी, भण्डी, योजनवल्ली, रसायनी, अरुणा, काला, रक्ताङ्गी, रक्तयष्टिका, भण्डीतकी, गण्डीरी, मञ्जूषा र वस्त्ररञ्जिनी : यी मजिठोका संस्कृत पर्यायवाची नामहरू हुन्। मजिठो गुलियो, तितो र टर्रो हुन्छ। यसले स्वर र शरीरको वर्णलाई राम्रो गर्दछ। यो पचाउन कठिन र गर्मी गर्ने गुणको हुन्छ। यसले विषविकार, कफविकार, सुजन, योनिका रोग, आँखाका रोग, कानका रोग, रक्तातिसार, कुष्ठ, रक्तविकार, विसर्प, घाउखटिरा र प्रमेह रोग नाश गर्दछ।

विवरण : मजिठो लहरा जातको वनस्पति हो। यसको बोट आठ-दश फिट लामो र रातो हुन्छ। जरा अझ राता हुन्छन्। पात बाटुला हुन्छन् र प्राय रूखमा बेरिने गर्दछ। यसका जराबाट विशेष प्रकारको तेल बन्दछ जुन तेल सुजन, घाउखटिरा र छालाका रोगमा प्रयोग गर्ने गरिन्छ। ओखती बाहेक यसलाई रङ्गाउने काममा समेत प्रयोग गरिन्छ। यो टाउको र तल्लो पेटका लागि हानिकारक हुन्छ। यो खाएपछि पिसाब समेत रातो हुन्छ।

## कुसुम

**स्यात्कुसुम्भं वह्निशिखं वस्त्ररञ्जकमित्यपि।**
**कुसुम्भं वातलं कृच्छ्रं रक्तपित्तकफापहम्॥१९३॥**

कुसुम्भ, वह्निशिख र वस्त्ररञ्जक : यी कुसुमका संस्कृत पर्यायवाची नामहरू हुन्। कुसुमले वातविकार बढाउँदछ। यो कृच्छ्र, रक्तपित्त र कफविकारको ओखती हुन्छ।

विवरण : यो जाडोमा फुल्दछ। यसका लामा, काँडेदार र नरम पात हुन्छन्। फूलको रङ कुङ्कुम जस्तै हुनाले यसलाई ग्राम्यकुङ्कुम पनि भनिन्छ। यसको गेडा, फूल र पात ओखतीमा प्रयोग हुन्छ। मात्रा : स्वरस एक-दुई तोला, फूलको काँढापानी पाँच-दश तोला र गेडा वा बोक्रा दुई-चार आना प्रयोग हुन्छ। यसले हानी गरे सुप खानु पर्दछ।

## लाहा

**लाक्षा पलंकषालक्तो यावो वृक्षामयो जतुः।**
**लाक्षा वर्ण्या हिमा बल्या स्निग्धा च तुवरा लघुः॥१९४॥**
**अनुष्णा कफपित्तास्रहिक्काकासज्वरप्रणुत्।**
**(ब्राह्मण्यङ्गारवल्ली च खरशाखा च हञ्जिका)॥१९५॥**
**व्रणोरःक्षतवीसर्पकृमिकुष्ठगदापहा।**
**अलक्तको गुणैस्तद्वद्विशेषाद्व्यङ्गनाशनः॥१९६॥**

लाक्षा, पलंकषा, अलक्त, याव, वृक्षामय, जतु, ब्राह्मणी, अङ्गारवल्ली, खरशाखा र हञ्जिका : यी लाहाका संस्कृत पर्यायवाची नामहरू हुन् । लाहाले शरीरको वर्णलाई उज्वल पार्दछ । यो शीतल, बलकारी, चिल्लो, टर्रो, पचाउन सहज र गर्मी नगर्ने हुन्छ । यसले कफविकार, पित्तविकार, रक्तविकार, बाडुली, खोकी, जरो, घाउखटिरा, उरक्षत, विसर्प,, कीरा र कुष्ठ नाश गर्दछ । लाहाबाट बनाइने माहुरमा पनि लाहाकै सबै गुण हुन्छन् । तर यसले विशेषतः व्यङ्ग रोगलाई ठिक गर्दछ ।

विवरण : पीपल, पाखरी, बर्रो, शिशौ आदि रूखका हाँगामाथि पाइने रातोरातो पदार्थलाई नै लाहा भनिन्छ । यसमध्ये पीपलको लाहा सबभन्दा उत्तम हुन्छ । ओखतीमा यसैलाई प्रयोग गर्नु पर्दछ । यही लाहालाई पकाएर माहुर बनाइन्छ । यसले छाती र तल्लो पेटलाई हानी गर्दछ । यो नपाउँदा यसको सट्टामा वंशलोचन प्रयोग गरिन्छ ।

## हलेदो

**हरिद्रा काञ्चनी पीता निशाऽऽख्या वरवर्णिनी ।**
**कृमिघ्नी हलदी योषित्प्रिया हट्टविलासिनी ॥१९७॥**
**हरिद्रा कटुका तिक्ता रूक्षोष्णा कफपित्तनुत् ।**
**वर्ण्या त्वग्दोषमेहास्रशोथपाण्डुव्रणापहा ॥१९८॥**

हरिद्रा, काञ्चनी, पीता, रातलाई बुझाउने संस्कृतका सबै शब्द, वरवर्णिनी, कृमिघ्नी, हलदी, योषित्प्रिया र हट्टविलासिनी : यी हलेदोका संस्कृत पर्यायवाची नामहरू हुन् । हलेदो पिरो र तीतो हुन्छ । यो रुखो हुन्छ र गर्मी गर्दछ । यसले कफविकार र पित्तविकार नाश गर्दछ तथा शरीरको वर्णलाई उज्यालो पार्दछ । हलेदोले छालाका रोग, प्रमेह, रक्तविकार, सुजन, पाण्डु र घाउखटिरा निको पार्दछ ।

विवरण : सामान्यतः हलेदोको गानुलाई सुकाएर पिसी धुलो बनाएर बेसारका रूपमा प्रयोग गरिन्छ । उमाल्नाले यसमा रहेको गर्मीपना कम हुन्छ । तर प्रमेह र कफजन्य रोगमा काँचै हलेदोको रस उत्तम हुन्छ । हलेदोलाई पहिले केही पात समेत हाली नरम नहुँदासम्म पानीमा उमाल्नू । राम्रो रङ निकाल्न अलिकति गाईको गोबर समेत मिसाउनू । अनि निकालेर पल्टाई पल्टाई निकै दिन हावामा सुकाउनू । राम्ररी सुकेपछि राम्ररी रगडेर बोक्रा आदि निकाल्नू र राख्नू । आवश्यकता पर्दा पिँधेर बेसार बनाउनू । पिनासका रोगीलाई हलेदो वा बेसार दूधमा उमालेर सक्खर मिसाएर खुवाउनू । भर्खर पिनास लागेका व्यक्तिदाई यसको धूप सुँघाउनू र एकाध घण्टासम्म पानी पिउन नदिनू । खोकी लाग्दा यसलाई भुटेर मह वा घिउसँग एक दुई मासा चाट्न दिनू । घिउको गन्ध हटाउन हलेदोको पात प्रयोग गरिन्छ । हलेदो वा बेसार धेरै खानाले मुटुलाई हानी गर्दछ । बेसार धेर खानेले कागती पानी खाने गर्नू । केहीले टोकेर वा काटेर भएका सामान्य घाउमा शुद्ध बेसार लगाउनू ।

## बनहलेदो

**अरण्यहलदीकन्दः कुष्ठवातास्रनाशनः ।**

वनहलेदोले कुष्ठ र वातरक्त रोग नाश गर्दछ ।

नोट : हलेदो जस्तै बोट हुने यो जङ्गलमा हुन्छ । यसका पात हलेदोका पातभन्दा पातला र साना हुन्छन् । गाना पनि साना, पातला र बाटुला हुन्छन् ।

## कपूरहलेदो

**दार्वीभेदाऽऽम्रगन्धा च सुरभीदारु दारु च ॥१९९॥**
**कर्पूरा पद्मपत्रा स्यात्सुरीमत्सुरतारका ।**
**आम्रगंधिर्हरिद्रा या सा शीता वातला मता ॥२००॥**
**पित्तहृन्मधुरा तिक्ता सर्वकण्डूविनाशिनी ।**

दार्वीभेदा, आम्रगन्धा, सुरभीदारु, दारु, कर्पूरा, पद्मपत्रा, सुरीमत् र सुरतारका (सुरभी, सुनरायिका) : यी कपूरहलेदोका संस्कृत पर्यायवाची नामहरू हुन् । आँपको जस्तो बास्ना आउने कपूरहलेदो शीतल, वातकारक, पित्तनाशक, गुलियो, तितो र सबै खालका चिलाउने रोग नाशक हुन्छ ।

## दारुहरिद्रा (चुत्रो)

**दार्वी दारुहरिद्रा च पर्जन्या पर्जनीति च ॥२०१॥**
**कटङ्कटेरी पीता च भवेत्सैव पचम्पचा ।**
**सैव कालीयकः प्रोक्तस्तथा कालेयकोऽपि च ॥२०२॥**
**पीतद्रुश्च हरिद्रुश्च पीतदारु कपीतकम् ।**
**दार्वी निशागुणा किन्तु नेत्र कर्णास्यरोगनुत् ॥२०३॥**

दार्वी, दारुहरिद्रा, पर्जन्या, पर्जनी, कटङ्कटेरी, पीता, पचम्पचा, कालीयक, कालेयक, पीतद्रु, हरिद्रु, पीतदारु र कपीतक : यी दारुहरिद्राका संस्कृत पर्यायवाची नामहरू हुन् । दारुहरिद्रामा पनि हलेदोकै गुण हुन्छन् । विशेष गरी यो आँखा, मुख र कानको रोग नाशक हुन्छ ।

नोट : यो गुल्म जातको वनस्पति हो । यसका जराबाट अति साना हाँगा निस्कन्छन् र यी सबै एकतिर अर्थात् भुइँतिर ढल्किएका हुन्छन् । यसको डाँठ पनि पहेँलो हुन्छ । छ-सात वर्षको बोट पनि सात-आठ फुट सम्म अग्लो हुन्छ । यसका ससाना अमिलो, गुलियो र टर्रो फल हुन्छ । यसको जरा, बोक्रा र डाँठ ओखतीमा प्रयोग हुन्छ ।

## रसाञ्जन

**दार्वीक्वाथसमं क्षीरं पादं पक्त्वा यदा घनम् ।**
**तदा रसाञ्जनाख्यं तन्नेत्रयोः परमं हितम् ॥२०४॥**
**रसाञ्जनं तार्क्ष्यशैलं रसगर्भं च तार्क्ष्यजम् ।**
**रसाञ्जनं कटु श्लेष्मविषनेत्रविकारनुत् ॥२०५॥**

**उष्णं रसायनं तिक्तं छेदनं व्रणदोषहृत् ।**

चुत्रोको काँढापानीमा त्यति नै मात्रामा दूध हाली पकाएर जब एक चौथाई बाँकी हुन्छ र लदरो हुन्छ तब झिकिन्छ । यसैलाई रसाञ्जन भनिन्छ । यो आँखाका लागि अति लाभदायक हुन्छ । रसाञ्जन, तार्क्ष्यशैल, रसगर्भ र तार्क्ष्यज : यी रसाञ्जनका संस्कृत पर्यायवाची नामहरू हुन् । रसाञ्जन पीरो हुन्छ । यो कफविकार, विषविकार र नेत्रविकार नाशक हुन्छ । यसले गर्मी गर्दछ । यो रसायनी, तीतो, छेदन र घाउखटिरा नाशक हुन्छ ।

## बकुची

**अवल्गुजो वाकुची स्यात्सोमराजी सुपर्णिका ॥२०६॥**
**शशिलेखा कृष्णफला सोमा पूतिफलीति च ।**
**सोमवल्ली कालमेषी कुष्ठघ्नी च प्रकीर्त्तिता ॥२०७॥**
**बाकुची मधुरा तिक्ता कटुपाका रसायनी ।**
**विष्टम्भहृद्धिमा रुच्या सरा श्लेष्मास्रपित्तनुत् ॥२०८॥**
**रूक्षा हृद्या श्वासकुष्ठमेहज्वरकृमिप्रणुत् ।**
**तत्फलं पित्तलं कुष्ठकफानिलहरं कटु ॥२०९॥**
**केश्यं त्वच्यं कृमिश्वासकासशोथामपाण्डुनुत् ।**

अवल्गुज, वाकुची, सोमराजी, सुपर्णिका, शशिलेखा, कृष्णफला, सोमा, पूतिफली, सोमवल्ली, कालमेषी र कुष्ठघ्नी : यी बाकुचीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र तीतो हुन्छ तर पचेपछि भने पिरो हुन्छ । यो रसायनी, कब्जियत नाशक, ठण्डी गर्ने, रुचिकारक, दिसा लगाउने, कफनाशक, रक्तपित्तनाशक, रुखो र हृदयका लागि फाइदाजनक हुन्छ । यसले दम, कुष्ठ, प्रमेह, जरो र कीरा नाश गर्दछ । यसको फलले पित्त बढाउँदछ तर कुष्ठ, कफविकार र वातविकार नाश गर्दछ । फलको स्वाद पिरो हुन्छ । यो कपाल र छालाका लागि लाभदायक तथा कीरा, दम, खोकी, सुजन, आमविकार र पाण्डुरोग नाशक हुन्छ ।

नोट : यो जङ्गलका झाडीमा तथा गेगरयुक्त जमिनमा पाइन्छ । यसको बोट चार फिटसम्म अग्लो र स्वतन्त्र हुन्छ । यसका पात अरणीका जस्तै गोला र तीन अमल सम्मका घेराका हुन्छन् । पातका दुबैतिर काला दाग हुन्छन् । नीला वा बैजनी रङ्का दुई अमल सम्मका भेट्नु भएका तीसवटा सम्म फूल फुल्दछन् । साना, गोला, काला, चिल्ला र एक बीज भएका फल फल्दछन् ।

## ताप्रे

**चक्रमर्दः प्रपुन्नाटो दद्रुघ्नो मेषलोचनः ॥२१०॥**
**पद्माटः स्यादेडगजश्चक्री पुन्नाट इत्यपि ।**
**चक्रमर्दो लघुः स्वादू रूक्षः पित्तानिलापहः ॥२११॥**
**हृद्यो हिमः कफश्वासकुष्ठदद्रुकृमीन्हरेत् ।**
**हन्त्युष्णं तत्फलं कुष्ठकण्डूदद्रुविषानिलान् ॥२१२॥**

**गुल्मकासकृमिश्वासनाशनं कटुकं स्मृतम् ।**

चक्रमर्द, प्रपुन्नाट, दद्रुघ्न, मेषलोचन, पद्माट, ऐडगज, चक्री र पुन्नाट : यी ताप्रेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका, स्वादिलो, रुखो, पित्तविकार नाशक, वातविकार नाशक, मुटुका लागि लाभदायक, शीतल गर्ने तथा कफ, दम, कुष्ठ, दाद र कीरानाशक हुन्छ । यसको फलले गर्मी गर्दछ । यसले कुष्ठ, लुतो, दाद, विषविकार र वातविकार गुल्म, खोकी, कीरा र दम नाश गर्दछ । यो पिरो हुन्छ भनिएको छ ।

## उत्तीस (अतीस)

**विषा त्वतिविषा विश्वा शृङ्गी प्रतिविषाऽरुणा ॥२१३॥**
**शुक्लकन्दा चोपविषा भङ्गुरा घुणवल्लभा ।**
**विषा सोष्णा कटुस्तिक्ता पाचनी दीपनी हरेत् ॥२१४॥**
**कफपित्तातिसारामविषकासवमिकृमीन् ।**

विषा, अतिविषा, विश्वा, शृङ्गी, प्रतिविषा, अरुणा, शुक्लकन्दा, उपविषा, भङ्गुरा र घुणवल्लभा : यी उत्तीसका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले गर्मी गर्दछ । यो पिरो र तीतो हुन्छ । यो पाचनी र दीपनी हुन्छ । यसले कफविकार, पित्तविकार, अतिसार, आमविकार, विषविकार, खोकी, वाकवाकी र कीरा नाश गर्दछ ।

## लोध (सेतो र रातो)

**लोध्रस्तिल्लस्तिरीटश्च सावरो गालवस्तथा ॥२१५॥**
**द्वितीयः पट्टिकालोध्रः क्रमुकः स्थूलवल्कलः ।**
**जीर्णपत्रो बृहत्पक्षः पट्टी लाक्षाप्रसादनः ॥२१६॥**
**लोध्रो ग्राही लघुः शीतश्चक्षुष्यः कफपित्तनुत् ।**
**कषायो रक्तपित्तासृग्ज्वरातीसारशोथहृत् ॥२१७॥**

लोध्र, तिल्ल, तिरीट, सावर र गालव : यी सेतो लोधका संस्कृत पर्यायवाची नामहरू हुन् । पट्टिकालोध्र, क्रमुक, स्थूलवल्कल, जीर्णपत्र, बृहत्पक्ष, पट्टी र लाक्षाप्रसादन : यी दोश्रो प्रकारको रातो लोधका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै थरी लोध ग्राही, पचाउन हलुका, शीतल गर्ने, आँखाका लागि लाभदायक तथा कफविकार र पित्तविकार नाशक हुन्छन् । यसको स्वाद टर्रो हुन्छ । यसले रक्तपित्त, रगतविकार, जरो, अतिसार र सुजन नाश गर्दछ ।

## लसुन

**लशुनस्तु रसोनः स्यादुग्रगन्धो महौषधम् ।**
**अरिष्टो म्लेच्छकन्दश्च यवनेष्टो रसोनकः ॥२१८॥**
**यदाऽमृतं वैनतेयो जहार सुरसत्तमात् ।**

**तदा ततोऽपतद् बिन्दुः स रसोनोऽभवद्भुवि ॥२१९॥**
**पञ्चभिश्च रसैर्युक्तो रसेनाम्लेन वर्जितः ।**
**तस्माद्रसोन इत्युक्तो द्रव्याणां गुणवेदिभिः ॥२२०॥**
**कटुकश्चापि मूलेषु तिक्तः पत्रेषु संस्थितः ।**
**नाले कषाय उद्दिष्टो नालाग्रे लवणः स्मृतः ॥२२१॥**
**बीजे तु मधुरः प्रोक्तो रसस्तद्गुणवेदिभिः ।**
**रसोनो वृंहणो वृष्यः स्निग्धोष्णः पाचनः सरः ॥२२२॥**
**रसे पाके च कटुकस्तीक्ष्णो मधुरको मतः ।**
**भग्नसन्धानकृत्कण्ठयो गुरुः पित्तास्रवृद्धिदः ॥**
**बलवर्णकरो मेधाहितो नेत्र्यो रसायनः ॥२२३॥**
**हृद्रोगजीर्णज्वरकुक्षिशूलविबन्धगुल्मारुचिकासशोफान् ।**
**दुर्नामकुष्ठानलसादजन्तुसमीरणश्वासकफांश्च हन्ति ॥२२४॥**

लशुन, रसोन, उग्रगन्ध, महौषध, अरिष्ट, म्लेच्छकन्द, यवनेष्ट र रसोनक : यी लसुनका संस्कृत पर्यायवाची नामहरु हुन् । जब गरुडले इन्द्रसँग अमृत खोसेर लेराइरहेका थिए तब त्यो अमृतका खसेका थोपाबाट पृथ्वीमा लसुन उम्रिए । यसमा अमिलो बाहेकका पाँच वटै रस हुन्छन् । यसैले पदार्थका गुण-विशेषज्ञले यसलाई रसोन नाम दिएका हुन् । लसुनको जरा पिरो, पात तीतो, डाँठ टर्रो र डाँठको टुप्पो नुनिलो हुन्छ भनिएको छ । यसैगरी यसको गेडा गुलियो हुन्छ भनी गुणविज्ञले बताएका छन् । लसुन पौष्टिक, वीर्यवर्धक, चिल्लो, गर्मी गर्ने, पाचन र दिसा खुलाउने गुणको हुन्छ । यसको पचेपछिको रस पिरो, तिक्खर र गुलियो हुन्छ भनिन्छ । यसले च्यातिएको छाला आदि चाँडै जोड्दछ र घाँटीका लागि लाभदायक हुन्छ । यो पचाउन कठिन, पित्त र रक्त वर्धक, बलवर्धक, वर्णमा चमक लेराउने, दिमागको ग्रहणगर्ने शक्ति बढाउने, आँखाका लागि हितकारी र रसायनी हुन्छ । मुटुका रोग, अजीर्ण, जरो, कोखाको शूल, गोटा परेको, गुल्म, अरुची, खोकी, सुजन, अल्काई, कुष्ठ कमजोर पाचन शक्ति, कीरा, वातविकार, दम र कफविकार यसले नाश गर्दछ ।

**(मद्यं मांसं तथाम्लञ्च हितं लशुनसेविनाम् ।**
**व्यायाममातपं रोषमतिनीरं पयो गुडम् ॥**
**रसोनमश्नन् पुरुषस्त्यजेदेतान् निरन्तरम् ॥)**

मद्य, मासु र अमिलो खानेका लागि लसुन हितकारी हुन्छ भने यो खानेले कसरत, घामको सेवन, रिस गर्ने काम, धेरै पानी पिउन, धेरै दूध पिउन र धेरै सक्खर खान हुँदैन ।

## प्याज

**पलाण्डुर्यवनेष्टश्च दुर्गन्धो मुखदूषकः ।**
**पलाण्डुस्तु गुणैर्ज्ञेयो रसोनसदृशो गुणैः ॥२२५॥**
**स्वादुः पाके रसेऽनुष्णः कफकृन्नातिपित्तलः ।**
**हरते केवलं वातं बलवीर्यकरो गुरुः ॥२२६॥**

पलाण्डु, यवनेष्ट, दुर्गन्ध र मुखदूषक : यी प्याजका संस्कृत पर्यायवाची नामहरू हुन् । गुणका दृष्टिले प्याजमा पनि लसुनकै जस्ता गुण हुन्छन् । यसको पचेपछिको रस गुलियो हुन्छ । यसले शीतल गर्दछ र कफ बढाउँदछ तर धेरै पित्तविकार गर्दैन । यसले वातविकार मात्र नाश गर्दछ तर बल र वीर्य बढाउँदछ । यो पचाउन कठिन हुन्छ ।

## भलायो

भल्लातकं त्रिषु प्रोक्तमरुष्कोरुष्करोऽग्निकः ।
तथैवाग्निमुखी भल्ली वीरवृक्षश्च शोफकृत् ॥२२७॥
भल्लातकफलं पक्वं स्वादुपाकरसं लघु ।
कषायं पाचनं स्निग्धं तीक्ष्णोष्णं छेदि भेदनम् ॥२२८॥
मेध्यं वह्निकरं हन्ति कफवातव्रणोदरम् ।
कुष्ठार्शोग्रहणीगुल्मशोफानाहज्वरकृमीन् ॥२२९॥
तन्मज्जा मधुरा वृष्या बृंहणी वातपित्तहा ।
वृन्तमारुष्करं स्वादु पित्तघ्नं केश्यमग्निकृत् ॥२३०॥
भल्लातकः कषायोष्णः शुक्रलो मधुरो लघुः ।
वातश्लेष्मोदरानाहकुष्ठार्शोग्रहणीगदान् ॥२३१॥
हन्ति गुल्मज्वरश्वित्रवह्निमान्द्यकृमिव्रणान् ।

भल्लातक, अरुष्क, अरुष्कर, अग्निक, अग्निमुखी, भल्ली, वीरवृक्ष र शोफकृत् : यी भलायोका संस्कृत पर्यायवाची नामहरू हुन् । भलायोको पाकेको फल र पचेपछिको रस गुलियो हुन्छ । यो पचाउन सहज, टर्रो, पाचन, चिल्लो, तिक्खर, गर्मी गर्ने, छेदन, भेदन, पवित्र (वा ग्रहणगर्ने क्षमता वर्धक) र पाचकाग्नि वर्धक हुन्छ । यसले कफविकार, वातविकार, घाउ, पेटका रोग, कुष्ठ, अल्काई, संग्रहणी, गुल्म, सुजन, आनाह, जरो र कीरा नाश गर्दछ । यसको गुदी गुलियो हुन्छ । यो गुदी वीर्यवर्धक, पौष्टिक र वातविकार र पित्तविकार नाशक हुन्छ । भलायोको भेट्नु पनि स्वादिलो, पित्तनाशक, कपालका लागि लाभकारी र पाचकाग्नि बढाउने गुणको हुन्छ । भलायो टर्रो, गर्मी गर्ने, शुक्रवर्धक, गुलियो र पचाउन सहज हुन्छ । यसले वातविकार, कफविकार, पेटका रोग, आनाह, कुष्ठ, अल्काई, ग्रहणी, गुल्म, जरो, सेतो कुष्ठ, कमजोर पाचनशक्ति, कीरा र घाउ नाश (ठिक) गर्दछ ।
नोट : भलायोको फल माथि हुने कालो गेडा र चोप विषालु हुन्छ । प्रशोधन नगरी प्रयोग गर्न हुन्न । यसले मुखभरी वा अन्यत्र समेत खटिरै खटिरा उमार्न सक्दछ । भलायो उश्रिनु भनेको यही हो ।

## भाँग वा भाङ

भङ्गा गञ्जा मातुलानी मादिनी विजया जया ॥२३२॥
भङ्गा कफहरी तिक्ता ग्राहिणी पाचनी लघुः ।
तीक्ष्णोष्णा पित्तला मोहमदवाग्वह्निवर्द्धिनी ॥२३३॥

भङ्गा, गञ्जा, मातुलानी, मादिनी, विजया र जया : यी भाङका संस्कृत पर्यायवाची नामहरू हुन् । भाङले कफनाश गर्दछ । यो तीतो, संग्राही, पाचनी, पचाउन हलुका, तिक्खर, गर्मी गर्ने, पित्तवर्धक, मोहवर्धक, मदवर्धक, बोलीवर्धक र पाचकाग्निवर्धक हुन्छ ।

## अफिमका फलका बोक्रा

**तिलभेदः खसतिलः खाखसश्चापि संस्मृतः ।**
**स्यात् खाखसफलोद्भूतं वल्कलं शीतलं लघु ॥२३४॥**
**ग्राहि तिक्तं कषायं च वातकृत् कफकासहृत् ।**
**धातूनां शोषकं रूक्षंमदकृद्वाग्विवर्द्धनम् ॥२३५॥**
**मुहुर्मोहकरं रुच्यं सेवनात्पुंस्त्वनाशनम् ।**

तिलभेद, खसतिल र खाखस : यी अफिम फलको बोक्राका संस्कृत पर्यायवाची नामहरू हुन् । अफिमको फलको बोक्रा शीतल गर्ने, पचाउन हलुका, सङ्ग्राही, तीतो, टर्रो, वातविकार गर्ने, कफविकार नाशक, खोकी नाशक, शरीरका धातुलाई सुकाउने, रुखो, नसा लगाउने, बोली बढाउने, पटक पटक मोह गराउने र रुची जगाउने हुन्छ । तर यसको लगातार सेवनले नुपंसकत्व हुन्छ ।

## अफिम (फलको रस)

**उक्तं खसफलक्षीरमाफूकमहिफेनकम् ॥२३६॥**
**आफूकं शोषणं ग्राहि श्लेष्मघ्नं वातपित्तलम् ॥**
**तथा खसफलोद्भूतवल्कलप्रायमित्यपि ॥२३७॥**

खसफलक्षीर, आफूक र अहिफेनक : यी अफिमका संस्कृत पर्यायवाची नामहरू हुन् । अफिम शोषक, सङ्ग्राही, कफनाशक, वातकारक र पित्तकारक हुन्छ । यसका साथै अफिमको बोक्रामा गुण पनि यसमा हुन्छन् ।

## अफिमका गेडा

**उच्यन्ते खसबीजानि ते खाखसतिला अपि ।**
**खसबीजानि बल्यानि वृष्याणि सुगुरूणि च ॥२३८॥**
**शमयन्ति कफं तानि जनयन्ति समीरणम् ।**

खसबीज र खाखसतिल : यी अफिमका गेडाका संस्कृत पर्यायवाची नामहरू हुन् । अफिमका दाना बल र वीर्य वर्धक, पचाउन कठिन, कफनाशक र वातवर्धक हुन्छ ।

## सिँधेनुन

**सैन्धवोऽस्त्री शीतशिवं मणिमन्थञ्च सिन्धुजम् ॥२३९॥**
**सैन्धवं लवणं स्वादु दीपनं पाचनं लघु ।**
**स्निग्धं रुच्यं हिमं वृष्यं सूक्ष्मं नेत्र्यं त्रिदोषहृत् ॥२४०॥**

सैन्धव, शीतशीव, मणिमन्थ र सिन्धुज : यी सिँधेनुनका संस्कृत पर्यायवाची नामहरू हुन् । सैन्धव शब्द स्त्रीलिङ्गमा हुँदैन । सिँधेनुन स्वादिलो, दीपन, पाचन र पचाउन हलुका हुन्छ । यो चिल्लो, रुचि जगाउने, शीतल, वीर्यवर्धक, सूक्ष्म, आँखाका लागि लाभदायक र त्रिदोषनाशक हुन्छ ।

## साँमरी नुन

**शाकम्भरीयं कथितं गडाख्यं रोमकं तथा ।**
**गडाख्यं लघु वातघ्नमत्युष्णं भेदि पित्तलम् ॥२४१॥**
**तीक्ष्णोष्णं चापि सूक्ष्मं चाभिष्यन्दि कटुपाकि च ।**

शाकम्भरीय, गड र रोमक : यी साँमरी नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नुन पचाउन हलुका, वातविकार नाशक, अती गर्मी गर्ने, भेदन, पित्तकारक, तिक्खर, सूक्ष्म र अभिष्यन्दि हुन्छ । यो पचेपछि पिरो हुन्छ ।

नोट : साँमर भारतको पश्चिमी राजस्थान, जयपुरमा रहेको एउटा नुनिलो पानीको ताल हो । यसको किनारको शहरलाई साँभर (साँमर) भनिन्छ । यो शहरको प्राचीन नाम शाकम्भरी हो । यही तालको पानी सुकाएर बनाइने नुनलाई साँमरी नुन भनिन्छ ।

## समुद्री नुन

**सामुद्रं यत्तु लवणमक्षीवं वशिरं च तत् ॥२४२॥**
**सामुद्रजं सागरजं लवणोदधिसम्भवम् ।**
**सामुद्रं मधुरं पाके सतिक्तं मधुरं गुरु ॥२४३॥**
**नात्युष्णं दीपनं भेदि सक्षारमविदाहि च ।**
**श्लेष्मलं वातनुत्तीक्ष्णमरूक्षं नातिशीतलम् ॥२४४॥**

सामुद्र, अक्षीव, वशिर, सामुद्रज, सागरज र लवणोदधिसंभव : यी समुद्री नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नुन मिठो हुन्छ र पचेपछि तीतो एवं गुलियो हुन्छ । यो पचाउन कठिन, केही गर्मी गर्ने, दीपन, भेदी, नुनिलो, डाह नगर्ने, कफविकार गर्ने, वातविकार नाशक, तिक्खर, चिल्लो र केही शीतलता दिने गुणको हुन्छ ।

नोट : समुद्रको पानीलाई ठूलठूला खाल्डामा भरिन्छ । एकदिन पछि त्यो जललाई पुनः अर्को खाल्डोमा सारिन्छ । पुनः तेश्रो खाल्डोमा सारेपछि त्यो पानी सुक्न दिइन्छ । यो जम्दछ र सेतो हुन्छ । केही ओखती हाली यसलाई सफा पनि गरिन्छ । यो नुन प्रायः बेलायतमा बन्दछ ।

## खारा नुन वा बिरे नुन (बिड)

**बिडं पाक्यं च कृतकं तथा द्राविडमासुरम् ।**
**बिडं सक्षारमूर्ध्वाधः कफवातानुलोमनम् ॥२४५॥**
**दीपनं लघु तीक्ष्णोष्णं रूक्षं रुच्यं व्यवायि च ।**
**विबन्धानाहविष्टम्भोदर्दगौरवशूलनुत् ॥२४६॥**

बिड, पाक्य, कृतक, द्राविड र आसुर : यी बिरेनुनका संस्कृत पर्यायवाची नामहरू हुन् । बिरेनुन नुनिलो हुन्छ । यसले कफलाई माथितिर र वातलाई तलबाट निकाल्दछ । यो दीपन, पचाउन सहज, तिक्खर, गर्मी गर्ने, रुखो, रुची जगाउने र व्यवायी हुन्छ । यसले विबन्ध, आनाह, विष्टम्भ, उदर्द, भारीपन र शूल नाश गर्दछ ।
नोटः यो अधिकतर खानीबाट निकालिन्छ भने केही मात्रामा कृत्रिम तरिकाले पनि बनाइन्छ ।

## सौंचर (कालो) नुन

**सौवर्चलं स्याद्रुचकमक्षपाकं च धातुमत् ।**
**रुचकं रोचनं भेदि दीपनं पाचनं परम् ॥२४७॥**
**सस्नेहं वातनुन्नातिपित्तलं विशदं लघु ।**

सौवर्चल, रुचक, अक्षपाक र धातुमत् : यी सौंचर नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो नुन रुचिकारक, भेदनी, दीपनी र अति नै पाचनी हुन्छ । यो चिल्लो, वातनाशक, थोरै पित्तकारक, चम्किलो ( विशद) र पचाउन हलुका हुन्छ ।

## खनिज नुन

**औद्भिदं पांशुलवणं यज्जातं भूमितः स्वयम् ॥२४८॥**
**क्षारं गुरु कटु स्निग्धं शीतलं वातनाशनम् ।**

औद्भिद र पांशुलवण : यी खनिज नुनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो जमिनबाट आफैं उत्पन्न हुन्छ । खनिज नुन नुनिलो, पचाउन कठिन, पिरो, चिल्लो, शीतल गर्ने र (तताएर पोको पारी सेकेमा) वातरोग नाशक हुन्छ ।

नोट : यो नुनिलो माटो भएको ठाउँमा हुन्छ । यस्तो ठाउँको माटोलाई पानीमा भिजाइन्छ । नुनको मात्रा पानीमा पग्लेर आउँदछ । अनि माटो अलग्याएर पानी सुकाइन्छ । अनि यो नुनको कण बन्दछ ।

## चनाको खार वा नुन

**चणकाम्लकमत्युष्णं दीपनं दन्तहर्षणम्॥२४९॥**
**लवणाम्लरसं रुच्यं शूलाजीर्णविबन्धनुत्।**

चनाको खार वा नुन अति नै गर्मीकारक हुन्छ। यसले जठराग्निलाई बाल्दछ। गिजाबाट रगत निकाल्दछ। यो नुनिलो र अमिलो स्वादको हुन्छ। रुचिकारक हुनुका साथै यसले शूल, अजीर्ण र कब्जियत ठिक गर्दछ।

नोट : चनाका बोट बढेपछि त्यसमा नुनिलो पन बस्न थाल्दछ। यतिखेर चनाको बोटमाथि राती पातलो कपडा ओढाइने गरिन्छ। रातभरमा यो कपडा भिज्दछ। बिहान भएपछि यो कपडा एउटा भाँडामा निचोरिन्छ र सुकाइन्छ। यसरी चनाको बोटबाट नुन निकाल्ने काम गरिन्छ।

## जवाखार

**पाक्यं क्षारो यवक्षारो यावशूको यवाग्रजः॥२५०॥**
**स्वर्जिकाऽपि स्मृतः क्षारः कापोतः सुखवर्चकः।**
**कथितः स्वर्जिकाभेदो विशेषज्ञैः सुवर्चिका॥२५१॥**
**यवक्षारो लघुः स्निग्धः सुसूक्ष्मो वह्निदीपनः।**
**निहन्ति शूलवातामश्लेष्मश्वासगलामयान्॥२५२॥**
**पाण्ड्वर्शोग्रहणीगुल्मानाहप्लीहहृदामयान्।**
**स्वर्जिकाऽल्पगुणा तस्माद्विज्ञेया गुल्मशूलहृत्॥२५३॥**
**सुवर्चिका स्वर्जिकावद् बोद्धव्या गुणतो जनैः।**

पाक्य, क्षार, यवक्षार, यावशूक र यवाग्रज : यी जवाखारका संस्कृत पर्यायवाची नामहरू हुन्। स्वर्जिका, क्षार, कापोत र सुखवर्चक : यी सज्जीखारका संस्कृत पर्यायवाची नामहरू हुन्। विशेषज्ञहरूले सुवर्चिकालाई सज्जीखारकै एक प्रकार भनी बताएका छन्। जवाखार पचाउन हलुका, चिल्लो, अति सूक्ष्म र जठराग्नि बाल्ने गुणको हुन्छ। यसले शूल, वातविकार, आमविकार, कफविकार, दम, घाँटीका रोग, पाण्डु, अल्काई, सङ्ग्रहणी, गुल्म, आनाह, फियोका रोग र मुटुका रोग नाश गर्दछ। सज्जीखारमा जवाखरका भन्दा कम गुण हुन्छन्। विशेष गरी यसले गुल्म र शूल नाश गर्दछ। सुवर्चिकामा सज्जीखारको जस्तै गुण हुन्छ भनी विशेषज्ञले बताएका छन्।

नोट : जब जौमा बाला लाग्न थाल्दछन् तब यसलाई जरै समेत उखेलेर लेराउनू। माटो पखाल्नू। यसपछि सुकाउनू। अनि डढाएर खरानी बनाउनू। यो खरानीलाई चौबीस घण्टासम्म खरानीको आठ गुना पानीमा हालेर भिजाउनू। डढाउँदा खरानी कालो छ भने भिजाउनुभन्दा अघि फलामको कराईमा हाली खरानी सेतो नहुँदासम्म पकाउनू। यसपछि माथिको सफा पानी निथार्नू वा फिल्टरमा छान्नू। अनि फेरी यसलाई कराहीमा पकाउनू। पानी सुकेपछि कराहीको पिँधमा जम्मा हुने धुलो वा क्षारलाई खुर्केर कुनै भाँडामा सुरक्षित तरिकाले राख्नू। यही नै जवाखार हो। यसको सामान्य मात्रा १-२ रत्ति हो। एक रत्तिमा १८२.२५ मि.ग्रा. हुन्छ।

## स्वाग, सुहागा

**सौभाग्यं टङ्कणं क्षारं धातुद्रावकमुच्यते ॥२५४॥**
**टङ्कणं वह्निकृद्रूक्षं कफहृद्वातपित्तकृत् ।**

सौभाग्य, टङ्कण, क्षार र धातुद्रावक : यी स्वागका संस्कृत पर्यायवाची नामहरू हुन् । स्वाग अग्निवर्धक, रुखो, कफनाशक, वातकारक र पित्तकारक हुन्छ । नोट : यो एक खनिज पदार्थ हो ।

## क्षारद्वय, क्षारत्रय र क्षाराष्टक

**स्वर्जिका यावशूकश्च क्षारद्वयमुदाहृतम् ॥२५५॥**
**टङ्कणेन युतं तत्तु क्षारत्रयमुदीरितम् ।**
**मिलितं तूक्तगुणकृद्विशेषाद्गुल्महृत्परम् ॥२५६॥**
**पलाश वज्रि शिखरि चिञ्चाऽर्कतिलनालजाः ।**
**यवजः स्वर्जिका चेति क्षाराष्टकमुदाहृतम् ॥२५७॥**
**क्षारा एतेऽग्निना तुल्या गुल्मशूलहरा भृशम् ।**

साज्जीखार र यवाखारलाई क्षारद्वय भनिन्छ । क्षारद्वयमा स्वाग मिसाएपछि क्षारत्रय हुन्छ । यी तीनका जेजस्ता गुण बताइएका छन् सम्मिश्रणमा त्यो सबै गुण हुन्छ । विशेषतः यसले गुल्म नाश गर्दछ । यसमा पलाँश, सिउँडी, ऐँजेरु (वा गुनाभा), अमिली, आँक र तिलको डाँठको क्षार मिसाएपछि क्षाराष्टक हुन्छ । यी सबै क्षार अग्निसमान हुन्छन् र गुल्म र शूल नाश गर्न उत्तम मानिन्छन् ।

## चुक अमिलो

**चुक्रंसहस्रवेधि स्याद्रसाम्लं शुक्तमित्यपि ॥२५८॥**
**चुक्रमत्यम्लमुष्णञ्च दीपनं पाचनं परम् ।**
**शूलगुल्मविबन्धामवातश्लेष्महरं सरम् ॥**
**वमितृष्णाऽऽस्यवैरस्यहृत्पीडावह्निमान्द्यहृत् ॥२५९॥**

चुक्र, सहस्रवेधि, रसाम्ल र शुक्त : यी चुकअमिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अती नै अमिलो, गर्मी गर्ने, दीपन र अति नै पचाउने शक्तिको हुन्छ । यसले शूल, गुल्म, विबन्ध, आमजन्य वातविकार र कफविकार नाश गर्दछ र दिसा खुलाउँदछ । यसले वाकवाकी, तिर्खा, मुखको स्वाद हराएको, मुटुको पीडा र कमजोर पाचन शक्ति नाश गर्दछ । नोट : अनेक प्रकारका अमिलो फलको रस पकाएर चूकअमिलो तयार गरिन्छ । यस्तो चूक अधेरै लामो समयसम्म बिग्रँदैन । बजार पाइने सिरका (भिनेगर) मा फलफूलको रस बाहेक अन्य कुरा मिसाइएको के कति छ त्यो हेरेर मात्र प्रयोग गर्नु पर्दछ । अन्य कुरा मिसाएपछि अमिलोको स्वाद त दिन्छ तर फाइदा गर्दैन ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे हरीतक्यादिवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको हर्रो-वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## अथ कर्पूरादिवर्गः
## (कपूर-वर्ग)
### कपूर

**पुंसि क्लीबे च कर्पूरः सिताभ्रो हिमवालुकः ।**
**घनसारश्चन्द्रसंज्ञो हिमनामाऽपि स स्मृतः ॥१॥**
**कर्पूरः शीतलो वृष्यश्चक्षुष्यो लेखनो लघुः ।**
**सुरभिर्मधुरस्तिक्तः कफपित्तविषापहः ॥२॥**
**दाहतृष्णाऽस्यवैरस्यमेदोदौर्गन्ध्यनाशनः ।**
**कर्पूरो द्विविधः प्रोक्तः पक्वापक्वप्रभेदतः ॥३॥**
**पक्वात्कर्पूरतः प्राहुरपक्वं गुणवत्तरम् ।**

कर्पूर शब्द पुंलिङ्ग र नपुंसक लिङ्गमा प्रयोग हुन्छ । सिताभ्र, हिमवालुक, घनसार, चन्द्रमा र चन्द्रमालाई बुझाउने शब्द तथा हिम र हिमलाई बुझाउने शब्द : यी कपूरका संस्कृत पर्यायवाची नामहरू हुन् । कपूर शीतल गर्ने, वीर्यवर्धक, आँखाका लागि लाभदायक, लेखनी, पचाउन हलुका, सुगन्धयुक्त तथा गुलियो र तीतो स्वादको हुन्छ । यसले कफविकार, पित्तविकार, विषविकार, डाह, तिर्खा, मुखको बिग्रेको स्वाद, बोसोविकार र दुर्गन्ध नाश गर्दछ । कपूर पक्व र अपक्व गरी दुई किसिमको हुन्छ । पक्वभन्दा अपक्व कपूर धेरै गुनिलो हुन्छ भनी वैद्यहरूले बताएका छन् ।

### चीनिया कपूर

**चीनाकसंज्ञः कर्पूरः कफक्षयकरः स्मृतः ॥४॥**
**कुष्ठकण्डूवमिहरस्तथा तिक्तरसश्च सः ।**

चीनिया कपूरलाई संस्कृतमा चीनाक भनिन्छ । यसले कफविकार, कुष्ठ, लुतो र वाकवाकी नाश गर्दछ । यो तीतो हुन्छ ।

### कस्तूरी

**मृगनाभिर्मृगमदः कथितस्तु सहस्रभित् ॥५॥**
**कस्तूरिका च कस्तूरी वेधमुख्या च सा स्मृता ।**

**कामरूपोद्भवा कृष्णा नैपाली नीलवर्णयुक् ॥६॥**
**काश्मीरी कपिलच्छाया कस्तूरी त्रिविधा स्मृता ।**
**कामरूपोद्भवा श्रेष्ठा नैपाली मध्यमा भवेत् ॥७॥**
**काश्मीरदेशसम्भूता कस्तूरी ह्यधमा मता ।**
**कस्तूरिका कटुस्तिक्ता क्षारोष्णा शुक्रला गुरुः ॥८॥**
**कफवातविषच्छर्दिशीतदौर्गन्ध्यशोषहृत् ।**

मृगनाभि, मृगमद, सहस्रभिद्, कस्तूरिका, कस्तूरी र वेधमुख्या : यी कस्तूरीका संस्कृत पर्यायवाची नामहरू हुन् । रङ अनुसार यो तीन किसिमको हुन्छ । कामरूप देशमा हुने कस्तूरी कालो रङको हुन्छ । नेपालमा हुने कस्तूरी नीलो रङको हुन्छ । काश्मीरमा हुने कस्तूरी कैलो रङको हुन्छ । यी तीन कस्तूरीमध्ये कामरूपको उत्तम, नेपालको मध्यम र काश्मीरको अधम हुन्छ । कस्तूरीको स्वाद पिरो र तीतो हुन्छ । यसमा क्षर वा नुनिलो पना हुनुका साथै यसले गर्मी गर्दछ । यो वीर्यवर्धक र पचाउन कठिन हुन्छ । यसले कफविकार, वातविकार, विषविकार र वाकवाकी नाश गर्दछ । यसले ठण्डी, दुर्गन्ध र सुजन नाश गर्दछ ।

नोट : भाले कस्तूरीमृगको जननेन्द्रियको मणिलाई छोप्ने छालाको एक थैली हुन्छ । यो थैली नाइटो नजिक वा नाइटो र जननेन्द्रिय ढाक्ने आवरणको बीचमा हुन्छ । यसका आकार अण्डाकार र सवा एकदेखि तीन इञ्च लामो तथा एकदेखि दुई इञ्चसम्म चौडा हुन्छ । यसको मुखमा रौंयुक्त एक सानो प्वाल हुन्छ । अर्कोभाग साँगुरिँदै गई जननेन्द्रिय छोप्ने छालाको मुखसम्म गएर जोडिएको हुन्छ । जननेन्द्रियबाट बहेको रस गएर सोही थैलोमा जम्मा हुन्छ । सुकेपछिको यही रसलाई कस्तूरी भनिन्छ । जवान कस्तूरीमृगको कस्तूरी बढी सुगन्धित हुन्छ । आफूबाटै आएको सुगन्धलाई अन्तबाट आएको ठान्दै मृग विरुवा सुँघ्दै हिँड्दछ र मारिन्छ । कस्तूरीमृगमा यसरी जम्मा हुने कस्तूरी बढीमा साडे दुई तोलासम्म पाइएको छ । यो अत्यन्त दुर्लभ र वसारपसार गर्न प्रतिबन्धित पदार्थ हो । बजारमा कस्तूरी भनेर जे दिइन्छ त्यो कुन जनावरको छाला हो बेच्नेलाई पनि थाहा हुँदैन । शिकारीहरुले मृग मारेपछि नाइटो काट्दछन् र त्यसलाई घाममा सुकाउँदछन् । अनि यसलाई त्यही मृगको रौंले बेरी छालाको थैलोमा हालेर सिलबन्दी गरी बट्टा वा टिनको बाकसमा हालेर बाहिर काठको बासकले मोरी तस्करी गर्ने गर्दछन् ।

## लताकस्तूरी

**लता कस्तूरिका तिक्ता स्वाद्वी वृष्या हिमा लघुः ॥९॥**
**चक्षुष्या छेदिनी श्लेष्मतृष्णाबस्त्यास्यरोगहृत् ।**

लताकस्तूरी तीतो र स्वादिलो हुन्छ । यो वीर्यवर्धक, शीतल गर्ने र पचाउन हलुका हुन्छ । यो आँखाका लागि लाभदायक, छेदन, कफनाशक, तिर्खानाशक तथा तल्लोपेट र मुखका रोग नाशक हुन्छ ।

नोट : यसको बोट प्रायः २-३ फुट अग्लो, भुसयुक्त र बनतोरीयाँको जस्तो हुन्छ । पात पनि रामतोरियाँकै जस्ता गोला, किनारा छिनेका र ३-५ भागमा विभाजित हुन्छन् । फूल पनि रामतोरियाँकै जस्ता ३-४ इञ्च बाटुला घण्टका आकारका हुन्छन् । फल पनि रामतोरियाकै जस्ता २-३ इञ्च लामा हुन्छन् । गेडा हल्का चेप्टा र काला हुन्छन् । यी गेडा माड्दा कस्तूरीको जस्तो बास्ना आउँदछ ।

## गन्धमार्जारवीर्य (जबादकस्तूरी वा जवा कस्तूरी)

**गन्धमार्जारवीर्यन्तु वीर्यकृत्कफवातहृत्॥१०॥**
**कण्डूकुष्ठहरं नेत्र्यं सुगन्धं स्वेदगन्धनुत्।**

यो वीर्यजनक, कफवात नाशक, लुतो र कुष्ठ नाशक, आँखाका लागि लाभकारी, सुगन्धयुक्त र पसिनाको गन्ध हटाउने गुणको हुन्छ ।

नोटः यो सुगन्धपदार्थ गन्धमार्जार नामक एक थरी बिरालोको पुच्छरभन्दा तल हुने थैलीमा पाइने प्रव्य पदार्थ हो । यो जीव अफ्रिका, दक्षिण एशिया र भारतको मालाबार प्रान्तमा पाइन्छ । यसको उचाई बिरालोको जत्रै तर पुच्छर धेरै लामो हुन्छ । शरीरमा गहिरा टिका (बुट्टा) हुन्छन् । मलद्वार र पुच्छरका बीचमा पुच्छर मुनि एक ठूलो थैली हुन्छ । यो थैली दुई खण्डको हुन्छ । यो थैलीमा हुने तरल पदार्थलाई सिह्वेट भनिन्छ । प्राकृतिक रूपमा यसको गन्ध अति नै तीक्ष्ण र असह्य हुन्छ । तर, जब यसलाई अरु वस्तुसँग मिसाएर तयार पारिन्छ तब यसबाट कस्तूरीको जस्तो सुगन्ध आउन थाल्दछ । यो तरल पदार्थ निकाल्न बिरालोलाई पिँजडामा थुनी लटचाएर निचोर्ने गरिन्छ । यसका खेती गर्नेहरु खेतबारीमा बाँस गाड्दछन् । यो बिरालो त्यसमा आएर आफ्नो जननेन्द्रिय रगड्दछ र वीर्यस्खलन गर्दछ । त्यो वीर्य बाँसमा लाग्दछ । यसैलाई जम्मा पारेर बेच्ने गर्दछन् । अरु कतिपयले भने यसलाई मारेर अण्डकोष उल्टचाई नसा आदि निकालेर फाल्दछन् र त्यसभित्र घाँस भरी सुकाएर बेच्ने गर्दछन् । यो वीर्य आलोमा हल्का पहेँला र सेतो रङ्को, नरम र महजस्तो गाढा हुन्छ । पुरानो भएपछि कालोपन देखिन्छ । सेतो रङ्कोलाई गुणस्तरहीन मानिन्छ । यसलाई सुत्लोमा चोपी आगोमा सेकाउँदा पग्लेर तेल भए नक्कली र एकैठाउँमा जम्मा भए सक्कली मानिन्छ ।

## चन्दन

**श्रीखण्डं चन्दनं न स्त्री भद्र श्रीस्तैलपर्णिकः॥११॥**
**गन्धसारो मलजयस्तथा चन्द्रद्युतिश्च सः ।**
**स्वादे तिक्तं कषे पीतं छेदे रक्तं तनौ सितम्॥१२॥**
**ग्रन्थिकोटरसंयुक्तं चन्दनं श्रेष्ठमुच्यते ।**
**चन्दनं शीतलं रूक्षं तिक्तमाह्लादनं लघु॥१३॥**
**श्रमशोषविषश्लेष्मतृष्णापित्तास्रदाहनुत्।**

श्रीखण्ड, चन्दन (यी दुई स्त्रीलिङ्गमा हुँदैनन्), भद्रश्री, तैलपर्णिक, गन्धसार, मलयज र चन्द्रद्युति : यी चन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । स्वादमा तीतो, घोट्दा हल्का पहेँलो, टुक्रा पार्दा रातो, हेर्नमा सेतो तथा गाँठा भएको र भित्र धोत्रो पसेको चन्दन ओखतीका लागि श्रेष्ठ चन्दन हुन्छ । चन्दन शीतल गर्ने, रुखो, तीतो, मनलाई आनन्द दिने, पचाउन हलुका तथा थकाई, सुजन, विषविकार, कफविकार, तिर्खा, पित्तविकार, रक्तविकार र डाह नाशक हुन्छ ।

## पहेँलो चन्दन

**कालीयकं तु कालीयं पीताभं हरिचन्दनम् ॥१४॥**
**हरिप्रियं कालसारं तथा कालानुसार्यकम् ।**
**कालीयकं रक्तगुणं विशेषाद् व्यङ्गनाशनम् ॥१५॥**

कालीयक, कालीय पीताभ, हरिचन्दन, हरिप्रिय, कालसार र कालानुसार्यक : यी पहिँलो चन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका गुण रातोचन्दनका जस्तै हुन्छन् । विशेषतः यसले अनुहारको व्यङ्गरोग ठिक गर्दछ ।

### रक्तचन्दन

**रक्तचन्दनमाख्यातं रक्ताङ्गं क्षुद्रचन्दनम् ।**
**तिलपर्णं रक्तसारं तत्प्रवालफलं स्मृतम् ॥१६॥**
**रक्तं शीतं गुरु स्वादुच्छर्दितृष्णाऽस्रपित्तहृत् ।**
**तिक्तं नेत्रहितं वृष्यं ज्वरव्रणविषापहम् ॥१७॥**

रक्तचन्दन, रक्ताङ्ग, क्षुद्रचन्दन, तिलपर्ण, रक्तसार र प्रवालफल : यी रातोचन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । रातोचन्दनमा शीतल गर्ने, पचाउन कठिन हुने, स्वादिलो, वाकवाकी हटाउने, तिर्खा मेटाउने, रगतका विकार नाश गर्ने, पित्तविकार नाश गर्ने, तीतो, आँखाका लागि फाइदा गर्ने, पौष्टिक एवं वीर्यवर्धक, जरो नाश गर्ने, घाउ निको पार्ने र विषको असर हटाउने गुण हुन्छ ।

### बकचन्दन

**पतङ्गं रक्तसारञ्च सुरङ्गं रञ्जनं तथा ।**
**पट्टरञ्जकमाख्यातं पत्तूरञ्च कुचन्दनम् ॥१८॥**
**पतङ्गं मधुरं शीतं पित्तश्लेष्मव्रणास्रनुत् ।**
**हरिचन्दनवद्वेद्यं विशेषाद्दाहनाशनम् ॥१९॥**

पतङ्ग, रक्तसार, सुरङ्ग, रञ्जन, पट्टरञ्जक, पत्तूर र कुचन्दन : यी बकचन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतल गर्ने, पित्तविकार नाशक, कफविकार नाशक, घाउखटिरा नाशक र रक्तविकार नाशक हुन्छ । यसका अन्य गुण पहिँलो चन्दनका जस्तै हुन्छन् विशेषतः यो डाहनाशक हुन्छ ।

**चन्दनानि तु सर्वाणि सदृशानि रसादिभिः ।**
**गन्धेन तु विशेषोऽस्ति पूर्वः श्रेष्ठतमो गुणैः ॥२०॥**

रसादिका दृष्टिले प्रायः सबै चन्दन समान भएपनि यसको सुगन्ध प्रमुख हुन्छ । गुणका दृष्टिले श्रीखण्ड श्रेष्ठ हुन्छ ।

### धुपी, धूपी

अगुरु प्रवरं लोहं राजार्हं योगजं तथा ।
वंशिकं कृमिजं वाऽपि कृमिजग्धमनार्यकम् ॥२१॥
अगुरूष्णं कटु त्वच्यं तिक्तं तीक्ष्णञ्च पित्तलम् ।
लघु कर्णाक्षिरोगघ्नं शीतवातकफप्रणुत् ॥२२॥
कृष्णं गुणाधिकं तत्तु लोहवद्वारि मज्जति ।
अगुरुप्रभवः स्नेहः कृष्णागुरुसमः स्मृतः ॥२३॥

अगुरु, प्रवर, लोह, राजार्ह, योगज, वंशिक, कृमिज, कृमिजग्ध र अनार्यक : यी धूपीका संस्कृत पर्यायवाची नामहरू हुन् । धूपीले गर्मी गर्दछ । यो पिरो र तीतो हुन्छ । यो छालाको लागि लाभदायक, तिक्खर, पित्तकारक, पचाउन सहज तथा कानका रोग, आँखाका रोग, चिसो लागेको, वातविकार र कफविकार नाशक हुन्छ । धूपीमध्ये कालो धूपी बढी गुणशाली हुन्छ र पानीमा फलाम डुबेझैं डुब्दछ । तर,सबै खालका धूपीको तेल कालो धूपीको तेल सरह कै गुणका हुन्छन् ।

## देवदार

देवदारु स्मृतं दारुभद्रं दार्विन्द्रदारु च ।
मस्तदारु द्रुकिलिमं किलिमं सुरभूरुहः ॥२४॥
देवदारु लघु स्निग्धं तिक्तोष्णं कटुपाकि च ।
विबन्धाध्मानशोथामतन्द्राहिक्काज्वरास्रजित् ॥
प्रमेहपीनसश्लेष्मकासकण्डूसमीरनुत् ॥२५॥

देवदारु, दारुभद्र, दारु, इन्द्रदारु, मस्तदारु, द्रुकिलिम, किलिम र सुरभूरुह : यी देवदारका संस्कृत पर्यायवाची नामहरू हुन् । देवदार पचाउन हलुका र चिल्लो हुन्छ । यो तीतो, गर्मी गर्ने र पचेपछि पिरो हुन्छ । यसले विबन्ध, आध्मान, सुजन, आमरोग, तन्द्रा, हिक्का, जरो र रक्तविकार नाश गर्दछ । साथै यसले प्रमेह, पिनास, कफविकार, खोकी, लुतो र वातविकार समेत ठिक गर्दछ ।

नोट : ७-८ हजार फिटको उचाइमा पाइन्छ । धेरै ठूलो, लामो समयसम्म जीवित रहने, हेर्नमा सुन्दर, १६०-१८० फिट अग्लो, फैलिएका र केही तल झुकेका हाँगा हुन्छन् । तीन कुने, सियो आकारका १-१.२५ इञ्च लामा, पेचकिलाका आकारमा निस्केका हाँगामा गुच्छाकारका पात हुन्छन् । हाँगाका टुप्पामा ४-५ इञ्च लामा र ३-४ इञ्च मोटा फल लाग्दछन् । गेडा आधा इञ्चसम्म लामा र तीनकुने वा अर्धचन्द्राकार खोलभित्र लाग्दछ । यसको काठ सुगन्धी र पहेँलो मिसिएको बदामी रङ्को हुन्छ र यसबाट अति पातलो तेल निकालिन्छ । काठ, तेल, पात र नरम हाँगा ओखतीमा प्रयोग गरिन्छ । यसको धुलो ३-६ मासा र तेल १०-४० थोपा प्रयोग गरिन्छ ।

## सल्लो

सरलः पीतवृक्षः स्यात्तथा सुरभिदारुकः ।

**सरलो मधुरस्तिक्तो कटुपाकरसो लघुः ॥२६॥**
**स्निग्धोष्णः कर्णकण्ठाक्षिरोगरक्षोहरः स्मृतः ।**
**कफानिलस्वेददाहकासमूर्छाव्रणापहः ॥२७॥**

सरल, पीतवृक्ष र सुरभिदारुक : यी सल्लोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको स्वाद गुलियो र तीतो तथा पचेपछि पिरो हुन्छ । यो पचाउन हलुका, चिल्लो र गर्मी गर्ने गुणको हुन्छ । यसले कानका रोग, घाँटीका रोग, आँखाका रोग, राक्षसदोष, कफविकार, वायुविकार, पसिना आउने रोग, डाह, खोकी, बेहोसी र घाउखटिरा नाश गर्दछ ।

## तगर

**कालानुसार्यं तगरं कुटिलं नहुषं नतम् ।**
**अपरं पिण्डतगरं दण्डहस्ती च बर्हिणम् ॥२८॥**
**तगरद्वयमुष्णं स्यात्स्वादु स्निग्धं लघु स्मृतम् ।**
**विषापस्मारशूलाक्षिरोगदोषत्रयापहम् ॥२९॥**

तगर दुई किसिमको हुन्छ । पहिलो तगरको कालानुसार्य, तगर, कुटिल र नहुष तथा दोश्रो खालको तगरको पिण्डतगर, दण्डहस्ती र बर्हिण संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै तगर गर्मी गर्ने, स्वादिला, चिल्ला र पचाउन सहज हुन्छन् । यसले विषविकार, छारेरोग, शूल, आँखाका रोग र त्रिदोष नाश गर्दछ ।

नोट : यसलाई अंग्रेजीमा इण्डियन वेलेरियन हाइजोम भनिन्छ । नेपालीमा सामान्यतः पितृकार्यमा प्रयोग गरिने सानो फूललाई तगर भनिन्छ तर आयुर्वेदले यहाँ बताएको तगर त्यो होइन ।

## पैयुँ

**पद्मकं पद्मगन्धि स्यात्तथा पद्माह्वयं स्मृतम् ।**
**पद्मकं तुवरं तिक्तं शीतलं वातलं लघु ॥३०॥**
**वीसर्पदाहविस्फोटकुष्ठश्लेष्मास्रपित्तनुत् ।**
**गर्भसंस्थापनं रुच्यं वमिव्रणतृषाप्रणुत् ॥३१॥**

पद्मक, पद्मगन्धि र पद्माह्वय : यी पैयुँका संस्कृत पर्यायवाची नामहरू हुन् । पैयुँ टर्रो र तीतो हुन्छ । यसले शीतल गर्दछ, वातविकार बढाउँदछ र पचाउन हलुका हुन्छ । यसले वीसर्प, डाह, विस्फोट, कुष्ठ, कफविकार, रक्तविकार र पित्तविकार नाश गर्दछ । यसले गर्भ बसाउन मद्दत गर्दछ, रुचि जगाउँदछ तथा वाकवाकी, घाउखटिरा र तिर्खा नाश गर्दछ ।

## गोकुलधूप

**गुग्गुलर्देवधूपश्च जटायुः कौशिकः पुरः ।**

**कुम्भोलूखलकं क्लीबे महिषाक्षः पलङ्कषः ॥३२॥**

गुग्गुल, देवधूप, जटायु, कौशिक, पुर, कुम्भोलूखलक (नपुंसक लिङ्गमा), महिषाक्ष र पलङ्कष : यी गोकुलधूपका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**महिषाक्षो महानीलः कुमुदः पद्म इत्यपि ।**
**हिरण्यः पञ्चमो ज्ञेयो गुग्गुलोः पञ्च जातयः ॥३३॥**

महिषाक्ष, महानील, कुमुद, पद्म र हिरण्य गरी गोकुलधूप पाँच किसिमका हुन्छन् ।

**भृङ्गाञ्जनसवर्णस्तु महिषाक्ष इति स्मृतः ।**
**महानीलस्तु विज्ञेयः स्वनामसमलक्षणः ॥३४॥**
**कुमुदः कुमुदाभः स्यात्पद्मो माणिक्यसन्निभः ।**
**हिरण्याख्यस्तु हेमाभः पञ्चानां लिङ्गमीरितम् ॥३५॥**
**महिषाक्षो महानीलो गजेन्द्राणां हिताबुभौ ।**
**हयानां कुमुदः पद्मः स्वस्त्यारोग्यकरौ परौ ॥३६॥**
**विशेषेण मनुष्याणां कनकः परिकीर्त्तितः ।**
**कदाचिन्महिषाक्षश्च मतः कैश्चिन्नृणामपि ॥३७॥**

भमरा वा गाजलजस्तो कालो रङको गोकुलधूपलाई “महिषाक्ष” भनिन्छ । गाढा नीलो वर्णको गोकुलधूपलाई “महानील” भनिन्छ । सेतो चन्द्रकमल जस्तो वर्णको गोकुलधूपलाई “कुमुद” भनिन्छ । माणिकको जस्तो वर्णको गोकुलधूपलाई “पद्म” भनिन्छ । सुनजस्तो वर्णको गोकुलधूपलाई “हिरण्याक्ष” भनिन्छ । महिषाक्ष र महानील हात्तीको उपचार गर्न लाभदायक हुन्छन् । कुमुद र पद्म घोडाको उपचारका लागि अत्यन्त लाभदायक र उपयोगी हुन्छन् । हिरण्याक्ष विशेषतः मानिसका लागि उपयोगी हुन्छ । कसै कसैले मानिसका लागि महिषाक्ष पनि उपयोगी हुन्छ भनेका छन् ।

**गुग्गुलुर्विशदस्तिक्तो वीर्योष्णः पित्तलः सरः ।**
**कषायः कटुकः पाके कटू रूक्षो लघुः परः ॥३८॥**
**भग्नसन्धानकृद् वृष्यः सूक्ष्मः स्वर्यो रसायनः ।**
**दीपनः पिच्छिलो बल्यः कफवातव्रणापचीः ॥३९॥**
**मेदोमेहाश्मवातांश्च क्लेदकुष्ठाममारुतान् ।**
**पिडकाग्रन्थिशोफार्शोगण्डमालाकृमीञ्जयेत् ॥४०॥**
**माधुर्याच्छमयेद्वातं कषायत्वाच्च पित्तहा ।**
**तिक्तत्वाद् कफजित्तेन गुग्गुलुः सर्वदोषहा ॥४१॥**

गोकुलधूप चम्किलो, तीतो, गर्मी गर्ने, पित्त बढाउने र दिसा लगाउने गुणको हुन्छ । यो टर्रो र पिरो, पचेपछि पिरो, रुखो र अति नै पचाउन सहज हुन्छ । यसले भाँचिएका हाड जोड्दछ, वीर्य बढाउँदछ, सूक्ष्मरूपले काम गर्ने गर्दछ र स्वरलाई उत्तम बनाउँदछ । यो रसायनी, पाचकाग्नि बर्धक, चिप्लो र बल बढाउने गुणको

हुन्छ । कफविकार, वातविकार, घाउखटिरा, अपची, बोसोविकार, प्रमेह, पत्थरी, वातविकार, थकाई, कुष्ठ, आमवात, पिड्को, गाँठेरोग, सुजन, अल्काइ, गण्डमाला र कीरा नाश गर्दछ । यसमा हुने गुलियोपनले वातरोग, टर्रोपनले पित्तरोग र तीतोपनले कफरोग नाश गर्दछ । यसैले यसलाई सबै दोष (त्रिदोष) नाशक भनिएको छ ।

**स नवो बृंहणो वृष्यः पुराणस्त्वतिलेखनः ।**
**स्निग्धः काञ्चनसङ्काशः पक्वजम्बूफलोपमः ॥४२॥**
**नूतनो गुग्गुलुः प्रोक्तः सुगन्धिर्यस्तु पिच्छिलः ।**
**शुष्को दुर्गन्धकश्चैव त्यक्तप्रकृतिवर्णकः ॥४३॥**
**पुराणः स तु विज्ञेयो गुग्गुलुर्वीर्यवर्जितः ।**

ताजा गोकुलधूप धातु र वीर्यवर्धक हुन्छ । पुरानोले शरीरका धातुलाई खियाउँदछ । चिल्लो, सुनजस्तो पहेँलो, पाकेको जामुनु जस्तो, बास्ना आउने र चिप्लो गोकुलधूपलाई ताजा गोकुलधूप भनिन्छ । सुकेको, गनाउने, रङ उडेको र वीर्यरहीत गोकुलधूपलाई पुरानो गोकुलधूप भनिन्छ ।

**अम्लं तीक्ष्णमजीर्णञ्च व्यवायं श्रममातपम् ॥४४॥**
**मद्यं रोषं त्यजेत्सम्यग् गुणार्थी पुरसेवकः ।**

गोकुलधूपको सेवन गरी लाभ लिन चाहने व्यक्तिले अमिलो, तिक्खर र नपच्ने खालका खानपिन गर्न हुँदैन । मैथुन, परिश्रम, घाममा हिँडडुल, मदिरा सेवन र रिसाउने काम गर्न हुँदैन ।

## सल्लाको खोटो

**श्रीवासः सरलस्रावः श्रीवेष्टो वृक्षधूपकः ॥४५॥**
**श्रीवासो मधुरस्तिक्तः स्निग्धोष्णस्तुवरः सरः ।**
**पित्तलो वातमूर्द्धाक्षिस्वररोगकफापहः ॥४६॥**
**रक्षोघ्नः स्वेददौर्गन्ध्ययूकाकण्डूव्रणप्रणुत् ।**

श्रीवास, सरलस्राव, श्रीवेष्ट र वृक्षधूपक : यी सल्लाको खोटोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र तीतो हुन्छ । सल्लाको खोटो चिल्लो, गर्मी गर्ने, टर्रो र दिसा लगाउने गुणको हुन्छ । यसले पित्त बढाउँदछ तथा वातविकार, टाउकाका रोग, आँखाका रोग, स्वरसम्बन्धी रोग र कफविकार नाश गर्दछ । साथै ग्रहबाधा, पसिना आउने रोग, दुर्गन्ध, जुम्रा, लुतो र घाउखटिरा नाशक हुन्छ ।

## सालधूप

**रालस्तु शालनिर्यासस्तथा सर्जरसः स्मृतः ॥४७॥**
**देवधूपो यक्षधूपस्तथा सर्वरसश्च सः ।**
**रालो हिमो गुरुस्तिक्तः कषायो ग्राहको हरेत् ॥४८॥**

**दोषास्रस्वेदवीसर्पज्वरव्रणविपादिकाः ।**
**ग्रहभग्नाग्निदग्धांश्च शूलातीसारनाशनः ॥४९॥**

राल, शालनिर्यास, सर्ज्जरस, देवधूप, यक्षधूप र सर्वरस : यी सालधूपका संस्कृत पर्यायवाची नामहरू हुन् । सालधूप शीतल गर्ने, पचाउन कठिन, तीतो-टर्रो र सङ्ग्राही हुन्छ । यसले वात आदि दोष, रक्तविकार, पसिना आउने रोग, विसर्प, जरो, घाउखटिरा, विपादिका र ग्रहबाधा नाश गर्दछ । साथै, हाड भाँचिएको र आगोले पोलेकोमा फाइदा गर्दछ एवं शूल र अतिसार ठिक गर्दछ ।

## साजको खोटो

**कुन्दुरुस्तु मुकुन्दः स्यात्सुगन्धः कुन्द इत्यपि ।**
**कुन्दुरुर्मधुरस्तिक्तस्तीक्ष्णस्त्वच्यः कटुर्हरेत् ॥५०॥**
**ज्वरस्वेदग्रहालक्ष्मीमुखरोगकफानिलान् ।**

कुन्दुरु, मुकुन्द, सुगन्ध, र कुन्द : यी साजको खोटोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, तीतो र तिक्खर हुन्छ । यो खोटो छालाका लागि लाभदायक, यसले जरो, पसिना आउने रोग, ग्रहबाधा, अलक्ष्मी, मुखका रोग, कफविकार र वायुविकार नाश गर्दछ ।

## शिलारस वा अरबी धूप विशेष

**सिह्लकस्तु तुरुष्कः स्याद्यतो यवनदेशजः ॥५१॥**
**कपितैलश्च संख्यातस्तथा च कपिनामकः ।**
**सिह्लकः कटुकः स्वादुः स्निग्धोष्णः शुक्रकान्तिकृत् ॥५२॥**
**वृष्यः कण्ठ्यः स्वेदकुष्ठज्वरदाहग्रहापहः ।**

सिह्लक, तुरुष्क, कपितैल र कपिका पर्यायवाची नाम, तुरुष्क, : यी अरबी धूप विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र स्वादिलो हुन्छ । चिल्लो हुन्छ र गर्मी गर्दछ । शुक्रवर्धक र कान्तिवर्धक हुन्छ । वीर्य बढाउँदछ र घाँटीका रोगमा फाइदा गर्दछ । पसिना रोग, कुष्ठ, जरो, डाह र ग्रहबाधा नाश गर्दछ ।

नोट : यो खोटो जस्तै वृक्ष विशेषको सुगन्धी रस हो । यसलाई अंग्रेजीमा लिक्विड स्टोऱ्याक्स भनिन्छ ।

## जाइफल

**जातीफलं जातिकोशं मालतीफलमित्यपि ॥५३॥**
**जातीफलं रसे तिक्तं तीक्ष्णोष्णं रोचनं लघु ।**
**कटुकं दीपनं ग्राहि स्वर्यं श्लेष्मानिलापहम् ॥५४॥**
**निहन्ति मुखवैरस्यं मलदौर्गन्ध्यकृष्णताः ।**

**कृमिकासवमिश्वासशोषपीनसहृद्रुजः ॥५५॥**

जातीफल, जातिकोश र मालतीफल : यी जाइफलका संस्कृत पर्यायवाची नामहरू हुन् । जाइफलको रस तीतो र तिक्खर हुन्छ । यसले गर्मी गर्दछ र रुची जगाउँदछ । यो पचाउन हलुका हुन्छ । यसको रस पिरो पनि हुन्छ । यो दीपनी, सङ्ग्राही, बिग्रेको स्वर ठिक गर्ने, कफविकार नाशक, वातविकार नाशक,मुखको स्वाद ठिक गर्ने, मलको गन्ध हटाउने, कालोपना नाशक, कीरा मार्ने, खोकी ठिक गर्ने, वाकवाकी हटाउने, दम ठिक गर्ने, सुजन बसाउने, पिनास निको पार्ने र मुटुका रोग नाश गर्ने गुणको हुन्छ । (यसको अत्यधिक प्रयोग विषालु हुन्छ र छारेरोग आदि हुन सक्दछ । यसको सीमित प्रयोगले भोक बढाउँदछ) ।

## जातीपत्री (जाइफलको बोक्रा)

**जातीफलस्य त्वक् प्रोक्ता जातीपत्री भिषग्वरैः ।**
**जातीपत्री लघुः स्वादुः कटूष्णा रुचिवर्णकृत् ॥५६॥**
**कफकासवमिश्वासतृष्णाकृमिविषापहा ।**

जाइफलको फललाई घेरेर बसेको रातो रङको जालीदार भागलाई नै विज्ञ वैद्यले जातीपत्री भनेका छन् । यो पचाउन हलुका, स्वादिलो, पिरो, गर्मी गर्ने, रुची जगाउने, वर्णमा निखार लेराउने तथा कफविकार, खोकी, वाकवाकी, दम, तिर्खा, कीरा र विषविकार नाशक हुन्छ ।

## ल्वाङ

**लवङ्गं देवकुसुमं श्रीसंज्ञं श्रीप्रसूनकम् ॥५७॥**
**लवङ्गं कटुकं तिक्तं लघु नेत्रहितं हिमम् ।**
**दीपनं पाचनं रुच्यं कफपित्तास्रनाशकृत् ॥५८॥**
**तृष्णां छर्दिं तथाऽऽध्मानं शूलमाशु विनाशयेत् ।**
**कासं श्वासञ्च हिक्काञ्च क्षयं क्षपयति ध्रुवम् ॥५९॥**

लवङ्ग, देवकसुम, लक्ष्मी वाचक सबै नाम र श्रीप्रसूनक : यी ल्वाङका संस्कृत पर्यायवाची नामहरू हुन् । ल्वाङ पिरो र तीतो हुन्छ । यो पचाउन हलुका, आँखाका लागि लाभदायक र शीतल गर्ने गुणको हुन्छ । यस्तै यो दीपनी, पाचनी, रुचि जगाउने तथा कफविकार, पित्तविकार र रक्तविकार नाशक हुन्छ । यसले तिर्खा, वाकवाकी, आध्मान र शूल चाँडै निको पार्दछ । यसले खोकी, दम, बाडुली र क्षयरोग पनि चाँडै र निश्चित रूपमा नाश गर्दछ ।

## अलैंची

**एला स्थूला च बहुला पृथ्वीका त्रिपुटाऽपि च ।**
**भद्रैला बृहदेला च चन्द्रबाला च निष्कुटिः ॥६०॥**
**स्थूलैला कटुका पाके रसे चानलकृल्लघुः ।**

**रूक्षोष्णा श्लेष्मपित्तास्रकण्डूश्वासतृषाऽपहा ॥६१॥**
**हृल्लासविषबस्त्यास्यशिरोरुग्वमिकासनुत् ।**

एला, स्थूला, बहुला, पृथ्वीका, त्रिपुटा, भद्रैला, बृहदेला, चन्द्रबाला, निष्कुटि र स्थूलैला : यी अलैंचीका संस्कृत पर्यायवाची नामहरू हुन् । अलैंची खाँदा र पचेपछिको रस पनि पिरो हुन्छ । यसले पाचकाग्नि बाल्दछ र पचाउन हलुका हुन्छ । रुखो हुन्छ र गर्मी गर्दछ । यसले कफविकार, पित्तविकार, रक्तविकार, लुतो, दम र तिर्खा नाश गर्दछ । साथै, यसले बेचैनी, विषविकार, तल्लोपेटका रोग, मुखका रोग, टाउकाका रोग, वाकवाकी र खोकी पनि ठिक गर्दछ ।

## सुकुमेल

**सूक्ष्मोपकुञ्चिका तुत्था कोरङ्गी द्राविडी त्रुटिः ॥६२॥**
**एला सूक्ष्मा कफश्वासकासार्शोमूत्रकृच्छहृत् ।**
**रसे तु कटुका शीता लघ्वी वातहरी मता ॥६३॥**

सूक्ष्मा, उपकुञ्चिका, तुत्था, कोरङ्गी, द्राविडी, त्रुटि र सूक्ष्मैला : यी सुकुमेलमा संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफविकार, दम, खोकी, अल्काई र मूत्रकृच्छ्र ठिक गर्दछ । यो पिरो, शीतल गर्ने, पचाउन हलुका र वातविकार नाशक हुन्छ ।

## चिनीयाँ तेजपात (बेतलौरी)

**त्वक्पत्रञ्च वराङ्गं स्याद् भृङ्गं चोचं तथोत्कटम् ।**
**त्वचं लघूष्णं कटुकं स्वादु तिक्तञ्च रूक्षकम् ॥६४॥**
**पित्तलं कफवातघ्नं कण्ड्वामारुचिनाशनम् ।**
**हृद्बस्तिरोगवातार्शः कृमिपीनसशुक्रहृत् ॥६५॥**

त्वक्पत्र, वराङ्ग, भृङ्ग, चोच, उत्कट र त्वच : यी बेतलौरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका, गर्मी गर्ने, पिरो, स्वादिलो र रुखो हुन्छ । यसले पित्तविकार गर्दछ तथा कफविकार, वातविकार, लुतो, आमरोग, अरुची, मुटुका रोग, तल्लोपेटका रोग, वातरोग, कीरा, पिनास र शुक्र नाश गर्दछ । (यो दालचीनीकै एक भेद हो)

## दालचीनी

**त्वक्स्वाद्वी तु तनुत्वक्स्यात्तथा दारुसिता मता ।**
**उक्ता दारुसिता स्वाद्वी तिक्ताचानिलपित्तहृत् ॥६६॥**
**सुरभिः शुक्रलाबल्या मुखशोषतृषापहा ।**

त्वक्, स्वाद्वी, त्वक्स्वाद्वी, तनुत्वक् र दारुसिता : यी दालचीनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो स्वादिलो र तीतो हुन्छ । यसले वातविकार र पित्तविकार नाश गर्दछ । यो सुगन्धी, शुक्रजनक, बलकारक, मुख सुन्निएको ठिक गर्ने र तिर्खा मेटाउने गुणको हुन्छ ।

## तेजपात

**पत्रं तमालपत्रञ्च तथा स्यात्पत्रनामकम् ॥६७॥**
**पत्रकं मधुरं किञ्चित्तीक्ष्णोष्णं पिच्छिलं लघु ।**
**निहन्ति कफवातार्शोहृल्लासारुचिपीनसान् ॥६८॥**

पत्र, तमालपत्र, पत्रका पर्यायवाची शब्दहरू र पत्रक : यी तेजपातका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र केही तिक्खर हुन्छ । यसले गर्मी गर्दछ । यो लेस्याइलो र पचाउन हलुका हुन्छ । यसले कफविकार, वातविकार, अल्काई, दिग्दारी, अरुची र पिनाश नाश गर्दछ ।

## नागकेशर

**नागपुष्प स्मृतो नागः केशरो नागकेशरः ।**
**चाम्पेयो नागकिञ्जल्कः कथितः काञ्चनाह्वयः ॥६९॥**
**(अयं पुष्पे तु क्लीबे) नागपुष्पं कषायोष्णं रूक्षं लघ्वामपाचनम् ।**
**ज्वरकण्डूतृषास्वेदच्छर्दिहृल्लासनाशनम् ॥७०॥**
**दौर्गन्ध्यकुष्ठवीसर्पकफपित्तविषापहम् ।**

नागपुष्प, नाग, केशर, नागकेशर, चाम्पेय, नागकिञ्जल्क र काञ्चनवाचक पुंलिङ्गी शब्द : यी नागकेशरका संस्कृत पर्यायवाची नामहरू हुन् । नागकेशर (को फूल) टर्रो हुन्छ । यसले गर्मी गर्दछ । यो रुखो हुन्छ तर पचाउन सहज हुन्छ । यसले आमलाई पचाउँदछ । साथै नागकेशरले जरो, लुतो, तिर्खा, पसिना आउने रोग, वाकवाकी, बाडुली वा छातीको पीडा, दुर्गन्ध, कुष्ठ, वीसर्प, कफविकार, पित्तविकार र विषविकार नाश गर्दछ ।

## त्रिजातक र चतुर्जातक

**त्वगेलापत्रकैस्तुल्यैस्त्रिसुगन्धि त्रिजातकम् ॥७१॥**
**नागकेशरसंयुक्तं चातुर्जातकमुच्यते ।**
**तद् द्वयं रोचनं रूक्षं तीक्ष्णोष्णं मुखगन्धहृत् ॥७२॥**
**लघुपित्ताग्निकृद्वर्ण्यं कफवातविषापहम् ।**

दालचिनी, अलैंची र तेजपात बराबर मात्रामा मिसाए पछि त्यसलाई त्रिजातक भनिन्छ । यदि यसमा अरु बराबरको नागकेशर पनि मिसायो भने त्यो चतुर्जातक हुन्छ । ती दुवै रुचिकारक, रुखा, तिक्खर, गर्मी गर्ने,

मुखको गन्ध हटाउने, पचाउन सहज, पित्तविकार बढाउने, अग्नि बढाउने, शरीरको वर्णमा निखार लेराउने, कफविकार नाशक, वातविकार नाशक र विषविकार नाशक हुन्छन् ।

## केसर

**कुङ्कुमं घुसृणं रक्तं काश्मीरं पीतकं वरम् ॥७३॥**
**संकोचं पिशुनं धीरं बाह्लीकं शोणिताभिधम् ।**
**काश्मीरदेशजे क्षेत्रे कुङ्कुमं यद्भवेद्धि तत् ॥७४॥**
**सूक्ष्मकेशरमारक्तं पद्मगन्धि तदुत्तमम् ।**
**बाह्लीकदेशसञ्जातं कुङ्कुमं पाण्डुरं स्मृतम् ॥७५॥**
**केतकीगन्धयुक्तं तन्मध्यमं सूक्ष्मकेशरम् ।**
**कुङ्कुमं पारसीकं यन्मधुगन्धि तदीरितम् ॥७६॥**
**ईषत्पाण्डुरवर्णं तदधमं स्थूलकेशरम् ।**
**कुङ्कुमं कटुकं स्निग्धं शिरोरुग्व्रणजन्तुजित् ॥७७॥**
**तिक्तं वमिहरं वर्ण्यं व्यङ्गदोषत्रयापहम् ।**

कुङ्कुम, घुसृण, रक्त, काश्मीर, पीतक, वर, सङ्कोच, पिशुन, धीर, बाह्लीक र शोणिताभिध : यी केसरका संस्कृत पर्यायवाची नामहरू हुन् । काश्मिरका खेतमा उत्पन्न हुने केसर सूक्ष्म केसरले युक्त, केही रातो र कमलको जस्तै सुगन्ध आउने हुन्छ । यसलाई उत्तम केसर मानिन्छ । बाह्लीक देशमा हुने केसर सेतो र पहेँलो मिश्रित वर्णको हुन्छ । यो क्याक्तुकेको फूलजस्तो जस्तो सुगन्धी हुन्छ । यो पनि सूक्ष्म केसरले युक्त हुन्छ । यसलाई मध्यम खालको केसर मानिन्छ । पारसीक देशको केसर मह जस्तै गन्ध आउने हुन्छ । यो पनि हल्का सेतो र पहेँलो मिश्रित वर्णको हुन्छ । यसका केसर मोटा हुन्छन् र यसलाई निम्नस्तरको केसर मानिन्छ । केसर पिरो तीतो हुन्छ । यो चिल्लो हुन्छ । यसले शरीरको वर्णमा निखार लेराउँदछ । यो टाउकाका रोग, घाउखटिरा, कीरा, वाकवाकी, व्यङ्ग र त्रिदोष नाशक हुन्छ ।

## गोरोचन

**गोरोचना तु मङ्गल्या वन्द्या गौरी च रोचना ॥७८॥**
**गोरोचना हिमा तिक्ता वश्या मङ्गलकान्तिदा बाह्लीक ।**
**विषालक्ष्मीग्रहोन्मादगर्भस्रावक्षतास्रहृत् ॥७९॥**

गोरोचना, मङ्गल्या, वन्द्या, गौरी र रोचना : यी गोरोचनका संस्कृत पर्यायवाची नामहरू हुन् । गोरोचनले शीतल गर्दछ । यसको स्वाद तीतो हुन्छ । यसले मोहनी लगाउने (वशीकरण) काम गर्दछ तथा मङ्गल र कान्ति बढाउँदछ । साथै, विषविकार, दरिद्रता, ग्रहबाधा, पागलपन, गर्भस्राव र घाउजन्य रगत बहाईलाई नाश गर्दछ ।

## नखी

नखं व्याघ्रनखं व्याघ्रायुधं तच्चक्रकारकम् ।
नखं स्वल्पं नखी प्रोक्ता हनुर्हट्टविलासिनी ॥८०॥
नखद्वयं ग्रहश्लेष्मवातास्रज्वरकुष्ठहृत् ।
लघूष्णं शुक्रलं वर्ण्यं स्वादु व्रणविषापहम् ॥८१॥
अलक्ष्मीमुखदौर्गन्ध्यहृत्पाकरसयोः कटुः ।

नख, व्याघ्रनख, व्याखायुध र चक्रकारक : यी नखीका संस्कृत पर्यायवाची नामहरू हुन् । सानो खालको नखलाई नखी भनिन्छ । हनु र हट्टविलासिनी यसका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै नखीले ग्रहबाधा, कफविकार, वातविकार, रक्तविकार (वा वातरक्त), जरो र कुष्ठ नाश गर्दछन् । यी पचाउन हलुका, गर्मी गर्ने, शुक्रवर्द्धक, वर्णमा निखार लेराउने, स्वादिला, घाउ ठिक गर्ने, विषविकार नाशक, दरिद्रता नाशक, मुखको दुर्गन्ध नाशक तथा स्वाद र पचेपछि पिरा हुन्छन् ।

## सुगन्धवाल

बालं ह्रीबेरबर्हिष्ठोदीच्यं केशाम्बुनाम च ॥८२॥
बालकं शीतलं रूक्षं लघु दीपनपाचनम् ।
हृल्लासारुचिवीसर्पहृद्रोगामातिसारजित् ॥८३॥

बाल, ह्रीबेर, बर्हिष्ठ, उदीच्य, केश र यसका पर्यायवाची शब्द, अम्बु र यसका पर्यायवाची शब्द तथा बालक : यी सुगन्धवालका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो रुखो, पचाउन हलुका, अग्निवर्द्धक र पाचक हुन्छ । यसले जीउको बेचैनी, अरुची, वीसर्प, मुटुका रोग, आमरोग र अतिसार नाश गर्दछ ।

## खस

स्याद्वीरणं वीरतरुर्वीरञ्च बहुमूलकम् ।
वीरणं पाचनं शीतं वान्तिहृल्लघु तिक्तकम् ॥८४॥
स्तम्भनं ज्वरनुद् भ्रान्तिमदजित्कफपित्तहृत् ।
तृष्णाऽस्रविषवीसर्पकृच्छ्रदाहव्रणापहम् ॥८५॥

वीरण, वीरतरु, वीर, बहुमूलक : यी खसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पाचक, शीतल गर्ने, वाकवाकी नाश गर्ने, पचाउन सहज, तीतो र स्तम्भन गर्ने गुणको हुन्छ । यसले जरो, भ्रम, नसा, कफविकार, पित्तविकार, तिर्खा, रक्तविकार, विषविकार, वीसर्प, कृच्छ्र, डाह र घाउखटिरा नाश गर्दछ ।

## खसको जरा

वीरणस्य तु मूलं स्यादुशीरं नलदञ्च तत् ।
अमृणालञ्च सेव्यञ्च समगन्धिकमित्यपि ॥८६॥

**उशीरं पाचनं शीतं स्तम्भनं लघु तिक्तकम् ।**
**मधुरं ज्वरहृद्वान्तिमदनुत्कफपित्तहृत् ॥८७॥**
**तृष्णाऽस्रविषवीसर्पदाहकृच्छ्रवणापहम् ।**

वीरण नामक झारको जरालाई उशीर (खस) भनिन्छ । उशीर, नलद, अमृणाल, सेव्य र समगन्धिक : खसको जराका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पाचक, शीतल गर्ने, स्तम्भन गर्ने, पचाउन हलुका र तीतो हुन्छ । यसले जरो, वाकवाकी, नसा, कफविकार, पित्तविकार, तिर्खारोग, रक्तविकार, विषविकार, वीसर्प, डाह, कृच्छ्र र घाउखटिरा नाश गर्दछ ।

## जटामसी

**जटामांसी भूतजटा जटिला च तपस्विनी ॥८८॥**
**मांसी तिक्ता कषाया च मेध्या कान्तिबलप्रदा ।**
**स्वाद्वी हिमा त्रिदोषास्रदाहवीसर्पकुष्ठनुत् ॥८९॥**

जटामांसी, भूतजटा, जटिला, तपस्विनी र मांसी : यी जटामसीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको स्वाद तीतो र टर्रो हुन्छ । यसले ग्रहण गर्ने क्षमता (मेधा) र कान्ति बढाउँदछ । जटामसीले बल दिन्छ । यो स्वादिलो हुन्छ र शीतल गर्दछ । यसले त्रिदोष, रक्तविकार, डाह, वीसर्प र कुष्ठ नाश गर्दछ ।

## शिलाकुङ्कुम

**शैलेयन्तु शिलापुष्पं वृद्धं कालानुसार्य्यकम् ।**
**शैलेयं शीतलं हृद्यं कफपित्तहरं लघु ॥९०॥**
**कण्डूकुष्ठाश्मरीदाहविष हृद् गुदरक्तहृत् ।**

शैलेय, शिलापुष्प, वृद्ध र कालानुसार्य्यक : यी शिलाकुङ्कुमका संस्कृत पर्यायवाची नामहरू हुन् । शिलाकुङ्कुम शीतल गर्ने, मुटुका लागि लाभदायक, कफ तथा पित्त नाशक, पचाउन सहज, एवं लुतो, कुष्ठ, पत्थरी, डाह, विषविकार र मलद्वारबाट रगत आउने रोग नाशक हुन्छ ।

## मोथे तथा नागरमोथे

**मुस्तकं न स्त्रियां मुस्तं त्रिषु वारिदनामकम् ॥९१॥**
**कुरुविन्दश्च संख्यातोऽपरः क्रोडकसेरुकः ।**
**भद्रमुस्तश्च गुन्द्रा च तथा नागरमुस्तकः ॥९२॥**
**मुस्तं कटु हिमं ग्राहि तिक्तं दीपनपाचनम् ।**
**कषायं कफपित्तास्रतृड्ज्वरारुचिजन्तुहृत् ॥९३॥**
**अनूपदेशे यज्जातं मुस्तकं तत्प्रशस्यते ।**

**तत्रापि मुनिभिः प्रोक्तं वरं नागरमुस्तकम् ॥९४॥**

मुस्तक (स्त्रीलिङ्ग बाहेकमा प्रयोग), मुस्त (तीन वटै लिङ्गमा प्रयोग), मेघवाचक सबै शब्द र कुरुविन्द : यी मोथेका संस्कृत पर्यायवाची नामहरू हुन् । अर्कोथरी नागरमोथेका क्रोडसेरक, भद्रमुस्त, गुन्द्रा र नागरमुस्तक संस्कृत पर्यायवाची नामहरू हुन् । मोथे पिरो, शीतल गर्ने, सङ्ग्राही, तीतो, दीपनी र पाचनी हुन्छ । यो टर्रो टर्रो पनि हुन्छ । यसले कफविकार, पित्तविकार, रक्तविकार, तिर्खा, जरो, अरुची र कीरा नाश गर्दछ । मोथेमा पनि पानी धेरैहुने स्थानमा हुने मोथे उत्तम हुन्छ । त्यसमा पनि नागरमोथे उत्तम हुन्छ ।

## कचूर

**कर्चूरो वेधमुख्यश्च द्राविडः कल्पकः शटी ।**
**कर्चुरो दीपनो रुच्यः कटुकस्तिक्त एव च ॥९५॥**
**सुगन्धिः कटुपाकः स्यात्कुष्ठार्शोव्रणकासनुत् ।**
**उष्णो लघुर्हरेछ्वासं गुल्मवातकफकृमीन् ॥९६॥**

कर्चुर, वेधमुख्य, द्राविड, कल्पक र शटी : यी कचूरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो दीपनी, रुची जगाउने, पीरो र तीतो हुन्छ । यो सुगन्धित हुन्छ र पचेपछि पनि पिरो हुन्छ । यसले कुष्ठ, अल्काई, घाउखटिरा र खोकी निको पार्दछ । यसले गर्मी गर्दछ । पचाउन हलुका हुन्छ । यसले दम, गुल्म, वातविकार, कफविकार र कीरा नाश गर्दछ ।

## कालो जटामसी

**मुरा गन्धकुटी दैत्या सुरभिः शालपर्णिका ।**
**मुरा तिक्ता हिमा स्वाद्वी लघ्वी पित्तानिलापहा ॥९७॥**
**ज्वरासृग्भूतरक्षोघ्नी कुष्ठकासविनाशिनी ।**

मुरा, गन्धकुटी, दैत्या, सुरभि र शालपर्णिका : यी कालो जटामसीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, शीतल गर्ने, स्वादिलो, पचाउन सहज, पित्तविकार नाशक र वातविकार नाशक हुन्छ । यसले जरो, रक्तविकार, भूतबाधा, राक्षसबाधा, कुष्ठ र खोकी नाश गर्दछ ।
नोटः यसको पहिचानका बारेमा मतभेद छ । कसैले यसलाई एकथरी जटामसी भनेका छन् त कसैले यसलाई कचुरको एक जात बताएका छन् ।

## कपुरहलेदो

**शठी पलाशी षड्ग्रन्था सुव्रता गन्धमूलिका ॥९८॥**
**गन्धारिका गन्धवधूर्वधूः पृथुपलाशिका ।**
**भवेद्गन्धपलाशी तु कषाया ग्राहिणी लघुः ॥९९॥**

**तिक्ता तीक्ष्णा च कटुकाऽनुष्णाऽऽस्यमलनाशिनी ।**
**शोथकासव्रणश्वासशूलसिध्मग्रहापहा ॥१००॥**

शठी, पलाशी, षड्ग्रन्था, सुव्रता, गन्धमूलिका, गन्धारिका, गन्धवधू, वधू, पृथुपलाशिका र गन्धपलाशी : यी कपुरहलेदोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, कब्जियत गर्ने र पचाउन हलुका हुन्छ । यो तीतो, तिक्खर र पिरो हुन्छ । यसले गर्मी गर्दैन । यसले मुखको मल नाश गर्दछ । साथै, सुजन, खोकी, घाउखटिरा, दम, शूल, बाडुली र ग्रहवाधा नाश गर्दछ ।

## दयाँलो

**प्रियङ्गुः फलिनी कान्ता लता च महिलाऽऽह्वया ।**
**गुन्द्रा गन्धफला श्यामा विष्वक्सेनाङ्गनाप्रिया ॥१०१॥**
**प्रियङ्गुः शीतला तिक्ता तुवराऽनिलपित्तहृत् ।**
**रक्तातीसारदौर्गन्ध्यस्वेददाहज्वरापहा ॥१०२॥**
**वान्तिभ्रान्त्यतिसारघ्नी वक्त्रजाड्यविनाशिनी ।**
**गुल्मतृड्विषमोहघ्नी तद्वद् गन्धप्रियङ्गुका ॥१०३॥**
**तत्फलं मधुरं रूक्षं कषायं शीतलं गुरु ।**
**विबन्धाध्मानबलकृत्संग्राहि कफपित्तजित् ॥१०४॥**

प्रियङ्गु, फलिनी, कान्ता, लता, महिलाह्वया (स्त्रीवाचक शब्द), गुन्द्रा, गन्धफला, श्यामा, विष्वक्सेनाङ्गना र प्रिया : यी दही गुयैँलोका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो शीतल गर्ने, तीतो र टर्रो हुन्छ । यसले वातविकार, पित्तविकार, रक्तातिसार, दुर्गन्ध, पसिना-रोग, डाह, जरो, वाकवाकी, भ्रम, अतिसार, मुखको जडता, गुल्म, तिर्खा, विषविकार र मोह नाश गर्दछ । गन्धप्रियङ्गुका पनि यिनै गुण हुन्छन् । यसको फल मिठो, रुखो, टर्रो, शीतल गर्ने र पचाउन कठिन हुन्छ । यसले कब्जियत र आध्मान गर्दछ । बल दिन्छ, सङ्ग्राही हुन्छ तथा कफविकार र पित्तविकार नाश गर्दछ ।

## कवाफचिनी वा शीतलचिनी

**रेणुकाराजपुत्री च नन्दिनी कपिला द्विजा ।**
**भस्मगन्धा पाण्डुपुत्री स्मृता कौन्ती हरेणुका ॥१०५॥**
**रेणुका कटुका पाके तिक्ताऽनुष्णा कटुर्लघुः ।**
**पित्तला दीपनी मेध्या पाचनी गर्भपातिनी ॥१०६॥**
**बलासवातकृच्चैव तृट्कण्डूविषदाहनुत् ।**

रेणुका, राजपुत्री, नन्दिनी, कपिला, द्विजा, भस्मगन्धा, पाण्डुपुत्री, कौन्ती र हरेणुका : यी शीतलचिनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र पचेपछि तीतो हुन्छ । धेरै गर्मी गर्दैन । पचाउन हलुका हुन्छ । यसले पित्त बढाउँदछ, दीपनी हुन्छ, ग्रहण गर्ने शक्ति बढाउँदछ, पाचकको काम गर्दछ, गर्भपात गराउँदछ, कफ बढाउने र बातविकार बढाउने गुणको हुन्छ । यसले तिर्खा, लुतो, विषविकार र डाह नाश गर्दछ ।

(नोट : यसका बारेमा पनि मतभेद छन् । कसैले विदेशी निर्गुण्डीको फललाई शीतलचिनी मानेका छन् । कसैले छैनन्) ।

## भेडेकुरो

**ग्रन्थिपर्णं ग्रन्थिकञ्च काकपुच्छञ्च गुच्छकम् ॥१०७॥**
**नीलपुष्पं सुगन्धञ्च कथितं तैलपर्णकम् ।**
**ग्रन्थिपर्णं तिक्ततीक्ष्णं कटूष्णं दीपनं लघु ॥१०८॥**
**कफवातविषश्वासकण्डूदौर्गन्ध्यनाशनम् ।**

ग्रन्थिपर्ण, ग्रन्थिक, काकपुच्छ, गुच्छक, नीलपुष्प, सुगन्ध र तैलपर्ण : यी भेडेकुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, तिक्खर र पिरो हुन्छ । गर्मी गर्दछ । दीपनी र पचाउन हलुका हुन्छ । यसले कफविकार, वातविकार, विषविकार, दम, लुतो र दुर्गन्ध नाश गर्दछ ।

नोटः यो ओखतीका बारेमा पनि मतभेद छ । शालिग्राम वैद्यले आसामतिर पाइने घाँस जातिको गाँठा हुने, औंला जस्ता लामालामा पात र नीला गुच्छाकार फूल हुने वनस्पतिलाई ग्रन्थिपर्ण बताएका छन् ।

## ढेङ्गेसल्लो वा वर्मासल्लो (आचार्य बालकृष्ण), लोठसल्लो

**स्थौणेयकं बर्हिबर्हं शुक्रबर्हञ्च कुक्कुरम् ॥१०९॥**
**शीर्णरोमशुकञ्चापि शुकपुष्पं शुकच्छदम् ।**
**स्थौणेयकं कटु स्वादु तिक्तं स्निग्धं त्रिदोषनुत् ॥११०॥**
**मेधाशुक्रकरं रुच्यं रक्षोघ्नं ज्वरजन्तुजित् ।**
**हन्ति कुष्ठास्रतृड्दाहदौर्गन्ध्यतिलकालकान् ॥१११॥**

स्थौणेयक, बर्हिबर्ह, शुक्रबर्ह, कुक्कुर, शीर्णरोम, शुक, शुकपुष्प, शुकच्छद : यी लोठसल्लाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, स्वादिलो र तीतो हुन्छ तथा चिल्लो र त्रिदोष नाश गर्ने गुणको हुन्छ । यसले ग्रहण गर्ने शक्ति (मेधा) र वीर्य बढाउँदछ, रुची जगाउँदछ र ग्रहदोष नाश गर्दछ साथै, जरो, कीरा, कुष्ठ, रक्तविकार, तिर्खा, डाह, दुर्गन्ध र छालाका कोठी नाश गर्दछ ।

## गन्धपाला विशेष (समयो, नेवारी भाषामा चमेहा)

**निशाचरो धनहरः कितवो गणहासकः ।**
**चोरकः शङ्कितश्चण्डो दुष्पत्रः क्षेमको रिपुः ॥११२॥**
**चोरको मधुरस्तिक्तः कटुः पाके कटुर्लघुः ।**
**तीक्ष्णो हृद्यो हिमो हन्ति कुष्ठकण्डूकफानिलान् ॥११३॥**
**रक्षोऽश्रीस्वेदमेदोऽस्रज्वरगन्धविषव्रणान् ।**

निशाचर, धनहर, कितव, गणहासक, चोरक, शङ्कित, चण्ड, दुष्पत्र, क्षेमक र रिपु : यी समयोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मिठो, तीतो र पिरो हुन्छ र पचेपछि पिरो हुन्छ । पचाउन हलुका र तिक्खर हुन्छ । यो मुटुका लागि लाभदायक र शीतल गर्ने गुणको हुन्छ । यसले कुष्ठ, लुतो, कफविकार, वातविकार, ग्रहबाधा, अलक्ष्मी, पसिना-रोग, बोसोविकार, रक्तविकार, जरो, दुर्गन्ध, विषविकार र घाउखटिरा निको पार्दछ ।

## सुनपाती वा गोब्रेसल्लो

**तालीसमुक्तं पत्राढ्यं धात्रीपत्रञ्च तत्स्मृतम् ॥११४॥**
**तालीसं लघु तीक्ष्णोष्णं श्वासकासकफानिलान् ।**
**निहन्त्यरुचिगुल्मामवह्निमांद्यक्षयामयान् ॥११५॥**

तालीस, पत्राढ्य र धात्रीपत्र : यी सुनपातीका संस्कृत पर्यायवाची नामहरू हुन् । सुनपाती पचाउन हलुका, तिक्खर र गर्मी गर्ने गुणको हुन्छ । यसले दम, खोकी, कफविकार, वायुविकार, अरुची, गुल्म, आमविकार, कमजोर पाचनशक्ति र क्षयरोग नाश गर्दछ ।

## फलकपुर

**कङ्कोलं कोलकं प्रोक्तं तथा कोषफलं स्मृतम् ।**
**कङ्कोलं लघु तीक्ष्णोष्णं तिक्तं हृद्यं रुचिप्रदम् ॥११६॥**
**आस्यदौर्गन्ध्यहृद्रोगकफवातामयान्ध्यहृत् ।**

कङ्कोल, कोलक र कोषफल : यी शीतलचिनीका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो पचाउन हलुका, तिक्खर, गर्मी गर्ने, तीतो, मुटुका लागि फाइदाजनक र रुचीकारक हुन्छ । यसले मुखको दुर्गन्ध, मुटुका रोग, कफविकार, वातविकार र अन्धोपन नाश गर्दछ ।

## गन्धकोकिला र गन्धमालती

**स्निग्धोष्णा कफहृत्तिक्ता सुगन्धा गन्धकोकिला ॥११७॥**
**गन्धकोकिलया तुल्या विज्ञेया गन्धमालती ।**

गन्धकोकिला चिल्लो, गर्मी गर्ने, कफनाशक, तीतो र सुगन्धी हुन्छ । गन्धमालतीका गुण पनि गन्धकोकिलाका सरह हुन् भनी जान्नू ।

नोट : गन्धमालतीलाई शब्दकल्पद्रुममा गन्धद्रव्य विशेष भनी लेखिएको छ भने गन्धप्रधान, गन्धमूलिका वा कोकिला नामको गन्धद्रव्य विशेष भनी गन्धकोकिलाको परिभाषा दिइएको छ । यी दुई वनस्पतिका बारेमा यकीन गर्न सकिएन ।

## लामज्जक

**लामज्जकं सुनालं स्यादमृणालं लवं लघु ॥११८॥**
**इष्टकापथकं सेव्यं नलदञ्चावदातकम् ।**
**लामज्जकं हिमं तिक्तं लघु दोषत्रयास्रजित् ॥११९॥**
**त्वगामयस्वेदकृच्छ्रदाहपित्तास्ररोगनुत् ।**

लामज्जक, सुनाल, अमृणाल, लव, लघु, इष्टकापथक, सेव्य, नलद र अवदातक : यी लामज्जकका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ, तीतो हुन्छ र पचाउन सहज हुन्छ । यसले त्रिदोष, रक्तविकार, छालाका रोग, पसिना आउने रोग, कृच्छ्ररोग, डाह र रक्तपित्त ठिक गर्दछ ।
नोट : यसलाई कुलचन्द्र शर्माले उशीरको जरा भनेका छन् । भावप्रकाशका टीकाकारले यसलाई उशीरजस्तै तर पहेँलो वर्णको झार मानेका छन् ।

## सिलटिमुर

**एलवालुकमैलेयं सुगन्धि हरिवालुकम् ॥१२०॥**
**ऐलवालुकमेलालु कपित्थत्वचमीरितम् ।**
**एलालु कटुकं पाके कषायं शीतलं लघु ॥१२१॥**
**हन्तिकण्डूव्रणच्छर्दितृट्कासारुचिहृद्रुजः ।**
**बलासविषपित्तास्रकुष्ठमूत्रगदकृमीन् ॥१२१॥**

एलवालुक, ऐलेय, सुगन्धि, हरिवालुक, ऐलवालुक, एलालु र कपित्थत्वग् : यी सिलटिमुरका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो पिरो स्वादको हुन्छ र पचेपछि टर्रो हुन्छ । यसले शीतल गर्दछ र पचाउन हलुका हुन्छ । साथै लुतो, घाउखटिरा, वाकवाकी, तिर्खा, खोकी, अरुची, मुटुका रोग, कफविकार, विषविकार, रक्तपित्त, कुष्ठ, मूत्ररोग र कीरा समेत नाश गर्दछ ।

## सेतो मोथे

**कुटन्नटं दासपुरं बालेयं परिपेलवम् ।**
**प्लवगोपुरगोनर्दकैवर्तीमुस्तकानि च ॥१२२॥**
**मुस्तावत्पेलवपुरं शुकाभं स्याद्बितुन्नकम् ।**
**वितुन्नकं हिमं तिक्तं कषायं कटु कान्तिदम् ॥१२३॥**
**कफपितास्रवीसर्पकुष्ठकण्डूविषप्रणुत् ।**

कुटन्नट, दासपुर, बालेय, परिपेलव, प्लव, गोपुर, गोनर्द, कैवर्तीमुस्तक र बितुन्नक : यी सेतो मोथेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मोथे जस्तै कमला कोसा भएको र सुँगा जस्तै रङको हुन्छ । यसले शीतल गर्दछ । यसको स्वाद तीतो, टर्रो र पिरो हुन्छ । यसले शरीरमा कान्ति दिन्छ । साथै, कफविकार, पित्तविकार, रक्तविकार, वीसर्प, कुष्ठ, लुतो र विषविकार नाश गर्दछ ।

नोट : यो मोथे जातकै सुगन्धित झार हो । मोथेको कन्द कालो हुन्छ तर यसका कन्द सेतो र सानो हुन्छ । पानीका छेउछाउमा यो बढी उम्रन्छ ।यसको माख्लो भागमा कालो रङको खोल हुन्छ, जसलाई हटाउँदा दूध जस्तै सेतो गाँठा निस्कन्छ र यसबाट हल्का कपुरको जस्तो बास्ना आउँदछ । यसको फूल पनि सेतो हुन्छ ।

## कपुरपाती

**स्पृक्काऽसृग् ब्राह्मणी देवी मरुन्माला लता लघुः ॥१२४॥**
**समुद्रान्ता वधूः कोटिवर्षालङ्कोपिकेत्यपि ।**
**स्पृक्का स्वाद्वी हिमा वृष्या तिक्ता निखिलदोषनुत् ॥१२५॥**
**कुष्ठकण्डूविषस्वेददाहाश्री ज्वररक्तहृत् ।**

स्पृक्का, असृक्, ब्राह्मणी, देवी, मरुन्माला, लता, लघु, समुद्रान्ता, वधू, कोटिवर्षा, र अलङ्कोपिका : यी कपुरपातीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो स्वादिलो, शीतल गर्ने, वीर्यवर्धक, तीतो र सबै खालका रोग नाशक हुन्छ । यसले कुष्ठ, लुतो, विषविकार, पसिना आउने रोग, डाह, रक्तविकार र रगतजन्य जरो समेत नाश गर्दछ ।

नोट : यो एक राता पात हुने सुगन्धित साग हो र लहरा फैलिए जसरी भुइँमा वा नजिक रहेका झाडीमा फैलिन्छ । यसको स्वाद तीतो हुन्छ । यो पानी धेरै हुने वा सिमसार क्षेत्रमा बढी उम्रन्छ ।

## पद्मावती

**पर्पटी रञ्जना कृष्णा जतुका जननी जनी ॥१२६॥**
**जतुकृष्णाऽग्निसंस्पर्शा जतुकृच्चक्रवर्त्तिनी ।**
**पर्पटी तुवरा तिक्ता शिशिरा वर्णकृल्लघुः ॥१२७॥**
**विषव्रणहरी कण्डूकफपित्तास्रकुष्ठनुत् ।**

पर्पटी, रञ्जना, कृष्णा, जतुका, जननी, जनी, जतुकृष्णा, अग्निसंस्पर्शा, जतुकृत् र चक्रवर्तिनी : यी पद्मावतीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र तीतो हुन्छ । यसले शीतल गर्दछ र वर्णमा निखार लेराउँदछ । पचाउन हलुका हुन्छ । यसले विषविकार, घाउखटिरा, लुतो, कफविकार, पित्तविकार, रक्तविकार र कुष्ठ नाश गर्दछ ।

नोट : यो एक सुगन्धित लहरा हो । यसका पात रङ्गाउन र ओखतीमा प्रयोग हुन्छ । यसका पात पानका पातसँग मिल्दाजुल्दा हुन्छन् । यसलाई तेल र ओखती सुगन्धित बनाउन हाल्ने गरिन्छ ।

## महारङ्गी भनिने मालकागुनु विशेष वा नलिका

**नलिका विद्रुमलता कपोतचरणा नटी ॥१२८॥**

**धमन्यञ्जनकेशी च निर्मध्या सुषिरा नली ।**
**नलिका शीतला लघ्वी चक्षुष्या कफपित्तहृत् ॥१२९॥**
**कृच्छ्राश्मवाततृष्णाऽस्रकुष्ठकण्डूज्वरापहा ।**

नलिका, विद्रुमलता, कपोतचरणा, नटी, धमनी, अञ्जनकेशी, निर्मथ्या, सुषिरा र नली यी नलिकाका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो शीतल गर्ने, पचाउन हलुका र आँखाका लागि लाभदायक हुन्छ । उसले कफविकार, पित्तविकार, कृच्छ्ररोग, पत्थरी, वातविकार, तिर्खा, रक्तविकार, कुष्ठ, लुतो र जरो नाश गर्दछ ।

## धूपी विशेष

**प्रपौण्डरीकं पौण्डर्यं चक्षुष्यं पौण्डरीयकम् ॥१३०॥**
**पौण्डर्यं मधुरं तिक्तं कषायं शुक्रलं हिमम् ।**
**चक्षुष्यं मधुरं पाके वर्ण्यं पित्तकफप्रणुत् ॥१३१॥**

प्रपौण्डरीक, पौण्डर्य, चक्षुष्य, पौण्डरीयक : यी धूपी विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मिठो, तीतो र टर्रो हुन्छ । यसले बीर्य बढाउँदछ र शीतल गर्दछ । यो आँखाका लागि लाभदायक, पचेपछि गुलियो, वर्णमा निखार लेराउने, पित्तविकार नाशक र कफविकार नाशक हुन्छ ।

## पुदीना (बाबरी) विशेष

**व्यञ्जनो वान्तिहारी च रुचिश्यः शाकशोभनः ।**
**पुदिनस्तु गुरुः स्वादू रुच्यो हृद्यः सुखावहः ॥१३२॥**
**मलमूत्रस्तम्भकर कफकासमदापहः ।**
**अग्निमान्द्यविषूचिघ्नः संग्रहण्यतिसारहा ॥**
**जीर्णज्वरंकृमींश्चैव नाशयेदिति कीर्तितम् ॥१३३॥**

व्यञ्जन, वान्तिहारी, रुचिश्य र शाकशोभन : यी पुदीनाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, स्वादिलो, रुचीकारक, मुटुका लागि लाभदायक र सुखदायक हुन्छ । यसले मलमूत्रलाई रोक्दछ तथा कफविकार, खोकी र नसा ठिक गर्दछ । यसले कमजोर पाचनशक्ति, विषूचिका, संग्रहणी, अतिसार, पुरानो जरो र कीरा नाश गर्दछ भनिएको छ ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे वर्गप्रकरणे कर्पूरादिवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको कपूरआदि-वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## अथ गुडूच्यादिवर्गः

**यदा लङ्केश्वरो मानी रावणो राक्षसाधिपः ।**

रामपत्नीं बलात्सीतां जहार मदनातुरः ॥१॥
ततस्तं वलवान् रामो रिपुं जायापहारिणम् ।
वृतो बानरसैन्येन जघान रणमूर्द्धनि ॥२॥
हते तस्मिन् सुरारातौ रावणे बलगर्विते ।
देवराजः सहस्राक्षः परितुष्टो हि राघवे ॥३॥
तत्र ये वानराः कैचिद्राक्षसैर्निहता रणे ।
तानिन्द्रो जीवयामास संसिच्यामृतवृष्टिभिः ॥४॥
ततो येषु प्रदेशेषु कपिगात्रात्परिच्युताः ।
पीयूषबिन्दवः पेतुस्तेभ्यो जाता गुडूचिका ॥५॥
गुडूची मधुपर्णी स्यादमृतामृतवल्लरी ।
छिन्ना छिन्नरुहा छिन्नोद्भवा वत्सादनीति च ॥६॥
जीवन्ती तन्त्रिका सोमा सोमवल्ली च कुण्डली ।
चत्रव्रलक्षणिका धीरा विशल्या च रसायनी ॥७॥
चन्द्रहासा वयस्था च मण्डली देवनिर्मिता ।
गुडूची कटुका तिक्ता स्वादुपाका रसायनी ॥८॥
संग्राहिणी कषायोष्णा लघ्वी बल्याग्निदीपनी ।
दोषत्रयामतृड्दाहमेहकासांश्च पाण्डुताम् ॥९॥
कामलाकुष्ठवातास्रज्वरकृमिवमीहरेत् ।
प्रमेहश्वासकासार्शः कृच्छ्रहृद्रोगवातनुत् ॥१०॥

जब राक्षसको स्वामी लङ्काको घमण्डी राजा रावणले कामान्ध भई रामचन्द्रकी पत्नी सीतालाई बलपूर्वक हरण गरेर लग्यो तब बलिया रामचन्द्रले स्त्रीहरण गर्ने त्यो शत्रुलाई बाँदर सेनाको सहयोगमा युद्ध गरी मारे । बलको अभिमानी एवं देवताको शत्रु त्यो रावण मारिँदा हजार आँखा भएका देवताका राजा इन्द्र रामचन्द्रसँग अति प्रसन्न भए र युद्धमा राक्षसबाट मारिएका सबै बाँदरलाई अमृत वर्षा गरी सिँचेर पुनः ब्युँताइ दिए । यसपछि अमृत वर्षा गर्दा जुन ठाउँमा बाँदरका शरीरबाट अमृतका थोपा जमिनमा खस्यो त्यहाँ गुर्जो उत्पन्न भयो । गुडूची, मधुपर्णी, अमृता, अमृतवल्लरी, छिन्ना, छिन्नरुहा, छिन्नोद्भवा, वत्सादनी, जीवन्ती, तन्त्रिका, सोमा, सोमवल्ली, कुण्डली, चक्रलक्षणिका, धीरा, विशल्या, रसायनी, चन्द्रहासा, वयस्था, मण्डली र देवनिर्मिता : यी गुर्जोका संस्कृत पर्यायवाची नामहरु हुन् । गुर्जो पिरो, तीतो र टर्रो हुन्छ र पचेपछि गुलियो हुन्छ । यो रसायनी, संग्राही, गर्मी गर्ने, पचाउन सहज, बलदायक र पाचकाग्नि वर्धक हुन्छ । यसले त्रिदोष, आमविकार, तिर्खा, डाह, प्रमेह, खोकी, पाण्डुरोग, कमलपित्त, कुष्ठ, वातरक्त, जरो, कीरा र वाकवाकी नाश गर्दछ । यसले दम, खोकी, अल्काई, कृच्छ्र, मुटुका रोग र वातविकार नाश गर्दछ ।

नोटः राम्रा र मोटा गुर्जोका लहरालाई वर्षा लाग्नु अघि बटुलेर बाहिरको छाला निकाल्नू । राम्ररी पखाल्नू । अनि ससाना टुक्रा पार्नू र ओखलमा कुट्नू । यसमा चौबर पानी हाली १२-१४ घण्टा ढड्याउनू । अनि राम्ररी मिचेर कपडामा छान्नू । थेग्रीन तल बसेपछि माथिको पानी बिस्तारै फाल्नू । अनि थेग्रिनलाई टम्म बिर्को लाग्ने सिसीमा हालेर राख्नू । कसैकसैले यसरी निथारिएको पानीमा फेरी त्यही गुर्जो हाली मिचेर उमाल्दछन् र कपडाले छान्दछन् । अनि पहिले निकालेको थेग्रीनमा मिसाएर घाममा सुकाउँदछन् । यसले गर्दा तातोपानीमा घोलिने पदार्थ पनि मिसिन जान्छ । कसै कसैले निथारिएको पानी मात्र पनि उमालेर सेलाई

पिउने गर्दछन् । मात्राका विषयमा धुलो खाए १-३ मासा, काँढापानी खाए ४-८ तोला र निधार खाए ५-१५ रत्ति खानु पर्दछ ।

## पान

**ताम्बूलवल्ली ताम्बूली नागिनी नागवल्लरी ।**
**ताम्बूलं विशदं रुच्यं तीक्ष्णोष्णं तुवरं सरम्॥११॥**
**वश्यं तिक्तं कटु क्षारं रक्तपित्तकरं लघु ।**
**बल्यं श्लेष्मास्यदौर्गन्ध्यमलवातश्रमापहम्॥१२॥**

ताम्बूलवल्ली, ताम्बूली, नागिनी, नागवल्लरी र ताम्बूल : यी पानका संस्कृत पर्यायवाची नामहरू हुन् । पान सुन्दर,रुचि जगाउने, तिक्खर, गर्मी गर्ने, टर्रो, दिसा खुलाउने, वशमा पार्ने, तीतो, पिरो, नुनिलो, रक्तपित्तकारी, पचाउन सहज र बलदायक हुन्छ । यसले कफविकार, मुखको दुर्गन्ध, दिसाको विकार, वातविकार र थकाई भगाउँदछ ।
नोट : लागु औषधी समेत पानमा मिसाएर खाने वा बेच्ने गरिन्छ ।

## बेल

**बिल्वः शाण्डिल्यशैलूषौ मालूरश्रीफलावपि ।**
**श्रीफलस्तुवरस्तिक्तो ग्राही रूक्षोऽग्निपित्तकृत्॥१३॥**
**वातश्लेष्महरो बल्यो लघुरुष्णश्च पाचनः ।**

बिल्व, शाण्डिल्य, शैलूष, मालूर र श्रीफल : यी बेलका संस्कृत पर्यायवाची नामहरू हुन् । बेल टर्रो र तीतो हुन्छ । यो सङ्ग्राही, रुखो, अग्निवर्धक, पित्तकारक, वातविकार नाशक, कफविकार नाशक, बलकारक, पचाउन हलुका, गर्मी गर्ने र पाचक हुन्छ ।

नोटः बेलको जरा, बोक्रा, काँचो फल, पाकेको फल, पात र फूल ओखतीमा प्रयोग गरिन्छ । धुलो आदि बनाउन काँचो फल, लेप वा लेह बनाउन आधा पाकेको फल र पेय बनाउन पाकेको फलको गुदी लिनु पर्दछ । दशमूल आदि काँढापानी बनाउँदा भने यसको जरा वा रुखको बोक्रा प्रयोग गर्ने गरिन्छ । जसलाई कहिले दिसा नहुने त कहिले दिसा लागिरहने गर्दछ उसले बिहान बिहान खाली पेटमा पाकेको बेलको गुदीको सर्वत छानेर बढीमा एक चम्चा एक गिलास पानीमा हालेर पिउने गर्नू । तर यसको प्रयोग गर्दा जरो आएको हुनु हुँदैन । यसको मात्रा सामान्यतः धुलो २-८ मासा र काँढापानी आधादेखि दुई औंससम्म हो ।

## खमारी

**गम्भारी भद्रपर्णी च श्रीपर्णी मधुपर्णिका॥१४॥**
**काश्मीरी काश्मरी हीरा काश्मर्यः पीतरोहिणी ।**
**कृष्णवृन्ता मधुरसा महाकुसुमिकाऽपि च॥१५॥**

**काश्मीरी तुवरा तिक्ता वीर्योष्णा मधुरा गुरुः ।**
**दीपनी पाचनी मेध्या भेदिनी भ्रमशोषजित् ॥१६॥**
**दोषतृष्णाऽऽमशूलार्शोविषदाहज्वरापहा ।**

गम्भारी, भद्रपर्णी, श्रीपर्णी, मधुपर्णिका, काश्मीरी, काश्मरी, हीरा, काश्मर्य, पीतरोहिणी, कृष्णवृन्ता, मधुरसा र महाकुसुमिका : यी खमारीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र तीतो हुन्छ । यसले गर्मी गर्दछ । स्वादिलो हुन्छ तर पचाउन कठिन हुन्छ । यो दीपनी, पाचनी र ग्रहण गर्ने क्षमता बढाउने गुणको हुन्छ । यसले मललाई खुकुलो पार्दछ । साथै यसले भ्रम, सुजन, त्रिदोष, तिर्खारोग, आमविकार, शूल, अल्काई, विषविकार, डाह र जरो समेत नाश गर्दछ ।

**तत्फलं बृंहणं वृष्यं गुरु केश्यं रसायनम् ॥१७॥**
**वातपित्ततृषारक्तक्षयमूत्रविबन्धनुत् ।**
**स्वादु पाके हिमं स्निग्धं तुवराम्लं विशुद्धिकृत् ॥१८॥**
**हन्याद्दाहतृषावातरक्तपित्तक्षतक्षयान् ।**

खमारीको फल धातुवर्धक (पौष्टिक), वीर्यवर्धक, पचाउन कठिन, कपालका लागि लाभदायक र रसायनी हुन्छ । यसले वातविकार, पित्तविकार, तिर्खारोग, रगतको क्षय हुने रोग र पिसाब रोकिने समस्या ठिक गर्दछ । यसको पचेपछिको रस स्वादिलो हुन्छ । यसले शीतल गर्दछ, चिल्लो हुन्छ, केही टर्रो र अमिलो हुन्छ, र शुद्ध बनाउने गुणको हुन्छ । यसले डाह, तिर्खा, वातविकार, रक्तपित्त, घाउ र क्षयरोग समेत नाश गर्दछ ।

नोटः खमारीको पात गाईको दूधमा पिँधेर टाउकोमा दल्नाले ग्रीष्मऋतुमा  टाउको दुख्ने समस्या ठीक हुन्छ । मात्रा : धुलो ३-६ मासा र फल १-३ मासा ।

## पाडरी र मोघा नामक लोधविशेष

**पाटलि पाटलाऽमोघा मधुदूतो फलेरुहा ॥१९॥**
**कृष्णवृन्ता कुबेराक्षी कालस्थाल्यलिवल्लभा ।**
**ताम्रपुष्पी च कथिताऽपरा स्यात्पाटला सिता ॥२०॥**
**मुष्कको मोक्षको घण्टापाटलिः काष्ठपाटला ।**
**पाटला तुवरा तिक्ताऽनुष्णा दोषत्रयापहा ॥२१॥**
**अरुचिश्वासशोथास्रच्छर्दिहिक्कातृषाहरी ।**
**पुष्पं कषायं मधुरं हिमं हृद्यं कफास्रनुत् ॥२२॥**
**पित्तातिसारहृत्कण्ठ्यं फलं हिक्काऽस्रपित्तहृत् ।**

पाटलि, पाटला, अमोघा, मधुदूती, फलेरुहा, कृष्णवृन्ता, कुबेराक्षी, कालस्थाली, अलिवल्लभा र ताम्रपुष्पी : यी पाडरीका संस्कृत पर्यायवाची नामहरू हुन् । अर्को मधेसतिर मोघा भनिने लोधविशेष (सेतो पाडरी) का पाटला सिता, मुष्कक, मोक्षक, घण्टापाटलि र काष्ठपाटला संस्कृत पर्यायवाची नामहरू हुन् । पाडरी टर्रो र तीतो हुन्छ । यसले गर्मी गर्दैन ।  पाडरीले त्रिदोष, अरुची, दम, सुजन, रक्तविकार, वाकवाकी, बाडुली र

तिर्खा नाश गर्दछ । यसको फूल टर्रो, मिठो, शीतल गर्ने, मुटुका लागि फाइदाजनक, कफविकार नाशक, अतिसार नाशक र घाँटीका लागि फाइदा गर्ने हुन्छ । यसको फलले बाडुली र रक्तपित्त नाश गर्दछ ।

## गिनेरी

**अग्निमन्थो जयः सस्याच्छ्रीपर्णी गणिकारिका ॥२३॥**
**जया जयन्ती तर्कारी नादेयी वैजयन्तिका ।**
**अग्निमन्थः श्वयथुनुद्वीर्योष्णः कफवातहृत् ॥२४॥**
**पाण्डुनुत्कटुकस्तिक्तस्तुवरो मधुरोऽग्निदः ।**

अग्निमन्थ, जय, श्रीपर्णी, गणिकारिका, जया, जयन्ती, तर्कारी, नादेयी र वैजयन्तिका : यी गिनेरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले सुजन ठिक गर्दछ, गर्मी गर्दछ, कफविकार र वातविकार नाश गर्दछ तथा पाण्डु रोग ठिक गर्दछ । यो पिरो, तीतो, टर्रो र गुलियो हुन्छ । यसले जठराग्निलाई बाल्दछ ।

## टटेलो

**श्योनाकः शोषणश्च स्यान्नटकट्वङ्गटुण्टुकाः ॥२५॥**
**मण्डूकपर्णपत्रोर्णशुकनासकुटन्नटाः ।**
**दीर्घवृन्तोऽरलुश्चापि पृथुशिम्बः कटम्भरः ॥२६॥**
**श्योनाको दीपनः पाके कटुकस्तुवरो हिमः ।**
**ग्राही तिक्तोऽनिलश्लेष्मपित्तकासप्रणाशनः ॥२७॥**
**टुण्टुकस्य फलं बालं रूक्षं वातकफापहम् ।**
**हृद्यं कषायं मधुरं रोचनं लघु दीपनम् ॥२८॥**
**गुल्मार्शःकृमिहृत् प्रौढं गुरु वातप्रकोपणम् ।**

श्योनाक, शोषण, नट, कट्वङ्ग, टुण्टुक, मण्डूकपर्ण, पत्रोर्ण, शुकनास, कुटन्नट, दीर्घवृन्त, अरलु, पृथुशिम्ब, र कटम्भर : यी टटेलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो दीपनी र पचेपछि पिरो हुन्छ । यो टर्रो हुन्छ र शीतल गर्दछ । टटेलो सङ्ग्राही र तीतो हुन्छ । यसले वातविकार, कफविकार, पित्तविकार र खोकी नाश गर्दछ । यसको कमलो फल रुखो, वातविकार र कफविकार नाशक तथा मुटुका लागि फाइदाजनक हुन्छ । यो टर्रो, गुलियो र रुचिकर हुन्छ । पचाउन हलुका हुनुका साथै जठराग्निलाई बाल्दछ । यसले गुल्म, अल्काई र कीरा नाश गर्दछ । यसको छिप्पिएको फल पचाउन कठिन र वातविकार बढाउने गुणको हुन्छ ।

## बृहत्पञ्चमूल

**श्रीफलः सर्वतोभद्रा पाटला गणिकारिका ॥२९॥**
**श्योनाकः पञ्चभिश्चैतैः पञ्चमूलं महन्मतम् ।**
**पञ्चमूलं महत् तिक्तं कषायँ कफवातनुत् ॥३०॥**

**मधुरं श्वासकासघ्नमुष्णं लघ्वग्निदीपनम् ।**

बेल, खमारी, पाडरी, गिनेरी र टटेलेको जराको सम्मिश्रणलाई बृहत् पञ्चमूल भनिन्छ । यो तीतो, टर्रो, कफविकार नाशक र वातविकार नाशक हुन्छ । यो गुलियो हुनाका साथै यसले दम र खोकी नाश गर्दछ । यसले गर्मी गर्दछ, पचाउन हलुका हुन्छ र जठराग्निलाई बाल्दछ ।

## साकिनु (शालपर्णी)

**शालपर्णी स्थिरा सौम्या त्रिपर्णी पीवरी गुहा ॥३१॥**
**विदारिगन्धा दीर्घाङ्गी दीर्घपत्रांऽशुमत्यपि ।**
**शालपर्णी गुरुश्छर्दिज्वरश्वासातिसारजित् ॥३२॥**
**शोषदोषत्रयहरी बृंहण्युक्ता रसायनी ।**
**तिक्ता विषहरी स्वादुः क्षतकासकृमिप्रणुत् ॥३३॥**

शालपर्णी, स्थिरा, सौम्या, त्रिपर्णी, पीवरी, गुहा, विदारिगन्धा, दीर्घाङ्गी, दीर्घपत्रा तथा अंशुमती : यी साकिनुका  संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन तथा वाकवाकी, जरो, दम, अतिसार, सुजन र त्रिदोष नाशक हुन्छ । यो पौष्टिक र रसायनी हुन्छ । यो तीतो, विषविकार नाशक र गुलियो हुन्छ । यसले घाउ, खोकी र कीरा नाश गर्दछ ।

## चाल्ने सिस्नु वा अल्लो (?), पृश्निपर्णी

**पृश्निपर्णी पृथक्पर्णी चित्रपर्ण्यहिपर्ण्यपि ।**
**क्रोष्टुविन्ना सिंहपुच्छी कलशी धावनिर्गुहा ॥३४॥**
**पृश्निपर्णी त्रिदोषघ्नी वृष्योष्णा मधुराऽसरा ।**
**हन्ति दाहज्वरश्वासरक्तातीसारतृड्वमीः ॥३५॥**

पृश्निपर्णी, पृथक्पर्णी, चित्रपर्णी, अहिपर्णी, क्रोष्टुविन्ना, सिंहपुच्छी, कलशी, धावनि र गुहा : यी चाल्ने सिस्नुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले त्रिदोष नाश गर्दछ, वीर्यवर्धक हुन्छ र गर्मी गर्दछ । यो गुलियो र सङ्ग्राही हुन्छ । यसले डाह, जरो, दम, रक्तातिसार, तिर्खा र वाकवाकी नाश गर्दछ ।

(नोट : पृश्निपर्णीको नेपाली नाम के.यन.स्वामीले सतिबयर र कुलचन्द्र शर्माले चाल्ने सिस्नु भनी दिएका छन् ।

## ठूलो बिही (ठूलो कण्टकारी)

**वार्त्ताकी क्षुद्रभण्टाकी महती बृहती कुली ।**
**हिङ्गुली राष्ट्रिका सिंही महोष्ट्री दुष्प्रधर्षिणी ॥३६॥**

**बृहती ग्राहिणी हृद्या पाचनी कफवातहृत् ।**
**कटुतिक्ताऽऽस्यवैरस्यमलारोचकनाशिनी ॥३७॥**
**उष्णा कुष्ठज्वरश्वासशूलकासाग्निमान्द्यजित् ।**

वार्त्ताकी, क्षुद्रभण्टाकी, महती, बृहती, कुली, हिङ्गुली, राष्ट्रिका, सिंही, महोष्ट्री र दुष्प्रधर्षिणी : यी ठूलो बिहीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सङ्ग्राही, मुटुका लागि लाभदायक, पाचनी, कफविकार नाशक र वातविकार नाशक हुन्छ । यो पिरो र तीतो हुन्छ । यसले मुख सुकेको, दिसा र अरुची नाश गर्दछ । यसले गर्मी गर्दछ । कुष्ठ, जरो, दम, शूल, खोकी र कमजोर पाचनशक्ति समेत यसले ठिक गर्दछ ।

## सानो बिही (कण्टकारी)

**कण्टकारी तु दुःस्पर्शा क्षुद्रा व्याघ्री निदिग्धिका ॥३८॥**
**कण्टालिका कण्टकिनी धावनी बृहती तथा ।**

कण्टकारी, दुःस्पर्शा, क्षुद्रा, व्याघ्री, निदिग्धिका, कण्टालिका, कण्टकिनी, धावनी र बृहती : यी कण्टकारीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**श्वेता क्षुद्रा चन्द्रहासा लक्ष्मणा क्षेत्रदूतिका ॥३९॥**
**गर्भदा चन्द्रमा चन्द्री चन्द्र पुष्पा प्रियङ्करी ।**

श्वेता, क्षुद्रा, चन्द्रहासा, लक्ष्मणा, क्षेत्रदूतिका, गर्भदा, चन्द्रमा, चन्द्री, चन्द्रपुष्पा र प्रियङ्करी : यी सेतो फूल फुल्ने कण्टकारीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**कण्टकारी सरा तिक्ता कटुका दीपनी लघुः ॥४०॥**
**रूक्षोष्णा पाचनी कासश्वासज्वरकफानिलान् ।**
**निहन्ति पीनसं पार्श्वपीडाकृमिहृदामयान् ॥४१॥**

कण्टकारी दिसा लगाउने, तीतो, पिरो, दीपनी र पचाउन हलुका हुन्छ । यो रुखो, गर्मी गर्ने र पाचनी हुन्छ । यसले खोकी, दम, जरो, कफविकार, वातविकार, पिनास, कोखाको दुखाई, कीरा र मुटुका रोग नाश गर्दछ ।

**तयोः फलं कटु रसे पाके च कटुकं भवेत् ।**
**शुक्रस्य रेचनं भेदि तिक्तं पित्ताग्निकृल्लघु ॥४२॥**
**हन्यात्कफमरुत्कण्डूकासमेदःकृमिज्वरान् ।**

यी दुवै कण्टकारी (बिही) का फल शुरुमा र पचेपछि पिरो स्वादका हुन्छन् । यी शुक्र-रेचनी हुन्छन् । दिसा खुकुलो पार्दछन् र तीता हुन्छन् । यिनले पित्तविकार र जठराग्नि बढाउँदछन् । पचाउन हलुका हुनुका साथै कफविकार, वातविकार, लुतो, खोकी, बोसोविकार, कीरा र जरो नाश गर्दछन् ।

**तद्वत्प्रोक्ता सिता क्षुद्रा विशेषाद् गर्भकारिणी ॥४३॥**

सेतो फूल फुल्ने कण्टकारीमा उपरोक्त सबै गुणका अतिरिक्त विशेष गरी गर्भधारण गराउने गुण हुन्छ ।

## ओदानेकाँडो

**गोक्षुरः क्षुरकोऽपि स्यात्त्रिकण्टः स्वादुकण्टकः ।**
**गोकण्टको गोक्षुरको वनशृङ्गाट इत्यपि ॥४४॥**
**पलङ्कषा श्वदंष्ट्रा च तथा स्यादिक्षुगन्धिका ।**
**गोक्षुरः शीतलःस्वादुर्बलकृद्बस्तिशोधनः ॥४५॥**
**मधुरो दीपनो वृष्यः पुष्टिदश्चाश्मरीहरः ।**
**प्रमेहश्वासकासार्शः कृच्छ्रहृद्रोगवातनुत् ॥४६॥**

गोक्षुर, क्षुरक, त्रिकण्ट, स्वादुकण्टक, गोकण्टक, गोक्षुरक, वनशृङ्गाट, पलङ्कषा, श्वदंष्ट्रा र इक्षुगन्धिका : यी ओदानेकाँडोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ, स्वादिलो हुन्छ, बल दिन्छ र तल्लो पेट सफा गर्दछ । यो गुलियो, दीपनी, वीर्यवर्धक, पौष्टिक र पत्थरी नाशक हुन्छ । यसका साथै यसले प्रमेह, दम, खोकी, अल्काई, कृच्छ्ररोग, मुटुका रोग र वातरोग समेत ठिक गर्दछ ।

## लघुपञ्चमूल

**शालपर्णी पृश्निपर्णी वार्त्ताकी कण्टकारिका ।**
**गोक्षुरः पञ्चभिश्चैतैः कनिष्ठं पञ्चमूलकम् ॥४७॥**
**पञ्चमूलं लघु स्वादु बल्यं पित्तानिलापहम् ।**
**नात्युष्णं बृंहणं ग्राहि ज्वरश्वासाश्मरीप्रणुत् ॥४८॥**

साकिनु, चाल्ने सिस्नु, ठूलो बिही, कण्टकारी र ओदानेकाँडोको जराको समष्टीलाई लघुपञ्चमूल भनिन्छ । यो पचाउन हलुका, स्वादिलो, बलदायक, पित्तविकार नाशक र वातविकार नाशक हुन्छ । यसले धेरै गर्मी पनि गर्दैन । यो पौष्टिक र सङ्ग्राही हुन्छ । यसले जरो, दम र पत्थरी ठिक गर्दछ ।

## दशमूल

**उभाभ्यां पञ्चमूलाभ्यां दशमूलमुदाहृतम् ।**
**दशमूलं त्रिदोषघ्नं श्वासकासशिरोरुजः ॥४९॥**
**तन्द्राशोथज्वरानाहपार्श्वपीडाऽरुचीहरेत् ।**

लघु र बृहत् दुबै पञ्चमूलको समष्टीलाई दशमूल भनिन्छ । यसले त्रिदोष, दम, खोकी र टाउकाका रोग निको पार्दछ । यसका साथै तन्द्रा, सुजन, जरो, आनाह, कोखाको शूल र अरुची पनि नाश गर्दछ ।

## जिरीको साग

**जीवन्ती जीवनी जीवा जीवनीया मधुस्रवा ॥५०॥**
**माङ्गल्यनामधेया च शाकश्रेष्ठा पयस्विनी ।**
**जीवन्ती शीतला स्वादुः स्निग्धा दोषत्रयापहा ॥५१॥**
**रसायनी बलकरी चक्षुष्या ग्राहिणी लघुः ।**

जीवन्ती, जीवनी, जीवा, जीवनीया, मधुस्रवा, मङ्गलवाचक सबै शब्द, शाकश्रेष्ठा र पयस्विनी : यी जिरीका सागका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो स्वादिलो र चिल्लो हुन्छ । यसले त्रिदोष नाश गर्दछ । यो रसायनी, बलदायक, आँखाका लागि लाभदायक, सङ्ग्राही र पचाउन हलुका हुन्छ । नोटः यो साग शक्खर जस्तै मिठो फूल फुल्ने लहरादार हुन्छ । यसको पहिचानका सम्बन्धमा मतभेद पाइन्छ ।

## वनमुगी

**मुद्गपर्णी काकपर्णी सूर्यपर्ण्यल्पिका सहा ॥५२॥**
**काकमुद्गा च सा प्रोक्ता तथा मार्जारगन्धिका ।**
**मुद्गपर्णी हिमा रूक्षा तिक्ता स्वादुश्च शुक्रला ॥५३॥**
**चक्षुष्या क्षतशोथघ्नी ग्राहिणी ज्वरदाहनुत् ।**
**दोषत्रयहरी लघ्वी ग्रहण्यर्शोऽतिसारजित् ॥५४॥**

मुद्गपर्णी, काकपर्णी, सूर्यपर्णी, अल्पिका, सहा, काकमुद्गा र मार्जारगन्धिका : यी वनमुगीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो रुखो, तीतो र स्वादिलो हुन्छ । यसले वीर्य बढाउँदछ, आँखाका लागि फाइदा गर्दछ तथा क्षयरोग र सुजन नाश गर्दछ । यो सङ्ग्राही हुन्छ तथा जरो र डाह ठिक गर्दछ । त्रिदोष नाश गर्नुका साथै यो पचाउन समेत हलुका हुन्छ । यसका साथै यसले ग्रहणी, अल्काई र अतिसारलाई पनि ठिक गर्दछ ।

## मासलहरी वा वनमास

**माषपर्णी सूर्यपर्णी काम्बोजी हयपुच्छिका ।**
**पाण्डुलोमशपर्णी च कृष्णवृन्ता महासहा ॥५५॥**
**माषपर्णी हिमा तिक्ता रूक्षा शुक्रबलासकृत् ।**
**मधुरा ग्राहिणी शोथवातपित्तज्वरास्रजित् ॥५६॥**

माषपर्णी, सूर्यपर्णी, काम्बोजी, हयपुच्छिका, पाण्डुलोमशपर्णी, कृष्णवृन्ता र महासहा : यी मासलहरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो तीतो र रुखो हुन्छ । यसले वीर्य, बल र कफ बढाउँदछ । मिठो र सङ्ग्राही हुन्छ । यसले सुजन, वातविकार, पित्तविकार, जरो र रक्तविकार नाश गर्दछ ।

## जीवनीय गण

**अष्टवर्गः सयष्टीको जीवन्ती मुद्गपर्णिका ।**
**माषपर्णी गणोऽयं तु जीवनीय इति स्मृतः ॥५७॥**
**जीवनो मधुरश्चापि नाम्ना स परिकीर्त्तितः ।**
**जीवनीयगणः प्रोक्तः शुक्रकृद् बृंहणो हिमः ॥५८॥**
**गुरुर्गर्भप्रदः स्तन्यकफकृत्पित्तरक्तहृत् ।**
**तृष्णां शोषं ज्वरं दाहं रक्तपित्तं व्यपोहति ॥५९॥**

पहिले बताइएका अष्टवर्गमा जिरी, बनमुगी र वनमाष मिसाएपछि त्यसलाई जीवनीय गण भनिन्छ । यसलाई जीवन गण वा मधुर गण पनि भनिन्छ । यसले वीर्य बढाउँदछ, पौष्टिक हुन्छ र शीतल गर्दछ । यो पचाउन कठिन, गर्भ बसाउने, स्त्रीमा दूधवर्धक, कफ बढाउने, पित्तविकार नाशक र रक्तविकार नाशक गुण हुन्छन् । यसले तिर्खा, शरीर सुक्ने रोग, जरो, डाह र रक्तपित्त नाश गर्दछ ।

## सेतो र रातो अँडिर

**शुक्ल एरण्ड आमण्डश्चित्रो गन्धर्वहस्तकः ।**
**पञ्चाङ्गुलो वर्द्धमानो दीर्घदण्डो व्यडम्बकः ॥६०॥**
**वातारिस्तरुणश्चापि रुबूकश्च निगद्यते ।**
**रक्तोऽपरो रुबूकः स्यादुरुबूको रुबुस्तथा ॥६१॥**
**व्याघ्रपुच्छश्च वातारिश्चञ्चुरुत्तानपत्रकः ।**
**एरण्डयुग्मं मधुरमुष्णं गुरु विनाशयेत् ॥६२॥**
**शूलशौथकटीबस्तिशिरःपीडोदरज्वरान् ।**
**व्रध्नश्वासकफानाहकासकुष्ठाप्तमारुतान् ॥६३॥**

शुक्लैरण्ड, आमण्ड, चित्र, गन्धर्वहस्तक, पञ्चाङ्गुल, वर्द्धमान, दीर्घदण्ड, व्यडम्बक, वातारि, तरुण र रुबूक : यी सेतो अँडिरका संस्कृत पर्यायवाची नामहरू हुन् । रक्तैरण्ड, रुबूक, उरुबूक, रुबु, व्याघ्रपुच्छ, वातारि, चञ्चु र उत्तानपत्रक : यी रातो अँडिरका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै अँडिर गुलिया, गर्मी गर्ने र पचाउन कठिन हुन्छन् । अँडिरले शूल, सुजन, कम्मरको पीडा, तल्लोपेटको पीडा, टाउको दुख्ने रोग, पेटका रोग, जरो, व्रध्नरोग, दम, कफविकार, आनाह, खोकी, कुष्ठ र आमजन्य वातविकार नाश गर्दछ ।

**एरण्डपत्रं वातघ्नं कफक्रिमिविनाशनम् ।**
**मूत्रकृच्छ्रहरं चापि पित्तरक्तप्रकोपणम् ॥६४॥**
**वातार्यग्रदलं गुल्मबस्तिशूलहरं परम् ।**

**कफवातकृमीन्हन्ति वृद्धिं सप्तविधामपि ॥६५॥**
**एरण्डफलमत्युष्णं गुल्मशूलानिलापहम् ।**
**यकृत्प्लीहोदरार्शोघ्नं कटुकं दीपनं परम् ॥६६॥**
**तद्वन्मज्जा च विडभेदी वातश्लेष्मोदरापहः ।**

अँडिरको पात वातविकार, कफविकार, कीरा र मूत्रकृच्छ्र रोग नाशक हुन्छ । यसले पित्त र रगतलाई दूषित बनाउँदछ । कमला पातले गुल्म र तल्लोपेटको शूल विशेषतः ठिक गर्दछ तथा कफविकार, वातविकार, कीरा र सात किसिमका अण्डकोष वृद्धिका रोग समेत ठिक गर्दछ । अँडिरको फलले अति नै गर्मी गर्दछ । यसले गुल्म, शूल, वातविकार, फियोका रोग, पेटका रोग र अल्काई ठिक गर्दछ । यो पिरो हुन्छ । यसले जठराग्निलाई तिब्ररूपले बाल्दछ । फलको गुदीमा पनि फलकै गुण हुन्छन् । यसले दिसा खुकुलो पार्दछ तथा वातजान्य, कफजन्य र पेटसम्बन्धी रोगलाई नाश गर्दछ । मात्रा : तेल १-२ तोला र जराको धुलो एक चौथाईदेखि आधा तोलासम्म ।

## सेतो र रातो आँक

**श्वेतार्को गणरूपः स्यान्मन्दारो वसुकोऽपि च ॥६७॥**
**श्वेतपुष्पः सदापुष्पः स चालर्कः प्रतापसः ।**
**रक्तोऽपरोऽर्कनामा स्यादर्कपर्णो विकीरणः ॥६८॥**
**रक्तपुष्पः शुक्लफलस्तथाऽऽस्फोटः प्रकीर्त्तितः ।**
**अर्कद्वयं सरं वातकुष्ठकण्डूविषव्रणान् ॥६९॥**
**निहन्ति प्लीहगुल्मार्शःश्लेष्मोदरशकृत्कृमीन् ।**

श्वेतार्क, गणरूप, मन्दार, वसुक, श्वेतपुष्प, सदापुष्प, अलर्क र प्रतापस : यी सेतो आँकका संस्कृत पर्यायवाची नामहरू हुन् । रक्तार्क, अर्कनामा (सूर्यवाचक शब्द सबै), अर्कपर्ण, विकीरण, रक्तपुष्प, शुक्लफल र आस्फोट : यी रातो आँकका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै आँकले दिसा लगाउँदछन् तथा वातविकार, कुष्ठ, लुतो, विषविकार, घाउखटिरा, फियोका रोग, गुल्म, अल्काई, कफविकार, पेटका रोग र कीरा नाश गर्दछन् ।

**अलर्ककुसुमं वृष्यं लघु दीपनपाचनम् ।**
**अरोचकप्रसेकार्शः कासश्वासनिवारणम् ॥७०॥**
**रक्तार्कपुष्पं मधुरं सतिक्तं कुष्ठकृमिघ्नं कफनाशनञ्च ।**
**अर्शो विषं हन्ति च रक्तपित्तं संग्राहि गुल्मे श्वयथौ हितं तत् ॥७१॥**

सेतो आँकको फूल वीर्यवर्धक, पचाउन हलुका, दीपनी र पाचनी हुन्छ । यसले अरुची, प्रसेक, अल्काई, खोकी र दम नाश गर्दछ । राता आँकको फूल गुलियो र हल्का तीतो हुन्छ । यसले कुष्ठ, कीरा, कफविकार, .अल्काई, विषविकार र रक्तपित्त नाश गर्दछ । यो सङ्ग्राही तथा गुल्म र सुजनमा लाभकारी हुन्छ ।

**क्षीरमर्कस्य तिक्तोष्णं स्निग्धं सलवणं लघु ।**

**कुष्ठगुल्मोदरहरं श्रेष्ठमेतद्विरेचनम् ॥७२॥**

आँकको दूध तीतो, गर्मी गर्ने, चिल्लो र नुनिलो हुन्छ । यो पचाउन हलुका हुन्छ तथा कुष्ठ, गुल्म र पेटका रोग नाश गर्दछ । विशेषतः यो विरेचनका लागि लाभदायक हुन्छ ।

### सिउँडी

**सेहुण्डः सिंहतुण्डः स्याद्वज्री वज्रद्रुमोऽपि च ।**
**सुधासमन्तदुग्धा च स्नुक्स्त्रियां स्यात्स्नुही गुडा ॥७३॥**
**सेहुण्डो रेचनस्तीक्ष्णो दीपनः कटुको गुरुः ।**
**शूलामाष्ठीलिकाऽऽध्मानकफगुल्मोदरानिलान् ॥७४॥**
**उन्मादमोहकुष्ठार्शः शोथमेदोऽश्मपाण्डुताः ।**
**व्रणशोथज्वरप्लीहविषदूषीविषं हरेत् ॥७५॥**

सेहुण्ड, सिंहतुण्ड, वज्री, वज्रद्रुम, सुधा, समन्तदुग्धा, स्नुक्, स्नुह्, स्नुही (स्त्री लिङ्गमा) र गुडा : यी सिउँडीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रेचनी, तिक्खर, दिपनी, पिरो र पचाउन कठिन हुन्छ । यसले शूल, आमविकार, अष्ठीला, आध्मान, कफविकार, गुल्म, पेटका रोग, वातरोग, पागलपन, मोह, कुष्ठ, अल्काई, सुजन, बोसोविकार, पत्थरी, पाण्डुरोग, घाउको सुजन, जरो, फियोका रोग, विषविकार र दूषीविष नाश गर्दछ ।

**उष्णवीर्यं स्नुहीक्षीरं स्निग्धञ्च कटुकं लघु ।**
**गुल्मिनां कुष्ठिनाञ्चापि तथैवोदररोगिणाम् ॥७६॥**
**हितमेतद्विरेकार्थं ये चान्ये दीर्घरोगिणः ।**

सिउँडीको दूधले गर्मी गर्दछ । यो चिल्लो, पिरो र पचाउन हलुका हुन्छ । यसले गुल्मरोगी, कुष्ठरोगी र पेटका रोगीलाई लाभ गर्दछ । साथै जो अन्य दीर्घरोगी छन् तिनको विरेचनमा पनि यो लाभदायक हुन्छ ।

### हात्तीकाने, रतनज्योति

**शातला सप्तला सारा विमला विदुला च सा ॥७७॥**
**तथा निगदिता भूरिफेना चर्मकषेत्यपि ।**
**शातला कटुका पाके वातला शीतला लघुः ॥७८॥**
**तिक्ता शोथकफानाहपित्तोदावर्त्तरक्तजित् ।**

शातला, सप्तला, सारा, विमला, विदुला, भूरिफेना र चर्मकर्षा : यी हात्तीकानेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचेपछि पिरो हुन्छ । यसले वातविकार बढाउँदछ, शीतल गर्दछ र पचाउन हलुका हुन्छ । यो तीतो हुन्छ । यसले सुजन, कफविकार, आनाह, पित्तविकार, उदावर्त र रक्तविकार नाश गर्दछ ।

## कलिहारी (गुन्या-मधुरा)

**कलिहारी तु हलिनी लाङ्गली शक्रपुष्प्यपि ॥७९॥**
**विशल्याऽग्निशिखाऽनन्तावह्निवक्त्रा च गर्भनुत् ।**
**कलिहारी सरा कुष्ठशोफार्शोव्रणशूलजित् ॥८०॥**
**सक्षारा श्लेष्मजित्तिक्ताकटुका तुवराऽपि च ।**
**तीक्ष्णोष्णा कृमिहृल्लघ्वी पित्तलागर्भपातिनी ॥८१॥**

कलिहारी, हलिनी, लाङ्गली, शक्रपुष्पी, विशल्या, अग्निशिखा, अनन्ता, वह्निवक्त्रा र गर्भनुत् : यी कलिहारीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले दिसा खुलाउँदछ तथा कुष्ठ, सुजन, अल्काई, घाउखटिरा र शूल नाश गर्दछ । यसमा नुनिलोपन हुन्छ र कफविकार नाश गर्दछ । यो तीतो, पिरो र टर्रो पनि हुन्छ । यो तिक्खर हुन्छ र गर्मी गर्दछ । कीरा मार्दछ र पचाउन हलुका हुन्छ । पित्तविकार बढाउँदछ र गर्भपात गराउँदछ ।

## करवीर (रातो र सेतो)

**करवीरः श्वेतपुष्पः शतकुम्भोऽश्वमारकः ।**
**द्वितीयो रक्तपुष्पश्च चण्डातो लगुडस्तथा ॥८२॥**
**करवीरद्वयं तिक्तं कषायं कटुकञ्च तत् ।**
**व्रणलाघवकृन्नेत्रकोपकुष्ठव्रणापहम् ॥८३॥**
**वीर्योष्णं कृमिकण्डूघ्नं भक्षितं विषवन्मतम् ।**

करवीर, श्वेतपुष्प, शतकुम्भ र अश्वमारक : यी सेतो करवीरका तथा रक्तपुष्प, चण्डात र लगुड : यी रातो करवीरका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै करवीर तीता, टर्रा र पिरा हुन्छन् । करवीरले घाउलाई खुम्च्याउँदछ । यसले आँखाको रोग विशेष कुष्ठरोग र घाउखटिरा ठिक गर्दछ र गर्मी गर्दछ । कीरा मार्दछ र दादलुतो नाश गर्दछ । तर, खाइए यो विषसमान हानिकारक हुन्छ ।

## धतुरो

**धत्तूरधूर्त्तधुत्तूरा उन्मत्तः कनकाह्वयः ॥८४॥**
**देवता कितवस्तूरी महामोही शिवप्रियः ।**
**मातुलो मदनश्चास्य फले मातुलपुत्रकः ॥८५॥**
**धत्तूरो मदवर्णाग्निवातकृज्ज्वरकुष्ठनुत् ।**
**कषायो मधुरस्तिक्तो यूकालिक्षाविनाशकः ॥८६॥**
**उष्णो गुरुर्व्रणश्लेष्मकण्डूकृमिविषापहः ।**

धत्तूर, धूर्त्त, धुत्तूर, उन्मत्त, कनकाह्वय (सुनवाची सबै शब्द), देवता, कितव, तूरी, महामोही, शिवप्रिय, मातुल र मदन : यी धतुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । धतुरोको फललाई मातुलपुत्रक भनिन्छ । धतुरो

नसा लगाउने, वर्णमा निखार लेराउने र जठराग्निलाई बाल्ने गुणको हुन्छ । यसले वातविकार बढाउँदछ तथा जरो र कुष्ठ नाश गर्दछ । यो टर्रो, मिठो र तीतो हुन्छ । यसले जुम्रा र लिखा नाश गर्दछ । गर्मी गर्दछ । पचाउन कठिन हुन्छ । घाउखटिरा, कफविकार, दादलुतो, कीरा र विषविकार नाश गर्दछ ।

## असुरो

**वासको वासिका वासा भिषङ्माता च सिंहिका ॥८७॥**
**सिंहास्यो वाजिदन्ता स्यादाटरूषोऽटरूषकः ।**
**अटरूषो वृषस्ताम्रः सिंहपर्णश्च स स्मृतः ॥८८॥**
**वासको वातकृत्स्वर्यः कफपित्तास्रनाशनः ।**
**तिक्तस्तुवरको हृद्यो लघुशीतस्तृडर्त्तिहृत् ॥८९॥**
**श्वासकासज्वरच्छर्दिमेहकुष्ठक्षयापहः ।**

वासक, वासिका, वासा, भिषङ्माता, सिंहिका, सिंहास्य, वाजिदन्ता, आटरूष, आटरूषक, अटरूष, वृष, ताम्र र सिंहपर्ण : यी असुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । असुरोले वातविकार बढाउँदछ । यसले स्वर खुलाउँदछ । यसले कफविकार, पित्तविकार र रक्तविकार नाश गर्दछ । यो तीतो र टर्रो हुन्छ तथा मुटुका लागि लाभकारी हुन्छ । पचाउन हलुका हुनुका साथै शीतल गर्दछ । तिर्खा मेट्दछ तथा दम, खोकी, जरो, वाकवाकी, प्रमेह, कुष्ठ र क्षयरोग नाश गर्दछ ।

## पित्तपापडा

**पर्पटो वरतिक्तश्च स्मृतः पर्पटकश्च सः ॥९०॥**
**कथितः पांशुपर्यायस्तथा कवचनामकः ।**
**पर्पटो हन्ति पित्तास्रभ्रमतृष्णाकफज्वरान् ॥९१॥**
**संग्राही शीतलस्तिक्तो दाहनुद्वातलो लघुः ।**

पर्पट, वरतिक्त, पर्पटक, पांशुवाची सबै शब्द र कवचवाची सबै शब्द : यी पित्तपापडाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पित्तविकार, रक्तविकार, भ्रम, तिर्खा, कफविकार र जरो नाश गर्दछ । यो सङ्ग्राही हुन्छ, शीतल गर्दछ, तीतो हुन्छ, डाह नाश गर्दछ, वातविकार बढाउँदछ र पचाउन हलुका हुन्छ ।

## नीम

**निम्बः स्यात्पिचुमर्दश्च पिचुमन्दश्च तिक्तकः ॥९२॥**
**अरिष्टः पारिभद्रश्च हिङ्गुनिर्यास इत्यपि ।**
**निम्बः शीतो लघुर्ग्राही कटुपाकोऽग्निवातनुत् ॥९३॥**
**अहृद्यः श्रमतृट्कासज्वरारुचिकृमिप्रणुत् ।**
**व्रणपित्तकफच्छर्दिकुष्ठहृल्लासमेहनुत् ॥९४॥**

निम्ब, पिचुमर्द, पिचुमन्द, तिक्तक, अरिष्ट, पारिभद्र र हिङ्गुनिर्यास : यी नीमका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ, पचाउन हलुका र सङ्ग्राही हुन्छ । यो पचेपछि पिरो हुन्छ । यसले पाचकाग्नि र वातविकार नाश गर्दछ । यो मुटुका लागि फाइदाजनक हुँदैन । यसले थकाई, तिर्खा, खोकी, जरो, अरुची र कीरा नाश गर्दछ । साथै, घाउखटिरा, पित्तविकार, कफविकार, वाकवाकी, कुष्ठ, हृल्लास र प्रमेह समेत नाश गर्दछ ।

**निम्बपत्रं स्मृतं नेत्र्यं कृमिपित्तविषप्रणुत् ।**
**वातलं कटुपाकञ्च सर्वारोचककुष्ठनुत् ॥९५॥**
**निम्बफलं रसे तिक्तं पाके तु कटुभेदनम् ।**
**स्निग्धं लघूष्णं कुष्ठघ्नं गुल्मार्शःकृमिमेहनुत् ॥९६॥**

नीमको पातले आँखालाई फाइदा गर्दछ तथा कीरा, पित्तविकार र विषविकार नाश गर्दछ । यसले वातविकार बढाउँदछ । यो पचेपछि पिरो हुन्छ । यसले सबै खालका अरुची र कुष्ठ नाश गर्दछ । नीमको फल खाँदा तीतो र पचेपछि पिरो हुन्छ । यो चिल्लो, पचाउन हलुका, गर्मी गर्ने, तथा कुष्ठ, गुल्म, अल्काई, कीरा र प्रमेह नाशक हुन्छ ।

## बकाइनु

**महानिम्बः स्मृतो द्रेका रम्यको विषमुष्टिकः ।**
**केशमुष्टिर्निम्बकश्च कार्मुको जीव इत्यपि ॥९७॥**
**महानिम्बो हिमो रूक्षस्तिक्तो ग्राही कषायकः ।**
**कफपित्तभ्रमच्छर्दिकुष्ठहृल्लासरक्तजित् ॥९८॥**
**प्रमेहश्वासगुल्मार्शोमूषिकाविषनाशनः ।**

महानिम्ब, द्रेका, रम्यक, विषमुष्टिक, केशमुष्टि, निम्बक, कार्मुक र जीव : यी बकाइनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतल गर्ने, रुखो, तीतो, सङ्ग्राही र टर्रो हुन्छ । यसले कफविकार, पित्तविकार, भ्रम, वाकवाकी, कुष्ठ, हृल्लास र रक्तविकार ठिक गर्दछ । साथै प्रमेह, दम, गुल्म, अल्काई र मुसाको विषको असर समेत नाश गर्दछ ।

## मन्दार

**पारिभद्रो निम्बतरुर्मन्दारः पारिजातकः ॥९९॥**
**पारिभद्रोऽनिलश्लेष्मशोथमेदः कृमिप्रणुत् ।**
**तत्पत्रं पित्तरोगघ्नं कर्णव्याधिविनाशनम् ॥१००॥**

पारिभद्र, निम्बतरु, मन्दार र पारिजातक : यी मन्दारका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वातविकार, कफविकार, सुजन, बोसोविकार र कीरा नाश गर्दछ । यसको पातले पित्तरोग र कानका रोग नाश गर्दछ ।

## कोइरालो

**काञ्चनारः काञ्चनको गण्डारिः शोणपुष्पकः ।**
**कोविदारश्च मरिकः कुद्दालो युगपत्रकः ॥१०१॥**
**कुण्डली ताम्रपुष्पश्चाश्मन्तकः स्वल्पकेशरी ।**
**काञ्चनारो हिमो ग्राही तुवरः श्लेष्मपित्तनुत् ॥१०२॥**
**कृमिकुष्ठगुदभ्रंशगण्डमालाव्रणापहः ।**
**कोविदारोऽपि तद्वत्स्यात्तयोः पुष्पं लघु स्मृतम् ॥१०३॥**
**रूक्षं संग्राहि पित्तास्रप्रदरक्षयकासनुत् ।**

काञ्चनार, काञ्चनक, गण्डारि र शोणपुष्पक : यी कोइरालोका संस्कृत पर्यायवाची नामहरू हुन् । अर्को एक थरी कोइरालोका कोविदार, मरिक, कुद्दाल, युगपत्रक, कुण्डली, ताम्रपुष्प, आश्मन्तक र स्वल्पकेशरी संस्कृत पर्यायवाची नामहरू हुन् । यि दुबैले शीतल गर्दछन् । यो सङ्ग्राही, टर्रो, कफनाशक र पित्तविकार नाशक हुन्छ । यसले कीरा, कुष्ठ, गुदभ्रंश, गण्डमाला र घाउखटिरा नाश गर्दछ । कोइरालोका फूल साना हुन्छन् । यो फूल पचाउन सहज, रुखो, दिसा कस्ने तथा पित्तविकार, रक्तप्रदर, क्षयरोग र खोकी नाशक हुन्छ ।

## सैजन

**शोभाञ्जनः शिग्रुतीक्ष्णगन्धकाक्षीवमोचकाः ॥१०४॥**
**तद्बीजं श्वेतमरिचंमधुशिग्रुः सलोहितः ।**
**शिग्रुः कटुः कटुः पाके तीक्ष्णोष्णो मधुरो लघुः ॥१०५॥**
**दीपनो रोचनो रूक्षः क्षारस्तिक्तो विदाहकृत् ।**
**संग्राही शुक्रलो हृद्यः पित्तरक्तप्रकोपणः ॥१०६॥**
**चक्षुष्यः कफवातघ्नो विद्रधिश्वयथुक्रिमीन् ।**
**मेदोऽपचीविषप्लीहगुल्मगण्डव्रणान्हरेत् ॥१०७॥**
**श्वेतः प्रोक्तगुणो ज्ञेयो विशेषाद्दाहकृद्भवेत् ।**
**प्लीहानं विद्रधिं हन्ति व्रणघ्नः पित्तरक्तहृत् ॥१०८॥**
**मधुशिग्रुः प्रोक्तगुणो विशेषाद्दीपनः सरः ।**
**शिग्रुवल्कलपत्राणां स्वरसः परमार्त्तिहृत् ॥१०९॥**
**चक्षुष्यं शिग्रुजं बीजं तीक्ष्णोष्णं विषनाशनम् ।**
**अवृष्यं कफवातघ्नं तन्नस्येन शिरोऽर्त्तिनुत् ॥११०॥**

(सैजन कालो, सेतो र रातो गरी तीन किसिमको हुन्छ) । शोभाञ्जन, शिग्रु, तीक्ष्णगन्धक, अक्षीव र मोचक : यी सैजनका संस्कृत पर्यायवाची नामहरू हुन् । सैजनका गेडालाई श्वेतमरिच भनिन्छ । रातो सैजनलाई मधुशिग्रु भनिन्छ । कालो सैजन स्वाद र पचेपछिको रस पिरो हुन्छ । यो तिक्खर,गर्मी गर्ने, मिठो र पचाउन सहज हुन्छ । यसमा दीपन र रोचन गुण हुन्छ । यो रुखो, नुनिलो, तीतो, डाह गर्ने, सङ्ग्राही, शुक्रवर्द्धक, मुटुका लागि लाभदायक तथा पित्त र रक्तलाई विकृत पार्ने गुणको हुन्छ । यो आँखाका लागि फाइदाजनक, तथा कफविकार, वातविकार, विद्रधि, सुजन, कीरा, बोसोविकार, अपची, विषविकार, फियोका रोग, गुल्म, गलगाँड र घाउखटिरा नाशक हुन्छ । सेतो सैजनमा पनि यिनै गुण हुन्छन् । यसले विषेषगरी डाह गर्दछ तथा फियोका रोग, विद्रधि, घाउखटिरा र पित्तरक्त नाश गर्दछ । रातो सैजनमा उपरोक्त सबै गुणका अतिरिक्त जठराग्नि बाल्ने र दिसा खुलाउने गुण हुन्छ । सैजनका बोक्रा र पातको स्वरसले सहन नसक्ने पीडालाई नाश गर्दछ । सैजनका गेडा आँखाका लागि लाभदायक हुन्छ । यो तिक्कर, गर्मी गर्ने तथा विषविकार, शुक्र, कफविकार र वातविकार नाशक हुन्छ । फलको धुलोको नस लिनाले टाउको दुःखेको ठिक हुन्छ ।

## अपराजिता

**आस्फोता गिरिकर्णीस्याद्विष्णुक्रान्ताऽपराजिता ।**
**अपराजिते कटू मेध्ये शीते कण्ठचेसुदृष्टिदे ॥१११॥**
**कुष्ठमूत्रत्रिदोषामशोथव्रणविषापहे ।**
**कषाये कटुके पाके तिक्ते च स्मृतिबुद्धिदे ॥११२॥**

(अपराजिता सेतो र नीलो फुल्ने गरी दुई किसिमको हुन्छ) । आस्फोता, गिरिकर्णी, विष्णुक्रान्ता र अपराजिता : यी अपराजिताका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबैको स्वाद पिरो, तीतो र टर्रो हुन्छ । दुबैले ग्रहणगर्ने शक्ति बढाउँदछन्, शीतल गर्दछन्, घाँटीलाई फाइदा गर्दछन् तथा दृष्टिशक्ति बढाउँदछन् । यिनले कुष्ठ, मुत्ररोग, त्रिदोष, आमविकार, सुजन, घाउखटिरा र विषविकार नाश गर्दछन् । यी पचेपछि पिरा हुन्छन् । यिनले सम्झनाशक्ति र बुद्धि दिन्छन् ।

## सिवाँली (वृक्ष)

**सिन्दुवारः श्वेतपुष्पः सिन्दुकः सिन्दुवारकः ।**
**नीलपुष्पी तु निर्गुण्डी शेफाली सुवहा च सा ॥११३॥**
**सिन्दुकः स्मृतिदस्तिक्तः कषायः कटुको लघुः ।**
**केश्यो नेत्रहितो हन्ति शूलशोथाममारुतान् ॥११४॥**
**कृमिकुष्ठारुचिश्लेष्मज्वरान्नीलापि तद्विधा ।**
**सिन्दुवारदलं जन्तुवातश्लेष्महरं लघु ॥११५॥**

(सिमाली नीलो र सेतो फुल्ने गरी दुई किसिमको हुन्छ) । सिन्दुवार, सिन्दुक र सिन्दुवारक सेतो फुल्ने सिमालीका तथा निर्गुण्डी, शेफाली र सुवहा नीलो फूल फुल्ने सिमालीका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो फुल्ने सिमालीले सम्झनाशक्ति बढाउँदछ । यो तीतो, टर्रो र पिरो हुन्छ । पचाउन हलुका हुन्छ । यो कपाल र आँखाका लागि लाभदायक हुन्छ । यसले शूल, सुजन, आमवात, कीरा, कुष्ठ, अरुची र

कफजन्य जरो नाश गर्दछ । नीलो फुल्ने सिमालीमा पनि यिनै गुण हुन्छन् । सिमालीका पातले कीरा, वातविकार र कफविकार नाश गर्दछ एवं पचाउन हलुका हुन्छ । (अन्य ग्रन्थमा यसका अनेक भेद बताइएका छन्) ।

## ठूलोकुरो

**कुटजः कूटजः कौटो वत्सको गिरिमल्लिका ।**
**कालिङ्गः शक्रशाखी च मल्लिकापुष्प इत्यपि ॥११६॥**
**इन्द्रो यवफलः प्रोक्तो वृक्षकः पाण्डुरद्रुमः ।**
**कुटजः कटुको रूक्षो दीपनस्तुवरो हिमः ॥११७॥**
**अर्शोऽतिसारपित्तास्रकफतृष्णाऽऽमकुष्ठनुत् ।**

कुटज, कूटज, कौट, वत्सक, गिरिमल्लिका, कालिङ्ग, शक्रशाखी, मल्लिकापुष्प, इन्द्र (यन्द्रका पर्यायवाची सबै शब्द), यवफल, वृक्षक र पाण्डुरद्रुम : यी ठूलोकुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरा, रुखो, दीपन, टर्रो र शीतल गर्ने गुणको हुन्छ । यसले अल्काई, अतिसार, पित्तविकार, रक्तविकार, कफविकार, तिर्खा, आमविकार र कुष्ठरोग नाश गर्दछ ।

## करञ्ज (काँडे गिठोली, लेकपाङ्गो)

**करञ्जो नक्तमालश्च करजश्चिरबिल्वकः ॥११८॥**
**घृतपूर्णकरञ्जोऽन्य प्रकीर्यः पूतिकोऽपि च ।**
**स चोक्तः पूतिकरञ्जः सोमवल्कश्च स स्मृतः ॥११९॥**
**करञ्जः कटुकस्तीक्ष्णो वीर्योष्णो योनिदोषहृत् ।**
**कुष्ठोदावर्त्तगुल्मार्शोव्रणक्रिमिकफापहः ॥१२०॥**

करञ्ज, नक्तमाल, करज र चिरबिल्वक : यी कण्टक(वृक्ष)-करञ्जका तथा प्रकीर्य, पूतिक, पूतिकरञ्ज र सोमवल्क : यी घृत(पूति)-करञ्जका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, तिक्खर र गर्मी गर्ने गुणको हुन्छ । यसले योनिका रोग, कुष्ठ, उदावर्त, गुल्म, अल्काई, घाउखटिरा, कीरा र कफविकार नाश गर्दछ ।

**तत्पत्रं कफवातार्शः कृमिशोथहरं परम् ।**
**भेदनं कटुकं पाके वीर्योष्णं पित्तलं लघुः ॥१२१॥**
**तत्फलं कफवातघ्नं मेहार्शःकृमिकुष्ठजित् ।**
**घृतपूर्णकरञ्जोऽपि करञ्जसदृशो गुणैः ॥१२२॥**

करञ्जका पातले कफविकार, वातविकार, अल्काई, कीरा र सुजनलाई अत्यन्त प्रभामवशाली ढङ्गले नाश गर्दछ । यसमा भेदन गर्ने गुण हुन्छ र पचेपछि पिरो हुन्छ । यसले गर्मी गर्दछ, पित्त बढाउँदछ तर पचाउन हलुका हुन्छ । यसको फलले कफविकार, वातविकार, प्रमेह, अल्काई, कीरा र कुष्ठ नाश गर्दछ । घृतकरञ्जमा पनि यिनै गुण हुन्छन् ।

## करञ्ज विशेष वा गिठोली विशेष (लताकरञ्ज ?)

**उदकीर्यस्तृतीयोऽन्य षड्ग्रन्था हस्तिवारुणी ।**
**मर्कटी वायसी चापि करञ्जी करभञ्जिका ॥१२३॥**
**करञ्जी स्तम्भनी तिक्ता तुवरा कटुपाकिनी ।**
**वीर्योष्णा वमिपित्तार्शः कृमिकुष्ठप्रमेहजित् ॥१२४॥**

माथि बताइएका जात बाहेकको एक तेश्रो जातको करञ्ज पनि हुन्छ । यसका उदकीर्य, षड्ग्रन्था, हस्तिवारुणी, मर्कटी, वायसी, करञ्जी र करमञ्जिका संस्कृत पर्यायवाची नामहरू हुन् । यो स्तम्भनी, तीतो र टर्रो हुन्छ तथा पचेपछि पिरो हुन्छ । यसले गर्मी गर्दछ तथा वाकवाकी, पित्तविकार, अल्काई, कीरा, कुष्ठ र प्रमेह नाश गर्दछ ।

## रातीगेडी

**श्वेता गुञ्जोच्चटा प्रोक्ता कृष्णला चापि सा स्मृता ।**
**रक्ता सा काकचिञ्ची स्यात्काकणन्ती च रक्तिका ॥१२५॥**
**काकादनी काकपीलुः सा स्मृता काकवल्लरी ।**
**गुञ्जाद्वयन्तु केश्यं स्याद्वातपित्तज्वरापहम् ॥१२६॥**
**मुखशोषभ्रमश्वासतृष्णामदविनाशनम् ।**
**नेत्रामयहरं वृष्यं बल्यं कण्डूं व्रणं हरेत् ॥१२७॥**
**कृमीन्द्रलुप्तकुष्ठानि रक्ता च धवलाऽपि च ।**

श्वेतगुञ्जा, उच्चटा र कृष्णला सेतो रातीगेडीका र रक्तगुञ्जा, काकचिञ्ची, काकणन्ती, रक्तिका, काकादनी, काकपीलु र काकवल्लरी रातो रातीगेडीका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै खालका रातीगेडी कपालका लागि लाभदायक तथा वातविकार, पित्तविकार, जरो, मुखको सुक्ने रोग, भ्रम, दम, तिर्खा, नसा ( मद) र आँखाका रोग नाशक हुन्छन् । यी वीर्यवर्धक र बलदायक हुन्छन् । यिनले लुतो, घाउखटिरा, कीरा, इन्द्रलुप्त र कुष्ठ ठिक गर्दछन् ।

## काउछो

**कपिकच्छूरात्मगुप्ता वृष्या प्रोक्ता च मर्कटी ॥१२८॥**
**अजडा कण्डुरा व्यङ्गा दुःस्पर्शा प्रावृषायणी ।**
**लाङ्गली शूकशिम्बी च सैव प्रोक्ता महर्षिभिः ॥१२९॥**
**कपिकच्छूर्भृशं वृष्या मधुरा बृंहणी गुरुः ।**
**तिक्ता वातहरी बल्या कफपित्तास्रनाशिनी ॥१३०॥**
**तद्बीजं वातशमनं स्मृतं वाजीकरं परम् ।**

कपिकच्छू, आत्मगुप्ता, वृष्या, मर्कटी, अजडा, कण्डुरा, व्यङ्गा, दुःस्पर्शा, प्रावृषायणी, लाङ्गली र शूकशिम्बी : यी काउछोका संस्कृत पर्यायवाची नामहरू हुन् भनी महर्षिहरूले बताएका छन् । अत्यन्त वीर्यवर्द्धक, मिठो, पौष्टिक र पचाउन कठिन हुन्छ । यो तीतो, वातविकार नाशक, बलदायक तथा कफविकार, पित्तविकार र रक्तविकार नाशक हुन्छ । काउछोका गेडा वातविकारलाई शान्त पार्ने र अती नै यौनशक्ति बढाउने गुणको हुन्छ ।

## मांसरोहिणी

**मांसरोहिण्यतिरुहा वृत्ता चर्मकषा वसा ॥१३१॥**
**प्रहारवल्ली विकशा वीरवत्यपि कथ्यते ।**
**स्यान्मांसरोहिणी वृष्या सरा दोषत्रयापहा ॥१३२॥**

मांसरोहिणी, अति(ग्नि)रुहा, वृत्ता, चर्मकषा, वसा, प्रहारवल्ली, विकशा र वीरवती : यी मांसरोहिणीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वीर्य बढाउँदछ, दिसा खुकुलो पार्दछ र त्रिदोष नाश गर्दछ ।

## चिह्लक

**चिह्लकोवातनिर्हारः श्लेष्मघ्नो धातुपुष्टिकृत् ।**
**आग्नेयो विषवद्यस्य फलं मत्स्यनिषूदनम् ॥१३३॥**

चिह्लकले वातविकार तथा कफविकार नाश गर्दछ । यसले धातुलाई पुष्ट पार्दछ, पाचकाग्नि बाल्दछ वा अती नै गर्मी गर्दछ । यसको फल विषसमान हुन्छ र माझीहरू माछा मार्न प्रयोग गर्दछन् ।

## टङ्कारी (टेकारी)

**टङ्कारी वातजित्तिक्ता श्लेष्मघ्नी दीपनी लघुः ।**
**शोथोदरव्यथाहन्त्री हिता पीठविसर्पिणाम् ॥१३४॥**

यो वातनाशक, तीतो, कफनाशक, दीपन, पचाउन हलुका तथा सुजन र पेटका रोग नाशक हुन्छ । ढाडको विसर्प रोगमा यो लाभदायक हुन्छ ।

## बेत

**वेतसो नम्रकः प्रोक्तो वानीरो वञ्जुलस्तथा ।**
**अभ्रपुष्पश्च विदुलो रथः शीतश्च कीर्त्तितः ॥१३५॥**
**वेतसः शीतलो दाहशोथार्शोयोनिरुक्प्रणुत् ।**
**हन्ति वीसर्पकृच्छ्रास्रपित्ताश्मरिकफानिलान् ॥१३६॥**

वेतस, नम्रक, वानीर, वञ्जुल, अभ्रपुष्प, विदुल, रथ र शीत : यी बेतका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ तथा डाह, सुजन, योनिका रोग, विसर्प, कृच्छ्र, रक्तविकार, पित्तविकार, पत्थरी, कफविकार र वातविकार नाश गर्दछ ।

## पानीबेत

**निकुञ्जकः परिव्याधो नादेयो जलवेतसः ।**
**जलजो वेतसः शीतः कुष्ठहृद्वातकोपनः ॥१३७॥**

निकुञ्जक, परिव्याध, नादेय र जलवेतस : यी पानीबेतका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो कुष्ठनाशक र वातवर्द्धक हुन्छ ।

## भुइँबेत

**इज्जलो हिज्जलश्चापि निचुलश्चाम्बुजस्तथा ।**
**जलवेतसवद्वेद्यो हिज्जलोऽयं विषापहः ॥१३८॥**

इज्जल, हिज्जल, निचुल र अम्बुज : यी भुइँबेतका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पानी बेत जस्तै गुणको हुन्छ तर विशेषतः यसले विषविकार नाश गर्दछ ।

## अम्फीफल

**अङ्कोटो दीर्घकीलः स्यादङ्कोलश्च निकोचकः ।**
**अङ्कोटकः कटुस्तीक्ष्णः स्निग्धोष्णस्तुवरो लघुः ॥१३९॥**
**रेचनः कृमिशूलामशोफग्रहविषापहः ।**
**विसर्पकफपित्तास्रमूषकाहिविषापहः ॥१४०॥**
**तत्फलं शीतलं स्वादु श्लेष्मघ्नं बृंहणं गुरु ।**
**बल्यं विरेचनं वातपित्तदाहक्षयास्रजित् ॥१४१॥**

अङ्कोट, दीर्घकील, अङ्कोल र निकोचक : यी अम्फीफलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तिक्खर हुन्छ । चिल्लो, गर्मी गर्ने, टर्रो र पचाउन हलुका हुन्छ । रेचन तथा कीरा, शूल, आमविकार, सुजन, ग्रहवाधा र विषविकार नाश गर्दछ । विसर्प, कफविकार, पित्तविकार, रक्तविकार, मुसाको विषविकार र सर्पको विषविकार नाश गर्दछ । यसको फलले शीतल गर्दछ । यो स्वादिलो हुन्छ । यसले कफविकार नाश गर्दछ । पौष्टिक हुन्छ तर पचाउन कठिन हुन्छ । यसले बल दिन्छ र दिसा खुलाउँदछ । वातविकार, पित्तविकार, डाह, क्षयरोग र रक्तविकार नाश गर्दछ ।

## बलु (चार थरी)

**बलावाटयालिका वाटया सैव वाटयालकाऽपि च ।**
**महाबला पीतपुष्पा सहदेवी च सा स्मृता ॥१४२॥**
**ततोऽन्याऽतिबला ऋष्यप्रोक्ता कङ्कतिका च सा ।**
**गाङ्गेरुकी नागबला झषा ह्रस्वगवेधुका ॥१४३॥**
**बलाचतुष्टयं शीतं मधुरं बलकान्तिकृत् ।**
**स्निग्धं ग्राहि समीरास्रपित्तास्रक्षतनाशनम् ॥१४४॥**

बला, वाटयालिका, वाटया र वाटयालका : यी बलुका संस्कृत पर्यायवाची नामहरू हुन् । महाबला, पीतपुष्पा र सहदेवी : यी महाबलु (निलीवा वा सहदेवी ?) का संस्कृत पर्यायवाची नामहरू हुन् । अतिबला, ऋष्यप्रोक्ता र कङ्कतिका : यी अतिबलाका संस्कृत पर्यायवाची नामहरू हुन् । गाङ्गेरुकी, नागबला, झषा र ह्रस्वगवेधुका : यी नागबला (गुनालु) का संस्कृत पर्यायवाची नामहरू हुन् । चारै बलुहरू शीतल गर्ने, गुलिया, बलदायक र कान्तिदायक हुन्छन् । यी चिल्ला, सङ्ग्राही तथा वातविकार, रक्तपित्त, रक्तविकार र घाउ नाशक हुन्छन् ।

**बलामूलत्वचश्चूर्णं पीतं सक्षीरशर्करम् ।**
**मूत्रातिसारं हरति दृष्टमेतन्न संशयः ॥१४५॥**
**हरेन्महाबला कृच्छ्रम् भवेद्वातानुलोमिनी ।**
**हन्यादतिवला मेहं पयसा सितया समम् ॥१४६॥**

बलुको जराको बोक्राको धुलो दूध र शक्खरसँग पिउने गरे मूत्रातिसार रोग नाश हुन्छ । यो प्रयोग गरेर हेरिएकोले यसमा कुनै शङ्का नगर्नू । महाबलाले कृच्छ्ररोग नाश गर्दछ र वातलाई पकाएर कब्जियतलाई ठिक गर्दछ । अतिबलाको धुलो दूध र चिनीसँग खाए प्रमेह नाश हुन्छ ।

## लक्ष्मणा

**पुत्रकाकाररक्ताल्पबिन्दुभिर्लाञ्छितच्छदा ।**
**लक्ष्मणा पुत्रजननी वस्तगन्धाकृतिर्भवेत् ॥१४७॥**
**कथिता पुत्रदाऽवश्या लक्ष्मणा मुनिपुङ्गवैः ।**

जुन बिरुवाको पातमा रातो रङ्का ससाना थोप्लाले पुरुषको आकृति बनेको हुन्छ र जुन बिरुवा हेर्दा बस्तगन्धा जस्तो देखिन्छ, त्यो पुत्र जन्माउने वनस्पतिलाई “लक्ष्मणा” हो भनी जान्नू । श्रेष्ठ मुनिजनहरूले यसबाट अवश्य नै पुत्र (सन्तान) जन्मन्छ भनेका छन् ।

नोटः यो यकीन गर्न नसकिएको विवादास्पद ओखती हो । कसैले यसलाई एक जातको सेतो कण्टकारी त कसैले अरु नै अर्थ लगाएका छन् । तर एउटै पुस्तकमा दुई ठाउँमा फरक फरक ढङ्गले यसको व्याख्या भएका कारण यो सेतो कण्टकारीभन्दा फरक ओखती हो भन्न सकिन्छ । योसँग मिल्दोजुल्दो चिनियाँ ओखती जिन्सेंग (*Ginseng, Aralia quinquefolis*) पाइन्छ । कसैले यसैलाई लक्ष्मणा भनेर पनि लेखेका छन् । तर आजसम्म पनि यसको पहिचान हुन वा यसलाई पत्ता लगाउन सकिएको छैन । वत्सगन्धाको अर्थ पनि कतै बोकाको जस्तो गन्ध आउने त कतै वन ज्वानु र कतै तुलसी जस्तै एक झार भनी लगाएका छन् ।

## सुनटिकी

**स्वर्णवल्लीरक्तफला काकायुः काकवल्लरी ॥१४८॥**
**स्वर्णवल्ली शिरः पीडां त्रिदोषान्हन्ति दुग्धदा ।**

स्वर्णवल्ली, रक्तफला, काकायु र कावल्लरी : यी सुनटिकीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले टाउको दुखेको र त्रिदोष ठिक गर्दछ तथा दूध बढाउँदछ ।

## कपास

**कार्पासी तुण्डकेशी च समुद्रान्ता च कथ्यते ॥१४९॥**
**कार्पासकी लघु कोष्णा मधुरा वातनाशिनी ।**
**तत्पलाशं समीरघ्नं रक्तकृन्मूत्रवर्द्धनम् ॥१५०॥**
**तत्कर्णपिडकानादपूयास्रावविनाशनम् ।**
**तद्बीजं स्तन्यदं वृष्यं स्निग्धं कफकरं गुरु ॥१५१॥**

कार्पासी, तुण्डकेशी र समुद्रान्ता : यी कपासका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका, केही गर्मी गर्ने, मिठो र वातविकार नाशक हुन्छ । यसको पात वातविकार नाशक तथा रगत एवं मूत्र बढाउने गुणको हुन्छ । यसले कानका खटिरा, कान बज्ने समस्या र कानबाट पीप बहने रोग ठिक गर्दछ । कपासका गेडाले दूध र वीर्य बढाउँदछ । यो चिल्लो हुन्छ तथा कफ बढाउँदछ अनि पचाउन कठिन हुन्छ ।

## बाँस

**वंशस्त्वक्सारकर्मारत्वचिसारतृणध्वजाः ।**
**शतपर्वा यवफलो वेणुमस्करतेजनाः ॥१५२॥**
**वंशः सरो हिमः स्वादुः कषायो वस्तिशोधनः ।**
**छेदनः कफपित्तघ्नः कुष्ठास्रव्रणशोथजित् ॥१५३॥**
**तत्करीरः कटुः पाके रसे रूक्षो गुरुः सरः ।**
**कषायः कफकृत्स्वादुर्विदाही वातपित्तलः ॥१५४॥**
**तद्यवास्तु सरा रूक्षाः कषायाः कटुपाकिनः ।**
**वातपित्तकरा उष्णा बद्धमूत्राः कफापहाः ॥१५५॥**

वंश, त्वक्सार, कर्मार, त्वचिसार, तृणध्वज, शतपर्वा, यवफल, वेणु, मस्कर र तेजन : यी बाँसका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले मल खुलाउँदछ र शीतल गर्दछ । यो स्वादिलो र टर्रो हुन्छ । यसले तल्लो पेट सफा गर्दछ । यो छेदन तथा कफविकार, पित्तविकार, कुष्ठ, रक्तविकार, घाउ र सुजन नाशक हुन्छ । बाँसका टुसा पचेपछि पिरो हुन्छ । यो रुखो, पचाउन कठिन र मल खुलाउने गुणको हुन्छ । केही पिरो र

टर्रो हुनाका साथै कफकारक, स्वादिलो, डाहकारक, वातकारक र पित्तकारक हुन्छ । बाँसका बीज पनि मल खुलाउने, रुखो, टर्रो, पचेपछि पिरो, वातपित्तकारी, गर्मी गर्ने, पिसाब रोक्ने र कफनाशक हुन्छ ।

## नर्कट

**नलः पोटगलः शून्यमध्यश्च धमनस्तथा ।**
**नलस्तुमधुरस्तिक्तः कषायः कफरक्तजित् ॥१५६॥**
**उष्णो हृद्बस्तियोन्यर्त्तिदाहपित्तविसर्पहृत् ।**

नल, पोटगल, शून्यमध्य र धमन : यी नर्कटका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मिठो, तीतो र टर्रो स्वादको हुन्छ । यसले गर्मी गर्दछ तथा कफविकार, रक्तविकार, मुटु दुखाई, तल्लो पेटको दुखाई, योनिको दुखाई, डाह, पित्तविकार र विसर्प नाश गर्दछ ।

## ढड्डी (भद्रमुञ्ज) र मुज (मुञ्ज)

**भद्रमुञ्जः शरो बाणस्तेजनश्चेक्षुवेष्टनः ॥१५७॥**
**मुञ्जो मुञ्जातको बाणः स्थूलदर्भः सुमेखलः ।**
**मुञ्जद्वयन्तु मधुरं तुवरं शिशिरं तथा ॥१५८॥**
**दाहतृष्णाविसर्पास्रमूत्रकृच्छ्राक्षिरोगजित् ।**
**दोषत्रयहरं वृष्यं मेखलासूपयुज्यते ॥१५९॥**

भद्रमुञ्ज, शर, बाण, तेजन र चक्षुवेष्टन : यी ढड्डीका तथा मुञ्ज, मुञ्जातक, बाण, स्थूलदर्भ र सुखेमल : यी मुजका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै थरी मुज मिठा, टर्रा, शीतल गर्ने र वीर्यवर्धक हुन्छन् । यिनले डाह, तिर्खा, विसर्प, रक्तविकार, मूत्रकृच्छ्र, आँखाका रोग र त्रिदोष नाश गर्दछन् । यी मेखला बनाउन प्रयोग गरिन्छन् ।

## काँस

**कासः कासेक्षुरुद्दिष्टः स स्यादिक्षुरसस्तथा ।**
**इक्ष्वालिकेक्षुगन्धा च तथा पोटगलः स्मृतः ॥१६०॥**
**कासः स्यान्मधुरस्तिक्तः स्वादुपाको हिमः सरः ।**
**मूत्रकृच्छ्राश्मदाहास्रक्षयपित्तजरोगजित् ॥१६१॥**

कास, कासेक्षु, इक्षुरस, इक्ष्वालिका, इक्षुगन्धा र पोटगल : यी काँसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र तीतो हुन्छ तथा पचेपछि गुलियो हुन्छ । यसले शीतल गर्दछ र मल खुलाउँदछ तथा मूत्रकृच्छ्र, पत्थरी, डाह, रक्तविकार, क्षयरोग र पित्तविकार नाश गर्दछ ।

## सानो जातको गुँद (झार)

**गुन्द्रः पटेरको गुल्मः शृङ्गवेराभमूलकः ।**
**गुन्द्रः कषायो मधुरः शिशिरः पित्तरक्तजित् ॥१६२॥**
**स्तन्यशुक्ररजोमूत्रशोधनो मूत्रकृच्छ्रहृत् ।**

गुन्द्र, पटेरक, गुल्म र श्रृङ्गवेराभमूलक : यी सानो गुँद झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र गुलियो हुन्छ । यसले शीतल गर्दछ तथा पित्तरक्त नाश गर्दछ । यसले दूध बढाउँदछ तथा शुक्रकिट, रज र मूत्रलाई प्रशोधन गर्दछ अनि मूत्रकृच्छ्र नाश गर्दछ ।

## मोथे विशेष (ठूलो गुँद)

**एरका गुन्द्रमूला च शिविर्गुन्द्रा शरीति च ॥१६३॥**
**एरका शिशिरा वृष्या चक्षुष्या वातकोपिनी ।**
**मूत्रकृच्छ्राश्मरीदाहपित्तशोणितनाशिनी ॥१६४॥**

एरका, गुन्द्रमूला, शिवि, गुन्द्रा र शरी : यी मोथे विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ, वीर्य बढाउँदछ, आँखाका लागि फाइदा गर्दछ र वातविकार बढाउँदछ । यसले मूत्रकृच्छ्र, पत्थरी, डाह, पित्तविकार र रक्तविकार नाश गर्दछ ।

## कुश र सिरु

**कुशो दर्भस्तथा बर्हिः सूच्यग्रो यज्ञभूषणः ।**
**ततोऽन्यो दीर्घपत्रः स्यात्क्षुरपत्रस्तथैव च ॥१६५॥**
**दर्भद्वयं त्रिदोषघ्नं मधुरं तुवरं हिमम् ।**
**मूत्रकृच्छ्राश्मरीतृष्णावस्तिरुक्प्रदरास्रजित् ॥१६६॥**

कुश, दर्भ, बर्हि, सूच्यग्र र यज्ञभूषण : यी कुशका संस्कृत पर्यायवाची नामहरू हुन् । दीर्घपत्र र क्षुरपत्र : यी सिरुका संस्कृत पर्यायवाची नामहरू हुन् । यी दुबै त्रिदोष नाशक, गुलिया र टर्रा हुन्छन् । यिनले शीतल गर्दछन् तथा मुत्रकृच्छ्र, पत्थरी, तिर्खा, तल्लोपेटका रोग र रक्तप्रदर नाश गर्दछन् ।

## रोहिष झार

**कत्तृणं रौहिषं देवजग्धं सौगन्धिकं तथा ।**
**भूतिकं ध्यामपौरञ्च श्यामकं धूपगन्धिकम् ॥१६७॥**
**रौहिषं तुवरं तिक्तं कटुपाकं व्यपोहति ।**
**हृत्कण्ठव्याधिपित्तास्रशूलकासकफज्वरान् ॥१६८॥**

कत्तृण, रौहिष, देवजग्ध, सौगन्धिक, भूतिक, ध्यामपौर, श्यामक र धूमगन्धिक : यी रोहिष झारका संस्कृत पर्यायवाची नामहरू हुन्। यो टर्रो र तीतो हुन्छ तथा पचेपछि पिरो हुन्छ। यसले मुटुका रोग, घाँटीका रोग, रक्तपित्त, शूल, खोकी र कफज्वर नाश गर्दछ।

## पिर्रे विशेष

**गुह्यबीजं तु भूतीकं सुगन्धं जम्बुकप्रियम्।**
**भूतृणं तु भवेच्छत्रा मालातृणकमित्यपि॥१६९॥**
**भूतृणं कटुकं तिक्तं तीक्ष्णोष्णं रेचनं लघु।**
**विदाहि दीपनं रूक्षमनेत्र्यं मुखशोधनम्॥१७०॥**
**अवृष्यं बहुविट्कञ्च पित्तरक्तप्रदूषणम्।**

गुह्यबीज, भूतीक, सुगन्ध, जम्बुकप्रिय, भूतृण, छत्रा र मालातृणक : यी पिर्रे विशेषका संस्कृत पर्यायवाची नामहरू हुन्। यो पिरो, तीतो र तिक्खर हुन्छ। यसले गर्मी गर्दछ, रेचन हुन्छ र पचाउन सहज हुन्छ। यसले डाह गर्दछ। यो दीपन, रुखो, आँखाका लागि लाभदायक, मुखलाई प्रशोधन गर्ने गुणको हुन्छ। यसले वीर्य बढाउँदैन। धेरै दिसा पैदा गर्दछ। पित्तरक्तलाई दूषित पार्दछ।
नोटः कसैले यसलाई लेमन ग्रास पनि भनेका छन्। कुलचन्द्रशर्माका अनुसार यो कुकुरमुते झार हो भने के.यन.स्वामीले यसलाई जरामा अदुवाको जस्तो गन्ध हुने एक जातको पिर्रे भनेका छन्।

## दूबो

**नीलदूर्वा रुहाऽनन्ता भार्गवी शतपर्विका॥१७१॥**
**शष्पं सहस्रवीर्या च शतवल्ली च कीर्त्तिता।**
**नीलदूर्वा हिमा तिक्ता मधुरा तुवरा हरेत्॥१७२॥**
**कफपित्तास्रवीसर्पतृष्णादाहत्वगामयान्।**

नीलदूर्वा, रुहा, अनन्ता, भार्गवी, शतपर्विका, शष्प, सहस्रवीर्या, र शतवल्ली : यी दूबोका संस्कृत पर्यायवाची नामहरू हुन्। दूबोले शीतल गर्दछ। यो तीतो, गुलियो र टर्रो हुन्छ। यसमा कफविकार, पित्तविकार, रक्तविकार, वीसर्प, तिर्खारोग, डाह र छालाका रोग निको पार्ने गुण हुन्छ।

## सेतो दूबो

**दूर्वा शुक्ला तु गोलोमी शतवीर्या च कथ्यते॥१७३॥**
**श्वेता दूर्वा कषाया स्यात्स्वाद्वी व्रण्या च जीवनी।**
**तिक्ता हिमा विसर्पास्रतृट्पित्तकफदाहहृत्॥१७४॥**

शुक्लदूर्वा, गोलोमी र शीतवीर्या : यी सेतो दूबोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, तीतो र टर्रो हुन्छ । यो घाउखटिराका लागि लाभदायक हुन्छ । यसले जीवनशक्ति बढाउँदछ, शीतल गर्दछ तथा विसर्प, रक्तविकार, तिर्खारोग, पित्तविकार, कफविकार र डाह नाश गर्दछ ।

## घोडेदूबो

**गण्डदूर्वा तु गण्डाली मत्स्याक्षी शकुलादनी ।**
**गण्डदूर्वा हिमा लोहद्राविणी ग्राहिणी लघुः ॥१७५॥**
**तिक्ता कषाया मधुरा वातकृत्कटुपाकिनी ।**
**दाहतृष्णाबलासास्रकुष्ठपित्तज्वरापहा ॥१७६॥**

गण्डदूर्वा, गण्डाली, मत्स्याक्षी र शकुलादनी : यी घोडेदूबोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शीतल गर्ने, फलाम समेत पगाल्ने, कब्जियत गराउने, पचाउन सहज, तीतो, टर्रो र गुलियो स्वादको हुन्छ । यसले वातविकार बढाउँदछ र पचेपछि पिरो हुन्छ । यसले डाह, तिर्खा, कफविकार, रक्तविकार, कुष्ठ र पित्तज्वर नाश गर्दछ ।

## गिठो

**वाराहीकन्दसंज्ञस्तु पश्चिमे गृष्टिसंज्ञकः ।**
**वाराहीकन्द एवान्यैश्चर्मकारालुको मतः ॥१७७॥**
**अनूपसम्भवे देशे वराह इव लोमवान् ।**
**वाराहवदना गृष्टिर्वरदेत्यपि कथ्यते ॥१७८॥**
**वाराही तु रसे स्वाद्वी तिक्ता पाके पुनः कटुः ।**
**शुक्रायुःस्वरवर्णाग्निबलपित्तविवर्द्धिनी ॥१७९॥**
**कफकुष्ठमरुन्मेहकृमिहृच्च रसायनी ।**

वाराहकन्द नामको कन्दलाई पश्चिमतिर गृष्टि भन्दछन् । यसैलाई अरुहरू चर्मकारालुक पनि भन्दछन् । जल बढी हुने स्थान (अनूप) मा हुने यो सुँगुरको रौजस्तै दह्रा रौंले युक्त हुन्छ । यसका वाराहवदना, गृष्टि र वरदा पर्यायवाची नामहरू हुन् । यो स्वादिलो र तीतो हुन्छ तथा पचेपछि पिरो हुन्छ । यसले कफविकार, कुष्ठ, वातविकार र कीरा नाश गर्दछ तथा रसायनी हुन्छ ।

## बिराले लहरा

**विदारी स्वादुकन्दा च सा तु क्रोष्ट्री सिता स्मृता ॥१८०॥**
**इक्षुगन्धा क्षीरवल्ली क्षीरशुक्ला पयस्विनी ।**
**विदारी मधुरा स्निग्धा बृंहणी स्तन्यशुक्रदा ॥१८१॥**
**शीता स्वर्या मूत्रला च जीवनी बलवर्णदा ।**
**गुरुः पित्तास्रपवनदाहान् हन्ति रसायनी ॥१८२॥**

विदारी, स्वादुकन्दा, क्रोष्ट्री, सिता, इक्षुगन्धा, क्षीरवल्ली, क्षीरशुक्ला, पयस्विनी : यी विदारीकन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मिठो, चिल्लो, पौष्टिक, दूध बढाउने, शुक्र बढाउने, शीतल गर्ने, स्वर खुलाउने, पिसाब गराउने, जीवनी, बलदायक, वर्णमा निखार लेराउने, पचाउन कठिन, पित्तविकार नाशक, रक्तविकार नाशक, वातविकार नाशक र रसायनी हुन्छ ।

## मुसलीकन्द

**तालमूली तु विद्वद्भिर्मुशली परिकीर्त्तिता ।**
**मुशली मधुरा वृष्या वीर्योष्णा बृंहणी गुरुः ॥१८३॥**
**तिक्ता रसायनी हन्ति गुदजान्यनिलं तथा ।**

विद्वानहरू तालमूलीलाई नै मुशली भन्ने गर्दछन् । (अर्थात् तालमूली र मूशली : यी कालो मूशलीका पर्यायवाची नामहरू हुन्) । यो मिठो, वीर्यवर्धक, गर्मी गर्ने, पौष्टिक र पचाउन कठिन हुन्छ । यो तीतो र रसायनी हुनुका साथै यसले मलद्वारका रोग र वातविकार नाश गर्दछ ।

## कुरिलो (सानो र ठूलो)

**शतावरी बहुसुता भीरुरिन्दीवरी वरी ॥१८४॥**
**नारायणी शतपदी शतवीर्या च पीवरी ।**
**महाशतावरी चान्या शतमूल्यूर्ध्वकण्टिका ॥१८५॥**
**सहस्रवीर्या हेतुश्च ऋष्यप्रोक्ता महोदरी ।**
**शतावरी गुरुः शीता तिक्ता स्वाद्वी रसायनी ॥१८६॥**
**मेधाऽग्निपुष्टिदा स्निग्धा नेत्र्या गुल्मातिसारजित् ।**
**शुक्रस्तन्यकरी बल्या वातपित्तास्रशोथजित् ॥१८७॥**
**महाशतावरी मेध्या हृद्या वृष्या रसायनी ।**
**शीतवीर्या निहन्त्यर्शोग्रहणीनयनामयान् ॥१८८॥**
**तदङ्कुरस्त्रिदोषघ्नो लघुरर्शःक्षयापहा ।**

शतावरी, बहुसुता, भीरु, इन्दीवरी, वरी, नारायणी, शतपदी, शतवीर्या र पीवरी : यी सानो शतावरीका संस्कृत पर्यायवाची नामहरू हुन् । महाशतावरी, शतमूली, ऊर्ध्वकण्टिका, सहस्रवीर्या, हेतु, ऋष्यप्रोक्ता र महोदरी : यी ठूलो कुरिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । सानो कुरिलो गुलियो र तीतो हुन्छ । यो पचाउन कठिन हुन्छ । यसले शीतल गर्दछ । यो रसायनी हुन्छ । यसले दिमागको ग्रहणगर्ने शक्ति बढाउँदछ, पाचकाग्निलाई बढाउँदछ, पुष्टि दिन्छ र चिल्लो हुन्छ । यो आँखाका लागि लाभदायक हुन्छ तथा वीर्य र स्त्रीको दूध बढाउँदछ । बल दिन्छ । गुल्म, अतिसार, वातविकार, पित्तविकार, रक्तविकार र सुजन नाश गर्दछ । ठूलो कुरिलोले पनि दिमागको ग्रहण गर्ने क्षमता बढाउँदछ, मुटुका रोगमा फाइदा गर्दछ, वीर्य बढाउँदछ, रसायनी हुन्छ र शीतल गर्दछ । यसले अल्काई, ग्रहणी र आँखाका रोग नाश गर्दछ । यी दुबै कुरिलोका टुसा पचाउन हलुका हुन्छ तथा यसले त्रिदोष, अल्काई र क्षयरोग ठिक गर्दछ ।

## अश्वगन्धा

**गन्धान्ता वाजिनामादिरश्वगन्धा हयाह्वया ॥१८९॥**
**वराहकर्णी वरदा बलदा कुष्ठगन्धिनी ।**
**अश्वगन्धाऽनिलश्लेष्मश्वित्रशोथक्षयापहा ॥१९०॥**
**बल्या रसायनी तिक्ता कषायोष्णाऽतिशुक्रला ।**

अश्वगन्धा, हयाह्वया, हय शब्दका पर्यायवाची शब्द, वराहकर्णी, वरदा, बलदा, कुष्ठगन्धिनी र घोडालाई बुझाउने शब्दका अन्तमा गन्ध शब्द जोडिएका शब्दहरु : यी अश्वगन्धाका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यसले वातविकार, कफविकार, सेतो कुष्ठ, सुजन र क्षयरोग नाश गर्दछ । यसले बल दिन्छ, रसायनी हुन्छ, तीतो र टर्रो हुन्छ । यसले गर्मी गर्दछ तथा अति नै बीर्य बढाउँदछ ।

## गानेगुर्जो

**पाठाऽम्बष्ठाऽम्बष्ठकी च प्राचीना पापचेलिका ॥१९१॥**
**एकाष्ठीला रसा प्रोक्ता पाठिका वरतिक्तिका ।**
**पाठोष्णा कटुका तीक्ष्णा वातश्लेष्महरी लघुः ॥१९२॥**
**हन्ति शूलज्वरच्छर्दिकुष्ठातीसारहृद्रुजः ।**
**दाहकण्डूविषश्वासकृमिगुल्मगरव्रणान् ॥१९३॥**

पाठा, अम्बष्ठा, अम्बष्ठकी, प्राचीना, पापचेलिका, एकाष्ठीला, रसा, पाठिका र वरतिक्तिका : यी गानेगुर्जोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले गर्मी गर्दछ । यो पिरो र तिक्खर हुन्छ । यसले वातविकार र कफविकार नाश गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले शूल, जरो, वाकवाकी, कुष्ठ, अतिसार, मुटुका रोग, डाह, लुतो, विषविकार, दम, कीरा, गुल्म, पेटका रोग र खटिरा निको पार्दछ ।

## सेतो निसोध

**श्वेता त्रिवृत् त्रिभण्डी स्यात् त्रिवृता त्रिपुटाऽपि च ।**
**सर्वानुभूतिः सरला निशोत्रा रेचनीति च ॥१९४॥**
**श्वेता त्रिवृद्रेचनी स्यात्स्वादुरुष्णा समीरहृत् ।**
**रूक्षा पित्तज्वरश्लेष्मपित्तशोथोदरापहा ॥१९५॥**

श्वेत त्रिवृत्, त्रिभण्डी, त्रिवृता, त्रिपुटा, सर्वानुभूति, सरला, निशोत्रा र रेचनी : यी सेतो निसोधका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रेचनी, स्वादिलो, गर्मी गर्ने र वातविकार नाशक हुन्छ । रुखो हुन्छ तथा पित्तजन्य जरो, कफविकार, पित्तविकार, सुजन र पेटका रोग नाश गर्दछ ।

## कालो निसोध

**त्रिवृच्छ्यामाऽर्द्धचन्द्रा च पालिन्दी च सुषेणिका ।**
**मसूरविदला काली कैषिका कालमेषिका ॥१९६॥**
**श्यामा त्रिवृत्ततो हीनगुणा तीव्रविरेचिनी ।**
**मूर्च्छादाहमदभ्रान्तिकण्ठोत्कर्षणकारिणी ॥१९७॥**

श्यामा, त्रिवृत्, अर्धचन्द्रा, पालिन्दी, सुषेणिका, मसूरविदला, काली, कैषिका र कालमेषिका : यी कालो निसोधका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सेतो निसोधका तुलनामा कम गुणस्तरको हुन्छ । यो अति नै रेचक हुन्छ । यसले बेहोसी, डाह, नसा र भ्रम उत्पन्न गराउँदछ । यसले घाँटी सुकाउँदछ वा बसाउँदछ ।

**अजयपाल (सानो र ठूलो)**

**लघुदन्ती विशल्या च स्यादुदुम्बरपर्ण्यपि ।**
**तथैरण्डफला शीघ्रा श्येनघण्टा घुणप्रिया ॥१९८॥**
**वाराहाङ्गी च कथिता निकुम्भश्च मकूलकः ।**
**द्रवन्ती शम्बरी चित्रा प्रत्यक्पर्ण्याखुपर्ण्यपि ॥१९९॥**
**उपचित्रा श्रुतश्रोणी न्यग्रोधी च तथा वृषा ।**
**दन्तीद्वयं सरं पाकं रसे च कटु दीपनम् ॥२००॥**
**गुदाङ्कुराश्मशूलास्रकण्डूकुष्ठविदाहनुत् ।**
**तीक्ष्णोष्णं हन्ति पित्तास्रकफशोथोदरक्रिमीन् ॥२०१॥**

लघुदन्ती, विशल्या, उदुम्बरपर्णी, एरण्डफला, शीघ्रा, श्येनघण्टा, घुणप्रिया, वाराहाङ्गी, निकुम्भ र मकूलक : यी सानो अजयपालका तथा द्रवन्ती, शम्बरी, चित्रा, प्रत्यक्पर्णी, आखुपर्णी, उपचित्रा, श्रुतश्रोणी, न्यग्रोधी र वृषा : यी ठूलो अजयपालका संस्कृत पर्यायवाची नामहरू हुन् । (यसका पात र हाँगा अँडिरका जस्तै हुन्छन्) । दुबै अजयपालको स्वाद र पचेपछिको स्वाद पिरो हुन्छ । यी मल खुलाउने र दीपनी हुन्छन् ।यिनले अल्काईका टुसा, पत्थरी, शूल, रक्तविकार, लुतो, कुष्ठ र डाह नाश गर्दछन् । यी तिक्खर हुन्छन् र गर्मी गर्दछन् । यिनले पित्तविकार, रक्तविकार, कफविकार, सुजन, पेटका रोग र कीरा समेत नाश गर्दछन् ।

**क्षुद्रदन्तीफलं तु स्यान्मधुरं रसपाकयोः ।**
**शीतलं सृष्टविण्मूत्रं गरशोथकफापहम् ॥२०२॥**

सानो दन्तीको फलको रस र पचेपछिको रस गुलियो हुन्छ । यसले शीतल गर्दछ । मलमूत्र खुलाउँदछ । विषविकार, सुजन र कफविकार नाश गर्दछ ।

**जयपालो दन्तिबीजं विख्यातं तिन्तिडीफलम् ।**
**जयपालो गुरुः स्निग्धो रेची पित्तकफापहः ॥२०३॥**

जयपाल, दन्तिबीज र तिन्तिडीफल : यी दन्तीका बीजका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, चिल्लो र रेचनी हुन्छ । यसले पित्तविकार र कफविकार नाश गर्दछ ।

## ऐरेलु

**ऐन्द्रीन्द्रवारुणी चित्रा गवाक्षी च गवादनी ।**
**वारुणी च पराऽप्युक्ता सा विशाला महाफला ॥२०४॥**
**श्वेतपुष्पा मृगाक्षी च मृगैर्वारुर्मृगादनी ।**
**गवादनीद्वयं तिक्तं पाके कटु सरं लघु ॥२०५॥**
**वीर्योष्णं कामलापित्तकफप्लीहोदरापहम् ।**
**श्वासकासापहं कुष्ठगुल्मग्रन्थिव्रणप्रणुत् ॥२०६॥**
**प्रमेहमूढगर्भामगण्डामयविषापहम् ।**

ऐन्द्री, इन्द्रावारुणी, चित्रा, गवाक्षी, गवादनी र वारुणी : यी ऐरेलुका संस्कृत पर्यायवाची नामहरू हुन् । विशाला, महाफला, श्वेतपुष्पा, मृगाक्षी, मृगैर्वारु र मृगादनी : यी ठूलो जातको ऐरेलुका संस्कृत पर्यायवाची नामहरू हुन् । दुबै शुरुमा तीता र पचेपछि पिरा हुन्छन् । यी मलमूत्र खुलाउने, पचाउन सहज र गर्मी गर्ने गुणका हुन्छन् । यिनले कमलपित्त, पित्तविकार, कफविकार, फियोका रोग, पेटका रोग, दम, खोकी, कुष्ठ, गुल्म, गाँठे रोग, खटिरा, प्रमेह, मूढगर्भ, आमविकार, गण्डरोग र विषविकार नाश गर्दछन् ।

## नीर

**नीली तु नीलिनी तूणी काला दोला च नीलिका ॥२०७॥**
**रञ्जनी श्रीफली तुच्छा ग्रामीणा मधुपर्णिका ।**
**क्लीतका कालकेशी च नीलपुष्पा च सा स्मृता ॥२०८॥**
**नीलिनी रेचनी तिक्ता केश्या मोहभ्रमापहा ।**
**उष्णा हन्त्युदरप्लीहवातरक्तकफानिलान् ॥२०९॥**
**आमवातमुदावर्त्तं मदं च विषमुद्धतम् ।**

नीली, नीलिनी, तूणी, काला, दोला, नीलिका, रञ्जनी, श्रीफली, तुच्छा, ग्रामीणा, मधुपर्णिका, क्लीतका, कालकेशी र नीलपुष्पा : यी नीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, रेचनी, कपालका लागि लाभदायक र गर्मी गर्ने गुणको हुन्छ । यसले मोह, भ्रम, पेटका रोग, फियोका रोग, वातरक्त, कफविकार, वातविकार, आमजन्य वात, उदावर्त, मदरोग र कडा विषविकार नाश गर्दछ ।

## रातो साकिनु

**शरपुङ्खः प्लीहशत्रुनीलीवृक्षाकृतिश्च सः ।**
**शरपुङ्खो यकृत्प्लीहगुल्मव्रणविषापहः ॥२१०॥**
**तिक्तः कषायः कासास्रश्वासज्वरहरो लघुः ।**

शरपुङ्ग, प्लीहशत्रु र नीलीवृक्षाकृति : यी रातो साकिनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कलेजोका रोग, फियोका रोग, गुल्म, खटिरा र विषविकार नाश गर्दछ । यो तीतो र टर्रो हुन्छ । यसले खोकी, रक्तविकार, दम र जरो समेत नाश गर्दछ ।

## बाटुल्पाते

**वृद्धदारुक आवेगी छागान्त्री वृष्यगन्धिका ॥२११॥**
**वृद्धद्दारुः कषायोष्णः कटुस्तिक्तो रसायनः ।**
**वृष्यो वातामवातार्शः शोथमेहकफप्रणुत् ॥२१२॥**
**शुक्रायुर्बलमेधाऽग्निस्वरकान्तिकरःसरः ।**

वृद्धदारुक, आवेगी, छागान्त्री र वृष्यगन्धिका : यी बाटुल्पातेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, पिरो र तीतो हुन्छ । यो रसायनी, वीर्यवर्धक, हुन्छ । यसले वातविकार, आमवात, अल्काई, सुजन, प्रमेह र कफविकार नाश गर्दछ । यसले शुक्र, आयु, बल, दिमागको ग्रहण क्षमता, पाचकाग्नि, स्वर र शरीरको तेज बढाउँदछ तथा मलमूत्र खुलाउँदछ ।

## सिस्नु र लहरे दुरालभा

**यासो यवासो दुःस्पर्शो धन्वयासः कुनाशकः ।**
**दुरालभा दुरालम्भा समुद्रान्ता च रोदिनी ॥२१४॥**
**गान्धारी कच्छुराऽनन्ता कषाया हरिविग्रहा ।**
**यासः स्वादुः सरस्तिक्तस्तुवरः शीतलो लघुः ॥२१५॥**
**कफमेदोमदभ्रान्तिपित्तासृक्कुष्ठकासजित् ।**
**तृष्णाविसर्पवातास्रवमिज्वरहरः स्मृतः ॥२१६॥**
**यवासस्य गुणैस्तुल्या बुधैरुक्ता दुरालभा ।**

यास, यवास, दुःस्पर्श, धन्वयास र कुनाशक : यी सिस्नु का तथा दुरालभा, दुरालम्भा, समुद्रान्ता, रोदिनी, गान्धारी, कच्छुरा, अनन्ता, कषाया र हरिविग्रहा : यी लहरे दुरालभाका संस्कृत पर्यायवाची नामहरू हुन् । सिस्नु मिठो, तीतो र टर्रो हुन्छ । यसले मल खुलाउँदछ र शीतल गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले कफविकार, बोसोविकार, मदरोग, भ्रम, पित्तविकार, रक्तविकार, कुष्ठ, खोकी, तिर्खा, विसर्प, वातरक्त, वाकवाकी र जरो नाश गर्दछ भनिएको छ ।

## गोरखमुण्डी

**मुण्डी भिक्षुरपि प्रोक्ता श्रावणी च तपोधना ॥२१७॥**
**श्रवणाह्वा मुण्डतिका तथा श्रवणशीर्षका ।**
**महाश्रावणिकाऽन्या तु सा स्मृता भूकदम्बिका ॥२१८॥**

**कदम्बपुष्पिका च स्यादव्यथाऽतितपस्विनी ।**
**मुण्डतिका कटुः पाके वीर्योष्णा मधुरा लघुः (?) ॥२१९॥**
**मेध्या गण्डापचीकृच्छ्रकृमियोन्यर्त्तिपाण्डुनुत् ।**
**श्लीपदारुच्यपस्मारप्लीहमेदोगुदार्तिहृत् ॥२२०॥**
**महामुण्डी च तत्तुल्या गुणैरुक्ता महर्षिभिः ।**

मुण्डी, भिक्षु, श्रावणी, तपोधना, श्रवणाह्वा मुण्डतिका र श्रवणशीर्षका : यी मुण्डीका तथा महाश्रावणिका, भुकदम्बिका, कदम्बपुष्पिका, अव्यथा र अतितपस्विनी : यी महामुण्डीका संस्कृत पर्यायवाची नामहरू हुन् । मुण्डी पचेपछि पिरो र शुरुमा खाँदा गुलियो हुन्छ । यसले गर्मी गर्दछ, पचाउन हलुका हुन्छ र दिमागको ग्रहण क्षमता बढाउँदछ । यसले गलगाँड, अपची, कृच्छ्र, कीरा, योनिरोग, पाण्डु, हात्तीपाइले, अरुची, छारेरोग, फियोका रोग, बोसोविकार र मलद्वार सम्बन्धी पीडा नाश गर्दछ । विद्वानहरूले महामुण्डीको गुण पनि मुण्डीकै समान हुन्छ भनेका छन् ।

## दतिवन

**अपामार्गस्तु शिखरी ह्यधः शल्यो मयूरकः ॥२२१॥**
**मर्कटी दुर्ग्रहा चापि किणिही खरमञ्जरी ।**
**अपामार्गः सरस्तीक्ष्णो दीपनस्तिक्तकः कटुः ॥२२२॥**
**पाचनो रोचनश्छर्दिकफमेदोऽनिलापहः ।**
**निहन्ति हृद्रुजाध्मानार्शः कण्डूशूलोदरापचीः ॥२२३॥**

अपामार्ग, शिखरी, अधःशल्य, मयूरक, मर्कटी, दुर्ग्रहा, किणिही र खरमञ्जरी : यी दतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, पिरो र तिक्खर स्वादको हुन्छ । यसले मल खुलाउँदछ । यो दीपनी हुन्छ । यसले मुटुका रोग, आध्मान, अल्काई, लुतो, शूल, पेटका रोग र अपची नाश गर्दछ ।

## रातो दतिवन

**रक्तोऽन्यो वशिरो वृत्तफलो धामार्गवोऽपि च ।**
**प्रत्यक्पर्णी केशपर्णी कथिता कपिपिप्पली ॥२२४॥**
**अपामार्गोऽरुणो वातविष्टम्भी कफहृद्धिमः ।**
**रूक्षः पूर्वगुणैर्न्यूनः कथितो गुणवेदिभिः ॥२२५॥**

वृत्तफल, धामार्गव, प्रत्यक्पर्णी, केशपर्णी र कपिपिप्पली : यी रातो दतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । यो वायु अड्काउने, कफनाशक, शीतल गर्ने र रुखो हुन्छ । गुणका बारेमा जानिफकारहरूले यसलाई दतिवनभन्दा कम गुण भएको हुन्छ भनेका छन् ।

**अपामार्गफलं स्वादु रसे पाके च दुर्जरम् ।**
**विष्टम्भि वातलं रूक्षं रक्तपित्तप्रसादनम् ॥२२६॥**

दतिवनका गेडा पचेपछि गुलियो हुन्छ, चाँडै पच्दैन, कब्जियत गराउँदछ, वातविकार बढाउँदछ, रुखो हुन्छ तर रक्तपित्त नाश गर्दछ ।

## तालमखाना

**कोकिलाक्षस्तु काकेक्षुरिक्षुरः क्षुरकः क्षुरः ।**
**भिक्षुः काण्डेक्षुरप्युक्त इक्षुगन्धेक्षुबालिका ॥२२७॥**
**क्षुरकः शीतलो वृष्यः स्वाद्वम्लः पिच्छिलस्तथा ।**
**तिक्तो वातामशोथाश्मतृष्णादृष्टयनिलास्रजित् ॥२२८॥**

कोकिलाक्ष, काकेक्षु, इक्षुर, क्षुरक, क्षुर, भिक्षु, काण्डेक्षु, इक्षुगन्धा र इक्षुबालिका : यी तालमखानाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ र वीर्य बढाउँदछ । यो स्वादिलो, तीतो, अमिलो र लेस्याइलो हुन्छ । यसले  वातविकार, आमविकार, सुजन, पत्थरी, तिर्खा, दृष्टिरोग र वातरक्त नाश गर्दछ ।

## हडचूर

**ग्रन्थिमानस्थिसंहारीवज्राङ्गीवाऽस्थिशृङ्खला ।**
**अस्थिसंहारकः प्रोक्तो वातश्लेष्महरोऽस्थियुक् ॥२२९॥**
**उष्णः सरः कृमिघ्नश्चदुर्नामघ्नोऽक्षिरोगजित् ।**
**रूक्षः स्वादुर्लघुर्वृष्यः पाचनः पित्तलः स्मृतः ॥२३०॥**

ग्रन्थिमान्, अस्थिसंहारी, वज्राङ्गी र अस्थिश्रृङ्खला : यी हडचूरका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वातविकार र कफविकार नाश गर्नुका साथै फुटेका वा भाँचिएको हाड जोड्दछ । यसले गर्मी गर्नुका साथै मल खुलाउँदछ । कीरा, अल्काई र आँखाका रोग नाश गर्दछ । यो रुखो, स्वादिलो, पचाउन सहज, वीर्यवर्धक, पाचनी र पित्तवर्धक हुन्छ ।

**काण्डं त्वग्विरहितमस्थिशृङ्खलायामाषार्द्रं द्विदलमकञ्चुकं तदर्द्धम् ।**
**संपिष्टं सुतनु ततस्तिलस्य तैलेसंपक्वं वटकमतीव वातहारि ॥२३१॥**

हडचूरका टुक्रालाई बोक्रा ताछेर त्यसमा बोक्रा नभएका मास आधा मिसाई पिँध्नू । अनि ससाना गोली बनाउनू  र तिलको तेलमा पकाउनू । यसले वातरोग ठिक हुन्छ । (मात्रा १-२ तोला) ।

## घिउकुमारी

**कुमारी गृहकन्या च कन्या घृतकुमारिका ।**
**कुमारी भेदनी शीता तिक्ता नेत्र्या रसायनी ॥२३२॥**
**मधुरा बृंहणी बल्या वृष्या वातविषप्रणुत् ।**

**गुल्मप्लीहयकृद्वृद्धिकफज्वरहरी हरेत्॥२३३॥**
**ग्रन्थ्यग्निदग्धविस्फोटपित्तरक्तत्वगामयान्।**

कुमारी, गृहकन्या, कन्या र घृतकुमारिका : यी घिउकुमारीका संस्कृत पर्यायवाची नामहरू हुन्। यसले दिसा खुकुलो पार्दछ र शीतल गर्दछ। यो तीतो हुन्छ र आँखाका लागि फाइदा गर्दछ। यो रसायनी, गुलियो, पौष्टिक, बलदायक, वातविकार नाशक र विषविकार नाशक हुन्छ। यसले गुल्म, फियोका रोग, कलेजो सुन्निने रोग र कफजन्य जरो नाश गर्दछ। गाँठिरोग, आगोले पोलेको, विस्फोट, पित्तविकार, रक्तविकार र छालाको रोग ठिक गर्दछ।

## सेतो पुनर्नवा

**पुनर्नवा श्वेतमूला शोथघ्नी दीर्घपत्रिका॥२३४॥**
**कटु कषायानुरसा पाण्डुघ्नी दीपनी परा।**
**शोफानिलगरश्लेष्महरी ब्रघ्नोदरप्रणुत्॥२३५॥**

पुनर्नवा, श्वेतमूला, शोथघ्नी र दीर्घपत्रिका : यी सेतो पुनर्नवाका संस्कृत पर्यायवाची नामहरू हुन्। यो पिरो र टर्रो हुन्छ। यसले पाण्डुरोग नाश गर्दछ। यो अति नै दीपनी हुन्छ। यसले सुजन, वातविकार, विषविकार, कफविकार, व्रध्न र पेटका रोग नाश गर्दछ।

## रातो पुनर्नवा

**पुनर्नवाऽपरा रक्ता रक्तपुष्पा शिलाटिका।**
**शोथघ्नी क्षुद्रवर्षाभूर्वर्षकेतुः कठिल्लकः॥२३६॥**
**पुनर्नवाऽरुणा तिक्ता कटुपाका हिमा लघुः।**
**वातला ग्राहिणी श्लेष्मपित्तरक्तविनाशिनी॥२३७॥**

रक्तपुनर्नवा, रक्तपुष्पा, शिलाटिका, शोथघ्नी, क्षुद्रवर्षाभू, वर्षकेतु र कठिल्लक : यी रातो पुनर्नवाका संस्कृत पर्यायवाची नामहरू हुन्। यो तीतो र पचेपछि पिरो हुन्छ। यसले शीतल गर्दछ र यो पचाउन हलुका हुन्छ। यसले वातविकार र कब्जियत गर्दछ तर कफविकार, पित्तविकार र रक्तविकार नाश गर्दछ।

## बिरी

**प्रसारणी राजबला भद्रपर्णी प्रतानिनी।**
**सरणी सारणी भद्रा बला चापि कटम्भरा॥२३८॥**
**प्रसारणी गुरुर्वृष्या वलसन्धानकृत्सरा।**
**वीर्योष्णा वातहृत्तिक्ता वातरक्तकफापहा॥२३९॥**

प्रसारणी, राजबला, भद्रपर्णी, प्रतानिनी, सरणी, सारणी, भद्रा, बला र कटम्भरा यी बिरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, वीर्यवर्धक, बलदायक, खाएको कुरा मिलाउने वा सडाउने र मल खुलाउने गुणको हुन्छ । यसले गर्मी गर्दछ र वातविकार नाश गर्दछ । यो तीतो हुन्छ । यसले वातरक्त र कफविकार नाश गर्दछ ।

## कालो अनन्तमूल

**कृष्णा तु शारिवा श्यामा गोपी गोपवधूश्च सा ।**

कृष्णा, शारिवा, श्यामा, गोपी र गोपवधू : यी कालो अनन्तमूलका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## सेतो अनन्तमूल

**धवला शारिवा गोपा गोपकन्या कृशोदरी ॥२४०॥**
**स्फोटा श्यामा गोपवल्ली लताऽऽस्फोता च चन्दना ।**

धवलशारिवा, शारिवा, गोपा, गोपकन्या, कृशोदरी, स्फोटा, श्यामा, गोपवल्ली, लता, आस्फोता र चन्दना : यी सेतो अनन्तमूलका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सारिवायुगलं स्वादु स्निग्धं शुक्रकरं गुरु ॥२४१॥**
**अग्निमान्द्यारुचिश्वासकासामविषनाशनम् ।**
**दोषत्रयास्रप्रदरज्वरातीसारनाशनम् ॥२४२॥**

दुवै थरी अनन्तमूल स्वादिला, चिल्ला, वीर्य उत्पादक र पचाउन कठिन हुन्छन् । यिनले कमजोर पाचकाग्नि, अरुची, दम, खोकी, आमविकार, विषविकार, त्रिदोष, रक्तप्रदर, जरो र अतिसार नाश गर्दछन् ।

## भृङ्गीराज

**भृङ्गराजो भृङ्गरजो मार्कवो भृङ्ग एव च ।**
**अङ्गारकः केशराजो भृङ्गारः केशरञ्जनः ॥२४३॥**
**भृङ्गारः कटुकस्तीक्ष्णो रूक्षोष्णः कफवातनुत् ।**
**केश्यस्त्वच्यः कृमिश्वासकासशोथामपाण्डुनुत् ॥२४४॥**
**दन्त्यो रसायनो बल्यः कुष्ठनेत्रशिरोऽर्त्तिनुत् ।**

भृङ्गराज, भृङ्गरज, मार्कव, भृङ्ग, अङ्गारक, केशराज, भृङ्गार र केशरञ्जन : यी भृङ्गीराजका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तिक्खर र रुखो हुन्छ । यसले गर्मी गर्दछ तथा कफविकार र वातविकार नाश गर्दछ । यो कपाल, दाँत र छालाका लागि फाइदाजनक हुन्छ । यसले कीरा, दम, खोकी, सुजन, आमविकार, पाण्डुरोग, कुष्ठ, आँखाका रोग र टाउकाका रोग ठिक गर्दछ । यो रसायनी र बलदायक हुन्छ ।

नोट : यो सेतो, पहैँलो र कालो फूल फुल्ने गरी तीन प्रकारको हुन्छ । सेतो फूल फुल्नेलाई *Eclipta alba* र पहैँलो फूल फुल्नेलाई *Wedelia calendulacea* भनिएको छ तर कालो फूल फुल्नेको आजसम्म पहिचान हुन सकेको छैन ।

## शणपुष्पी

**शणपुष्पी स्मृता घण्टा शणपुष्पसमाकृतिः ॥२४५॥**
**शणपुष्पी कटुस्तिक्ता वामिनी कफपित्तजित् ।**

शणपुष्पी, घण्टा र शणपुष्पसमाकृति : यी शणपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तीतो हुन्छ । यसले बान्ता गराउँदछ तथा कफविकार र पित्तविकार नाश गर्दछ ।

## मुडिलो

**बलभद्रा त्रायमाणा त्रायन्ती गिरिजाऽनुजा ॥२४६॥**
**त्रायन्ती तुवरा तिक्ता सरा पित्तकफापहा ।**
**ज्वरहृद्रोगगुल्मार्शोभ्रमशूलविषप्रणुत् ॥२४७॥**

बलभद्रा, त्रायमाणा, त्रायन्ती, गिरिजा र अनुजा : यी मुडिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र तीतो हुन्छ । यसले मल खुलाउँदछ तथा पित्तविकार, कफविकार, जरो, मुटुका रोग, गुल्म, अल्काई, भ्रम, शूल र विषविकार नाश गर्दछ ।
नोट : विभिन्न विद्वानहरुले विभिन्न द्रव्यलाई त्रायमाण मानेका छन् तर पनि अधिकांशले *Gentiana Kurroo Royale* लाई नै त्रायमाणा मानेको पाइन्छ ।

## मरुई लहरो

**मूर्वा मधुरसा देवी मोरटा तेजनी सुवा ।**
**मधुलिका मधुश्रेणी गोकर्णी पीलुपर्ण्यपि ॥२४८॥**
**मूर्वा सरा गुरुः स्वादुस्तिक्ता पित्तास्रमेहनुत् ।**
**त्रिदोषतृष्णाहृद्रोगकण्डूकुष्ठज्वरापहा ॥२४९॥**

मूर्वा, मधुरसा, देवी, मोरटा, तेजनी, सुवा, मधुलिका, मधुश्रेणी, गोकर्णी र पीलुपर्णी : यी मरुई लहरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मल खुकुल्याएर सार्ने, पचाउन कठिन, स्वादिलो र तीतो हुन्छ । यसले पित्तविकार, रक्तविकार, प्रमेह, त्रिदोष, तिर्खा, मुटुका रोग, लुतो, कुष्ठ र जरो नाश गर्दछ ।
नोट : यो पनि विवादास्पद वनस्पति हो । छ किसिमका द्रव्यलाई मूर्वाका रूपमा प्रयोग गर्ने गरिएको पाइएको छ ।

## कवई

**काकमाची ध्वाङ्क्षमाची काकाह्वा चैव वायसी ।**
**काकमाची त्रिदोषघ्नी स्निग्धोष्णा स्वरशुक्रदा ॥२५०॥**
**तिक्ता रसायनी शोथकुष्ठार्शोज्वरमेहजित् ।**
**कटुर्नेत्रहिता हिक्काच्छर्दिहृद्रोगनाशिनी ॥२५१॥**

काकमाची, ध्वाङ्क्षमाची, काकाह्वा र वायसी : यी कवईका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले त्रिदोष नाश गर्दछ । यो चिल्लो हुन्छ । यसले गर्मी गर्दछ, स्वरलाई लाभ गर्दछ र वीर्य बढाउँदछ । यो तीतो र रसायनी हुन्छ । यसले सुजन, कुष्ठ, अल्काई, जरो र प्रमेह नाश गर्दछ । यो पिरो हुन्छ । यसले आँखाका लागि फाइदा गर्दछ तथा बाडुली, वाकवाकी र मुटुका रोग नाश गर्दछ ।

## कौवाठोरी (काकचुचे)

**काकनासा तु काकाङ्गी काकतुण्डफला च सा ।**
**काकनासा कषायोष्णा कटुका रसपाकयोः ॥२५२॥**
**कफघ्नी वामनी तिक्ता शोथार्शश्वित्रकुष्ठहृत् ।**

काकनासा, काकाङ्गी र काकतुण्डफला : यी कौवाठोरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो हुन्छ । यसले गर्मी गर्दछ । पचेपछि पिरो हुन्छ । यसले कफविकार नाश गर्दछ, बान्ता गराउँदछ तथा सुजन, अल्काई र सेतोकुष्ठ नाश गर्दछ ।

## काकजङ्घा

**काकजङ्घा नदीकान्ता काकतिक्ता सुलोमशा ॥२५३॥**
**पारावतपदी दासी काका चापि प्रकीर्त्तिता ।**
**काकजङ्घा हिमा तिक्ता कषाया कफपित्तजित् ॥२५४॥**
**निहन्ति ज्वरपित्तास्रव्रणकण्डूविषक्रिमीन् ।**

काकजङ्घा, नदीकान्ता, काकतिक्ता, सुलोमशा, पारावतपदी, दासी र काका : यी काकजङ्घाका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यसले शीतल गर्दछ । यो तीतो र टर्रो हुन्छ । यसले कफविकार, पित्तविकार, जरो, रक्तपित्त, घाउखटिरा, लुतो, विषविकार र कीरा नाश गर्दछ ।

## कुकुरडाइनु

**नागपुष्पी श्वेतपुष्पा नागिनी रामदूतिका ॥२५५॥**
**नागिनी रोचनी तिक्ता तीक्ष्णोष्णा कफपित्तनुत् ।**
**विनिहन्ति विषं शूलं योनिदोषवमिक्रिमीन् ॥२५६॥**

नागपुष्पी, श्वेतपुष्पा, नागिनी र रामदूतिका : यी कुकरडाइनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचिवर्धक, तीतो, तिक्खर र गर्मी गर्ने गुणको हुन्छ । यसले कफविकार, पित्तविकार, विषविकार, शूल, योनिका रोग, वाकवाकी र कीरा नाश गर्दछ ।

## मेढाशृङ्गी वा भेडासिङ्गी

**मेषशृङ्गी विषाणी स्यान्मेषवल्ल्यजशृङ्गिका ।**
**मेषशृङ्गी रसे तिक्ता वातला श्वासकासहृत् ॥२५७॥**
**रूक्षा पाके कटुः पित्तव्रणश्लेष्माक्षिशूलनुत् ।**
**मेषशृङ्गीफलं तिक्तं कुष्ठमेहकफप्रणुत् ॥२५८॥**
**दीपनं स्रंसनं कासक्रिमिव्रणविषापहम् ।**

मेषशृङ्गी, विषाणी, मेषवल्ली र अजशृङ्गिका : यी भेडासिङ्गीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो र बातविकार बढाउने गुणको हुन्छ । यसले दम र खोकी नाश गर्दछ । रुखो हुन्छ र पचेपछि पिरो हुन्छ । यसले पित्तविकार, घाउखटिरा, कफविकार र नेत्रशूल नाश गर्दछ । यसको फल पनि तीतो हुन्छ । यसले कुष्ठ, प्रमेह र कफविकार नाश गर्दछ । यो दीपनी र संस्रन हुन्छ । यसले खोकी, कीरा, घाउखटिरा र विषविकार नाश गर्दछ ।

## कानेसिन्को

**हंसपादी हंसपदी कीटमाता त्रिपादिका ॥२५९॥**
**हंसपादी गुरुः शीता हन्ति रक्तविषव्रणान् ।**
**विसर्पदाहातीसारलूताभूताग्निरोहिणीः ॥२६०॥**

हंसपादी, हंसपदी, कीटमाता र त्रिपादिका यी कानेसिन्कोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन र शीतल गर्ने गुणको हुन्छ । यसले रक्तविकार, विषविकार, घाउखटिरा, विसर्प, डाह, अतिसार, माकुराको विषविकार, भूतदोष, ग्रहदोष र अग्निरोहिणी (प्लेग) रोग नाश गर्दछ ।

## सोमलता

**सोमवल्ली सोमलता सोमक्षीरी द्विजप्रिया ।**
**सोमवल्ली त्रिदोषघ्नी कटुस्तिक्ता रसायनी ॥२६१॥**

सोमवल्ली, सोमलता, सोमक्षीरी र द्विजप्रिया : यी सोमलताका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले त्रिदोष नाश गर्दछ । यो पिरो र तीतो हुन्छ तथा रसायनी हुन्छ ।

## आकाशवेली वा अमरवेल

**आकाशवल्ली तु बुधैः कथिताऽमरवल्लरी ।**
**खवल्ली ग्राहिणी तिक्ता पिच्छिलाऽक्ष्यामयापहा ॥२६२॥**
**तुवराऽग्निकरी हृद्या पित्तश्लेष्मामनाशिनी ।**

विद्वानहरू अमरवल्लरीलाई आकाशवल्ली मान्दछन् । आकाशवल्ली, खवल्ली र अमरवल्लरी : यी आकाशवेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सङ्ग्राही, तीतो र लेस्याइलो हुन्छ । यसले आँखाका रोग नाश गर्दछ । यो टर्रो हुन्छ । यसले पाचकाग्नि बाल्दछ । यो मुटुका लागि लाभदायक हुन्छ तथा पित्तविकार र कफविकार नाश गर्दछ ।

## पातालगरुडी

**छिलिहिण्टो महामूलः पातालगरुडाह्वयः ॥२६३॥**
**छिलिहिण्टः परं वृष्यः कफघ्नः पवनापहः ।**

छिलिहिण्ट, महामूल र पातालगरुड : यी भोटे खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति नै वीर्यवर्धक हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ ।

## ऐंजेरु

**वन्दा वृक्षादनी वृक्षभक्ष्या वृक्षरुहाऽपि च ॥२६४॥**
**वन्दाकः स्याद्धिमस्तिक्तः कषायो मधुरो रसे ।**
**मङ्गल्यः कफवातास्ररक्षोव्रणविषापहः ॥२६५॥**

वन्दा, वृक्षादनी, वृक्षभक्ष्या, वृक्षरुहा र वन्दाक : यी ऐंजेरुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो तीतो, टर्रो र गुलियो हुन्छ । यो मङ्गलदायक तथा कफविकार, वातरक्त, राक्षसबाधा, घाउखटिरा र विषविकार नाशक हुन्छ ।

## वटपत्री

**वटपत्री तु कथिता मोहिन्यैरावती बुधैः ।**
**वटपत्री कषायोष्णा योनिमूत्रगदापहा ॥२६६॥**

वटपत्रीलाई विद्वानहरू मोहिनी र ऐरावती भन्दछन् । यो टर्रो हुन्छ । यसले गर्मी गर्दछ तथा योनिजन्य र मूत्रजन्य रोग नाश गर्दछ । (यो द्रव्यको यकीन हुन सकेको छैन) ।

## हिङ्गुपत्री

**हिङ्गुपत्री तु कवरी पृथ्वीका पृथुका पृथुः ।**

**हिङ्गुपत्री भवेद्रुच्या तीक्ष्णोष्णा पाचनी कटुः ॥२६७॥**
**हृद्बस्तिरुग्विबन्धार्शःश्लेष्मगुल्मानिलापहा ।**

हिङ्गुपत्री, कवरी, पृथ्वीका, पृथुका र पृथु : यी हिङ्गुपत्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले रुची जगाउँदछ । यो तिक्खर हुन्छ र गर्मी गर्दछ । पाचनी र पिरो हुन्छ । यसले मुटुका रोग, तल्लो पेटका रोग, विवन्ध, अल्काई, कफविकार, गुल्म र वातविकार नाश गर्दछ । (यसको पहिचान र प्रयोगमा समानता छैन) ।

## बाँसपाते झार

**वंशपत्री वेणुपत्री पिण्डा हिङ्गुशिवाटिका ॥२६८॥**
**हिङ्गुपत्रीगुणा विज्ञैर्वंशपत्री च कीर्त्तिता ।**

वंशपत्री, वेणुपत्री, पिण्डा र हिङ्गुशिवाटिका : यी वाँसपाते झारका संस्कृत पर्यायवाची नामहरू हुन् । विद्वानहरूले बाँसपाते झारका गुण जिम्बुका जस्तै हुन्छन् भनेका छन् ।

## मत्स्याक्षी (पिर्रे वा मरहट्टी झार)

**मत्स्याक्षी बाह्लिका मत्स्यगन्धा मत्स्यादनीति च ॥२६९॥**
**मत्स्याक्षी ग्राहिणी शीतकुष्ठपित्तकफास्रजित् ।**
**लघुस्तिक्ता कषाया च स्वाद्वी कटुविपाकिनी ॥२७०॥**

मत्स्याक्षी, बाह्लिका, मत्स्यगन्धा र मत्स्यादनी : यी पिर्रेका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सङ्ग्राही, शीतल गर्ने तथा कुष्ठ, पित्तविकार, कफविकार र रक्तविकार नाशक हुन्छ । यो पचाउन सहज, तीतो, टर्रो, स्वादिलो र पचेपछि पिरो हुन्छ ।

## सर्पको काफल

**सर्पाक्षी स्यात्तु गण्डाली तथा नाडीकलापकः ।**
**सर्पाक्षी कटुका तिक्ता सोष्णा कृमिनिकृन्तनी ॥२७१॥**
**वृश्चिकोन्दुरुसर्पाणां विषघ्नी व्रणरोपिणी ।**

सर्पाक्षी, गण्डाली र नाडीकलापक : यी सर्पको काफलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तीतो हुन्छ । यसले गर्मी गर्दछ, कीरा मार्दछ, घाउ भर्दछ तथा बिच्छी, मुसा र सर्पको विषविकार नाश गर्दछ । ( दुई थरी वनस्पति अर्थात् *Ophiorrhiza mungos Linn* र *Polygonum plebejum R.Br* लाई सर्पाक्षी मान्ने गरेको पाइएको छ ।)

## शङ्खपुष्पी

**शङ्खपुष्पी तु शङ्खाह्वा मङ्गल्यकुसुमाऽपि च ॥२७२॥**
**शङ्खपुष्पी सरा मेध्या वृष्या मानसरोगहृत् ।**
**रसायनी कषायोष्णा स्मृतिकान्तिबलाग्निदा ॥२७३॥**
**दोषापस्मारभूताश्रीकुष्ठक्रिमिविषप्रणुत् ।**

शङ्खपुष्पी, शङ्खाह्वा र मङ्गल्यकुसुमा : यी शङ्खपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले मल खुलाउँदछ । दिमागको ग्रहण गर्ने क्षमता र वीर्य बढाउँदछ । यसले मानसिक रोग नाश गर्दछ । यो रसायनी, टर्रो र गर्मी गर्ने हुन्छ । यसले सम्झना शक्ति, कान्ति, बल र पाचकाग्नि बढाउँदछ तथा त्रिदोष, छारेरोग, भूतबाधा, दरिद्रता, कुष्ठ, कीरा र विषविकार नाश गर्दछ ।

## अर्कपुष्पी

**अर्कपुष्पी क्रूरकर्मा पयस्या जलकामुका ॥२७४॥**
**अर्कपुष्पी कृमिश्लेष्ममेहपित्तविकारजित् ।**

अर्कपुष्पी, क्रूरकर्मा, पयस्या र जलकामुका : यी अर्कपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कीरा, कफविकार, प्रमेह र पित्तविकार नाश गर्दछ ।

## लज्जावती

**लज्जालुः स्वाच्छमीपत्रा समङ्गा जलकारिका ॥२७५॥**
**रक्तपादी नमस्कारी नाम्ना खदिरकेत्यपि ।**
**लज्जालुः शीतला तिक्ता कषाया कफपित्तजित् ॥२७६॥**
**रक्तपित्तमतीसारं योनिरोगान् विनाशयेत् ।**

लज्जालु, शमीपत्रा, समङ्गा, जलकारिका, रक्तपादी, नमस्कारी र खदिरका : यी लज्जावतीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो तीतो र टर्रो हुन्छ । यसले कफविकार, पित्तविकार, रक्तपित्त, अतिसार र योनिका रोगहरू नाश गर्दछ ।

## काँडा नहुने लज्जावती

**अलम्बुषा खरत्वक् च तथा मेदोगला स्मृता ॥२७७॥**
**अलम्बुषा लघुः स्वादुः क्रिमिपित्तकफापहा ।**

अलम्बुषा, खरत्वक् र मेदागला : यी काँडा नहुने लज्जावती झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका र स्वादिलो हुन्छ । यसले कीरा, पित्तविकार र कफविकार नाश गर्दछ ।

## दूधे झार

**दुग्धिका स्वादुपर्णी स्यात्क्षीरा विक्षीरिणी तथा ॥२७८॥**
**दुग्धिकोष्णा गुरू रूक्षा वातलागर्भकारिणी ।**
**स्वादुक्षीरा कटुस्तिक्ता सृष्टमूत्रा मलापहा ॥२७९॥**
**स्वादुर्विष्टम्भिनी वृष्या कफकुष्ठक्रिमिप्रणुत् ।**

दुग्धिका, स्वादुपर्णी, क्षीरा, विक्षीरिणी : यी दूधे झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले गर्मी गर्दछ । यो पचाउन कठिन र रुखो हुन्छ । यसले वातविकार बढाउँदछ र गर्भ बसाउन लाभदायक हुन्छ । यो स्वादिलो, दूध युक्त, पिरो र तीतो हुन्छ । यसले पिसाब बढाउँदछ र दिसाको समस्या नाश गर्दछ । यो स्वादिष्ट, विष्टम्भी, वीर्य वर्धक, कफनाशक, कुष्ठनाशक र कीरा नाशक हुन्छ ।

## भुइँ अमला

**भूम्यामलकिका प्रोक्ता शिवा तामलकीति च ॥२८०॥**
**बहुपत्रा बहुफला बहुवीर्याऽजटाऽपि च ।**
**भूधात्री वातकृत्तिक्ता कषाया मधुरा हिमा ॥२८१॥**
**पिपासाकासपित्तास्रकफकण्डूक्षतापहा ।**

भूम्यामलकिका, शिवा, तामलकी, बहुपत्रा, बहुफला, बहुवीर्या, अजटा र भूधात्री : यी भुइँअमलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो, टर्रो र गुलियो हुन्छ । यसले शीतल गर्नुका साथै तिर्खा, खोकी, पित्तविकार, रक्तविकार, कफविकार, लुतो र घाउ ठिक गर्दछ ।

## ब्राह्मी र मण्डूकपर्णी

**ब्राह्मी कपोतवङ्का च सोमवल्ली सरस्वती ॥२८२॥**
**मण्डूकपर्णी माण्डूकी त्वाष्ट्री दिव्या महौषधी ।**
**ब्राह्मी हिमा सरा तिक्ता लघुर्मेध्या च शीतला ॥२८३॥**
**कषाया मधुरा स्वादुपाकाऽऽयुष्या रसायनी ।**
**स्वर्या स्मृतिप्रदा कुष्ठपाण्डुमेहास्रकासजित् ॥२८४॥**
**विषशोथज्वरहरी तद्वन्मण्डूकपर्णिनी ।**

ब्राह्मी, कपोतवङ्का, सोमवल्ली र सरस्वती ब्राह्मीका तथा मण्डूकपर्णी, माण्डूकी, त्वाष्ट्री, दिव्या र महौषधी : यी मण्डूकपर्णीका संस्कृत पर्यायवाची नामहरू हुन् । ब्राह्मीले शीतल गर्दछ । यसले मल खुलाउँदछ । यो तीतो, दिमागको ग्रहण क्षमता बढाउने शीतल हुन्छ । यो टर्रो र पचेपछि गुलियो हुन्छ । यसले आयु बढाउँदछ र रसायनी हुन्छ । स्वरलाई फाइदा गर्दछ, स्मरण शक्ति बढाउँदछ तथा कुष्ठ, पाण्डु, प्रमेह, रक्तविकार, खोकी, विषविकार, सुजन र जरो नाश गर्दछ । मण्डूकपर्णीमा पनि यी सबै गुण हुन्छन् ।

## द्रोणपुष्पी

**द्रोणा च द्रोणपुष्पी च फलेपुष्पा च कीर्त्तिता ॥२८५॥**
**द्रोणपुष्पी गुरुः स्वादू रूक्षोष्णा वातपित्तकृत् ।**
**सतीक्ष्णलवणा स्वादुपाका कट्वी च भेदिनी ॥२८६॥**
**कफामकामलाशोथतमकश्वासजन्तुजित् ।**

द्रोणा, द्रोणपुष्पी र फलेपुष्पा : यी द्रोणपुष्पीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, स्वादिलो, रुखो र गर्मी गर्ने गुणको हुन्छ । यसले वातविकार र पित्तविकार गर्दछ । यो तिक्खर, नुनिलो, पचेपछि गुलियो र पिरो तथा मल खुकुल्याउने गुणको हुन्छ । यसले कफविकार, आमविकार, कमलपित्त, सुजन, तमकश्वास र कीरा नाश गर्दछ ।

## हुर्हुरे

**सुवर्चला सूर्यभक्ता वरदा बदराऽपि च ॥२८७॥**
**सूर्यावर्त्ता रविप्रीताऽपरा ब्रह्मसुदुर्लभा ।**
**सुवर्चला हिमा रूक्षा स्वादुपाका सरा गुरुः ॥२८८॥**
**अपित्तला कटुः क्षारा विष्टम्भकफवातजित् ।**
**अन्या तिक्ता कषायोष्णा सरा रुक्षा लघुः कटुः ॥२८९॥**
**निहन्ति कफपित्तास्रश्वासकासारुचिज्वरान् ।**
**विस्फोटकुष्ठमेहास्रयोनिरुक्कृमिपाण्डुताः ॥२९०॥**

सुवर्चला, सूर्यभक्ता, वरदा, बदरा, सूर्यावर्त्ता र रविप्रीता : यी हुर्हुरेका संस्कृत पर्यायवाची नामहरू हुन् । एक फरक प्रकारको हुर्हुरे पनि हुन्छ जसलाई ब्रह्मसुदुर्लभा भनिन्छ । यसले शीतल गर्दछ, रुखो हुन्छ, पचेपछि गुलियो हुन्छ, मल खुलाउँदछ, पचाउन कठिन हुन्छ, पित्तविकार नगर्ने, पिरो, नुनिलो, विष्टम्भी, कफविकार नाशक, वातविकार नाशक हुन्छ । दोश्रो प्रकारको तीतो, टर्रो, गर्मी गर्ने, मल खुलाउने, रुखो, पचाउन सहज र पिरो हुन्छ । यसले कफविकार, पित्तविकार, रक्तविकार, दम, खोकी, अरुची, जरो, विस्फोट, कुष्ठ, प्रमेह, योनिका रोग, कीरा र पाण्डुरोग नाश गर्दछ ।

नोट : यो सेतो (*Gynandropsis pentaphylla, DC.*), पहेँलो (*Cleome viscosa, Linn.*) र बैजनी (*C.monophylla Linn.*) गरी तीन किसिमको हुन्छ । सेतो हुर्हुरेको पातको डाँठ सूर्यसँगसँगै घुम्ने गर्दछ । स्थान अनुसार अजगन्धा आदि अनेक वनस्पतिलाई यो नाममा प्रयोग गर्ने गरिएको छ ।

## फल नफल्ने चठेल

**वन्ध्याकर्कोटकी देवी कन्या योगीश्वरीति च ।**
**नागारिर्नक्रदमनी विषकण्टकिनी तथा ॥२९१॥**
**बन्ध्याकर्कोटकी लघ्वी कफनुद् व्रणशोधिनी ।**

**सर्पदर्पहरी तीक्ष्णा विसर्पविषहारिणी ॥२९२॥**

वन्ध्याककोर्टकी, देवी, कन्या, योगीश्वरी, नागारि, नक्रदमनी र विषकण्टकिनी : यी फल नफल्ने चठेलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका, कफनाशक र घाउखटिरा प्रशोधक हुन्छ । यो सर्पको घमण्ड नाशक (विषविकार नाशक), तिक्खर, विसर्पनाशक र विषविकार नाशक हुन्छ ।

नोट : यसको वानस्पतिक नाम *Momordica dioica Roxb.* हो । यसको भाले र पोथी लहरा बेग्लाबेग्लै हुन्छन् र बेग्लाबेग्लै फूल फुल्दछन् । पोथी लहरोमा फल पनि लाग्दछ र यसलाई चठेल भनिन्छ । फल नफल्ने खालको लहरालाई वन्ध्याककोर्टकी भनिन्छ । यी दुई लहरालाई फूलका भेट्नाबाट पहिचान गर्न सकिन्छ । भाले चठेल अर्थात् वन्ध्याककोर्टकीको फूलको भेट्नु लामो हुन्छ ।

## बन परबर

**मार्कण्डिका भूमिवल्ली मार्कण्डी मृदुरेचनी ।**
**मार्कण्डिका कुष्ठहरी ऊर्ध्वाधःकायशोधिनी ॥२९३॥**
**विषदुर्गन्धकासघ्नी गुल्मोदरविनाशिनी ।**

मार्कण्डिका, भूमिवल्ली, मार्कण्डी र मृदुरेचनी : यी वनपरबरका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कुष्ठ नाश गर्दछ र तलमाथिबाट शरीरलाई प्रशोधन गर्दछ साथै विषविकार, दुर्गन्ध, खोकी, गुल्म र पेटका रोग नाश गर्दछ ।

## सानो बनतोरी (भुसे वनतोरियाँ)

**देवदाली यु वेणी स्यात्कर्कटी च गरागरी ॥२९४॥**
**देवताडो वृत्तकोशस्तथा जीमूत इत्यपि ।**
**पीता परा खरस्पर्शा विषघ्नी गरनाशिनी ॥२९५॥**
**देवदाली रसे तिक्ता कफार्शःशोफपाण्डुताः ।**
**नाशयेद्वामनी तीक्ष्णा क्षयहिक्काकृमिज्वरान् ॥२९६॥**
**देवदालीफलं तिक्तं कृमिश्लेष्मविनाशनम् ।**
**स्रंसनं गुल्मशूलघ्नमर्शोघ्नं वातजित्परम् ॥२९७॥**

देवदाली, वेणी, कर्कटी, गरागरी, देवताड, वृत्तकोश र जीमूत : यी भुसे बनतोरियाका संस्कृत पर्यायवाची नामहरू हुन् । पहेँलो भुसे बनतोरियाका खरस्पर्शा, विषघ्नी र गरनाशिनी संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो हुन्छ तथा कफविकार, अल्काई, सुजन र पाण्डु नाश गर्दछ । यसले तिब्र तरिकाले बान्ता गराउँदछ । यो तिक्खर हुन्छ । यसले क्षयरोग, बाडुली, कीरा र जरो नाश गर्दछ । यसको फल तस्तो हुन्छ र यसले कीरा र कफविकार नाश गर्दछ । यसमा संस्रन गुण हुन्छ । यसले गुल्म, शूल, अल्काई र राम्ररी वातरोग निको पार्दछ ।

## जल पिप्ला

**जलपिप्पल्यभिहिता शारदी शकुलादनी ।**
**मत्स्यादनी मत्स्यगन्धा लाङ्गलीत्यपि कीर्त्तिता ॥२९८॥**
**जलपिप्पलिका हृद्या चक्षुष्या शुक्रला लघुः ।**
**संग्राहिणी हिमा रूक्षा रक्तदाहव्रणापहा ॥२९९॥**
**कटुपाकरसा रुच्या कषाया वह्निवर्द्धिनी ।**

जलपिप्पली, शारदी, शकुलादनी,, मत्स्यादनी, मत्स्यगन्धा र लाङ्गली : यी जल पिप्लाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो मुटु र आँखाका लागि लाभदायक हुन्छ । यसले वीर्य बढाउँदछ । यो पचाउन हलुका र सङ्ग्राही हुन्छ । यसले शीतल गर्दछ तर रुखो हुन्छ । यसले रक्तविकार, डाह र घाउखटिरा निको पार्दछ । पचेपछि पिरो हुन्छ । रुची बढाउँदछ । टर्रो हुन्छ । पाचकाग्निलाई बढाउँदछ ।

## जभ्रेटो

**गोजिह्वा गोजिका गोभी दार्विका खरपर्णिनी ॥३००॥**
**गोजिह्वा वातला शीता ग्राहिणी कफपित्तनुत् ।**
**हृद्या प्रमेहकासास्रव्रणज्वरहरी लघुः ॥३०१॥**
**कोमला तुवरा तिक्ता स्वादुपाकरसा स्मृता ।**

गोजिह्वा, गोजिका, गोभी, दार्विका र खरपर्णिनी : यी जभ्रेटोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वातविकार बढाउँदछ, शीतल गर्दछ, सङ्ग्राही हुन्छ तथा कफविकार र पित्तविकार नाश गर्दछ । यो मुटुका लागि फाइदाजनक हुन्छ । यसले प्रमेह, खोकी, रक्तविकार, घाउखटिरा र जरो निको पार्दछ । यो पचाउन हलुका, कमलो, टर्रो, तीतो र गुलियो हुन्छ । पचेपछि गुलियो हुन्छ ।

## तितेपाती

**विज्ञेया नागदमनी बलामोटा विषापहा ॥३०२॥**
**नागपुष्पी नागपत्रा महायोगेश्वरीति च ।**
**बलामोटा कटुस्तिक्ता लघुः पित्तकफापहा ॥३०३॥**
**मूत्रकृच्छ्रव्रणान् रक्षो नाशयेज्जालगर्दभम् ।**
**सर्वग्रहप्रशमनी निःशेषविषनाशिनी ॥**
**जयं सर्वत्र कुरुते धनदासुमतिप्रदा ॥३०४॥**

नागदमनी, बलामोटा, विषापहा, नागपुष्पी, नागपत्रा र महायोगेश्वरी : यी तितेपातीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो र पचाउन सहज हुन्छ । यसले पित्तविकार, कफविकार, मूत्रकृच्छ्र, घाउखटिरा, राक्षसबाधा, जालगर्दभ, सबै प्रकारका ग्रहदोष र सबै खाले विषविकार नाश गर्दछ । यसले सर्वत्र जय गर्दछ र सुबुद्धि दिन्छ ।

## वीरतरु

**वेल्लन्तरो जगति वीरतरुः प्रसिद्धः श्वेतासितारुणविलोहितनीलपुष्पः ।**
**स्याज्जातितुल्यकुसुमः शमिसूक्ष्मपत्रः स्यात्कण्टकी विजलदेशज एव वृक्षः ॥३०५॥**
**वेल्लन्तरो रसे पाके तिक्तस्तृष्णाकफापहः ।**
**मूत्राघाताश्मजिद्ग्राही योनिमूत्रानिलार्त्तिजित् ॥३०६॥**

वेल्लन्तर र वीरतरु : यी दुई नाम संसार प्रसिद्ध छन् । यसको फूल चमेलीको फूल जस्तै हुन्छ । फूलको रङ सृतो, कालो, अरुण, गाढा रातो र नीलो पनि हुन्छ । शमीका जस्तै मसिना पात हुन्छन् । यसमा काँडा हुन्छन् र यो सुक्खा स्थानमा मात्र हुन्छ । यो शुरुमा र पचेपछि तीतो हुन्छ । यसले तिर्खा, कफविकार, मूत्राघात, पत्थरी, योनिरोग, मुत्ररोग र वातविकार नाश गर्दछ । यो सङ्ग्राही हुन्छ ।

## छिम्केझार

**छिक्कनी क्षवकृत्तीक्ष्णा छिक्किका घ्राणदुःखदा ।**
**छिक्कनी कटुका रुच्या तीक्ष्णोष्णावह्निपित्तकृत् ॥३०७॥**
**वातरक्तहरी कुष्ठक्रिमिवातकफापहा ।**

छिक्कनी, क्षवकृत्, तीक्ष्णा, छिक्किका र घ्राणदुःखदा : यी छिम्केझारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, रुचिकारक र तिक्खर हुन्छ । यसले गर्मी गर्दछ तथा पाचकाग्नि र पित्तविकार बढाउँदछ । यसले वातरक्त, कुष्ठ, कीरा, वातविकार र कफविकार नाश गर्दछ ।

## कुकुन्दर

**कुकुन्दरस्ताम्रचूडः सूक्ष्मपत्रो मृदुच्छदः ॥३०८॥**
**कुकुन्दरः कटुस्तिक्तो ज्वररक्तकफापहः ।**
**तन्मूलमार्द्रं निक्षिप्तं वदने मुखशोषहृत् ॥३०९॥**

कुकुन्दर, ताम्रचूड, सूक्ष्मपत्र र मृदुच्छद : यी कुकुन्दरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तीतो हुन्छ । यसले जरो, रक्तविकार र कफविकार नाश गर्दछ । यसको आलो वा ताजा जरा मुखमा राख्यो भने मुख सुक्न बन्द हुन्छ ।

## सुदर्शना

**सुदर्शना सोमवल्ली चक्राह्वा मधुपर्णिका ।**
**सुदर्शना स्वादुरुष्णा कफशोथास्रवातजित् ॥३१०॥**

सुदर्शना, सोमवल्ली, चक्राह्वा र मधुपर्णिका : यी सुदर्शनाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो स्वादिलो हुन्छ र गर्मी गर्दछ । यसले कफविकार, सुजन, रक्तविकार र वातविकार नाश गर्दछ ।

## मुसाकाने झार

**आखुकर्णी त्वाखुपर्णी पर्णिका भूदरीभवा ।**
**आखुकर्णी कटुस्तिक्ता कषाया शीतला लघुः ॥**
**विपाके कटुका मूत्रकफामयकृमिप्रणुत् ॥३११॥**

आखुकर्णी, आखुपर्णी, पर्णिका र भूदरीभवा : यी मुसाकाने झारका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो र टर्रो हुन्छ । यसले शीतल गर्दछ । यो पचाउन हलुका हुन्छ । पचेपछि पिरो हुन्छ । यसले मुत्ररोग, कफविकार र कीरा नाश गर्दछ ।

## सहस्रजरी

**मयूराह्वशिखा प्रोक्ता सहस्राहिर्मधुच्छदा ।**
**नीलकण्ठशिखा लघ्वी पित्तश्लेष्मातिसारजित् ॥३१२॥**

मयूराह्वशिखा (मयूर वाचक शब्दका पछाडि शिखा जोडिएका नीलकण्ठशिखा आदि शब्द), सहस्राहि र मधुच्छदा : यी सहस्रजरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका हुन्छ । यसले पित्तविकार, कफविकार र अतिसार ठिक गर्दछ ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे गुडूच्यादिवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको गुर्जोआदि-वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ पुष्पवर्गः ॥
## (फूल वर्ग)
## कमल

**वा पुंसि पद्मं नलिनमरविन्दं महोत्पलम् ।**
**सहस्रपत्रं कमलं शतपत्रं कुशेशयम् ॥१॥**
**पङ्केरुहं तामरसं सारसं सरसीरुहम् ।**
**बिसप्रसूनराजीवपुष्कराम्भोरुहाणि च ॥२॥**
**कमलं शीतलं वर्ण्यं मधुरं कफपित्तजित् ।**
**तृष्णादाहास्रविस्फोटविषवीसर्पनाशनम् ॥३॥**

पद्म (यो प्रायः नपुंसक लिङ्गमा र कहिलेकाहीँ पुंलिङ्गमा पनि प्रयोग हुन्छ), नलिन, अरविन्द, महोत्पल, सहस्रपत्र, कमल, शतपत्र, कुशेशय, पङ्केरुह, तामरस, सारस, सरसीरुह, बिसप्रसून, राजीव, पुष्कर र

अम्भोरुह : यी कमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ र शरीरको वर्णमा निखार लेराउँदछ । यो मिठो हुन्छ । यसले कफविकार, पित्तविकार, तिर्खा, डाह, रक्तविकार, विस्फोट, विषविकार र वीसर्प रोग नाश गर्दछ ।

**विशेषतः सितं पद्मं पुण्डरीकमिति स्मृतम् ।**
**रक्तं कोकनदं ज्ञेयं नीलमिन्दीवरं स्मृतम् ॥४॥**
**धवलं कमलं शीतं मधुरं कफपित्तजित् ।**
**तस्मादल्पगुणं किञ्चिदन्यद्रक्तोत्पलादिकम् ॥५॥**

विशेष गरी सेतो कमललाई “पुण्डरीक”, रातो कमललाई “कोकनद” र नीलो कमललाई “इन्दीवर” भनिन्छ । सेतो कमलले शीतल गर्दछ । यो मिठो हुन्छ । यसले कफविकार र पित्तविकार नाश गर्दछ । अन्य राता, नीला आदि कमल यसका तुलनामा कम गुणशाली हुन्छन् । (यसको ल्याटिन नाम *Nelumbium speciosum Wild.* र अंग्रेजी नाम *Sacred Lotus* हो ।)

**मूलनालदलोत्फुल्लफलैः समुदिता पुनः ।**
**पद्मिनी प्रोच्यते प्राज्ञैर्बिसिन्यादि च सा स्मृता ॥६॥**

जरा, डाँठ, पात र फल सहितको फूलेको कमललाई विद्वानहरू “पद्मिनी” भन्दछन् । यसैलाई “बिसिनी” ( नलिनी, कमलिनी) आदि पनि भनिन्छ ।

**पद्मिनी शीतला गुर्वी मधुरा लवणा च सा ।**
**पित्तासृक्कफनुद्रूक्षा वातविष्टम्भकारिणी ॥७॥**

पद्मिनीले शीतल गर्दछ । पचाउन कठिन हुन्छ । मिठो र नुनिलो हुन्छ । यसले पित्तविकार, रक्तविकार र कफविकार नाश गर्दछ । यो रुखो हुन्छ । यसले वातविकार बढाउँदछ । यो विष्टम्भी हुन्छ ।

**संवर्त्तिका नवदलं बीजकोशस्तु कर्णिका ।**
**किञ्जल्कः केशरः प्रोक्तो मकरन्दो रसः स्मृतः ॥८॥**
**पद्मनालं मृणालं स्यात्तथा बिसमिति स्मृतम् ।**

कमलका भर्खर पलाएका नयाँ पातलाई “संवर्त्तिका” भनिन्छ । कमलका गेडा रहने बीजकोश (फल) लाई “कर्णिका” पनि भनिन्छ । कमलको केशरलाई “किञ्जल्क” र फूलको रसलाई “मकरन्द” भनिन्छ । कमलको डाँठलाई “पद्मनाल” वा “मृणाल” वा “बिस” भनिन्छ ।

**संवर्त्तिका हिमा तिक्ता कषाया दाहतृट्प्रणुत् ॥९॥**
**मूत्रकृच्छ्रगुदव्याधिरक्तपित्तविनाशिनी ।**

कमलका कलिलो पात चिसो हुन्छ र शीतल गर्दछ । यो तीतो र टर्रो हुन्छ । यसले डाह, तिर्खा, मूत्रकृच्छ्र, मलद्वारका रोग र रक्तपित्त नाश गर्दछ ।

**पद्मस्य कर्णिका तिक्ता कषाया मधुरा हिमा ॥१०॥**
**मुखवैशद्यकृल्लघ्वी तृष्णाऽस्रकफपित्तनुत् ।**

कमलको बीजकोश तीतो, टर्रो र गुलियो हुन्छ । यसले शीतल गर्दछ । यसले मुखको शुद्धि गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले तिर्खा, रक्तविकार, कफविकार र पित्तविकार नाश गर्दछ । (कमलका गेडा पौष्टिक, गुलियो, चिल्लो, सङ्ग्राही, रक्तसङ्ग्राही, गर्भसंस्थापक र शीतल गर्ने गुणको हुन्छ ।)

**किञ्जल्कः शीतलो वृष्यः कषायो ग्राहकोऽपि सः ॥११॥**
**कफपित्ततृषादाहरक्तार्शोविषशोथजित् ।**

कमलको केशरले शीतल गर्दछ । यो वीर्यवर्धक, टर्रो र सङ्ग्राही हुन्छ । यसले कफविकार, पित्तविकार, तिर्खा, डाह, रगत बहने अल्काई, विषविकार र सुजनलाई नाश गर्दछ ।

**मृणालं शीतलं वृष्यं पित्तदाहास्रजिद् गुरु ॥१२॥**
**दुर्जरं स्वादुपाकञ्च स्तन्यानिलकफप्रदम् ।**
**संग्राहि मधुरं रूक्षं शालूकमपि तद्गुणम् ॥१३॥**

कमलको डाँठले शीतल गर्दछ, वीर्य बढाउँदछ तथा पित्तविकार, डाह र रक्तविकार नाश गर्दछ । यो पचाउन कठिन, रुखो र पचेपछि गुलियो हुन्छ । यसले दूध फुटाउँदछ वा बढाउँदछ तथा वायुविकार र कफविकार बढाउँदछ । यो सङ्ग्राही, गुलियो र रुखो हुन्छ । कमलको जरामा हुने गानुमा पनि कमलको डाँठमा हुने जस्तै गुण हुन्छन् ।

**स्थलकमल**

**पद्मचारिण्यतिचराऽव्यथा पद्मा च शारदा ।**
**पद्माऽनुष्णा कटुस्तिक्ता कषाया कफवातजित् ॥१४॥**
**मूत्रकृच्छ्राश्मशूलघ्नो श्वासकासविषापहा ।**

पद्मचारिणी, अतिचरा, अव्यथा, पद्मा र शारदा : यी स्थलकमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले हल्का गर्मी गर्दछ । यो पिरो, तीतो र टर्रो हुन्छ । यसले कफविकार, वातविकार, मुत्रकृच्छ्र, पत्थरी, शूल, दम, खोकी र विषविकार नाश गर्दछ ।

(चतुर्धा स्थलपद्मानि सेवन्ती गुलदावदी । नैपाली च गुलाबश्च बकुलश्च कदम्बकः ॥ जस्ता मतहरु भेटिन्छन् । कसैले *Ionidium suffruticosum Ging.* लाई त कसैले *Hibiscus mutabills Linn.* लाई स्थलकमल मानेका छन् ।

## रातमा जून लागेपछि फुल्ने सेतो कमल (कुमुद)

**श्वेतं कुवलयं प्रोक्तं कुमुदं कैरवं तथा ॥१५॥**
**कुमुदं पिच्छिलं स्निग्धं मधुरं ह्लादि शीतलम् ।**

श्वेतकुवलय, कुमुद र कैरव : यी रातमा जून लागेपछि फुल्ने सेतो कमलका पर्यायवाची नामहरू हुन् । यो लेस्याइलो, चिल्लो र गुलियो हुन्छ । यसले शीतल गर्दछ र मनलाई प्रसन्न पार्दछ ।

## कुमुदिनी

**कुमुद्वती कैरविका तथा कुमुदिनीति च ॥१६॥**
**सा तु मूलादिसर्वाङ्गैरुक्ता समुदिता बुधैः ।**
**पद्मिन्या ये गुणाः प्रोक्ताः कुमुदिन्याश्च ते स्मृताः ॥१७॥**

जरा, डाँठ, पात र फल सहितको कुमुदको फूललाई कुमुदिनी भनिन्छ । कुमुद्वती, कैरविका र कुमुदिनी यसका संस्कृत पर्यायवाची नामहरू हुन् । पहिले जेजस्ता गुण पद्मिनीका बताइए कुमुदिनीमा पनि तिनै गुणहरू हुन्छन् भनी जान्नू ।

## सौगन्धिक

**सौगन्धिकं तु कह्लारं हल्लकं रक्तसन्ध्यकम् ।**
**कह्लारं शीतलं ग्राहि विष्टम्भि गुरु रूक्षणम् ॥१८॥**

सौगन्धिक, कह्लार, हल्लक र रक्तसन्ध्यक : यी सौगन्धिक कमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो सङ्ग्राही, विष्टम्भी, पचाउन कठिन र रुखो हुन्छ ।

यसका विभिन्न जात हुन्छन् । *Nymphaea alba Linn., Nymphaea rubra Roxb., Nymphaea pubescens Wild* र *Nymphaea stelleta Wild.* लाई यसवर्गमा गणना गर्ने गरिएको पाइन्छ ।

## जलकुम्भी र सिवाँली

**वारिपर्णी कुम्भिका स्याद्वारिमूली खमूलिका ।**
**शैवालं जलनीली स्याच्छैवलं जलजञ्च तत् ॥१९॥**
**वारिपर्णी हिमा तिक्ता लघ्वी स्वाद्वी सरा कटुः ।**
**दोषत्रयहरी रूक्षा शोणितज्वरशोषकृत् ॥२०॥**
**शैवालं तुवरं तिक्तं मधुरं शीतलं लघु ।**

**स्निग्धं दाहतृषापित्तरक्तज्वरहरं परम् ॥२१॥**

वारिपर्णी, कुम्भिका, वारिमूली र खमूलिका : यी जलकुम्भीका संस्कृत पर्यायवाची नामहरू हुन् । शैवाल, जलनीली, शैवल र जलज : यी सिवाँलीका संस्कृत पर्यायवाची नामहरू हुन् । जलकुम्भीले शीतल गर्दछ । यो तीतो, पचाउन सहज, स्वादिलो, मल खुलाउने र पिरो हुन्छ । यसले त्रिदोष नाश गर्दछ । यो रुखो हुन्छ । यसले रक्तविकार, जरो र सुजन गर्दछ । सिवाँली टर्रो, तीतो र गुलियो हुन्छ । यसले शीतल । यो पचाउन हलुका र चिल्लो हुन्छ । यसले विशेष किसिमले डाह, तिर्खा, पित्तविकार, रक्तविकार र जरो नाश गर्दछ ।

## गुलाफ

**शतपत्री तरुण्युक्ता कर्णिका चारुकेशरा ।**
**महाकुमारी गन्धाढ्या लाक्षापुष्पाऽतिमञ्जुला ॥२२॥**
**शतपत्री हिमा हृद्या ग्राहिणी शुक्रला लघुः ।**
**दोषत्रयास्रजिद्वर्ण्या कट्वी तिक्ता च पाचनी ॥२३॥**

शतपत्री, तरुणी, कर्णिका, चारुकेशरा, महाकुमारी, गन्धाढ्या, लाक्षापुष्पा र अतिमञ्जुला : यी गुलाफका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो मुटुका लागि लाभदायक र सङ्ग्राही हुन्छ । यसले वीर्य बढाउँदछ र पचाउन हलुका हुन्छ । त्रिदोष र रक्तविकार नाश गर्दछ । यसले वर्णमा निखार लेराउँदछ । यो पिरो, तीतो र पाचनी हुन्छ ।

## नेवारी

**नेपाली कथिता तज्ज्ञैः सप्तला नवमालिका ।**
**वासन्ती शीतला लघ्वी तिक्ता दोषत्रयास्रजित् ॥२४॥**

नेपाली, सप्तला, नवमालिका र वासन्ती : यी नेवारी फूलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ तथा त्रिदोष र रक्तविकार नाश गर्दछ । यो पचाउन हलुका र तीतो हुन्छ ।

## बेली

**श्रीपदी षट्पदानन्दा वार्षिकी मुक्तबन्धना ।**
**वार्षिकी शीतला लघ्वी तिक्ता दोषत्रयापहा ॥२५॥**
**कर्णाक्षिमुखरोगघ्नी तत्तैलं तद्गुणं स्मृतम् ।**

श्रीपदी, षट्पदानन्दा, वार्षिकी र मुक्तबन्धना : यी बेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो पचाउन हलुका, तीतो र त्रिदोष नाशक हुन्छ । यसले कानका रोग, आँखाका रोग र मुखका रोग नाश गर्दछ । यसको तेलमा पनि यिनै गुण हुन्छन् ।

## चमेली र पहेँलो चमेली

**जातिर्जाती च सुमना मालती राजपुत्रिका ॥२६॥**
**चेतिका हृद्यगन्धा च सा पीता स्वर्णजातिका ।**
**जातीयुगं तिक्तमुष्णं तुवरं लघु दोषजित् ॥२७॥**
**शिरोऽक्षिमुखदन्तार्त्तिविषकुष्ठानिलास्रजित् ।**

जाति, जाती, सुमना, मालती, राजपुत्रिका, चेतिका र हृद्यगन्धा : यी चमेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । पहेँलो जाईलाई स्वर्णजातिका भनिन्छ । दुबै जाई तीता हुन्छन् । यिनले गर्मी गर्दछन्, टर्रा र पचाउन हलुका हुन्छन् तथा त्रिदोष नाश गर्दछन् । साथै टाउकाका रोग, आँखाका रोग, मुखका रोग, दाँतका रोग, विषविकार, कुष्ठ, वातविकार र रक्तविकार नाश गर्दछन् ।

## जुही र पहेँलो जूही

**यूथिका गणिकाऽम्बष्ठा सा पीता हेमपुष्पिका ॥२८॥**
**यूथीयुगं हिमं तिक्तं कटुपाकरसं लघु ।**
**मधुरं तुवरं हृद्यं पित्तघ्नं कफवातलम् ॥२९॥**
**व्रणास्रमुखदन्ताक्षिशिरोरोगविषापहम् ।**

यूथिका, गणिका र अम्बष्ठा : यी जूहीका संस्कृत पर्यायवाची नामहरू हुन् । यदि त्यो पहेँलो छ भने त्यसलाई "हेमपुष्पिका" भनिन्छ । दुबै थरी जूहीले शीतल गर्दछन् । यी तीता, गुलिया र टर्रा हुन्छन् तथा पचेपछि पिरा र पचाउन हलुका हुन्छन् । यिनले मुटुका रोग, पित्तविकार, घाउखटिरा, रक्तविकार, मुखका रोथ, दाँतका रोग, आँखाका रोग टाउकाका रोग र विषविकार नाश गर्दछन् । यिनले कफविकार र वातविकार बढाउँदछन् ।

## चाँप

**चाम्पेयश्चम्पकः प्रोक्तोहेमपुष्पश्च स स्मृतः ॥३०॥**
**एतस्य कलिका गन्धफलेति कथिता बुधैः ।**
**चम्पकः कटुकस्तिक्तः कषायो मधुरो हिमः ॥३१॥**
**विषक्रिमिहरः कृच्छ्रकफवातास्रपित्तजित् ।**

चाम्पेय, चम्पक र हेमपुष्प : यी चाँपका संस्कृत पर्यायवाची नामहरू हुन् । विद्वानहरूले यसको कोपिलालाई "गन्धफली" भनेका छन् । यो पिरो, तीतो, टर्रो र गुलियो हुन्छ । यसले शीतल गर्दछ । यसले विषविकार, कीरा, कृच्छ्र, कफविकार, वातविकार, रक्तविकार र पित्तविकार नाश गर्दछ ।

## मौलसिरी

**बकुलो मधुगन्धश्च सिंहकेसरकस्तथा ॥३२॥**
**बकुलस्तुवरोऽनुष्णः कटुपाकरसो गुरुः ।**
**कफपित्तविषश्वित्रकृमिदन्तगदापहः ॥३३॥**

बकुल, मधुगन्ध र सिंहकेसरक : यी मौलसिरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र पिरो तथा पचेपछि पिरो हुन्छ । यसले धेरै गर्मी गर्दैन । यो पचाउन कठिन हुन्छ । यसले कफविकार, पित्तविकार, विषविकार, श्वेतकुष्ठ, कीरा र दाँतका रोग निको पार्दछ ।

## ठूलो मौलसिरी (गुम्पाती)

**शिवमल्ली पाशुपत एकाष्ठीलो वको वसुः ।**
**वकोऽनुष्णः कटुस्तिक्तः कफपित्तविषापहः ॥३४॥**
**योनिशूलतृषादाहकुष्ठशोथास्रनाशनः ।**

शिवमल्ली, पाशुपत, एकाष्ठील, वक र वसु : यी गुम्पातीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले हल्का गर्मी गर्दछ । यो पिरो र तीतो हुन्छ । यसले कफविकार, पित्तविकार, विषविकार, योनिशूल, तिर्खा, डाह, कुष्ठ, सुजन र रक्तविकार नाश गर्दछ ।

## कदम

**कदम्बः प्रियको नीपो वृत्तपुष्पो हलिप्रियः ॥३५॥**
**कदम्बो मधुरः शीतः कषायो लवणो गुरुः ।**
**सरो विष्टम्भकृद्रूक्षः कफस्तन्यानिलप्रदः ॥३६॥**

कदम्ब, प्रियक, नीप, वृत्तपुष्प र हलिप्रिय : यी कदमका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, टर्रो र नुनिलो हुन्छ । यसले शीतल गर्दछ । यो पचाउन कठिन हुन्छ । यसले मल खुलाउँदछ । यो विष्टम्भी र रुखो हुन्छ । यसले कफविकार, वातविकार र दूध बढाउँदछ ।

## बाह्रमासे गुलाफ

**कुब्जको भद्रतरुणी वृत्तपुष्पोऽतिकेसरः ।**
**महासहा कण्टकाढ्या नीलालिकुलसंकुला ॥३७॥**
**कुब्जकः सुरभिः स्वादुः कषायानुरसः सरः ।**
**त्रिदोषशमनो वृष्यः शीतहर्त्ता च स स्मृतः ॥३८॥**

कुब्जक, भद्रतरुणी, वृत्तपुष्प, अतिकेसर, महासहा, कण्टकाढ्या र नीलालिकुलसंकुला : यी बाह्रमासे गुलाफका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सुगन्धी, शुरुमा स्वादिलो र पछि टर्रो हुन्छ । यसले मल खुकुल्याउँदछ । यसले त्रिदोष नाश गर्दछ, वीर्य बढाउँदछ र चिसो लागेको ठिक गर्दछ ।

## लहरे बेली

**मल्लिका मदयन्ती च शीतभीरुश्च भूपदी ।**
**मल्लिकोष्णा लघुर्वृष्या तिक्ता च कटुका हरेत् ॥३९॥**
**वातपित्तास्यदृग्व्याधिकुष्ठारुचिविषव्रणान् ।**

मल्लिका, मदयन्ती, शीतभीरु र भूपदी : यी बेलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले गर्मी गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले वीर्य बढाउँदछ । यो तीतो र पिरो हुन्छ । यसले वातविकार, पित्तविकार, मुखका रोग, आँखाका रोग, कुष्ठ, अरुची, विषविकार र घाउखटिरा नाश गर्दछ ।

## वासन्ती

**माधवी स्यात्तु वासन्ती पुण्ड्रको मण्डकोऽपि च ॥४०॥**
**अतिमुक्तो विमुक्तश्च कामुको भ्रमरोत्सवः ।**
**माधवी मधुरा शीता लघ्वी दोषत्रयापहा ॥४१॥**

माधवी, वासन्ती, पुण्ड्रक, मण्डक, अतिमुक्त, विमुक्त, कामुक र भ्रमरोत्सव : यी वासन्तीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, शीतल गर्ने, पचाउन सहज र त्रिदोष नाशक हुन्छ ।

## केत्तुके र पहैंलो केत्तुके

**केतकः सूचिकापुष्पो जम्बुकः क्रकचच्छदः ।**
**सुवर्णकेतकी त्वन्या लघुपुष्पा सुगन्धिनी ॥४२॥**
**केतकः कटुकः स्वादुर्लघुस्तिक्तः कफापहः ।**
**उष्णा तिक्तरसा ज्ञेया चक्षुष्या हेमकेतकी ॥४३॥**

केतक, सूचिकापुष्प, जम्बुक र क्रकचच्छद : यी केत्तुकेका तथा सुवर्णकेतकी, लघुपुष्पा र सुगन्धिनी : यी पहैंलो केत्तुकेका संस्कृत पर्यायवाची नामहरू हुन् । केत्तुके पिरो, स्वादिलो, तीतो र पचाउन हलुका हुन्छ । यसले कफविकार नाश गर्दछ । पहैंलो केत्तुके पनि तीतो हुन्छ । यसले गर्मी गर्दछ र आँखाका लागि लाभदायक हुन्छ ।

## किङ्किरात

**किङ्किरातो हेमगौरः पीतकः पीतभद्रकः ।**
**किङ्किरातो हिमस्तिक्तः कषायश्च हरेदसौ ॥४४॥**
**कफपित्तपिपासाऽस्रदाहशोषवमिक्रिमीन् ।**

किङ्किरात, हेमगौर, पीतक र पीतभद्रक : यी किङ्किरातका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यसले शीतल गर्दछ । यो तीतो र टर्रो हुन्छ । यसले कफविकार, पित्तविकार, तिर्खा, रक्तविकार, डाह, सुजन र कीरा नाश गर्दछ ।

## काठे चाँप

**कर्णिकारः परिव्याधः पादपोत्पल इत्यपि ॥४५॥**
**कर्णिकारः कटुस्तिक्तस्तुवरो शोधनो लघुः ।**
**रञ्जनः सुखदः शोथश्लेष्मास्रव्रणकुष्ठजित् ॥४६॥**

कर्णिकार, परिव्याध र पादपोत्पल : यी काठे चाँपका संस्कृत पर्यावाची नामहरू हुन् । यो पिरो, तीतो र टर्रो हुन्छ । यसले पेट सफा गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले रङ र सुख दिन्छ तथा सुजन, कफविकार, रक्तविकार, घाउखटिरा र कुष्ठ नाश गर्दछ ।

## अशोक

**अशोको हेमपुष्पश्च वञ्जुलस्ताम्रपल्लवः ।**
**कङ्केलि पिण्डपुष्पश्च गन्धपुष्पो नटस्तथा ॥४७॥**
**अशोकः शीतलस्तिक्तो ग्राही वर्ण्यः कषायकः ।**
**दोषापचीतृषादाहकृमिशोषविषास्रजित् ॥४८॥**

अशोक, हेमपुष्प, वञ्जुल, ताम्रपल्लव, कङ्केलि, पिण्डपुष्प, गन्धपुष्प र नट : यी अशोकका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो तीतो, सङ्ग्राही, वर्णमा निखार लेराउने र टर्रो हुन्छ । यसले त्रिदोष, अपची, तिर्खा, डाह, कीरा, सुजन, विषविकार र रक्तविकार नाश गर्दछ ।

## अम्लाटन : एक जातको कटसरैया

**अम्लातोऽम्लाटनः प्रोक्तस्तथाऽम्लातक इत्यपि ।**
**कुरण्टको वर्णपुष्पः स एवोक्तो महासहः ॥४९॥**
**अम्लाटनः कषायोष्णः स्निग्धः स्वादुश्च तिक्तकः ।**

अम्लात, अम्लाटन, अम्लातक, कुरण्टक, वर्णपुष्प र महासह : यी अम्लातकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, स्वादिलो र तीतो हुन्छ । यो चिल्लो हुन्छ । यसले गर्मी गर्दछ ।

## कटसरैया

**सैरेयकः श्वेतपुष्पः सैरेयः कटसारिका ॥५०॥**
**सहाचरः सहचरः स च भिन्द्यपि कथ्यते ।**

**कुरण्टकोऽत्रपीते स्याद्रक्त कुरबकः स्मृतः ॥५१॥**
**नीले बाणा द्वयोरुक्तो दासी चार्त्तगलश्च सः ।**
**सैरेयः कुष्ठवातास्रकफकण्डूविषापहः ॥५२॥**
**तिक्तोष्णो मधुरोऽनम्लः सुस्निग्धः केशरञ्जनः ।**

सैरेयक, श्वेतपुष्पसैरेयक, सैरेय, कटसारिका, सहाचर, सहचर र भिन्दी : यी सेतो फूल फुल्ने कटसरैयाका; कुरण्टक यो पहेँलो फूल फुल्ने कटसरैयाको; कुरबक यो राता फूल फुल्ने कटसरैयाको तथा बाणा, बाण (यो शब्द पुंलिङ्ग र स्त्रीलिङ्ग दुबैमा प्रयोग हुने), दासी र आर्तगल : यी नीलो फूल फुल्ने कटसरैयाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कुष्ठ, वातविकार, रक्तविकार, कफविकार, लुतो र विषविकार नाश गर्दछ । यो तीतो, गर्मीगर्ने, गुलियो, हल्का अमिलो, अति चिल्लो र कपालका लागि फाइदाजनक (केशरञ्जन) हुन्छ ।

## कुन्दपुष्प

**कुन्दं तु कथितं माध्यं सदापुष्पञ्च तत्स्मृतम् ॥५३॥**
**कुन्दं शीतं लघु श्लेष्मशिरोरुग्विषपित्तहृत् ।**

कुन्द, माध्य र सदापुष्प : यी कुन्दपुष्पका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले कफविकार, टाउकाका रोग, विषविकार र पित्तविकार नाश गर्दछ ।

## मुचुकुन्द वा कनकचम्पा

**मुचुकुन्दः क्षत्रवृक्षश्चित्रकः प्रतिविष्णुकः ॥५४॥**
**मुचुकुन्दः शिरःपीडापित्तास्रविषनाशनः ।**

मुचुकुन्द, क्षत्रवृक्ष, चित्रक र प्रतिविष्णुक : यी मुचुकुन्दका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले टाउकोको दुःखाइ, पित्तविकार, रक्तविकार र विषविकार नाश गर्दछ ।

## तिल्के

**तिलकः क्षुरकः श्रीमान्पुरुषश्छिन्नपुष्पकः ॥५५॥**
**तिलकः कटुकः पाके रसे चोष्णो रसायनः ।**
**कफकुष्ठक्रिमीन्वस्तिमुखदन्तगदान्हरेत् ॥५६॥**

तिलक, क्षुरक, श्रीमान्, पुरुष र छिन्नपुष्पक : यी तिल्केका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शुरुमा र पचेपछि पनि पिरो हुन्छ । यसले गर्मी गर्दछ । यो रसायनी हुन्छ । यसले कफविकार, कुष्ठ, कीरा, तल्लोपेटका रोग, मुखका रोग र दाँतका रोग ठिक गर्दछ ।

## दोपहरिया

**बन्धूको बन्धुजीवश्च रक्तो माध्याह्विकोऽपि च ।**
**बन्धूकः कफकृद् ग्राही वातपित्तहरो लघुः ॥५७॥**

बन्धुक, बन्धुजीव, रक्त र माध्याह्निक : यी दोहरिया फूलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफ बढाउँदछ । यो सङ्ग्राही हुन्छ । यसले वातविकार र पित्तविकार नाश गर्दछ । यो पचाउन हलुका हुन्छ ।

## जपाकुसुम

**ओड्रपुष्पं जपा चाथ त्रिसन्ध्या साऽरुणा सिता ।**
**जपा संग्राहिणी केश्या त्रिसन्ध्या कफवातजित् ॥५८॥**

ओड्रपुष्प र जपा : यी बाह्रमासे फूलका तथा त्रिसन्ध्या : यो रातो वा सेतो बाह्रमासे फूलको संस्कृत पर्यायवाची नाम हो । यो सङ्ग्राही हुन्छ । यसले कपाललाई फाइदा गर्दछ । त्रिसन्ध्याले कफविकार र वायुविकार नाश गर्दछ ।

## रोहिणी वा सिँदुरे

**सिन्दूरी रक्तबीजा च रक्तपुष्पा सुकोमला ।**
**सिन्दूरी विषपित्तास्रतृष्णावान्तिहरी हिमा ॥५९॥**

सिन्दूरी, रक्तबीजा, रक्तपुष्पा र सुकोमला : यी सिन्दूर वा रोहिणीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले विषविकार, पित्तविकार, रक्तविकार र तिर्खा नाश गर्नुका साथै शीतल गर्दछ ।

## अगस्ति

**अथागस्त्यो वङ्गसेनो मुनिपुष्पो मुनिद्रुमः ।**
**अगस्तिः पित्तकफजिच्चातुर्थिकहरो हिमः ॥६०॥**
**रूक्षो वातकरस्तिक्तः प्रतिश्यायनिवारणः ।**

अगस्त्य, वङ्गसेन, मुनिपुष्प र मुनिद्रुम : यी अगस्तिका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पित्तविकार, कफविकार र चार दिन बिराएर आउने जरो नाश गर्दछ तथा शीतल गर्दछ । यो रुखो र तीतो हुन्छ । यसले वातविकार बढाउँदछ र पिनास नाश गर्दछ ।

## तुलसी

**तुलसी सुरसा ग्राम्या सुलभा बहुमञ्जरी ॥६१॥**
**अपेतराक्षसी गौरी भूतघ्नी देवदुन्दभिः ।**

**तुलसी कटुका तिक्ता हृद्योष्णा दाहपित्तकृत् ॥६२॥**
**दीपनी कुष्ठकृच्छ्रास्रपार्श्वरुक्कफवातजित् ।**
**शुक्ला कृष्णा च तुलसी गुणैस्तुल्या प्रकीर्त्तिता ॥६३॥**

तुलसी, सुरसा, ग्राम्या, सुलभा, बहुमञ्जरी, अपेतराक्षसी, गौरी, भूतघ्नी, र देवदुन्दुभि : यी तुलसीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तीतो हुन्छ । यसले गर्मी, डाह र पित्तविकार बढाउने काम गर्दछ । यसले मुटुका रोग, कुष्ठ, कृच्छ्र, रक्तविकार, कोखाको दुःखाई, कफविकार र वातविकार नाश गर्दछ । यो दीपनी हुन्छ । सेतो र कालो दुबै तुलसीको गुणदोष समान मानिएको छ ।

## मरुवा

**मारुतोऽसौ मरुबको मरुन्मरुरपि स्मृतः ।**
**फणी फणिज्जकश्चापि प्रस्थपुष्पः समीरणः ॥६४॥**
**मरुदग्निप्रदो हृद्यस्तीक्ष्णोष्णः पित्तलो लघुः ।**
**वृश्चिकादिविषश्लेष्मवातकुष्ठक्रिमिप्रणुत् ॥६५॥**
**कटुपाकरसो रुच्यस्तिक्तो रूक्षः सुगन्धिकः ।**

मारुत, मरुबक, मरुत्, मरु, फणी, फणिज्जक, प्रस्थपुष्प र समीरण : यी मरुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पाचकाग्निलाई बाल्दछ र मुटुलाई फाइदा गर्दछ । यो तिक्खर हुन्छ । यसले गर्मी गर्दछ, पित्त बढाउँदछ तर पचाउन हलुका हुन्छ । बिच्छी आदिको विषविकार, कफविकार, वातविकार, कुष्ठ र कीरा नाश गर्दछ । यो  शुरुमा पिरो र तीतो तथा पचेपछि पिरो हुन्छ । यो रुखो र सुगन्धी हुन्छ ।

## दमना झार

**उक्तो दमनको दान्तो मुनिपुत्रस्तपोधनः ॥६६॥**
**गन्धोत्कटो ब्रह्मजटो विनीतः कलपत्रकः ।**
**दमनस्तुवरस्तिक्तो हृद्यो वृष्यः सुगन्धिकः ॥६७॥**
**ग्रहणाद् विषकुष्ठास्रक्लेदकण्डूत्रिदोषजित् ।**

दमनक, दान्त, मुनिपुत्र, तपोधन, गन्धोत्कट, ब्रह्मजट, विनीत, कलपत्र र दमन : यी दमना झारका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो टर्रो र तीतो हुन्छ । यसले मुटुका रोगमा फाइदा गर्दछ र वीर्य बढाउँदछ । यो सुगन्धी हुन्छ । यसले विषविकार, कुष्ठ, रक्तविकार, बिना परिश्रमको थकाई, लुतो र त्रिदोष नाश गर्दछ ।

## बाबरी

**बर्बरी तुवरी तुङ्गी खरपुष्पाऽजगन्धिका ॥६८॥**
**पर्णाशस्तत्र कृष्णे तु कठिल्लककुठेरकौ ।**

**तत्र शुक्लेऽर्जकः प्रोक्तो वटपत्रस्ततोऽपरः ॥६९॥**
**बर्बरीत्रितयं रूक्षं शीतं कटु विदाहि च ।**
**तीक्ष्णं रुचिकरं हृद्यं दीपनं लघुपाकि च ॥**
**पित्तलं कफवातास्रकण्डूकृमिविषापहम् ॥७०॥**

बर्बरी, तुबरी, तुङ्गी, खरपुष्पा, अजगन्धिका र पर्णाश : यी (सामान्य) बाबरीका संस्कृत पर्यायवाची नामहरू हुन् । कालो बाबरीलाई कठिल्लक र कुठेरक, सेतो बाबरीलाई अर्जक तथा तेश्रो थरी (फुस्रो र हरियो बाबरीलाई वटपत्र भनिन्छ । तीन थरी बाबरी रुखा, शीतल गर्ने, पिरा र डाह गर्ने हुन्छन् । यी तिक्खर हुन्छन् र रुची बढाउँदछन् । यिनले मुटुका रोगमा फाइदा गर्दछन् , दीपनी हुन्छन्, पचाउन हलुका हुन्छन् । यिनले पित्तविकार बढाउँदछन् तर कफविकार, वातविकार, रक्तविकार, लुतो, कीरा र विषविकार नाश गर्दछन् ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे पुष्पवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको फूल-वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ वटादिवर्गः ॥
## (बर आदि वर्ग)
### बर

**वटो रक्तफलः शृङ्गी न्यग्रोधः स्कन्धजो ध्रुवः ।**
**क्षीरी वैश्रवणो वासो बहुपादो वनस्पतिः ॥१॥**
**वटः शीतो गुरुर्ग्राही कफपित्तव्रणापहः ।**
**वर्ण्यो विसर्पदाहघ्नः कषायो योनिदोषहृत् ॥२॥**

वट, रक्तफल, शृङ्गी, न्यग्रोध, स्कन्धज, ध्रुव, क्षीरी, वैश्रवण, वास, बहुपाद र वनस्पति : यी बरका संस्कृत पर्यायवाची नामहरू हुन् । बरले शीतल गर्दछ । यो पचाउन कठिन र सङ्ग्राही हुन्छ । यसले कफविकार, पित्तविकार र घाउखटिरा नाश गर्दछ । यसले वर्णमा निखार लेराउँदछ तथा विसर्प र डाह नाश गर्दछ । यो टर्रो हुन्छ । यसले योनिका विकारहरू नाश गर्दछ ।

### पीपल

**बोधिद्रुः पिप्पलोऽश्वत्थश्चलपत्रो गजाशनः ।**
**पिप्पलो दुर्जरः शीतः पित्तश्लेष्मव्रणास्रजित् ॥३॥**
**गुरुस्तुवरको रूक्षो वर्ण्यो योनिविशोधनः ।**

बोधिद्रु, पिप्पल अश्वत्थ, चलपत्र र गजाशन : यी पीपलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, शीतल गर्ने तथा पित्तविकार, कफविकार, घाउखटिरा र रक्तविकार नाशक हुन्छ । यो टर्रो र रुखो हुन्छ । यसले वर्णमा निखार लेराउँदछ र योनिलाई सफा गर्दछ ।

## पारिसपिप्पल

**पारीषोऽन्य पलाशश्च कपिचूतः कमण्डलुः ॥४॥**
**गर्दभाण्डः कन्दरालः कपीतनसुपार्श्वकौ ।**
**पारीषो दुर्जरः स्निग्धः कृमिशुक्रकफप्रदः ॥५॥**
**फलेऽम्लो मधुरो मूले कषायस्वादुमज्जकः ।**

पारीष, पलाश, कपिचूत, कमण्डलु, गर्दभाण्ड, कन्दराल, कपीतन र सुपार्श्वक : यी पारिसपिप्पलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, चिल्लो तथा कीरा, शुक्र र कफ वृद्धि गराउने गुणको हुन्छ । यसको फल अमिलो, जरा गुलियो र काठ (मज्जा) टर्रो एवं स्वादिलो हुन्छ ।

## लहरेपीपल

**नन्दीवृक्षोऽश्वत्थभेदः प्ररोही गजपादपः ॥६॥**
**स्थालीवृक्षः क्षयतरुः क्षीरी च स्याद्वनस्पतिः ।**
**नन्दीवृक्षो लघुः स्वादुस्तिक्तस्तुवर उष्णकः ॥७॥**
**कटुपाकरसो ग्राही विषपित्तकफास्रजित् ।**

नन्दीवृक्ष, अश्वत्थभेद, प्ररोही, गजपादप, स्थालीवृक्ष, क्षयतरु, क्षीरी र वनस्पति : यी लहरेपीपलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन हलुका, स्वादिलो, तीतो, टर्रो र गर्मीगर्ने गुणको हुन्छ । पचेपछि पिरो हुन्छ । यो सङ्ग्राही तथा विषविकार, पित्तविकार, कफविकार र रक्तविकार नाशक हुन्छ ।

## डुम्री

**उदुम्बरो जन्तुफलो यज्ञाङ्गो हेमदुग्धकः ॥८॥**
**उदुम्बरो हिमो रूक्षो गुरुः पित्तकफास्रजित् ।**
**मधुरस्तुवरो वर्ण्यो व्रणशोधनरोपणः ॥९॥**

उदुम्बर, जन्तुफल, यज्ञाङ्ग र हेमदुग्धक : यी डुम्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो रुखो र पचाउन कठिन हुन्छ । यसले पित्तविकार, कफविकार र रक्तविकार नाश गर्दछ । यो गुलियो र टर्रो हुन्छ । यसले वर्णमा निखार लेराउँदछ तथा घाउखटिरा सफागर्ने र भर्ने काम गर्दछ ।

## काठेडुम्री

**काकोदुम्बरिका फल्गुर्मलयूर्जघनेफला ।**
**मलयुः स्तम्भकृत्तिक्ता शीतला तुवरा जयेत्॥१०॥**
**कफपित्तव्रणश्वित्रकुष्ठपाण्ड्वर्शकामलाः ।**

काकोदुम्बरिका, फल्गु, मलयू र जघनेफला : यी काठेडुम्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले दिसा कस्दछ, शीतल गर्दछ तथा कफविकार, पित्तविकार, घाउखटिरा, श्वेतकुष्ठ, पाण्डु, अल्काई र कमलपित्त ठिक गर्दछ । यो तीतो र टर्रो हुन्छ ।

## पाखरी

**प्लक्षो जटी पर्करी च पर्कटी च स्त्रियामपि॥११॥**
**प्लक्षः कषायः शिशिरो व्रणयोनिगदापहः ।**
**दाहपित्तकफास्रघ्नः शोथहा रक्तपित्तहृत्॥१२॥**

प्लक्ष, जटी, पर्करी र पर्कटी (यो स्त्रीलिङ्गमा पनि प्रयोग हुन्छ) : यी पाखरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो हुन्छ । यसले शीतल गर्नुका साथै घाउखटिरा र योनिका रोग निको पार्दछ । साथै, डाह, पित्तविकार, कफविकार, रक्तविकार, सुजन र रक्तपित्तलाई नाश गर्दछ ।

## शिरीष

**शिरीषो भण्डिलो भण्डी भण्डीरश्च कपीतनः ।**
**शुकपुष्पः शुकतरुर्मृदुपुष्पः शुकप्रियः॥१३॥**
**शिरीषो मधुरोऽनुष्णस्तिक्तश्च तुवरो लघुः ।**
**दोषशोथविसर्पघ्नः कासव्रणविषापहः॥१४॥**

शिरीष, भण्डिल, भण्डी, भण्डीर, कपीतन, शुकपुष्प, शुकतरु, मृदुपुष्प र शुकप्रिय : यी शिरीषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, टर्रो र तीतो हुन्छ । यसले धेरै गर्मी गर्दैन । यसले त्रिदोष, सुजन, विसर्प, खोकी, घाउखटिरा र विषविकार नाश गर्दछ ।

## पाँच थरी दूधे वृक्ष

**न्यग्रोधोदुम्बराश्वत्थपारीषप्लक्षपादपाः ।**
**पञ्चैते क्षीरिणो वृक्षास्तेषां त्वक्पञ्चवल्कलम्॥१५॥**
**क्षीरिवृक्षा हिमा वर्ण्या योनिरोगव्रणापहाः ।**
**रूक्षाः कषाया मेदोघ्ना विसर्पामयनाशनाः॥१६॥**
**शोथपित्तकफास्रघ्नाः स्तन्या भग्नास्थियोजकः ।**
**त्वक्पञ्चकं हिमं ग्राहि व्रणशोथविसर्पजित्॥१७॥**

**तेषां पत्रं हिमं ग्राहि कफवातास्रनुल्लघु ।**
**विष्टम्भाध्मानजित्तिक्तं कषायं लघु लेखनम् ॥१८॥**

बर, डुम्री, पीपल, पारिसपीपल र पाखरीलाई "पञ्च क्षीर वृक्ष" भनिन्छ । यिनै रूखका बोक्रालाई "पञ्चवल्कल" भनिन्छ । पाँच दुधे रूखले शीतल गर्दछ, वर्णमा निखार लेराउँदछ तथा योनिका रोग र घाउखटिरा नाश गर्दछ । यी रुखा, टर्रा, बोसो नाशक, विसर्प र आमरोग नाशक हुन्छन् । यिनले सुजन, पित्तविकार, कफविकार र रक्तविकार नाश गर्दछन् । दूध बढाउँदछन् र भाँचिएका हाड जोड्दछन् । पाँच थरी बोक्राले पनि शीतल गर्दछ, सङ्ग्राही हुन्छ तथा घाउखटिरा, सुजन र विसर्पलाई ठिक गर्दछ । यिनको पातले पनि शीतल गर्दछ, सङ्ग्राही हुन्छ तथा कफविकार, वातविकार र रक्तविकार नाश गर्दछ । यी पाँच वृक्षका पात पचाउन हलुका हुन्छन् । यी पात विष्टम्भ र आध्मानलाई जित्नुका साथै तीता, टर्रा, पचाउन हलुका र लेखनी गुणका हुन्छन् ।

## साल

**शालस्तु सर्जकार्श्याश्वकर्णकाः शस्यशम्बरः ।**
**अश्वकर्णः कषायः स्याद् व्रणस्वेदकफक्रिमीन् ॥१९॥**
**ब्रध्नविद्रधिबाधिर्ययोनिकर्णगदान् हरेत् ।**

शाल, सर्ज, कार्श्य, अश्वकर्णक र शस्यसंवर : यी सालका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो हुन्छ । यसले घाउखटिरा, पसिना आउने रोग, कफविकार, कीरा, व्रध्न, विद्रधि, बहिरोपना, योनिका रोग र कानका रोग नाश गर्दछ ।

## सर्जक

**सर्जकोऽन्योऽजकर्णः स्याच्छालो मरिचपत्रकः ॥२०॥**
**अजकर्णः कटुस्तिक्तः कषायोष्णो व्यपोहति ।**
**कफपाण्डुश्रुतिगदान् मेहकुष्ठविषव्रणान् ॥२१॥**

सर्जक, अजकर्ण, शाल र मरिचपत्रक : यी सर्जकका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो, तीतो र टर्रो हुन्छ । यसले गर्मी गर्दछ तथा कफविकार, पाण्डु, कानका रोग, प्रमेह, कुष्ठ र विषविकार नाश गर्दछ ।

## काँढे सल्लो

**शल्लकी गजभक्ष्या च सुवहा सुरभी रसा ।**
**महेरुणा कुन्दुरुकी वल्लकी च बहुस्रवा ॥२२॥**
**शल्लकी तुवरा शीता पित्तश्लेष्मातिसारजित् ।**
**रक्तपित्तव्रणहरी पुष्टिकृत्समुदीरिता ॥२३॥**

शल्लकी, गजभक्ष्या, सुवहा, सुरभि, रसा, महेरुणा, कुन्दुरुकी, वल्लकी र बहुस्रवा : यी काँढे सल्लोका संस्कृत पर्यायवाची नामहरु हुन् । यो टर्रो हुन्छ । यसले शीतल गर्दछ तथा पित्तविकार, कफविकार, अतिसार, रक्तपित्त र घाउकठिरा निको पार्नुका साथै यो पुष्टिकारक समेत हुन्छ ।

## सिसौ

**शिंशपा पिच्छिला श्यामा कृष्णसारा च सा गुरु ।**
**कपिला सैव मुनिभिर्भस्मगर्भेतिकीर्त्तिता ॥२४॥**
**शिंशपा कटुका तिक्ता कषाया शोषहारिणी ।**
**उष्णवीर्या हरेन्मेदः कुष्ठश्वित्रवमिक्रिमीन् ॥२५॥**
**बस्तिरुग्व्रणदाहास्रबलासान् गर्भपातिनी ।**

शिंशपा, पिच्छिला, श्यामा र कृष्णसारा : यी सिसौका संस्कृत पर्यायवाची नामहरू हुन् । यदि यो पचाउन कठिन हुने खालको र कैलो रङ्को छ भने यसलाई संस्कृतमा "भस्मगर्भा" भनिन्छ । सिसौ पिरो, तीतो र टर्रो हुन्छ । यसले सुकेनास नाश गर्दछ तथा गर्मी गर्दछ । बोसोविकार, कुष्ठ, श्वेतकुष्ठ, वाकवाकी, कीरा, तल्लो पेटका रोग, घाउखटिरा, डाह, रक्तविकार र कफविकार नाश गर्दछ । यसले गर्भपात गराउँदछ ।

## काउलो

**ककुभोऽर्जुननामाख्यो नदीसर्जश्च कीर्त्तितः ॥२६॥**
**इन्द्रदुर्वीरवृक्षश्च वीरश्च धवलः स्मृतः ।**
**कुकुभः शीतलो हृद्यः क्षतक्षयविषास्रजित् ॥२७॥**
**मेदोमेहव्रणान् हन्ति तुवरः कफपित्तहृत् ।**

ककुभ, अर्जुन (तथा अर्जुनलाई बुझाउने सबै शब्द), नदीसर्ज, इन्द्रद्रु, वीर र धवल : यी खरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ तथा मुटुलाई फाइदा गर्दछ । यसले चोटपटक, क्षयरोग, विषविकार र रक्तविकार समेत नाश गर्दछ । बोसोका विकार, प्रमेह, घाउखटिरा, कफविकार र पित्तविकार नाश गर्दछ । यो टर्रो हुन्छ ।च

## विजयशाल

**बीजकः पीतसारश्च पीतशालक इत्यपि ॥२८॥**
**बन्धूकपुष्पः प्रियकः सर्जकश्चासनः स्मृतः ।**
**बीजकः कुष्ठवीसर्पश्वित्रमेहगुद क्रिमीन् ॥२९॥**
**हन्ति श्लेष्मास्रपित्तञ्च त्वच्च्यः केश्यो रसायनः ।**

बीजक, पीतसार, पीतशालक, बन्धूकपुष्प, प्रियक, सर्जक र असन : यी विजयसालका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कुष्ठ, विसर्प, श्वेतकुष्ठ, प्रमेह, मलद्वारका कीरा, कफविकार, रक्तविकार र पित्तविकार नाश गर्दछ । यो छाला र कपालका लागि हितकारी र रसायनी हुन्छ ।

## खयर

**खदिरो रक्तसारश्च गायत्री दन्तधावनः ॥३०॥**
**कण्टकी बालपत्रश्च बहुशल्यश्च यज्ञियः ।**
**खदिरः शीतलो दन्त्यः कण्डूकासारुचिप्रणुत् ॥३१॥**
**तिक्तः कषायो मेदोघ्नः कृमिमेहज्वरव्रणान् ।**
**श्वित्रशोथामपित्तास्रपाण्डुकुष्ठकफान् हरेत् ॥३२॥**

खदिर, रक्तसार, गायत्री, दन्तधावन, कण्टकी, बालपत्र, बहुशल्य र यज्ञिय : यी खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ, दाँतलाई फाइदा गर्दछ तथा लुतो, खोकी र अरुची नाश गर्दछ । । यो तीतो र टर्रो हुन्छ । यसले बोसोविकार, कीरा, प्रमेह, जरो र घाउखटिरा ठिक गर्दछ । यसका साथै यसले श्वेतकुष्ठ, सुजन, आमविकार, पित्तविकार, रक्तविकार, पाण्डु, कुष्ठ र कफविकार समेत नाश गर्दछ ।

## सेतो खयर

**खदिरः श्वेतसारोऽन्य कदरः सोमवल्कलः ।**
**कदरो विशदो वर्ण्यो मुखरोगकफास्रजित् ॥३३॥**

श्वेतखदिर, श्वेतसार, कदर र सोमवल्कल : यी सेतो खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो विशद, वर्णलाई निखार्ने तथा मुखका रोग र कफविकार नाशक हुन्छ ।

## गनाउने खयर

**इरिमेदो विट्खदिरः कालस्कन्धोऽरिमेदकः ।**
**इरिमेदः कषायोष्णो मुखदन्तगदास्रजित् ॥३४॥**
**हन्ति कण्डूविषश्लेष्मकृमिकुष्ठविषव्रणान् ।**

इरिमेद, विट्खदिर, कालस्कन्ध र अरिमेदक : यी गनाउने खयरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो र गर्मी गर्ने तथा मुखका रोग, दाँतका रोग र रक्तविकार नाशक हुन्छ । यसले लुतो, विषविकार, कफविकार, कीरा, कुष्ठ, विषविकार र घाउखटिरा निको पार्दछ ।

## गुराँस (रोहितक)

**रोहीतको रोहितको रोही दाडिमपुष्पकः ॥३५॥**

**रोहीतकः प्लीहघाती रुच्यो रक्तप्रसादनः ।**

रोहीतक, रोहितक, रोही र दाडिमपुष्पक : यी गुराँसका संस्कृत पर्यायवाची नामहरू । यसले फियोका रोग नाश गर्दछ, रुची बढाउँदछ र रगत प्रशोधन गर्दछ ।

## बबुर वा बबुल

**बब्बूलः किङ्किरातः स्यात्किङ्किराटः सपीतकः ॥३६॥**
**स एव कथितस्तज्ज्ञैराभाषट्पदमोदिनी ।**
**बब्बूलः कफनुद् ग्राही कुष्ठक्रिमिविषापहः ॥३७॥**

बब्बूल, किङ्किरात, किङ्किराट, सपीतक र आभाषट्पदमोदिनी : यी बबुलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफविकार, कुष्ठ, कीरा र विषविकार नाश गर्दछ तर सङ्ग्राही हुन्छ ।

## रिट्ठो

**अरिष्टकस्तु मङ्गल्यः कृष्णवर्णोऽर्थसाधनः ।**
**रक्तबीजः पीतफेनः फेनिलो गर्भपातनः ॥३८॥**
**अरिष्टकस्त्रिदोषघ्नो ग्रहजिद् गर्भपातनः ।**

अरिष्टक, मङ्गल्य, कृष्णवर्ण, अर्थसाधन, रक्तबीज, पीतफेन, फेनिल र गर्भपातन : यी रिठ्ठोका संस्कृत पर्यावाची नामहरू हुन् । यसले त्रिदोष नाश गर्दछ, ग्रहदोष हटाउँदछ र गर्भपतन गराउँदछ ।

## पुत्रञ्जीवा

**पुत्रजीवो गर्भकरो यष्टीपुष्पोऽर्थसाधकः ॥३९॥**
**पुत्रजीवी गुरुर्वृष्यो गर्भदः श्लेष्मवातहृत् ।**
**सृष्टमूत्रमलो रूक्षो हिमः स्वादुः पटुः कटुः ॥४०॥**

पुत्रजीव, गर्भकर, यष्टीपुष्प र अर्थसाधक : यी पुत्रञ्जीवाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, वीर्यवर्धक, गर्भदायक तथा कफविकार र वातविकार नाशक हुन्छ । यसले दिसापिसाब नियमित गराउँदछ वा खुलाउँदछ । यो रुखो, शीतल गर्ने, स्वादिलो, नुनिलो र पिरो हुन्छ ।

## चिउरी

**इङ्गुदोऽङ्गारवृक्षश्च तिक्तकस्तापसद्रुमः ।**
**इङ्गुदः कुष्ठभूतादिग्रहव्रणविषक्रिमीन् ॥४१॥**
**हन्त्युष्णः श्वित्रशूलघ्नस्तित्तकः कटुपाकवान् ।**

इङ्गुद, अङ्गारवृक्ष, तिक्तक र तापसद्रुम : यी चिउरीका संस्कृत पर्यायवाची नाशहरू हुन् । यसले कुष्ठ, भूत आदि ग्रह बाधा, घाउखटिरा, विषविकार र कीरा नाश गर्दछ । यसले गर्मी गर्दछ तथा श्वेतकुष्ठ र शूल नाश गर्दछ । यो तीतो र पचेपछि पिरो हुन्छ ।

## झिङ्गिनी (पहाडी गोकुलधूप)

**जिङ्गिनी झिङ्गिनी झिङ्गी सुनिर्यासा प्रमोदिनी ॥४२॥**
**जिङ्गिनी मधुरा सोष्णा कषाया योनिशोधिनी ।**
**कटुका व्रणहृद्रोगवातातीसारहृत् पटुः ॥४३॥**

जिङ्गिनी, झिङ्गिनी, झिङ्गी, सुनिर्यासा र प्रमोदिनी : यी पहाडी गोकुलधूपका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, पिरो र टर्रो हुन्छ । यसले गर्मी गर्दछ, योनिलाई प्रशोधन गर्दछ तथा घाउखटिरा, मुटुका रोग, वातविकार र अतिसार नाश गर्दछ । यो सुन्दर हुन्छ ।

## तमाल वा सतिसाल

**तमाल उक्तस्तापिच्छः कालस्कन्धोऽमितद्रुमः ।**
**लोकस्कन्धो नीलध्वजो नीलतालश्च स स्मृतः ॥४४॥**
**तमालः शालवद्वेद्यो दाहविस्फोटहृत् पुनः ।**

तमाल, तापिच्छ, कालस्कन्ध, अमितद्रुम, लोकस्कन्ध, नीलध्वज र नीलताल : यी तमालका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका गुण साल वृक्षका जस्तै हुन्छन् । यसले डाह र विस्फोट नाश गर्दछ ।

## टुनी

**तूणी तुन्नक आपीनस्तुणिकः कच्छकस्तथा ॥४५॥**
**कुठेरकः कान्तलको नन्दीवृक्षश्च नन्दकः ।**
**तूणी रक्तः कटुः पाके कषायो मधुरो लघुः ॥४६॥**
**तिक्तो ग्राही हिमो वृष्यो व्रणकुष्ठास्रपित्तजित् ।**

तूणी, तुन्नक, आपीन, तुणिक, कच्छक, कुठेरक, कान्तलक, नन्दीवृक्ष र नन्दक : यी टुनीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो रातो रङको हुन्छ । यसको स्वाद शुरुमा टर्रो, गुलियो र तीतो तथा पचेपछि पिरो हुन्छ । यो पचाउन हलुका, सङ्ग्राही, शीतल गर्ने, वीर्यवर्धक तथा घाउखटिरा, कुष्ठ, रक्तविकार र पित्तविकार नाशक हुन्छ ।

## भोजपात

**भूर्जपत्रः स्मृतो भूर्जश्चर्मी बहुलवल्कलः ॥४७॥**
**भूर्जो भूतग्रहश्लेष्मकर्णरुक्पित्तरक्तजित् ।**
**कषायो राक्षसघ्नश्च मेदोविषहरः परः ॥४८॥**

भूर्जपत्र, भूर्ज, चर्मी र बहुलबल्कल : यी भोजपातका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले भूतबाधा, ग्रहबाधा, कफविकार, कानका रोग, पित्तविकार र रक्तविकार नाश गर्दछ । यो टर्रो हुन्छ । यसले विशेषतः राक्षसबाधा, बोसोविकार र विषविकार नाश गर्दछ ।

## पलाँस

**पलाशः किंशुकः पर्णो यज्ञियो रक्तपुष्पकः ।**
**क्षारश्रेष्ठो वातपोथो ब्रह्मवृक्षः समिद्वरः ॥४९॥**
**पलाशो दीपनो वृष्यः सरोष्णो व्रणगुल्मजित् ।**
**भग्नसंधानकृद् दोषग्रहण्यर्शः क्रिमीन् हरेत् ॥५०॥**
**कषाय कटुकस्तिक्तः स्निग्धो गुदजरोगजित् ।**
**तत्पुष्पं स्वादु पाके तु कटु तिक्तं कषायकम् ॥५१॥**
**वातलं कफपित्तास्रकृच्छ्रजिद् ग्राहि शीतलम् ।**
**तृड्दाहशमकं वातरक्तकुष्ठहरं परम् ॥५२॥**
**फलं लघूष्णं मेहार्शःकृमिवातकफापहम् ।**
**विपाके कटुकं रूक्षं कुष्ठं गुल्मोदरप्रणुत् ॥५३॥**

पलाश, किंशुक, पर्ण, यज्ञिय, रक्तपुष्पक, क्षारश्रेष्ठ, वातपोथ, ब्रह्मवृक्ष र समिद्वर : यी पलाँसका संस्कृत पर्यायवाची नामहरू हुन् । यो दीपनी, वीर्यवर्धक, मलमूत्र खुकुल्याउने र गर्मी गर्ने गुणको हुन्छ । यसले घाउखटिरा, गुल्म, त्रिदोष, ग्रहणी, अल्काई, मलद्वारका रोग र कीरा नाश गर्दछ । यसले भाँचिएका हाड जोड्दछ । यो टर्रो, पिरो र तीतो एवं चिल्लो हुन्छ । यसको फूल गुलियो हुन्छ र पचेपछि पिरो, तीतो र टर्रो हुन्छ । यसले वातविकार बढाउँदछ तर कफविकार, पित्तविकार, रक्तविकार र कृच्छ्र नाश गर्दछ । यो सङ्ग्राही र शीतल गर्ने गुणको हुन्छ । यसले तिर्खा र डाह शान्त पार्दछ तथा विशेषतः वातविकार, रक्तविकार र कुष्ठ नाश गर्दछ । यसको फल पचाउन सहज, गर्मी गर्ने तथा प्रमेह, अल्काई, कीरा, वातविकार र कफविकार नाशक हुन्छ । यो पचेपछि पिरो हुन्छ । यो रुखो हुन्छ । यसले कुष्ठ, गुल्म र पेटका रोग नाश गर्दछ ।

## सिमल

**शाल्मलिस्तु भवेन्मोचा पिच्छिला पूरणीति च ।**
**रक्तपुष्पा स्थिरायुश्च कण्टकाढ्या च तूलिनी ॥५४॥**
**शाल्मली शीतला स्वाद्वी रसे पाके रसायनी ।**
**श्लेष्मला पित्तवातास्रहारिणी रक्तपित्तजित् ॥५५॥**

शाल्मलि, मोचा, पिच्छिला, पूरणी, रक्तपुष्पा, स्थिरायु, कण्टकाढ्या र तूलिनी : यी सिमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो शुरुमा खाँदा र पचेपछि पनि स्वादिलो वा गुलियो हुन्छ । यो रसायनी र कफवर्धक हुन्छ । यसले पित्तविकार, वातविकार, रक्तविकार र रक्तपित्त नाश गर्दछ ।

## सिमलको खोटो

**निर्यासः शाल्मलेः पिच्छा शाल्मलीवेष्टकोऽपि च ।**
**मोचास्रावोमोचरसो मोचनिर्यास इत्यपि ॥५६॥**
**मोचास्रावो हिमो ग्राही स्निग्धो वृष्यः कषायकः ।**
**प्रवाहिकाऽतिसारामकफपित्तास्रदाहनुत् ॥५७॥**

शाल्मलिनिर्यास, पिच्छा, शाल्मलीवेष्टक, मोचास्राव, मोचरस र मोचनिर्यास : यी सिमलको खोटोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो सङ्ग्राही, चिल्लो, वीर्यवर्द्धक र टर्रो हुन्छ । यसले प्रवाहिका, अतिसार, आमविकार, कफविकार, पित्तविकार, रक्तविकार र डाह नाश गर्दछ ।

## सेतो वा कालो (?) सिमल

**कुत्सितः शाल्मलि प्रोक्तो रोचनः कूटशाल्मलिः ।**
**कूटशाल्मलिकस्तिक्तः कटुकः कफवातनुत् ॥५८॥**
**भेद्युष्णः प्लीहजठरयकृद्गुल्मविषापहः ।**
**भूतानाहविबन्धास्रमेदः शूलकफापहः ॥५९॥**

कुत्सितशाल्मलि, रोचन, कूटशाल्मलि र कूटशाल्मलिक : यी कालो सिमलका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीतो र पिरो हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ । यो भेदन र गर्मी गर्ने गुणको हुन्छ । यसले फियोका रोग, पेटका रोग, कलेजोका रोग, गुल्म र विषविकार नाश गर्दछ । साथै, भूतबाधा, आनाह, विबन्ध, रक्तविकार, बोसोविकार, शूल र कफविकार समेत नाश गर्दछ ।

## धयैँरो विशेष

**धवो धटो नन्दितरुः स्थिरो गौरो धुरन्धरः ।**
**धवः शीतः प्रमेहार्शः पाण्डुपित्तकफापहः ॥६०॥**
**मधुरस्तुवरस्तस्य फलञ्च मधुरं मनाक् ।**

धव, धट, नन्दितरु, स्थिर, गौर र धुरन्धर : यी बोटधयैँरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ तथा प्रमेह, अल्काई, पाण्डु, पित्तविकार र कफविकार नाश गर्दछ । यो गुलियो एवं टर्रो हुन्छ । यसको फल पनि केही गुलियो हुन्छ ।

## दबदबे (धनुर्वृक्ष)

**धन्वङ्गस्तु धनुर्वृक्षो गोत्रवृक्षः सुतेजनः ॥६१॥**
**धन्वङ्गः कफपित्तास्रकासहृत्तुवरो लघुः ।**
**बृंहणो बलकृद्रूक्षः सन्धिकृद् व्रणरोपणः ॥६२॥**

धन्वङ्ग, धनुर्वृक्ष, गोत्रवृक्ष र सुतेजन : यी दबद्बेका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफविकार, पित्तविकार, रक्तविकार र खोकी ठिक गर्दछ । यो टर्रो र पचाउन हलुका हुन्छ । यो पौष्टिक, बलदायक, रुखो, टुटेफुटेका अङ्ग जोड्ने र घाउभर्ने गुणको हुन्छ ।

## करीर

**करीरः क्रकरीपत्रो ग्रन्थिलो मरुभूरुहः ।**
**करीरः कटुकस्तिक्त स्वेद्युष्णो भेदनः स्मृतः ॥६३॥**
**दुर्नामकफवातामगरशोथव्रणप्रणुत् ।**

करीर, क्रकरीपत्र, ग्रन्थिल र मरुभूरुह : यी करीरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र तीतो हुन्छ । यसले पसिना निकाल्दछ र गर्मी गर्दछ । यसमा भेदन गुण हुन्छ । यसले अल्काई, कफविकार, वातविकार, आमविकार, विषविकार, सुजन र खटिरा नाश गर्दछ ।

## शाखोट (पाते खाक्सी ?)

**शाखोटः पीतफलको भूतावासः खरच्छदः ॥६४॥**
**शाखोटो रक्तपित्तार्शोवातश्लेष्मातिसारजित् ।**

शाखोट, पीतफलक, भूतावास र खरच्छद : यी शाखोटका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले रक्तपित्त, अल्काई, वातविकार, कफविकार र अतिसार नाश गर्दछ ।

## सिप्लिकान

**वरुणो वरणः सेतुस्तिक्तशाकः कुमारकः ॥६५॥**
**वरुणः पित्तलो भेदीश्लेष्मकृच्छ्राश्ममारुतान् ।**
**निहन्ति गुल्मवातास्रकृमींश्चोष्णोऽग्निदीपनः ॥६६॥**
**कषायो मधुरस्तिक्तः कटुकोरूक्षको लघुः ।**

वरुण, वरण, सेतु, तिक्तशाक र कुमारक : यी सिप्लिकानका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पित्त बढाउँदछ, यसमा भेदन र दीपन गुण हुन्छ तथा कफविकार, कृच्छ्र, पत्थरी, वातविकार, गुल्म, वातरक्त र कीरा नाश गर्दछ । यो टर्रो, गुलियो, तीतो र पिरो हुनुका साथै रुखो र पचाउन हलुका समेत हुन्छ ।

## कटभी

**कटभी स्वादुपुष्पश्च मधुरेणुः कटम्भरः ॥६७॥**
**कटभी तु प्रमेहार्शोनाडीव्रणविषक्रिमीन् ।**
**हन्त्युष्णा कफकुष्ठघ्नी कटू रूक्षा च कीर्तिता ॥६८॥**
**तत्फलं तुवरं ज्ञेयं विशेषात्कफशुक्रहृत् ।**

कटभी, स्वादुपुष्प, मधुरेणु र कटम्भर : यी कटभीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले प्रमेह, अल्काई, नाडीव्रण, विषविकार, कीरा, कफविकार र कुष्ठ नाश गर्दछ । यसले गर्मी गर्दछ । यो पिरो र रुखो हुन्छ भनिएको छ ।

## लोध विशेष

**मोक्षस्तु मोक्षकोऽपि स्याद् गोलीढोगोलिहस्तथा ॥६९॥**
**क्षारश्रेष्ठः क्षारवृक्षो द्विविधः श्वेतकृष्णकः ।**
**मोक्षकः कटुकस्तिक्तो ग्राह्युष्णः कफवातहृत् ॥७०॥**
**विषमेदोगुल्मकण्डूबस्तिरुक्कृमिशुक्रनुत् ।**

मोक्ष, मोक्षक, गोलीढ, क्षारश्रेष्ठ र क्षारवृक्ष : यी लोधविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सेतो र कालो गरी दुई किसिमको हुन्छ । यो पिरो, तीतो, सङ्ग्राही र गर्मी गर्ने गुणको हुन्छ । यसले कफविकार, वातविकार, विषविकार, बोसोविकार, गुल्म, लुतो, तल्लोपेटका रोग, कीरा र शुक्र नाश गर्दछ ।

## पानीशिरीष

**शिरीषिका टिण्टिनिका दुर्बलाऽम्बुशिरीषिका ॥७१॥**
**त्रिदोषविषकुष्ठार्शोहरी वारिशिरीषिका ।**

अम्बुशिरीषिका, टिण्टिनिका, दुर्बला र शिरीषिका : यी पानीशिरीषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले त्रिदोष, विषविकार, कुष्ठ र अल्काई नाश गर्दछ । (यसको आजसम्म पहिचान हुन सकेको छेन ।)

## शमी

**शमी शक्तुफला तुङ्गा केशहन्त्री शिवाफला ॥७२॥**
**मंगल्या च तथा लक्ष्मीः शमीरः साऽलिपका स्मृता ।**
**शमी तिक्ता कटुः शीता कषाया रेचनी लघुः ॥७३॥**
**कफकासभ्रमश्वासकुष्ठार्शः कृमिजित् स्मृता ।**

शमी, शक्तुफला, तुङ्गा, केशहन्त्री, शिवाफला, मङ्गल्या र लक्ष्मी : यी शमीका संस्कृत पर्यायवाची नामहरू हुन् । सानो खालको शमीलाई शमीर भनिन्छ । यो तीतो, पिरो, शीतल गर्ने, टर्रो, रेचनी र पचाउन हलुका हुन्छ । यसले कफविकार, खोकी, भ्रम, दम, कुष्ठ, अल्काई र कीरा नाश गर्दछ भनिएको छ ।

## छतिवन

**सप्तपर्णो विशालत्वक् शारदो विषमच्छदः ॥७४॥**
**सप्तपर्णो व्रणश्लेष्मवातकुष्ठास्रजन्तुजित् ।**
**दीपनः श्वासगुल्मघ्नः स्निग्धोष्णस्तुवरः सरः ॥७५॥**

सप्तपर्ण, विशालत्वच्, शारद र विषमच्छद : यी छतिवनका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले घाउखटिरा, कफविकार, वातविकार, कुष्ठ, रक्तविकार, कीरा, दम र गुल्म नाश गर्दछ । यो दीपनी, चिल्लो, टर्रो र मल खुकुल्याउने गुणको हुन्छ ।

## तिनिश

**तिनिशः स्यन्दनो नेमी रथद्रुर्वञ्जुलस्तथा ।**
**तिनिशः श्लेष्मपित्तास्रमेदःकुष्ठप्रमेहजित् ॥७६॥**
**तुवरः श्वित्रदाहघ्नो व्रणपाण्डुकृमिप्रणुत् ।**

तिनिश, स्यन्दन, नेमी, रथद्रु र वञ्जुल : यी तिनिशका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफविकार, पित्तविकार, रक्तविकार, बोसोविकार, कुष्ठ, प्रमेह, श्वेतकुष्ठ, डाह, घाउखटिरा, पाण्डु र कीरा नाश गर्दछ । यो टर्रो हुन्छ ।

## खरच्छद

**भूमीसहो द्वारदारुर्वरदारुः खरच्छदः ॥**
**भूमीसहस्तु शिशिरो रक्तपित्तप्रसादनः ॥७७॥**

भूमीसह, द्वारदारु, वरदारु र खरच्छद : यी खरच्छदका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्नुका साथै रक्तपित्तलाई शुद्धीकरण गर्दछ ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे वटादिवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको बर आदि वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



**॥ अथ आम्रादिफलवर्ग : ॥**

## आँप

### आँपका पर्यायवाची शब्दहरू

**आम्रश्चूतो रसालश्च सहकारोऽतिसौरभः ।**
**कामाङ्गो मधुदूतश्च माकन्दः पिकवल्लभः ॥१॥**

आम्र, चूत, रसाल, सहकार, अतिसौरभ, कामाङ्ग, मधुदूत, माकन्द र पिकवल्लभ : यी आँपका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### आँपको फूल

**आम्रपुष्पमतीसारकफपित्तप्रमेहनुत् ।**
**असृग्दुष्टिहरं शीतं रुचिकृद् ग्राहि वातलम् ॥२॥**

आँपको फूलले अतीसार, कफविकार, पित्तविकार र प्रमेह रोग नाश गर्दछ । यसले रक्तविकार नाश गर्दछ, शीतल गर्दछ र रुची जगाउँदछ तर यो सङ्ग्राही हुन्छ र यसले वातविकार पनि बढाउँदछ ।

### काँचो आँप

**आमं बालं कषायाम्लं रुच्यं मारुतपित्तकृत् ।**
**तरुणं तु तदत्यम्लं रूक्षं दोषत्रयास्रकृत् ॥३॥**

कलिलो काँचो आँप टर्रो र अमिलो हुन्छ । यो रुचिकारक भएपनि यसले वातविकार र पित्तविकार बढाउँदछ । छिप्पिएको काँचो आँप भने अति नै अमिलो हुन्छ । यो रुखो हुन्छ । यसले त्रिदोष र रक्तविकारलाई जन्माउँदछ ।

### अम्चुर

**आम्रमामं त्वचाहीनमातपेऽतिविशोषितम् ।**
**अम्लं स्वादु कषायं स्याद्भेदनं कफवातजित् ॥४॥**

काँचो आँपलाई बोक्रो ताछेर घाममा धेरै सुकाई (पिँधेर बनाइने धुलो वा चाना) बनाइने अम्चुर अमिलो, गुलियो र टर्रो हुन्छ । यो भेदनी हुन्छ । यसले कफविकार र वातविकार नाश गर्दछ ।

### पाकेको आँप

**पक्वं तु मधुरं वृष्यं स्निग्धं बलसुखप्रदम् ।**
**गुरु वातहरं हृद्यं वर्ण्यं शीतमपित्तलम् ॥५॥**

**कषायानुरसं वह्निश्लेश्मशुक्रविवर्द्धनम् ।**

पाकेको आँपको स्वाद शुरुमा गुलियो र अन्तिममा हल्का टर्रो हुन्छ । यसले वीर्य बढाउँदछ । यो चिल्लो हुन्छ । यसले बल र सुख दिन्छ । यो पचाउन कठिन हुन्छ । यसले वातविकार र मुटुका रोग नाश गर्दछ । वर्णमा निखार लेराउँदछ । शीतल गर्दछ र हल्का पित्तविकार बढाउँदछ । यसमा हुने टर्रो रसले पाचनशक्ति, कफ र शुक्र बढाउँदछ ।

**तदेव वृक्षसम्पक्वं गुरु वातहरं परम् ॥६॥**
**मधुराम्लरसं किञ्चिद्भवेत्पित्तप्रकोपणम् ।**

रूखमै पाकेको आँप गुलियो र अमिलो हुन्छ । यो पचाउन कठिन हुन्छ । यसले विशेषतः वातविकार नाश गर्दछ । तर, केही मात्रामा वित्तविकार बढाउँदछ ।

**आम्रं कृत्रिमपक्वञ्च तद्भवेत्पित्तनाशनम् ॥७॥**
**रसस्याम्लस्य हीनस्तु माधुर्याच्च विशेषतः ।**
**चूषितं तत्परं रुच्यं बलवीर्यकरं लघु ॥८॥**
**शीतलं शीघ्रपाकि स्याद्वातपित्तहरं सरम् ।**

कृत्रिम तरिका (काँचैमा टिपेर हानि नगर्ने किसिम) ले पकाइएको आँपले पित्तविकार नाश गर्दछ किन कि यसमा प्रायः अमिलो रस हराएर गुलियो रस मात्र बाँकी हुने गर्दछ । यस्तो आँप चुस्नाले रुची, बल र वीर्य बढाउँदछ । यो पचाउन हलुका, शीतल गर्ने, चाँडै पच्ने, वातविकार र पित्तविकार नाश गर्ने तथा मललाई खुकुल्याउने गुणको हुन्छ ।

**तद्रसो गालितो बल्यो गुरुर्वातहरः सरः ॥९॥**
**अहृद्यस्तर्पणोऽतीव बृंहणः कफवर्द्धनः ।**

निचोरिएको आँपको रस (वा जुस) ले बल दिन्छ तर पचाउन कठिन हुन्छ । यसले वातविकार नाश गर्दछ र मललाई खुकुलो पार्दछ । तर यसले मुटुलाई फाइदा गर्दैन । यसले तिव्र तरिकाले शरीरमा शक्ति सञ्चार गर्दछ । यो पौष्टिक हुन्छ तर कफविकार बढाउँदछ ।

**तस्य खण्डं गुरु परं रोचनं चिरपाकि च ॥१०॥**
**मधुरं बृंहणं बल्यं शीतलं वातनाशनम् ।**

पाकेको आँपको चाना पचाउन कठिन, अति नै रुचिकारक, पच्न धेरै बेर लाग्ने, गुलियो, पौष्टिक, बलदायक, शीतल गर्ने र वातविकार नाशक हुन्छ ।

**वातपित्तहरं रुच्यं बृंहणं बलवर्द्धनम् ॥**
**वृष्यं वर्णकरं स्वादु दुग्धाम्र गुरु शीतलम् ॥११॥**

दूधसँग खाइएको पाकेको आँप रुचीकारक, पौष्टिक र बलवर्द्धक हुन्छ । यसले वीर्य बढाउँदछ र वर्णमा निखार लेराउँदछ । यो स्वादिलो भएपनि पचाउन भने कठिन हुन्छ । यसले शीतल गर्दछ ।

## धेरै आँप खानाले हुने हानी र उपचार

**मन्दानलत्वं विषमज्वरं च रक्तामयं बद्धगुदोदरं च ।**
**आम्रातियोगो नयनामयं वा करोति तस्मादति तानि नाद्यात् ॥१२॥**
**एतदम्लाम्रविषयं मधुराम्लपरं न तु ।**
**मधुरस्य परं नेत्रहितत्वाद्या गुणा यतः ॥१३॥**

धेरै आँप खानाले पाचनशक्ति कमजोर हुन्छ, विषज्वर आउन सक्दछ, रगतजन्य रोगहरु लाग्न सक्दछन्, कब्जियत हुन्छ र आँखासम्बन्धी रोग हुन सक्दछ । यसैले धेरै आँप नखानू । यो निषेध अमिलो आँपका हकमा लागु हुन्छ, गुलियो आँपका हकमा लागु हुँदैन । किन कि पाकेको र गुलियो आँपमा आँखाको लागि फाइदा गर्ने गुण हुन्छ ।

**शुण्ठ्यम्भसोऽनुपानं स्यादाम्राणामतिभक्षणे ।**
**जीरकं वा प्रयोक्तव्यं सह सौवर्चलेन च ॥१४॥**

धेरै आँप खाएका कारण कुनै असर गरे सुठो र पानी पिउनू अथवा सौचर नुन र जीरा खानू ।

## अमोठ

**पक्वस्य सहकारस्य पटे विस्तारितो रसः ।**
**घर्मशुष्को मुहुर्दत्त आम्रावर्त्त इति स्मृतः ॥१५॥**
**आम्रावर्त्तस्तृषाच्छर्दि वातपित्तहरः सरः ।**
**रुच्यः सूर्यांशुभिः पाकाल्लघुश्च स हि कीर्त्तितः ॥१६॥**

पाकेका आँपलाई निचोरी निकालिएको रस सफा कपडामा राखेर घाममा सुकाउनू । जब सुक्दछ त्यसमाथि पुनः रस हालेर सुकाउनू । यसो गर्दा गर्दा जब त्यहाँ बाक्लो पत्र बन्दछ त्यो पत्रलाई “आम्रावर्त्त” (अमोठ) भनिन्छ । यसले तिर्खारोग, वाकवाकी, वातविकार र पित्तविकार नाश गर्दछ तथा मललाई खुकुलो पार्दछ । यो रुचिकारक हुन्छ । सूर्यका किरणमा सुकेर पाकेका कारण यो पचाउन पनि हलुका हुन्छ ।

## आँपको कोया र मुना

**आम्रबीजं कषायं स्याच्छर्द्यतीसारनाशनम् ।**
**ईषदम्लश्च मधुरं तथा हृदयदाहनुत् ॥१७॥**
**आम्रस्य पल्लवो रुच्यः कफपित्तविनाशनः ॥१८॥**

आँपको कोया भित्रको गुदी टर्रो, गुलियो र अमिलो मिसिएको स्वादको हुन्छ । यसले वाकवाकी, अतीसार र मुटुको दुःखाईलाई नाश गर्दछ । आँपको मुना (कलिला पात) रुचीकारक तथा कफविकार र पित्तविकार नाशक हुन्छ ।

## अमारो

**आम्रातकः पीतनश्च मर्कटाम्रः कपीतनः ।**
**आम्रातमम्लं वातघ्नं गुरूष्णं रुचिकृत्सरम् ॥१९॥**
**पक्वन्तु तुवरं स्वादु रसे पाके हिमं स्मृतम् ।**
**तर्पणं श्लेष्मलं स्निग्धं वृष्यं विष्टम्भि बृंहणम् ॥२०॥**
**गुरु बल्यं मरुत्पित्तक्षतदाहक्षयास्रजित् ।**

आम्रातक, पीतन, मर्कटाम्र, कपीतन र आम्रात : यी अमारोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमिलो, वातविकार नाशक, पचाउन कठिन, गर्मी गर्ने, रुची बढाउने र मल खुकुलो पार्ने गुणको हुन्छ । पाकेको अमारोको फल टर्रो, पचेपछि स्वादिलो, शीतल गर्ने, सन्तुष्ट पार्ने, कफवर्द्धक, कब्जियत गर्ने, पौष्टिक, पचाउन कठिन, बलदायक तथा वातविकार, पित्तविकार, चोटपटक, डाह, क्षयरोग र रक्तविकार नाशक हुन्छ ।

## कलमी आँप

**राजाम्रष्टङ्क आम्रातः कामाह्वो राजपुत्रकः ॥२१॥**
**राजाम्रं तुवरं स्वादु विशदं शीतलं गुरु ।**
**ग्राहि रूक्षं विबन्धाध्मवातकृत्कफपित्तनुत् ॥२२॥**

राजाम्र, टङ्क, आम्रात, कामाह्व र राजपुत्रक : यी कलमी-आँपका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, गुलियो, विशद (सफा, सुन्दर र सेतो) र पचाउन कठिन हुन्छ । यसका साथै यो सङ्ग्राही, रुखो, विबन्धकारी र आध्मानकारी हुन्छ । तर यसले कफविकार र पित्तविकार नाश गर्दछ ।

## बिज्जु आँप

**कोशाम्र उक्तः क्षुद्राम्रः कृमिवृक्षः सुकोशकः ।**
**कोशाम्रः कुष्ठशोथास्रपित्तव्रणकफापहः ॥२३॥**
**तत्फलं ग्राहि वातघ्नमम्लोष्णं गुरु पित्तलम् ।**
**पक्वन्तु दीपनं रुच्यं लघूष्णं कफवातनुत् ॥२४॥**

कोशाम्र, क्षुद्राम्र, कृमिवृक्ष र सुकोशक : यी बिज्जु आँपका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कुष्ठ, सुजन, रक्तपित्त, घाउखटिरा र कफविकार नाश गर्दछ । यसको फल सङ्ग्राही, वातविकार नाशक, अमिलो,

गर्मी गर्ने, पचाउन कठिन र पित्तविकार गर्ने गुणको हुन्छ । यसको पाकेको फल भने दीपनी, रुचिवर्द्धक, पचाउन हलुका, गर्मी गर्ने तथा कफविकार र पित्तविकार नाशक हुन्छ ।

## कटहर

**पनशः कण्टकिफलः पलसोऽतिबृहत्फलः ।**
**पनसं शीतलं पक्वं स्निग्धं पित्तानिलापहम् ॥२५॥**
**तर्पणं बृंहणं स्वादु मांसलं श्लेष्मलं भृशम् ।**
**बल्यं शुक्रपदं हन्ति रक्तपित्तक्षतव्रणान् ॥२६॥**
**आमं तदेव विष्टम्भि वातलं तुवरं गुरु ।**
**दाहकृन्मधुरं बल्यं कफमेदोविवर्द्धनम् ॥२७॥**

पनश, कण्टकिफल, पलस र अतिबृहत्फल : यी रूखकटहरका संस्कृत पर्यायवाची नामहरू हुन् । पाकेको रूखकटहरको फलले शीतल गर्दछ । यो चिल्लो हुन्छ । यसले पित्तविकार र वातविकार नाश गर्दछ । यो सन्तर्पण गर्ने, पौष्टिक, स्वादिलो तथा अति नै मासु र कफ बढाउने गुणको हुन्छ । यसले बल र शुक्र बढाउँदछ तथा रक्तविकार, पित्तविकार, चेटपटक र घाउखटिरा ठिक गर्दछ । यदि यो काँचो छ भने यसले कब्जियत गर्दछ, वातविकार बढाउँदछ, टर्रो हुन्छ र पचाउन कठिन हुन्छ । यसले शरीरमा डाह गर्दछ तथा बल, कफ र बोसो बढाउँदछ ।

## कटहरका गेडा

**पनसोद्भूतबीजानि वृष्याणि मधुराणि च ।**
**गुरूणि बद्धविट्कानि सृष्टमूत्राणि संवदेत् ॥२८॥**

कटहरका गेडा वीर्यवर्द्धक र मिठो हुन्छ । यो पचाउन कठिन, दिसा गोटापार्ने र पिसाब लगाउने गुणको हुन्छ ।

## कटहरको मज्जा

**मज्जा पनसजो वृष्यो वातपित्तकफापहः ।**
**विशेषात्पनसो वर्ज्यो गुल्मिभिर्मन्दवह्निभिः ॥२९॥**

कटहरको गेडा भित्रको भाग वीर्यवर्द्धक तथा त्रिदोष नाशक हुन्छ । विशेषतः गुल्मका रोगी र पाचनशक्ति कमजोर हुने व्यक्तिले कटहर खान हुँदैन ।

## बडहर

**लकुचः छुद्रपनसो लिकुचो डहुरित्यपि ।**

**आमं लकुचमुष्णञ्च गुरु विष्टम्भकृत्तथा ॥३०॥**
**मधुरश्च तथाऽम्लञ्च दोषत्रितयरक्तकृत् ।**
**शुक्राग्निनाशनं वाऽपि नेत्रयोरहितं स्मृतम् ॥३१॥**
**सुपक्वं तत्तु मधुरमम्लं चानिलपित्तहृत् ।**
**कफवह्निकरं रुच्यं वृष्यं विष्टम्भकञ्च तत् ॥३२॥**

लकुच, क्षुद्रपनस, लिकुच र डहु : यी बडहरका संस्कृत पर्यायवाची नामहरू हुन् । काँचो बडहरको फलले गर्मी गर्दछ, पचाउन कठिन हुन्छ, कब्जियत गर्दछ, गुलियो र अमिलो हुन्छ, त्रिदोष गर्दछ, रक्तविकार गर्दछ, शुक्र र पाचन शक्ति नाश गर्दछ तथा आँखाका लागि समेत लाभदायक हुँदैन । यसको पाकेको फल गुलियो र अमिलो हुन्छ । यसले वातविकार र पित्तविकार नाश गर्दछ । यसले कफविकार र जठराग्निलाई बढाउँदछ । यो रुचिकर, वीर्यवर्द्धक र कब्जियत गराउने गुणको हुन्छ ।

## केरा

**कदली वारणा मोचाऽम्बुसाराँऽशुमतीफला ।**
**मोचाफलं स्वादु शीतं विष्टम्भि कफकृद् गुरु ॥३३॥**
**स्निग्धं पित्तास्रतृड्दाहक्षतक्षयसमीरजित् ।**
**पक्वं स्वादु हिमं पाके स्वादु वृष्यञ्च बृंहणम् ॥३४॥**
**क्षुत्तृष्णानेत्रगदहृन्मेहघ्नं रुचिमांसकृत् ।**

कदली, वारणा, मोचा, अम्बुसारा र अंशुमतीफला : यी केराका संस्कृत पर्यायवाची नामहरू हुन् । केरा स्वादिलो, शीतल गर्ने, कब्जियत गर्ने, कफ बढाउने र पचाउन कठिन हुने गुणको हुन्छ । यो चिल्लो हुन्छ । यसले पित्तविकार, रक्तविकार, तिर्खा, डाह, चोटपटक, क्षयरोग र वातविकार नाश गर्दछ । पाकेको केरा सदिलो, शीतल गर्ने, पचेपछि गुलियो हुने, वीर्यवर्द्धक, पौष्टिक तथा भोक, तिर्खा, आँखाका रोग, र प्रमेह नाशक हुन्छ । यसले रुचि र मासु बढाउँदछ ।

**माणिक्यमर्त्यामृतचम्पकाद्या भेदाः कदल्या बहवोऽपि सन्ति ॥३५॥**
**उक्ता गुणास्तेष्वधिका भवन्ति निर्दोषता स्याल्लघुता च तेषाम् ।**

माणिक्य, मर्त्य, अमृत, चम्पक आदि केराका अनेकौं जात हुन्छन् । ती सबैमा प्रायः माथि बताइएका गुण नै हुन्छन् । तिनमा दोषहीनता र पचाउन सहज हुने गुण नै हुने गर्दछ ।

## चिर्भिट

**चिर्भिटं धेनुदुग्धं च तथा गोरक्षकर्कटी ॥३६॥**
**चिर्भिटं मधुरं रूक्षं गुरु पित्तकफापहम् ।**
**अनुष्णं ग्राहि विष्टम्भि पक्वं तूष्णञ्च पित्तलम् ॥३७॥**

चिर्भिट, धेनुदुग्ध र गोरक्षकर्कटी : यी चिर्भिटका संस्कृत पर्यायवाची शब्दहरू हुन् । यो गुलियो, रुखो, पचाउन कठिन तथा पित्तविकार र कफविकार नाशक हुन्छ । (यसको पहिचानमा समान धारणा छैन) ।

## नरिवल

**नारिकेलो दृढफलो लाङ्गली कूर्चशीर्षकः ।**
**तुङ्गः स्कन्धफलश्चैव तृणराजः सदाफलः ॥३८॥**
**नारिकेलफलं शीतं दुर्जरं बस्तिशोधनम् ।**
**विष्टम्भि बृंहणं बल्यं वातपित्तास्रदाहनुत् ॥३९॥**

नारिकेल, दृढफल, लाङ्गली, कूर्चशीर्षक, तुङ्ग, स्कन्धफल, तृणराज र सदाफल : यी नरिवलका संस्कृत पर्यायवाची नामहरू हुन् । नरिवलको फलले शीतल गर्दछ । यो ढिलो पच्दछ । यसले तल्लो पेट सफा गर्दछ, कब्जियत गर्दछ तथा पौष्टिक हुन्छ । यसले बल दिन्छ तथा वातविकार, पित्तविकार, रक्तविकार र डाह नाश गर्दछ ।

**विशेषतः कोमलनारिकेलं निहन्ति पित्तज्वरपित्तदोषान् ।**
**तदेव जीर्णं गुरु पित्तकारि विदाहि विष्टम्भि मतं भिषग्भिः ॥४०॥**

नरिवलको कमलो फलले विशेषतः पित्तज्वर र पित्तदोष नाश गर्दछ । सुकेको फल पचाउन कठिन, पित्तकारक, डाह गर्ने र कब्जियत गर्ने हुन्छ भन्ने मान्यता वैद्यहरूको छ ।

**तस्याम्भः शीतलं हृद्यं दीपनं शुक्रलं लघु ।**
**पिपासापित्तजित्स्वादु बस्तिशुद्धिकरं परम् ॥४१॥**

नरिवलको फलभित्रको पानीले शीतल गर्दछ, मुटुलाई फाइदा गर्दछ तथा दीपनी, शुक्रवर्धक र पचाउन हलुका हुन्छ । यसले तिर्खा र पित्तविकार नाश गर्नुका साथै स्वादिलो हुन्छ । यसले विशेषतः तल्लो पेटलाई सफा गर्दछ ।

**नारिकेलस्य तालस्य खर्जूरस्य शिरांसि तु ।**
**कषायस्निग्धमधुरबृंहणानि गुरूणि च ॥४२॥**

नरिवल, ताडी र खजूरको भेट्नुतिर हुने गुदी टर्रो र गुलियो हुन्छ । यो चिल्लो, पचाउन कठिन र पौष्टिक हुन्छ ।

## तरबुजो

**कालिन्दं कृष्णबीजं स्यात्कालिङ्गञ्च सुवर्त्तुलम् ।**
**कालिन्दं ग्राहि दृक्पित्त शुक्र हृच्छीतलं गुरु ॥४३॥**

**पक्वन्तु सोष्णं सक्षारं पित्तलं कफवातजित् ।**

कालिन्द, कृष्णबीज, कालिङ्ग र सुवर्त्तुल : यी तरबुजोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सङ्ग्राही हुन्छ । यसले दृष्टि क्षमता, पित्त र शुक्र नाश गर्दछ । यो पचाउन कठिन हुन्छ । यसको पाकेको फल गर्मी गर्ने, नुनिलो, पित्तकारी तथा कफविकार र वातविकार नाशक हुन्छ ।

## खरबुजो

**दशाङ्गुलं तु खर्बूजं कथ्यन्ते तद्गुणा अथ ॥४४॥**
**खर्बूजं मूत्रलं बल्यं कोष्ठशुद्धिकरं गुरु ।**
**स्निग्धं स्वादुतरं शीतं वृष्यं पित्तानिलापहम् ॥४५॥**
**तेषु यच्चाम्लमधुरं सक्षारञ्च रसाद्भवेत् ।**
**रक्तपित्तकरं तत्तु मूत्रकृच्छ्रकरं परम् ॥४६॥**

दशाङ्गुल र खर्बूज : यी खर्बुजाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पिसाबको मात्रा बढाउँदछ, बल दिन्छ र विशेषतः पेट शुद्ध वा सफा पार्दछ । यो चिल्लो, अती स्वादिलो, शीतल गर्ने, वीर्यवर्द्धक तथा पित्तविकार र वातविकार नाशक हुन्छ । यसको फलमा हुने अमिलो, गुलियो र नुनिलो रसले भने रक्तपित्त र मूत्रकृच्छ्र रोग जन्माउने सम्भावना अत्यधिक हुन्छ ।

## काँक्रो

**त्रपुसं कण्टकिफलं सुधावासः सुशीतलम् ।**
**त्रपुसं लघु नीलञ्च नवं तृट्क्लमदाहजित् ॥४७॥**
**स्वादु पित्तापहं शीतं रक्तपित्तहरं परम् ।**
**तत्पक्वमम्लमुष्णं स्यात्पित्तलं कफवातनुत् ॥४८॥**
**तद्बीजं मूत्रलं शीतं रूक्षं पित्तास्रकृच्छ्रजित् ।**

त्रपुस, कण्टकिफल, सुधावास र सुशीतल : यी काँक्रोका संस्कृत पर्यायवाची नामहरू हुन् । काँक्रोका साना, नीला र कलिला फलले तिर्खा, बिना परिश्रमको थकाई र डाह नाश गर्दछ । यो स्वादिलो, पित्तविकार नाशक, शीतल गर्ने र विशेषतः रक्तपित्त नाशक हुन्छ । पाकेको काँक्रो अमिलो, गर्मी गर्ने, पित्तविकार बढाउने तया कफविकार र वातविकार नाश गर्ने गुणको हुन्छ । काँक्राका गेडाले पिसाब खुलाउँदछ, शीतल गर्दछ, रुखो हुन्छ तथा पित्तविकार, रक्तविकार र कृच्छ्र नाशक हुन्छ ।

## सुपारी

**घोरण्टः पूगी पूगश्च गुवाकः क्रमुकोऽस्य तु ॥४९॥**
**फलं पूगीफलं प्रोक्तमुद्वेगं च तदीरितम् ।**
**पूगं गुरु हिमं रूक्षं कषायं कफपित्तजित् ॥५०॥**

**मोहनं दीपनं रुच्यमास्यवैरस्यनाशनम् ।**

घोरण्ट, पूगी, पूग, गुवाक र क्रमुक : यी सुपारीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको फललाई पूगीफल वा उद्वेग भनिन्छ । यो पचाउन कठिन, शीतल गर्ने, रुखो, टर्रो, कफविकार नाशक र पित्तविकार नाशक हुन्छ । यसले मोह बढाउँदछ । यो दीपनी, रुचीकारक र मुख सुकेको ठिक गर्ने गुणको हुन्छ ।

**आर्द्रं तद्गुर्वभिष्यन्दि वह्निदृष्टिहरं स्मृतम् ॥५१॥**
**स्विन्नं दोषत्रयच्छेदि दृढमध्यं तदुत्तमम् ।**

काँचो सुपारी पचाउन कठिन, अभिष्यन्दि, पाचनशक्ति नाशक र दृष्टिक्षमता नाशक हुन्छ भनिएको छ । चिल्लो सुपारीले त्रिदोष नाश गर्दछ । बीचको भाग साह्रो हुने सुपारी उत्तम हुन्छ ।

## ताड

**तालस्तु लेख्यपत्रः स्यात्तृणराजो महोन्नतः ॥५२॥**
**पक्वं तालफलं पित्तरक्तश्लेष्मविवर्द्धनम् ।**
**दुर्जरं बहुमूत्रञ्च तन्द्राऽभिष्यन्दशुक्रदम् ॥५३॥**
**तालमज्जा तु तरुणः किञ्चिन्मदकरो लघुः ।**
**श्लेष्मलो वातपित्तघ्नः सस्नेहो मधुरः सरः ॥५४॥**

ताल, लेख्यपत्र, तृणराज र महोन्नत : यी ताडका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको पाकेको फलले पित्तविकार, रक्तविकार र कफविकार बढाउँदछ । यो ढिलो पच्ने, धेरै पिसाब लगाउने, तन्द्रा लगाउने, अभिष्यन्दी र शुक्र उत्पादक हुन्छ । ताडको छिप्पिएको गुदी केही नसा लगाउने र पचाउन हलुका हुन्छ । यो कफविकार गर्ने, चिल्लो, गुलियो, मल सार्ने तथा वातविकार र पित्तविकार नाशक हुन्छ ।

**तालजं तरुणं तोयमतीव मदकृन्मतम् ।**
**अम्लीभूतं तदा तु स्यात्पित्तकृद्वातदोषहृत् ॥५५॥**

छिप्पिएको ताडको रस (ताडी) अति नै नसालु हुन्छ । यदि यो पुरानो भएर अमिलो भएको छ भने यसले पित्तविकार बढाउँदछ तर वातविकार नाश गर्दछ ।

## बेल

**बिल्वः शाण्डिल्यशैलूषौ मालूरश्रीफलावपि ।**
**बालं बिल्बफलं बिल्वकर्कटी बिल्वपेशिका ॥५६॥**
**ग्राहिणी कफवातामशूलघ्नी बिल्वपेषिका ।**
**बालं बिल्वफलं ग्राहि दीपनं पाचनं कटु ॥५७॥**
**कषायोष्णं लघु स्निग्धं तिक्तं वातकफापहम् ।**

बिल्व, शाण्डिल्य, शैलूष, मालूर र श्रीफल : यी बेलका तथा बालबिल्वफल, बिल्वकर्कटी र बिल्वपेशिका : यी काँचो बेलका संस्कृत पर्यायवाची नामहरू हुन् । काँचो बेल सङ्ग्राही तथा कफविकार, वातविकार, आमविकार र शूल नाशक हुन्छ । यो सङ्ग्राही, दीपनी, पाचनी, पिरो, टर्रो, गर्मी गर्ने, पचाउन हलुका, चिल्लो, तीतो, वातविकारनाशक र पित्तविकारनाशक हुन्छ ।

**पक्वं गुरु त्रिदोषं स्याद् दुर्जरं पूतिमारुतम् ॥५८॥**
**विदाहि विष्टम्भकरं मधुरं वह्निमान्द्यकृत् ।**

पाकेको बेल पचाउन कठिन हुन्छ । यसले त्रिदोष गर्दछ, यो ढिलो पच्दछ, गनाउने अपानवायु निकाल्दछ, डाह गर्दछ, विष्टम्भी हुन्छ, गुलियो हुन्छ र पाचनशक्तिलाई कमजोर बनाउँदछ ।

**फलेषु परिपक्वं यद्गुणवत्तदुदाहृतम् ॥५९॥**
**बिल्वादन्यत्र विज्ञेयमामं तद्धि गुणाधिकम् ।**
**द्राक्षाबिल्वशिवाऽऽदीनां फलं शुष्कं गुणाधिकम् ॥६०॥**

सामान्यतः पाकेको फल नै बढी गुनिला हुन्छन् तर बेलको हकमा यो नियम लागु हुँदैन भनिएको छ किन कि बेलको काँचो फल नै विशेष गुनिलो हुन्छ । यसैगरी अंगूर, बेल र हर्रो आदि फल सुकेका छन् भने ती बढी गुनिला हुन्छन् ।

## कैथ

**कपित्थस्तु दधित्थः स्यात्तथा पुष्पफलः स्मृतः ।**
**कपिप्रियो दधिफलस्तथा दन्तशठोऽपि च ॥६१॥**
**कपित्थमामं संग्राहि कषायं लघु लेखनम् ।**
**पक्वं गुरु तृषाहिक्काशमनं वातपित्तजित् ॥६२॥**
**स्यादम्लं तुवरं कण्ठशोधनं ग्राहि दुर्जरम् ।**

कपित्थ, दधित्थ, पुष्पफल, कपिप्रिय, दधिफल र दन्तशठ : यी कैथका संस्कृत पर्यायवाची नामहरू हुन् । कैथको काँचो फल सङ्ग्राही, टर्रो, पचाउन हलुका र लेखनी गुणको हुन्छ । पाकेको फल पचाउन कठिन तथा तिर्खा, बाडुली, वातविकार र पित्तविकार नाशक हुन्छ । यो अमिलो र टर्रो हुन्छ । यसले घाँटी सफा गर्दछ । यो सङ्ग्राही र ढिलो पच्ने गुणको हुन्छ ।

## सुन्तला

**नारङ्गो नागरङ्गः स्यात्त्वक्सुगन्धो मुखप्रियः ॥६३॥**
**नारङ्गो मधुराम्लः स्याद्रोचनो वातनाशनः ।**
**अपरं त्वम्लमत्युष्णं दुर्जरं वातहृत् सरम् ॥६४॥**

नारङ्ग, नागरङ्ग, त्वक्सुगन्ध र मुखप्रिय : यी सुन्तलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र अमिलो हुन्छ । यसले रुची जगाउँदछ र वातविकार नाश गर्दछ । अर्के जातको (?) सुन्तला अमिलो, अति गर्मी गर्ने, ढिलो पच्ने, वातविकार नाशक र मलमूत्र तलतिर धकेल्ने गुणको हुन्छ ।

## तिँदु

**तिन्दुकः स्फूर्जकः कालस्कन्धश्चासितकारकः ।**
**स्यादामं तिन्दुकं ग्राहि वातलं शीतलं लघु ॥६५॥**
**पक्वं पित्तप्रमेहास्रश्लेष्मघ्नं मधुरं गुरु ।**

तिन्दुक, स्फूर्जक, कालसकन्ध र असितकारक : यी तिँदुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको काँचो फल सङ्ग्राही, वातविकार गर्ने, शीतल र पचाउन हलुका हुन्छ । पाकेको फलले पित्तविकार, प्रमेह, रक्तविकार र कफविकार नाश गर्दछ । यो गुलियो र पचाउन सहज हुन्छ ।

## कुचिला

**तिन्दुको यस्तु कथितो जलदो दीर्घपत्रकः ॥६६॥**
**कुपीलुः कुलकः काकतिन्दुकः काकपीलुकः ।**
**काकेन्दुर्विषतिन्दुश्च तथा मर्कटतिन्दुकः ॥६७॥**
**कुपीलुः शीतलं तिक्तं वातलं मदकृल्लघु ।**
**परं व्यथाहरं ग्राहि कफपित्तास्रनाशनम् ॥६८॥**

तिन्दुक, जलद, दीर्घपत्रक, कुपीलु, कुलक, काकतिन्दुक, काकपीलुक, काकेन्दु, विषतिन्दु र मर्कटतिन्दु : यी कुचिलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो तीतो हुन्छ । यसले वातविकार बढाउँदछ, नसा लगाउँदछ र पचाउन हलुका हुन्छ । विशेषतः यसले रोगहरू नाश गर्दछ । यो सङ्ग्राही हुन्छ तथा यसले कफविकार, पित्तविकार र रक्तविकार नाश गर्दछ ।

## फणिर

**फलेन्द्रा कथिता नन्दी राजजम्बूर्महाफला ।**
**तथा सुरभिपत्रा च महाजम्बूरपि स्मृता ॥६९॥**
**राजजम्बूफलं स्वादु विष्टम्भि गुरु रोचनम् ।**

फलेन्द्रा, नन्दी, राजजम्बू, महाफला, सुरभिपत्रा र महाजम्बू : यी फणिरका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको फल स्वादिलो, विष्टम्भि, पचाउन कठिन र रुचिकर हुन्छ ।

## पानीजामुनु

**क्षुद्रजम्बुः सूक्ष्मपत्रा नादेयी जलजम्बुका ॥७०॥**
**जम्बूः संग्राहिणी रूक्षा कफपित्तास्रदाहजित् ।**

क्षुद्रजम्बु, सूक्ष्मपत्रा, नादेयी र जलजम्बुका : यी जामुनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो सङ्ग्राही, रुखो तथा कफविकार, पित्तविकार, रक्तविकार र डाह नाशक हुन्छ ।

## बयर

**पुंसि स्त्रियाञ्च कर्कन्धूर्बदरी कोलमित्यपि ॥७१॥**
**फेनिलं कुवलं घोण्टा सौवीरं बदरं महत् ।**
**अजप्रिया कुहा कोली विषमोभयकण्टका ॥७२॥**

कर्कन्धू (स्त्रीलिङ्ग र पुंलिङ्ग दुबैमा प्रयोग हुने), बदरी, कोल, फेनिल, कुवल, घोण्टा र सौवीर : यी सानो बयरका तथा अजप्रिया, कुहा, कोली, विषमा र उभयकण्टका : यी ठूलो बयरका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**पच्यमानं सुमधुरं सौवीरं बदरं महत् ।**

पाकेको र मिठो ठूलो खालको बयरलाई सौवीर भनिन्छ ।

**सौवीरं बदरं शीतं भेदनं गुरु शुक्रलम् ॥७३॥**
**बृंहणं पित्तदाहास्रक्षयतृष्णानिवारणम् ।**
**सौवीरं लघु सम्पक्वं मधुरं कोलमुच्यते ॥७४॥**
**कोलन्तु बदरं ग्राहि रुच्यमुष्णञ्च वातहृत् ।**
**कफपित्तकरं चापि गुरु सारकमीरितम् ॥७५॥**
**कर्कन्धूः क्षुद्रवदरं कथितं पूर्वसूरिभिः ।**
**अम्लं स्यात्क्षुद्रवदरं कषायं मधुरं मनाक् ॥७६॥**
**स्निग्धं गुरु च तिक्तञ्च वातपित्तापहं स्मृतम् ।**
**शुष्कं भेद्यग्निकृत्सर्वं लघु तृष्णाक्लमास्रजित् ॥७७॥**

सौवीरले शीतल गर्दछ । यो भेदनी, पचाउन कठिन, शुक्रवर्द्धक र पौष्टिक हुन्छ । यसले पित्तविकार, डाह, रक्तविकार, क्षयरोग र तिर्खा नाश गर्दछ । सानो, गुलियो र पाकेको सौवीर बयरलाई कोल भनिन्छ । यो सङ्ग्राही, रुचिकर, गर्मी गर्ने, वातनाशक, कफविकार पित्तविकार गर्ने, पचाउन कठिन र मलमूत्र सार्ने गुणको हुन्छ । पहिलेका विद्वानहरूले सानो जातको बयरलाई कर्कन्धु भनेका छन् । यो अमिलो, टर्रो र केही गुलियो हुन्छ । यो चिल्लो, पचाउन कठिन, तीतो, वातविकार नाशक र पित्तविकार नाशक हुन्छ भनिएको छ । सबै खालका सुकेका बयर दिसा खुकुलो पार्ने, पाचनशक्ति बढाउने, पचाउन हलुका तथा तिर्खा, परिश्रम बिनाको थकाई र रक्तविकार नाशक हुन्छन् ।

## पानीअमला

**प्राचीनामलकं लोके पानीयामलकं स्मृतम् ।**
**प्राचीनामलकं दोषत्रयजिज्ज्वरघाति च ॥७८॥**

प्राचीनामलक र पानीयामलक : यी पानीअमलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले त्रिदोष र जरो नाश गर्दछ ।

## सुगन्धमूला

**सुगन्धमूला लवली पाण्डुः कोमलवल्कला ।**
**लवलीफलमश्मार्शःकफपित्तहरं गुरु ॥७९॥**
**विशदं रोचनं रूक्षं स्वाद्वम्लं तुवरं रसे ।**

सुगन्धमूला, लवली, पाण्डु र कोमलवल्कला : यी सुगन्धमूलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पत्थरी, अल्काई, कफविकार र पित्तविकार नाश गर्दछ । यो पचाउन कठिन, सफा र उज्यालो, रुचिकर, रुखो, अमिलो र टर्रो हुन्छ ।

## पनेरु वा करौंजी

**करमर्दः सुषेणः स्यात्कृष्णपाकफलस्तथा ॥८०॥**
**तस्माल्लघुफला या तु सा ज्ञेया करमर्दिका ।**
**करमर्दद्वयं त्वाममम्लं गुरु तृषाहरम् ॥८१॥**
**उष्णं रुचिकरं प्रोक्तं रक्तपित्तकफप्रदम् ।**
**तत्पक्वं मधुरं रुच्यं लघु पित्तसमीरजित् ॥८२॥**

करमर्द, सुषेण र कृष्णपाकफल : यी पनेरुका संस्कृत पर्यायवाची नामहरू हुन् । सानो खालको पनेरुलाई संस्कृतमा करमर्दिका भनिन्छ । दुबै खालका पनेरु अमिला, पचाउन कठिन र तिर्खा नाशक हुन्छन् । यो फलले गर्मी गर्दछ, रुची जगाउँदछ तथा रक्तपित्तर र कफविकार उत्पन्न गर्दछ । यसको पाकेको फल मिठो, रुचिकर, पचाउन हलुका तथा पित्तविकार र कफविकार नाशक हुन्छ ।

## चिरौंजी वा प्रियाल

**प्रियालस्तु खरस्कन्धश्चारो बहुलवल्कलः ।**
**राजादनस्तापसेष्टः सन्नकद्रुर्धनुष्पटः ॥८३॥**
**चारः पित्तकफास्रघ्नस्तत्फलं मधुरं गुरु ।**
**स्निग्धं सरं मरुत्पित्तदाहज्वरतृषाऽपहम् ॥८४॥**

**प्रियालमज्जा मधुरो वृष्यः पित्तानिलापहः ।**
**हृद्योऽतिदुर्जरः स्निग्धो विष्टम्भी चामवर्द्धनः ॥८५॥**

प्रियाल, खरस्कन्ध, चार, बहुलवल्कल, राजादन, तापसेष्ट, सन्नकद्रु र धनुष्पट : यी चिरौंजीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पित्तविकार, कफविकार र रक्तविकार नाश गर्दछ , यसको फल गुलियो, पचाउन कठिन, चिल्लो मलमूत्र तलतिर सार्ने तथा वातविकार, पित्तविकार, डाह, जरो र तिर्खा नाशक हुन्छ । यसको काठको गुदी (मज्जा) गुलियो, वीर्यवर्धक तथा पित्तविकार र वातविकार नाशक हुन्छ । यसले मुटुलाई फाइदा गर्दछ तर अति नै ढिलो पच्दछ । यो चिल्लो, विष्टभी र आमविकार बढाउने गुणको हुन्छ ।

## खिर्नी

**राजादनः फलाध्यक्षो राजन्या क्षीरिकाऽपि च ।**
**क्षीरिकायाः फलं वृष्यं बल्यं स्निग्धं हिमं गुरु ॥८६॥**
**तृष्णामूर्च्छामदभ्रान्तिक्षयदोषत्रयास्रजित् ।**

राजादन, फलाध्यक्ष, राजन्या र क्षीरिका : यी खिर्नीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको फल वीर्यवर्द्धक, बलवर्द्धक, चिल्लो, शीतल गर्ने, पचाउन कठिन तथा तिर्खा, मूर्छा, नसा, भ्रम, क्षयरोग, त्रिदोष र रक्तविकार नाशक हुन्छ ।

## विकङ्कत

**विकङ्कतः सुवावृक्षो ग्रन्थिलः स्वादुकण्टकः ॥८७॥**
**स एव यज्ञवृक्षश्च कण्टकी व्याघ्रपादपि ।**
**विकङ्कतफलं पक्वं मधुरं सर्वदोषजित् ॥८८॥**

विकङ्कत, सुवावृक्ष, ग्रन्थिल, स्वादुकण्टक, यज्ञवृक्ष, कण्टकी र व्याघ्रपाद : यी विकङ्कतका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको पाकेको फल गुलियो र सबै दोष नाशक हुन्छ ।

## कमलको बीज

**पद्मबीजं तु पद्माक्षं गालोड्यं पद्मकर्कटी ।**
**पद्मबीजं हिमं स्वादु कषायं तिक्तकं गुरु ॥८९॥**
**विष्टम्भि वृष्यं रूक्षञ्च गर्भसंस्थापकं परम् ।**
**कफवातकरं बल्यं ग्राहि पित्तास्रदाहनुत् ॥९०॥**

पद्मबीज, पद्माक्ष, गालोड्य र पद्मकर्कटी : यी कमलका बीजका संस्कृत पर्यायवाची नामहरू हुन् । यशले शीतल गर्दछ । यो स्वादिलो, टर्रो, तीतो, पचाउन कठिन, विष्टम्भि, वीर्यवर्द्धक, रुखो र विशेषतः गर्भ स्थापक

हुन्छ । यसले कफविकार र वातविकार बढाउँदछ । यसले बल दिन्छ । यो सङ्ग्राही हुन्छ । यसले पित्तविकार, रक्तविकार र डाह नाश गर्दछ ।

## मखाना

**मखान्नं पद्मबीजाभं पानीयफलमित्यपि ।**
**मखान्नं पद्मबीजस्य गुणैस्तुल्यं विनिर्दिशेत् ॥९१॥**

मखान्न, पद्मबीजाभ र पानीयफल : यी मखानाका संस्कृत पर्यायवाची शब्दहरू हुन् । मखानाका गुण कमलको बीज समान हुन्छ भनी जान्नू ।

## सिँगडा

**शृङ्गाटकं जलफलं त्रिकोणफलमित्यपि ।**
**शृङ्गाटकं हिमं स्वादु गुरु वृष्यं कषायकम् ॥९२॥**
**ग्राही शुक्रानिलश्लेष्मप्रदं पित्तास्रदाहनुत् ।**

शृङ्गाटक, जलफल र त्रिकोणफल : यी सिँगडाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो स्वादिलो, पचाउन कठिन, वीर्यवर्द्धक, टर्रो, सङ्ग्राही, शुक्रवर्द्धक, वातकारक, कफकारक तथा पित्तविकार, रक्तविकार डाह नाशक हुन्छ ।

## सेतो चन्द्रकमलको बीज

**उक्तं कुमुदबीजन्तु बुधैः कैरविणीफलम् ॥९३॥**
**भवेत्कुमुद्वतीबीजं स्वादु रूक्षं हिमं गुरु ।**

कुमुदको बीजलाई विद्वानहरूले कैरविणीफल भनेका छन् । यो स्वादिलो, रुखो, शीतल गर्ने र पचाउन कठिन हुन्छ ।

## महुवा

**मधूको गुडपुष्पः स्यान्मधुपुष्पो मधुस्रवः ॥९४॥**
**वानप्रस्थो मधुष्ठीलो जलजेऽत्र मधूलकः ।**
**मधूकपुष्पं मधुरं शीतलं गुरु बृंहणम् ॥९५॥**
**बलशुक्रकरं प्रोक्तं वातपित्तविनाशनम् ।**
**फलं शीतं गुरु स्वादु शुक्रलं वातपित्तनुत् ॥९६॥**
**अहृद्यं हन्ति तृष्णाऽस्रदाहश्वासक्षतक्षयान् ।**

मधूक, गुडपुष्प, मधुपुष्प, मधुस्राव, वानप्रस्थ र मधुष्ठील : यी महुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । पानीमा हुने महुवालाई मधूलक भनिन्छ । महुवाको फूल गुलियो, शीतल गर्ने, पचाउन कठिन, पौष्टिक, बल र शुक्र वर्द्धक तथा वातविकार र पित्तविकार नाशक हुन्छ । यसको फल पनि शीतल गर्ने, पचाउन कठिन, स्वादिलो, वीर्यवर्द्धक तथा वातविकार र पित्तविकार नाशक हुन्छ । यो मुटुका लागि हानिकारक हुन्छ तर तिर्खा, रक्तविकार, डाह, दम, चोटपटक र क्षयरोग ठिक गर्दछ ।

## फाल्सा

**परूषकं तु परुषमल्पास्थि च परापरम् ॥९७॥**
**परूषकं कषायाम्लमामं पित्तकरं लघु ।**
**तत्पक्वं मधुरं पाके शीतं विष्टम्भि बृंहणम् ॥९८॥**
**हृद्यन्तु पित्तदाहास्रज्वरक्षयसमीरहृत् ।**

परूषक, परुष, अल्पास्थि र परापर : यी फाल्साका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको काँचो फल टर्रो र अमिलो हुन्छ । यसले आमविकार र पित्तविकार गर्दछ तर पचाउन हलुका हुन्छ । यसको पाकेको फल पचेपछि गुलियो हुन्छ । यसले शीतल गर्दछ । यो विष्टम्भी, वीर्यवर्द्धक, मुटुका लागि फाइदाजनक, तथा पित्तविकार, डाह, रक्तविकार, जरो, क्षयरोग र वातविकार नाशक हुन्छ ।

## पालेवत

**पालेवतांसतं पुष्पैस्तिन्दुकाभं फलं मतम् ।**
**अन्यन्माणवकं ज्ञेयं महापालेवतं तथा ॥**
**स्वाद्वम्लं शीतमुष्णं च द्विधा पालेवतं गुरु ।**
**यत् स्वादु मधुरं शीतं तदम्लं च तदुष्णकम् ॥**

पालेवतको फूल सेतो हुन्छ । यसको फल तिन्दुको जस्तै हुन्छ । अर्को पालेवत माणवक र महापालेवत भनेर प्रसिद्ध छ । यो मिठो र अमिलो हुन्छ । यो शीतल (गुलियो) र गर्मी गर्ने (अमिलो) गरी दुई थरी हुन्छ । जुन गुलियो हुन्छ त्यसले शीतल गर्दछ तथा जुन अमिलो हुन्छ त्यसले गर्मी गर्दछ । (डा. राजीव दीक्षितले पालेवतको हिन्दी नाम हरपरौरी दिएका छन् जसको नेपाली नाम हरिफल भनिएको पाइन्छ) ।

## किम्बु

**तूतस्थूलं च पूगश्च क्रमुको ब्रह्मदारु च ॥९९॥**
**तूतं पक्वं गुरु स्वादु हिमं पित्तानिलापहम् ।**
**तदेवामं गुरु सरमम्लोष्णं रक्तपित्तकृत् ॥१००॥**

तूत, स्थूल, पूग, क्रमुक, र ब्रह्मदारु : यी किम्बुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको पाकेको फल पचाउन कठिन, स्वादिलो, शीतल गर्ने तथा पित्तविकार र वातविकार नाशक हुन्छ । यसैगरी यसको काँचो फल पनि पचाउन कठिन, मलमूत्र सार्ने, अमिलो, गर्मी गर्ने र रक्तपित्त रोग उब्जाउने गुणको हुन्छ ।

## दारिम

**दाडिमः करको दन्तबीजो लोहितपुष्पकः ।**
**तत्फलं त्रिविधं स्वादु स्वाद्वम्लं केवलाम्लकम् ॥१०१॥**
**तत्तु स्वादु त्रिदोषघ्नं तृड्दाहज्वरनाशनम् ।**
**हृत्कण्ठमुखगन्धघ्नं तर्पणं शुक्रलं लघु ॥१०२॥**
**कषायानुरसं ग्राहि स्निग्धं मेधाबलावहम् ।**
**स्वाद्वम्लं दीपनं रुच्यं किञ्चित्पित्तकरं लघु ॥१०३॥**
**अम्लन्तु पित्तजनकमामं वातकफापहम् ।**

दाडिम, करक, दन्तबीज र लोहितपुष्पक : यी दारिमका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका गुलिया, गुलिया-अमिला र अमिला फल फल्ने गरी तीन जात हुन्छन् । गुलियो स्वादको दारिमले त्रिदोष, तिर्खा, डाह र जरो नाश गर्दछ । यसले मुटुका रोग, घाँटीका रोग र मुखको दुर्गन्ध नाश गर्दछ, तृप्ति दिन्छ, शुक्र बढाउँदछ । यो पचाउन हलुका हुन्छ । टर्रो स्वादको दारिम सङ्ग्राही, चिल्लो, ग्रहण गर्ने क्षमता बढाउने र बलदायक हुन्छ । गुलियो-अमिलो स्वादको दारिम दीपनी, रुचिकर, केही पित्तविकार गर्ने र पचाउन हलुका हुन्छ । अमिलो स्वादको दारिम भने पित्तविकार र आमविकार गर्ने तथा वातविकार र कफविकार नाश गर्ने गुणको हुन्छ ।

## लप्सी

**बहुवारस्तु शीतः स्यादुद्दालो बहुवारकः ॥१०४॥**
**शेलुः श्लेष्मातकश्चापि पिच्छिलो भूतवृक्षकः ।**
**बहुवारो विषस्फोटव्रणवीसर्पकुष्ठनुत् ॥१०५॥**
**मधुरस्तुवरस्तिक्तः केश्यश्च कफपित्तहृत् ।**
**फलमामन्तु विष्टम्भि रूक्षं पित्तकफास्रजित् ॥१०६॥**
**तत्पक्वं मधुरं स्निग्धं श्लेष्मलं शीतलं गुरु ।**

बहुवार, शीत, उद्दाल, बहुवारक, शेलु, श्लेष्मातक, पिच्छिल र भूतवृक्षक : यी लप्सीका संस्कृत पर्यायवाची नामहरू हुन् । लप्सीले विषविकार, खटिरा, घाउ, वीसर्प र कुष्ठ नाश गर्दछ । यो गुलियो, टर्रो र तीतो स्वादको हुन्छ । यसले कपाललाई फाइदा गर्दछ तथा कफविकार र पित्तविकार नाश गर्दछ । यसको काँचो फल विष्टम्भि, रुखो तथा पित्तविकार, कफविकार र रक्तविकार नाशक हुन्छ । पाकेको फल गुलियो, चिल्लो, कफकारक, शीतल गर्ने र पचाउन कठिन हुने हुन्छ ।

## निर्मली

**पयःप्रसादी कतकः कतकं तत्फलं च तत् ॥१०७॥**
**कतकस्य फलं नेत्र्यं जलनिर्मलताकरम् ।**
**वातश्लेष्महरं शीतं मधुरं तुवरं गुरु ॥१०८॥**

पयःप्रसादी, कतक र कतकम् : यी निर्मलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले आँखालाई फाइदा गर्दछ तथा पानीलाई शुद्ध पार्दछ । यसका साथै यसले वातविकार र कफविकार नाश गर्दछ, शीतल गर्दछ । यो गुलियो र टर्रो स्वादको हुन्छ । यो पचाउन कठिन हुन्छ ।

## अङ्गूर

**द्राक्षास्वादुफला प्रोक्ता तथा मधुरसाऽपि च ।**
**मृद्वीका हारहूरा च गोस्तनी चापि कीर्त्तिता ॥१०९॥**
**द्राक्षा पक्वा सरा शीता चक्षुष्या बृंहणी गुरुः ।**
**स्वादुपाकरसा स्वर्या तुवरा सृष्टमूत्रविट् ॥११०॥**
**कोष्ठमारुतकृद् वृष्या कफपुष्टिरुचिप्रदा ।**
**हन्ति तृष्णाज्चरश्वासवातवातास्रकामलाः ॥१११॥**

द्राक्षा, स्वादुफला, मधुरसा, मृद्वीका, हारहूरा र गोस्तनी : यी अङ्गूरका संस्कृत पर्यायवाची नामहरू हुन् । अङ्गूरका पाकेका फलमा मलमूत्र तलतिर सार्ने, शीतल गर्ने, आँखाका लागि हितकारी, पौष्टिक र पचाउन कठिन हुने गुण हुन्छ । यो पचेपछि पनि गुलियो हुन्छ । यसले स्वरलाई लाभ गर्दछ । टर्रो हुन्छ र दिसापिसाब बढी गराउँदछ । यसले पेटभित्र बायु बढाउँदछ, वीर्य बढाउँदछ, कफलाई पुष्ट पार्दछ र रुची जगाउँदछ । यसले तिर्खा, जरो, दम, वातविकार, वातरक्त र कमलपित्त रोग नाश गर्दछ ।

**कृच्छ्रास्रपित्तसंमोहदाहशोषमदात्ययान् ।**
**आमा स्वल्पगुणा गुर्वी सैवाम्ला रक्तपित्तकृत् ॥११२॥**
**वृष्या स्याद् गोस्तनी द्राक्षा गुर्वी च कफपित्तनुत् ।**
**अबीजाऽन्या स्वल्पतरा गोस्तनीसदृशी गुणैः ॥११३॥**
**द्राक्षा पर्वतजा लघ्वी साऽम्ला श्लेष्माम्लपित्तकृत् ।**
**द्राक्षा पर्वतजा यादृक् तादृशी करमर्दिका ॥११४॥**

यसले कृच्छ्र, रक्तपित्त, भ्रम, डाह, सुजन र मदात्यय नाश गर्दछ । काँचो अङ्गूर कम गुनिलो, पचाउन कठिन र अमिलो भए रक्तपित्त गराउने गुणको हुन्छ । मुनक्का (गोस्तनी) वीर्यवर्धक, पचाउन कठिन तथा कफविकार र पित्तविकार नाशक हुन्छ । गेडा नहुने (वा कम हुने) अङ्गूर (वा किसमिस) मा पनि मुनक्काकै जस्ता तर केही कम गुण हुन्छन् । पर्वते अङ्गूर पचाउन हलुका, अमिलो तथा कफविकार र अम्लपित्त गराउने गुणको हुन्छ । करमर्दिका (करौंदी) का गुण पनि पर्वते अङ्गूरका जस्तै हुन्छन् ।

## खजुर

भूमिखर्जूरीका स्वाद्वी दुरारोहाः मृदुच्छदा ।
तथा स्कन्धफला काककर्कटी स्वादुमस्तका ॥११५॥
पिण्डखर्जूरिका त्वन्या सा देशे पश्चिमे भवेत् ।
खर्जुरी गोस्तनाकारा परद्वीपादिहागता ॥११६॥
जायते पश्चिमे देशे सा छोहारेति कीर्त्त्यते ।
खर्जूरीत्रितयं शीतं मधुरं रसपाकयोः ॥११७॥
स्निग्धं रुचिकरं हृद्यं क्षतक्षयहरं गुरु ।
तर्पणं रक्तपित्तघ्नं पुष्टिविष्टम्भशुक्रदम् ॥११८॥
कोष्ठमारुतहृद् बल्यं वान्तिवातकफापहम् ।
ज्वरातिसारक्षुत्तृष्णाकासश्वासनिवारकम् ॥११९॥
मदमूर्च्छामरुत्पित्तमद्याद्भूतगदान्तकृत् ।
महतीभ्यां गुणैरल्पास्वल्पखर्जूरिका स्मृता ॥१२०॥

भूमिखर्जूरिका, स्वाद्वी, दुरारोहा, मृदुच्छदा, स्कन्धफला, काककर्कटी र स्वादुमस्तका : यी खजुरका संस्कृत पर्यायवाची नामहरू हुन् । अन्य एक जातको खजुर पश्चिम देश (अफगानिस्तान) तिर उब्जा हुन्छ त्यसलाई पिण्डखर्जूरिका भनिन्छ । तेश्रो जातको गाई थुनको मुन्टो जत्रो आकारको, अर्को द्वीपबाट भारतीय द्वीपमा आएको खजुरलाई छोकडा भनिन्छ । तीन वटै जातका खजुरले शीतल गर्दछ । यी खाँदा शुरुमा र पचेपछि पनि गुलिया हुन्छन् । यी चिल्ला, रुचिकर, मुटुलाई फाइदा गर्ने, चेटपटक ठिक गर्ने, क्षयरोग नाशक र पचाउन कठिन हुन्छन् । यिनले तृप्ती दिन्छन् तथा रक्तविकार र पित्तविकार नाश गर्दछन् । यी पुष्टिदायक, विष्टम्भि र शुक्रवर्द्धक हुन्छन् । यिनले पेटको वायुविकार नाश गर्दछन्, बल दिन्छन् तथा वाकवाकी, वातविकार र कफविकार नाश गर्दछन् । यिनले जरो, अतिसार, भोक, तिर्खा, खोकी र दम ठिक गर्दछन् । नसा, बेहोसी, वातपित्त र मदजन्य रोग नाश गर्दछन् । दुबै खालका ठूला खजुरभन्दा कम गुनिलो हुनाले गर्दा अर्को सानो जातको खजुरलाई स्वल्पखर्जूरिका भनिन्छ ।

खर्जूरीतरुतोयं तु मदपित्तकरं भवेत् ।
वातश्लेष्महरं रुच्यं दीपनं बलशुक्रकृत् ॥१२१॥
सुलेमानी तु मृदुला दलहीनफला च सा ।
सुलेमानी श्रमभ्रान्तिदाहमूर्च्छाऽस्रपित्तहृत् ॥१२२॥

खजुरको वृक्षको पानी रुचीकारक, पाचकाग्नि बाल्ने, नसा लगाउने, पित्तविकार उब्जाउने, वातविका नाशक, कफविकार नाशक, रुचिकर, दीपन, बलदायक र शुक्रवर्द्धक हुन्छ । सुलेमानी नामक सानो जातको खजुर जसलाई सुलेमानी, खर्जूरी, मृदुला वा दलहीनफला पनि भनिन्छ त्यो खजूरले थकाई, भ्रम, डाह, बेहोसी र रक्तपित्त नाश गर्दछ ।

### कागजी बदाम

वातादौ वातवैरी स्यान्नेत्रोपमफलस्तथा ।

**वातादः उष्णः सुस्निग्धो वातघ्नः शुक्रकृद् गुरुः ॥१२३॥**
**वातादमज्जा मधुरो वृष्यः पित्तानिलापहः ।**
**स्निग्धोष्णः कफकृन्ननेष्टो रक्तपित्तविकारिणाम् ॥१२४॥**

वाताद, वातवैरी र नेत्रोपमफल : यी मदीसे बदामका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले गर्मी गर्दछ । यो चिल्लो हुन्छ । यसले वातविकार नाश गर्दछ र शुक्र बढाउँदछ । यो पचाउन कठिन हुन्छ । बदामको गुदी गुलियो, वीर्यवर्द्धक, त्तिविकार नाशक, वातविकार नाशक, चिल्लो, गर्मी गर्ने र कफकारी हुन्छ । यो रक्तपित्त रोगीका लागि हितकर हुँदैन ।

## स्याउ

**मुष्टिप्रमाणं बदरं सेवं सिवितिकाफलम् ।**
**सेवं समीरपित्तघ्नं बृंहणं कफकृद् गुरु ॥१२५॥**
**रसे पाके च मधुरं शिशिरं रुचिशुक्रकृत् ।**

मुष्टिप्रमाण, बदर, सेव, र सिवितिकाफल : यी स्याउका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वातविकार र पित्तविकार नाश गर्दछ । यो पौष्टिक, कफकारी र पचाउन कठिन हुन्छ । यो शुरुमा र पचेपछि पनि गुलियो हुन्छ । यसले शीतल गर्दछ, रुची जगाउँदछ र शुक्र उत्पन्न गर्दछ ।

## नासपाती

**अमृतफलं लघु वृष्यं सुस्वादु त्रीन्हरेद्दोषान् ॥१२६॥**
**देशेषु मुद्गलानां-बहुलं तल्लभ्यते लोकैः ।**

नासपाती पचाउन हलुका, वीर्यवर्द्धक, स्वादिलो र त्रिदोष नाशक हुन्छ । मुगलहरूको देशमा मानिस यसलाई सहजै पाउँदछन् ।

## पीलु

**पीलुर्गुडफलः स्रंसी तथा शीतफलोऽपि च ॥१२७॥**
**पीलु श्लेष्मसमीरघ्नं पित्तलं भेदि गुल्मनुत् ।**
**स्वादु तिक्तञ्च यत्पीलु तन्नात्युष्णं त्रिदोषहृत् ॥१२८॥**

पीलु, गुडफल, संस्री र शीतफल : यी पीलुका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले कफविकार र वातविकार नाश गर्दछ तर पित्तविकार बढाउँदछ । यो भेदनी हुन्छ र गुल्म ठिक गर्दछ । जुन् दाँते ओखर स्वादिलो र तीतो हुन्छ त्यो उतिसारो गर्मी गर्ने पनि हुँदैन र त्रिदोष नाशक हुन्छ ।

## ओखर

**पीलुः शैलभवोऽक्षोटः कर्परालश्च कीर्तितः ।**
**अक्षोटकोपि वातादसदृशः कफपित्तकृत् ॥१२९॥**

पर्वततिर हुने पीलुलाई अक्षोट र कर्पराल भनिन्छ । यो मदिसे बदाम जस्तै गुणको हुन्छ । यसले कफविकार र पित्तविकार बढाउँदछ ।

## बिमिरो

**बीजपूरो मातुलुङ्गो रुचकः फलपूरकः ।**
**बीजपूरफलं स्वादु रसेऽम्लं दीपनं लघु ॥१३०॥**
**रक्तपित्तहरं कण्ठजिह्वाहृदयशोधनम् ।**
**श्वासकासारुचिहरं हृद्यं तृष्णाहरं स्मृतम् ॥१३१॥**

बीजपूर, मातुलुङ्ग, रुचक र फलपूरक : यी बिमिरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो स्वादिलो, अमिलो, दीपनी र पचाउन हलुका हुन्छ । यसले विशेषतः रक्तपित्त ठिक गर्दछ तथा घाँटी, जिभ्रो र मुटुलाई सफा पार्दछ । यसले दम, खोकी र अरुची नाश गर्दछ, मुटुलाई फाइदा गर्दछ र तिर्खा मेट्दछ ।

## मधुबिमिरो

**बीजपूरोऽपरः प्रोक्तो मधुरो मधुकर्कटी ।**
**मधुकर्कटिका स्वाद्वी रोचनी शीतला गुरुः ॥१३२॥**
**रक्तपित्तक्षयश्वासकासहिक्काभ्रमापहा ।**

अर्को जातको एकथरी बिमिरोलाई मधुर र मधुकर्कटी भनिन्छ । यो स्वादिलो, रुचिकर, शीतल गर्ने, पचाउन कठिन तथा रक्तपित्त, क्षयरोग, दम, खोकी, बाडुली र भ्रम नाशक हुन्छ ।

## ज्यामिर

**स्याज्जम्बीरो दन्तशठो जम्भजम्भीरजम्भलाः ॥१३३॥**
**जम्बीरमुष्णं गुर्वम्लं वातश्लेष्मविबन्धनुत् ।**
**शूलकासकफोत्क्लेशच्छर्दितृष्णाऽमदोषजित् ॥१३४॥**
**आस्यवैरस्यहृत्पीडावह्निमान्द्यक्रिमीन् हरेत् ।**
**स्वल्पजम्बीरिका तद्वत्तृष्णाच्छर्दिनिवारिणी ॥१३५॥**

जम्बीर, दन्तशठ, जम्भ, जम्भीर र जम्भल : यी ज्यामिरका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले गर्मी गर्दछ । यो पचाउन कठिन र अमिलो हुन्छ । यसले वातविकार, कफविकार र विबन्ध नाश गर्दछ । यसले शूल, खोकी, कफविकार, वाकवाकी, तिर्खा र आमविकार माथि विजय प्राप्त गर्दछ । यसले मुखको बिग्रेको

स्वाद, मुटु दुःखाई, कमजोर पाचनशक्ति र कीरा नाश गर्दछ । सानो खालको ज्यामिरमा पनि यिनै गुण हुन्छन् । विशेष गरी यसले तिर्खा र वाकवाकी नाश गर्दछ ।

## कागती

**निम्बूः स्त्री निम्बुकं क्लीबे निम्बूकमपि कीर्त्तितम् ।**
**निम्बूकमम्लं वातघ्नं दीपनं पाचनं लघु ॥१३६॥**

निम्बू (स्त्रीलिङ्गमा), निम्बुक (नपुंसकलिङ्गमा) र निम्बूक : यी कागतीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमिलो, वातनाशक, दीपनी, पाचनी र पचाउन हलुका हुन्छ ।

**निम्बुकं कृमिसमूहनाशनं तीक्ष्णमम्लमुदरग्रहापहम् ।**
**वातपित्तकफशूलिने हितं कष्टनष्टरुचिरोचनं परम् ॥१३७॥**
**त्रिदोषवह्निक्षयवातरोगनिपीडितानां विषविह्वलानाम् ।**
**मन्दानले बद्धगुदे प्रदेयं विषूचिकायां मुनयो वदन्ति ॥१३८॥**

कागतीले कीराको समूहलाई नाश गर्दछ, तिक्खर हुन्छ, अमिलो हुन्छ, पेटका पीडा नाश गर्दछ, ग्रहबाधा नाश गर्दछ । यो वातविकार, पित्तविकार र कफजन्य शूल हुनेलाई हितकारी हुन्छ । कठिनाईपूर्वक जसको अन्नप्रति अरुची भएको छ यसले तिनलाई राम्ररी रुची जगाउँदछ । यसले त्रिदोष भएका, पाचन शक्ति नाश हुने, क्षयरोगी, वातरोगी, विषले पीडित पाचन शक्ति कमजोर हुने, कब्जियत हुने र हैजाका रोगीलाई कागती खुवाउनु लाभदायक हुन्छ भनेर मुनिजन भन्दछन् ।

## मोसम (वा जुनार)

**मिष्टनिम्बूफलं स्वादु गुरु मारुतपित्तनुत् ।**
**गलरोगविषध्वंसिकफोत्क्लेशि च रक्तहृत् ॥१३९॥**
**शोषारुचितृषाच्छर्दिहरं बल्यञ्च बृंहणम् ।**

जुनार वा मोसमलाई संस्कृतमा मिष्टनिम्बू भनिन्छ । यो स्वादिलो, पचाउन कठिन, वातविकार एवं पित्तविकार नाशक, घाँटीका रोग एवं विषविकार नाशक, कफविकार गर्ने, रक्तविकार, सुजन, अरुची, तिर्खा एवं वाकवाकी नाशक तथा बलदायक र पौष्टिक हुन्छ ।

## कमरख

**कर्मरङ्गं शिरालं च बृहदम्लं रुजाकरम् ॥१४०॥**
**कर्मरङ्गं हिमं ग्राहि स्वाद्वम्लं कफवातहृत् ।**

कर्मरङ्ग, शिराल, बृहदम्ल र रुजाकर : यी कमरखका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो सङ्ग्राही, स्वादिलो, अमिलो तथा कफविकार र वातविकार नाशक हुन्छ ।

**अमिली**

**अम्लिका चुक्रिकाऽम्ली च चुका दन्तशठाऽपि च ॥१४१॥**
**अम्ला च चिञ्चिका चिञ्चा तिन्तिडीका च तिन्तिडी ।**
**अम्लिकाऽम्ला गुरुर्वातहरी पित्तकफास्रकृत् ॥१४२॥**
**पक्वा तु दीपनी रूक्षा सरोष्णा कफवातनुत् ।**

अम्लिका, चुक्रिका, अम्ली, चुक्रा, दन्तशठा, अम्ला, चिञ्चिका, चिञ्चा, तिन्तिडीका र तिन्तिडी : यी अमिलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अमिलो, पचाउन कठिन, वातविकार नाशक तथा पित्तविकार, कफविकार र रक्तविकार गराउने गुणको हुन्छ । पाकेको अमिली भने दीपनी, रुखो, गर्मी गर्ने तथा कफविकार र वातविकार नाश गर्ने गुणको हुन्छ ।

**अम्लवेतस (पदमचाल्नु वा सङ्ल्वेत्रो ?)**

**स्यादम्लवेतसश्चुक्रं शतवेधि सहस्रनुत् ॥१४३॥**
**अम्लवेतसमत्यम्लं भेदनं लघु दीपनम् ।**
**हृद्रोगशूलगुल्मघ्नं पित्तलं लोमहर्षणम् ॥१४४॥**
**रूक्षं विण्मूत्रदोषघ्नं प्लीहोदावर्त्तनाशनम् ।**
**हिक्काऽऽनाहारुचिश्वासकासाजीर्णवमिप्रणुत् ॥१४५॥**
**कफवातामयध्वंसिच्छागमांसद्रवत्वकृत् ।**
**चणकाम्लगुणं ज्ञेयं लोहसूचीद्रवत्वकृत् ॥१४६॥**

अम्लवेतस, चुक्र, शतवेधि र सहस्रनुत् : यी पदमचाल्नु (?) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति नै अमिलो, भेदनी, पचाउन हलुका, दीपनी तथा मुटुका रोग, शूल र गुल्म नाशक हुन्छ । यसले पित्तविकार बढाउँदछ र रौं नै ठाडा हुनेगरी जीउलाई सिरिङ्ग पार्दछ । यो रुखो हुन्छ । यसले दिसापिसाबका विकार, फियोका रोग, उदावर्त, बाडुली, आनाह, अरुची, दम, खोकी, अजीर्ण र वाकवाकी नाश गर्दछ । यसले कफविकार र वातविकार नाश गर्दछ तथा बोकाको मासुलाई गाल्दछ । यसका गुण चनाको खार सरह हुन्छन् र फलामको सियोलाई समेत गलाउँदछ ।

**वृक्षाम्ल (चुक-अमिलो ?)**

**वृक्षाम्लं तिन्तिडीकञ्चचुक्रं स्यादम्लवृक्षकम् ।**
**वृक्षाम्लमाममम्लोष्णं वातघ्नं कफपित्तलम् ॥१४७॥**
**पक्वन्तु गुरु संग्राहि कटुकं तुवरं लघु ।**
**अम्लोष्णं रोचनं रूक्षं दीपनं कफवातकृत् ॥१४८॥**

**तृष्णाऽर्शोग्रहणीगुल्मशूलहृद्रोगजन्तुजित् ।**

वृक्षाम्ल, तिन्तिडीक, चुक्र र अम्लवृक्षक : यी चुक अमिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो आमविकार गर्ने, अमिलो, गर्मी गर्ने, वातविकार नाशक, कफविकार गर्ने र पित्तविकार गर्ने गुणको हुन्छ । पाकेको अवस्थामा पचाउन कठिन, सङ्ग्राही, पिरो र थोरै टर्रो हुन्छ । यो गर्मी गर्ने, रुचिकर, रुखो, दीपनी तथा कफविकार र ातविकार गर्ने गुणको हुन्छ । यसको पाकेको फलले तिर्खा, अल्काई, ग्रहणी, गुल्म, शूल, मुटुका रोग र कीरा नाश गर्दछ ।

## चतुर्अम्ल वा पञ्चाम्ल

**अम्लवेतसवृक्षाम्लबृहज्जम्बीरनिम्बुकैः ॥१४९॥**
**चतुरम्लं हि पञ्चाम्लं बीजपूरयुतैर्भवेत् ।**

अम्लवेत, वृक्षाम्ल, ठूलो ज्यामिर र कागतीको समष्टिगत योगलाई 'चतुराम्ल' भनिन्छ । यसमा बिमिरो मिसाएपछि यो 'पञ्चाम्ल' हुन्छ ।

## फलका गुण र दोष

**फलेषु परिपक्वं यद् गुणवत्तदुदाहृतम् ॥१५०॥**
**बिल्वादन्यत्र विज्ञेयमामं तद्धि गुणाधिकम् ।**
**फलेषु सरसं यत्स्याद् गुणवत्तदुदाहृतम् ॥१५१॥**
**द्राक्षाबिल्वशिवाऽदीनां फलं शुष्कं गुणाधिकम् ।**
**फलतुल्यगुणं सर्वं मज्जानमपि निर्दिशेत् ॥१५२॥**
**फलं हिमाग्निदुर्वातव्यालकीटादिदूषितम् ।**
**अकालजं कुभूमीजं पाकातीतं न भक्षयेत् ॥१५३॥**
**(पाकातीतं : पाकमतिक्रम्य स्थितम्)**

फलहरूमा पाकेको फल काँचोको तुलनामा बढी गुनिलो हुन्छ । तर यो नियम बेलका फलका हकमा लागु हुँदैन । बेलको फल काँचो नै बढी गुनिलो हुन्छ । फलको रस सुकेको फलको भन्दा ताजा फलको गुनिलो हुन्छ । तर दाख, बेल, हर्रो आदिको भने सुकेको फलको रस बढी गुनिलो हुन्छ । फलको गुण समान नै त्यसको गुदीको पनि गुण हुन्छ भनी जान्नू । जुन फललाई हिउँ, आगो, आँधी, सर्प, कीरा आदिले दूषित बनाएको हुन्छ अथवा जुन फल कुसमयमा वा खराब जमिनमा फलेको हुन्छ अथवा धेरै पाकेर बिग्रेको हुन्छ त्यस्तो फल कहिल्यै नखानू । (यहाँ पाकातीत भन्नाले पाक्ने समय-सीमा नाघेको भनी अर्थ लिनु पर्दछ) ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे आम्रादिवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको आँप आदि वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ धात्वादिवर्ग ॥
## (धातु आदि वर्ग)
### धातुहरू

**स्वर्णं रूप्यञ्च ताम्रं च रङ्गं यशदमेव च ।**
**सीसं लौहञ्च सप्तैते धातवो गिरिसम्भवः ॥१॥**

सुन, चाँदी, तामा, राँग, जस्ता, सीसा र फलाम : यी सात धातु पर्वत (भूगर्भ) मा उत्पन्न हुने धातुहरू हुन् ।

### धातुको परिभाषा

**वली पलित खालित्य कार्श्याबल्य जरामयान् ।**
**निवार्य देहं दधति नृणां तद्धातवो मताः ॥२॥**

(छाला) चाउरी पर्ने, (कपाल) फुल्ने, (कपाल) खुइलने, दुब्लाउने, निर्बल हुने, बुढ्यौली र रोग : यी कुरालाई रोकेर (वा हटाएर) मानिसको शरीरलाई स्थिर राख्ने द्रव्यलाई "धातु" भनिन्छ ।

### सुनको उत्पत्ति कथा

**पुरा निजाश्रमस्थानां सप्तर्षीणां जितात्मनाम् ।**
**पत्नीर्विलोक्य लावण्यलक्ष्मीसम्पन्नयौवनाः ॥३॥**
**कन्दर्पदर्पविध्वस्तचेतसो जातवेदसः ।**
**पतितं यद्धरापृष्ठे रेतस्तद्धेमतामगात् ॥४॥**
**कृत्रिमञ्चापि भवति तद्रसेन्द्रस्य वेधतः ।**

प्राचीन कालमा एकताका इन्द्रियलाई वशमा राखेका सप्तर्षिहरू आफ्ना आश्रममा बसिरहेका थिए । त्यसबेला सुन्दरता र शोभाले भरिपूर्ण पूर्ण तरुनी तिनका पत्निहरूलाई देखेर कामदेवबाट जितेन्द्रिय स्वभाव नष्ट भएका अग्निको जुन वीर्य स्खलित भई पृथ्वीमा खस्यो, त्यही वीर्य सुन हुन पुग्यो अर्थात् त्यसैबेला सुन उत्पन्न भएको हो । पारोको सम्मिश्रणबाट कृत्रिम वा नक्कली सुन पनि बन्दछ । (सप्तर्षि : मरीचि, अङ्गिरा, अत्रि, पुलस्त्य, पुलह, क्रतु र वशिष्ठ) । (विज्ञानले भने यसलाई मानवले बनाउन नसकेको एक पदार्थ जो विशेष तत्व भएको तारा विष्फोट हुँदा अन्तरीक्षमा बन्ने गर्दछ भनेको छ । अग्निले आफ्नो सत् छोड्नु अर्थात् तेजिलो पन गुमाउनु नै तारा विष्फोटन हुनु हो । कतै कतै सप्तर्षिलाई विशेष खालका ताराहरूको समूह भनिएको छ । तिनका पत्नी भनेको ती ताराको शक्ति (नेचरल पावर) हो ।)

### सुनका पर्यायवाची शब्दहरू :

**स्वर्णं सुवर्णं कनकं हिरण्यं हेम हाटकम् ॥५॥**
**तपनीयं च गाङ्गेयं कलधौतञ्च काञ्चनम् ।**

**चामीकरं शातकुम्भं तथा कार्त्तस्वरं च तत्॥६॥**
**जाम्बूनदं जातरूपं महारजतमित्यपि ।**

स्वर्ण, सुवर्ण, कनक, हिरण्य, हेम, हाटक, तपनीय, गाङ्गेय, कलधौत, काञ्चन, चामीकर, शातकुम्भ, कार्त्तस्वर, जाम्बुनद, जातरूप र महारजत : यी सुनका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**उत्तम सुनका गुण :**

**दाहे रक्तं सितं छेदे निकषे कुङ्कुमप्रभम्॥७॥**
**तारशुल्बोज्झितं स्निग्धं कोमलं गुरु हेम सत् । (सत् : उत्तमम्)**

तताउँदा रातो, काट्दा सेतो, कसीमा घोट्दा केसरी जस्तो (पहेँलो), चाँदी वा तामा नमिसाइएको, चिल्लो, कोमल र तौलँदा गह्रौं हुने सुन नै उत्तम सुन हो ।

**कमसल सुनका गुण :**

**तच्छ्वेतं कठिनं रूक्षं विवर्णं समलं दलम्॥८॥**
**दाहे छेदेऽसितं श्वेतं कषे त्याज्यं लघु स्फुटम् ।**
**(दलं : जारे इति लोके । स्फुटं : यद्घनाहतं स्फुटति)**

जुन सुन हेर्नमा केही सेतो, कडा, रुखो, रङ उग्लिने खालको, मैलो, गाँठागुँठी परेको, पोल्दा वा काट्दा कालो, घोट्दा सेतो, जोख्दा हलुको र घनले हिर्काउँदा फुट्ने खालको हुन्छ, त्स्तो सुनलाई निकृष्ट सुन सम्झी ओखतीका लागि त्याग गर्नू (प्रयोग नगर्नू) ।

**स्वर्णभष्मका फाइदा :**

**सुवर्णं शीतलं वृष्यं बल्यं गुरु रसायनम्॥९॥**
**स्वादु तिक्तं च तुवरं पाके च स्वादु पिच्छिलम् ।**
**पवित्रं बृंहणं नेत्र्यं मेधास्मृतिमतिप्रदम्॥१०॥**
**हृद्यमायुष्करं कान्तिवाग्विशुद्धिस्थिरत्वकृत् ।**
**विषद्वयक्षयोन्मादत्रिदोषज्वरशोषजित्॥११॥**

राम्ररी पोली खरानी बनाइएको सुन मिठो, तीतो र टर्रो स्वादको हुन्छ । यस्तो स्वर्णभष्म पचेपछि गुलियो, चिप्लो, पवित्र, पौष्टिक, आँखाका लागि फाइदाजनक, दिमागको ग्रहण गर्ने शक्ति र सम्झने शक्ति बढाउने तथा बुद्धि बढाउने गुणको हुन्छ । यो मुटुका लागि हितकर, आयुवर्द्धक, कान्तिवर्द्धक तथा स्वर शुद्ध र स्थिर पार्ने गुणको हुन्छ । यसले स्थावर र जङ्गम दुवैथरी विषविकार, क्षयरोग, उन्माद, त्रिदोष, जरो र सुजन समेत ठिक गर्दछ ।

### विधि नपुऱ्याई बनाइएको स्वर्णभष्मका बेफाइदा :

बलं सवीर्यं हरते नराणां रोगव्रजान् पोषयतीह काये ।
असौख्यकृच्चापि सदा सुवर्णमशुद्धमेतन्मरणञ्च कुर्यात् ॥१२॥
असम्यङ्मारितं स्वर्णं बलं वीर्य्यञ्च नाशयेत् ।
करोति रोगान् मृत्युं च तद्धन्याद्यत्नतस्ततः ॥१३॥

विधिपूर्वक तयार नगरिएको स्वर्णभष्मले मानिसको बल र वीर्य नष्ट गर्दछ तथा शरीरमा रोगलाई मद्दत गर्दछ । यसले सधैं दुःख दिन्छ र अन्त्यमा मार्दछ । राम्ररी शुद्ध नगरी तयार पारिएको स्वर्णभष्मले पनि बल र वीर्य नाश गर्दछ । यसले रोग र मृत्यु दिन्छ । यसैले स्वर्णभष्म बनाउँदा विशेष ध्यान दिनु पर्दछ ।

## चाँदी

### चाँदीको उत्पत्ति

त्रिपुरस्य वधार्थाय निर्निमेषैर्विलोचनैः ।
निरीक्षयामास शिवः क्रोधेन परिपूरितः ॥१४॥
अग्निस्तत्कालमपतत्तस्यकस्माद्विलोचनात् ।
ततो रुद्र : समभवद् वैश्वानर इव ज्वलन् ॥१५॥
द्वितीयादपतन्नेत्रादश्रुबिन्दुस्तु वामकात् ।
तस्माद्रजतमुत्पन्नमुक्तकर्मसु योजयेत् ॥१६॥

त्रिपुरासुरलाई मार्न भनी रिसाएर आँखा नझिम्क्याई उसलाई हेर्दा भगवान् शिवका एक आँखाबाट आगो निस्कियो । त्यसबाट भगवान् शिव अग्निझैं प्रज्वलित हुनु भयो । दोश्रो आँखाबाट आँशुका थोपा खसे । त्यही थोपाबाट चाँदी उत्पन्न भयो । यसलाई वैद्यहरूले शास्त्रसम्मत कर्ममा उपयोग गर्नु पर्दछ ।

### नक्कली चाँदी

कृत्रिमं च भवेत्तद्धि वङ्गादिरसयोगतः ।
राँग आदि धातुमा पारो मिसाएर नक्कली चाँदी बनाइन्छ ।

### चाँदीका संस्कृत पर्यायवाची नामहरू

रूप्यं तु रजतं तारं चन्द्रकान्ति सितप्रभम् ॥१७॥
रूप्य, रजत, तार, चन्द्रकान्ति र सितप्रभ : यी चाँदीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### असल र कमसल चाँदी

**गुरु स्निग्धं मृदु श्वेतं दाहे छेदे घनक्षमम् ।**
**वर्णाढ्यं चन्द्र वत्स्वच्छं रूप्यं नवगुणं शुभम् ॥१८॥**
**कठिनं कृत्रिमं रूक्षं रक्तं पीतदलं लघु ।**
**दाहच्छेदघनैर्नष्टं रूप्यं दुष्टं प्रकीर्त्तितम् ॥१९॥**

जोख्दा गह्रौं, चिल्लो, नरम, तताउँदा वा काट्दा सेतो, घनले पिट्दा चोट सहने (वा नटुक्रिने), उत्तम वर्णको र चन्द्रमा (किरण) झैं स्वच्छ चमक भएको चाँदी उत्तम चाँदी हुन्छ । कडाखालको, कृत्रिम, रुखो, रातो, पहेँलो, जोरन हालिएको, तौलँदा हलुका तथा तताउँदा वा काट्दा वा पिट्दा टुक्राटुक्रा हुने चाँदी कमसल वा खराब चाँदी हो ।

**रजतभष्म**

**रूप्यं शीतं कषायाम्लं स्वादुपाकरसं सरम् ।**
**वयसः स्थापनं स्निग्धं लेखनं वातपित्तजित् ॥**
**प्रमेहादिकरोगांश्च नाशयत्यचिराद् ध्रुवम् ॥२०॥**

राम्ररी प्रशोधित रजतभष्म टर्रो, अमिलो र गुलियो हुन्छ । यो पचेपछि हुने रस पनि गुलियो नै हुन्छ । यसले शीतल गर्दछ । मलमूत्र सार्दछ । यसमा जवानीलाई स्थिर राख्ने, चिल्लो, लेखनी तथा वातविकार, पित्तविपकार र प्रमेह आदि रोगलाई चाँडै र निश्चित तरिकाले नाश गर्ने गुण हुन्छ ।

**तारं शरीरस्य करोति तापं विध्वंसनं यच्छति शुक्रनाशम् ।**
**वीर्यं बलं हन्ति तनोश्च पुष्टिं महागदान्पोषयति ह्यशुद्धम् ॥२१॥**

राम्ररी प्रशोधन नगरिएको वा नबनाइएको रतजभस्मले शरीरमा जलन हुन्छ तथा शुक्र, वीर्य, बल र पुष्टता नाश गर्दछ । यसले महारोगलाई समेत जन्माउँदछ ।

**तामा**
**तामाको उत्पत्ति कथा**

**शुक्रं यत् कार्त्तिकेयस्य पतितं धरणीतले ।**
**तस्मात्ताम्रं समुत्पन्नमिदमाहुः पुराविदः ॥२२॥**

भगवान् कार्तिकेयको जुन् शुक्र पृथ्वीमा खस्यो त्यसबाट तामाको उत्पत्ति भयो भनी पुराणविज्ञहरू बताउँदछन् ।

**पर्यायवाची नामहरू :**

**ताम्रमौदुम्बरं शुल्बमुदुम्बरमपि स्मृतम् ।**

रविप्रियं म्लेच्छमुखं सूर्यपर्यायनामकम् ॥२३॥

ताम्र, औदुम्बर, शुल्ब, उदुम्बर, रविप्रिय, म्लेच्छमुख र सूर्यका पर्यायवाची शब्द : यी तामाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## उत्तम तामा

जपाकुसुमसङ्काशं स्निग्धं मृदु घनक्षमम् ।
लौहनागोज्भितं ताम्रं मारणाय प्रशस्यते ॥२४॥

बाह्रमासे फूलजस्तो रातो, चिल्लो, नरम, घनको चोट सहन सक्ने तथा फलाम र सिसा नमिसाइएको तामा ताम्रभष्म बनाउनका लागि उत्तम हुन्छ ।

## कमसल तामा

कृष्णं रूक्षमतिस्तब्धं श्वेतञ्चापि घनासहम् ।
लौहनागयुतञ्चेति शुल्बं दुष्टं प्रकीर्त्तितम् ॥२५॥

कालो, रुखो, अति कडा, सेतो, घनको चोट नसहने तथा फलाम र सिसा मिसाइएको तामा कमसल तामा हो भनिएको छ ।

## असल ताम्रभष्म

ताम्रं कषायं मधुरं च तिक्तमम्लं च पाके कटु सारकं च ।
पित्तापहं श्लेष्महरं च शीतं तद्रोपणं स्याल्लघु लेखनञ्च ॥२६॥
पाण्डूदरार्शोज्वरकुष्ठकासश्वासक्षयान् पीनसमम्लपित्तम् ।
शोथं कृमिं शूलमपाकरोति प्राहुः परे बृंहणमल्पमेतत् ॥२७॥

राम्ररी भष्म गरिएको ताम्रभष्म टर्रो, तीतो र अमिलो हुन्छ । यो पचेपछि पिरो हुन्छ । यसले मलमूत्र सार्दछ पित्तविकार र कफविकार नाश गर्दछ । शीतल गर्दछ । घाउ भर्दछ । पचाउन हलुका हुन्छ । लेखनी हुन्छ । यसले पाण्डु, पेटका रोग, अल्काई, जरो, कुष्ठ, खोकी, दम,, क्षयरोग, पिनास, अम्लपित्त, सुजन, कीरा र शूल नाश गर्दछ । कोही कोही यो थोरै पौष्टिक हुन्छ पनि भन्दछन् ।

## कमसल ताम्रभष्म

एको दोषो विषे ताम्रेत्वसम्यङ्मारितेऽष्ट ते ।
दाहः स्वेदोऽरुचिर्मूर्च्छाक्लेदो रेको वमिर्भ्रमः ॥२८॥

विषमा एउटै दोष हुन्छ तर राम्ररी भष्म नगरिएको ताम्रभष्ममा डाह गर्ने, पसिना निकाल्ने, अरुची बढाउने, बेहोस पार्ने, शरीर सुकाउने, दिसा लगाउने, बान्ता गराउने र भ्रम गरायने गरी आठ दोष हुन्छन् ।

## राँग

**रङ्गं वङ्गं त्रपु प्रोक्तं तथा पिच्चटमित्यपि ।**
**क्षुरकं मिश्रकं चापि द्विविधं वङ्ग मुच्यते ॥२९॥**
**उत्तमं क्षुरकं तत्र मिश्रकं त्ववरं मतम् ।**

रङ्ग, वङ्ग, त्रपु, र पिच्चट : यी राँगका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका क्षुरक र मिश्रक गरी दुई जात हुन्छन् । यीमध्ये क्षुरक उत्तम र मिश्रक निकृष्ट हुन्छ भनिन्छ ।

**रङ्गं लघु सरं रूक्षमुष्णं मेहकफक्रिमीन् ॥३०॥**
**निहन्ति पाण्डुं सश्वासं चक्षुष्यं पित्तलं मनाक् ।**
**सिंहो यथा हस्तिगणं निहन्ति तथैव वङ्गोऽखिलमेहवर्गम् ॥३१॥**
**देहस्य सौख्यं प्रबलेन्द्रियत्वं नरस्य पुष्टिं विदधाति नूनम् ।**

राम्ररी भष्म पारिएको राँगभष्म पचाउन सहज, रुखो, गर्मी गर्ने, आँखाका लागि फाइदाजनक, केही पित्तकारक तथा प्रमेह, कफविकार , कीरा, पाण्डु र दम नाश गर्ने गुणको हुन्छ । जसरी सिँहले हात्तीको बथानलाई नष्ट पार्दछ त्यसरी नै राँगले पनि प्रमेहलाई नष्ट गर्दछ । यसका साथै यसले सेवन गर्नेलाई निश्चय नै शारीरिक सुख, इन्द्रियमा सबलता र पुष्टि पनि दिन्छ ।

## जस्ता

**यशदं रङ्गसदृशं रीतिहेतुश्च तन्मतम् ॥३२॥**
**यशदं तुवरं तिक्तं शीतलं कफपित्तहृत् ।**
**चक्षुष्यं परमं मेहान् पाण्डुं श्वासं च नाशयेत् ॥३३॥**

यशद, रङ्गसदृश र रीतिहेतु : यी जस्ताका संस्कृत पर्यायवाची नामहरू हुन् । जस्ता (भष्म) टर्रो र तीतो हुन्छ । यसले शीतल गर्दछ । यो आँखाका लागि अति लाभकारी हुन्छ । यसले कफविकार, पित्तविकार, सबै खालका प्रमेह, पाण्डु र दम नाश गर्दछ ।

## सिसा

**दृष्ट्वा भोगिसुतां रम्यां वासुकिस्तुमुमोच यत् ।**
**वीर्यं जातस्ततो नागः सर्वरोगापहा नृणाम् ॥३४॥**
**सीसं ब्रध्नं च वप्रं च योगेष्टं नागनामकम् ।**

एकपटक नागराज वासुकीको कुनै सुन्दरी नागकन्यालाई देखेर कामपीडित भई शुक्र स्खलन भयो । त्यसैबाट मानिसका सबै रोग नाश गर्ने सिसा उत्पन्न भयो । यसैले यसलाई “नाग” भनिन्छ । सीस, ब्रध्न, वप्र, योगेष्ट र नाग (नागवाची शब्द समेत) : यी सिसाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**सीसं रङ्गगुणं ज्ञेयं विशेषान्मेहनाशनम् ॥३५॥**
**नागस्तु नागशततुल्यबलं ददाति व्याधिं विनाशयति जीवनमातनोति ।**
**बह्निं प्रदीपयति कामबलं करोति मृत्युं च नाशयति सन्ततसेवितः सः ॥३६॥**

सिसाको गुण पनि राँगका जस्तै हुन्छन् । विशेष गरी यसले प्रमेह नाश गर्दछ । । यसको लगातार सेवनले हात्तीको जस्तै बल प्राप्त हुन्छ, रोग नाश हुन्छन्, आयु बढ्दछ, जठराग्निलाई बाल्दछ, यौन क्षमता बढाउँदछ र काललाई पनि नाश गर्दछ (अर्थात् अकाल मृत्युबाट जोगाउँदछ) ।

**पाकेन हीनौ किल वङ्गनागौ कुष्ठानि गुल्मांश्च तथाऽतिकष्टान् ।**
**कण्डूप्रमेहानिलसादशोथभगन्दरादीन् कुरुतः प्रयुक्तौ ॥३८॥**

राम्ररी भस्म नगरिएको सिसा र राँगको भष्म प्रयोग गर्नाले कुष्ठ र गुल्म हुन्छ । शरीरलाई अती नै कष्ट हुन्छ र शरीर चिलाउँदछ । प्रमेह, वायुरोग, शरीर लाटो हुने, शरीर सुन्निने, भगन्दर हुने आदि रोग उत्पन्न गराउँदछ ।

## फलाम
## उत्पत्ति कथा

**पुरा लोमिनदैत्यानां निहतानां सुरैर्युधि ।**
**उत्पन्नानि शरीरेभ्यो लोहानि विविधानि च ॥३९॥**
**लोहोऽस्त्री शस्त्रकं तीक्ष्णं पिण्डं कालायसायसी ।**

पहिले कुनै समयमा युद्धमा देवताहरूबाट मारिएको लोमिन नामक दैत्यका शरीरबाट अनेक प्रकारका फलाम उत्पन्न भए । लोह (स्त्रीलिङ्ग बाहेक), शस्त्रक, तीक्ष्ण, पिण्ड, कालायस र अयस् : यी फलामका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## फलामका गुण र दोष

**गुरुता दृढतोत्क्लेदः कश्मलं दाहकारिता ॥४०॥**
**अश्मदोषः सुदुर्गन्धो दोषाः सप्तायसस्य तु ।**

पचाउन कठिन, दृढता, वाकवाकी, बेहोसी, डाह, पत्थरीको सम्भावना र अत्यन्त दुर्गन्ध : यी फलामका सात दोष हुन् ।

**लोहं तिक्तं सरं शीतं मधुरं तुवरं गुरु ॥४१॥**
**रूक्षं वयस्यं चक्षुष्यं लेखनं वातलं जयेत् ।**
**कफं पित्तं गरं शूलं शोथार्शः प्लीहपाण्डुताः ॥४२॥**
**मेदोमेहकृमीन् कुष्ठं तत्किट्टं तद्वदेव हि ।**

फलाम (भस्म) तीतो, मलमूत्र सार्ने, शीतल गर्ने, गुलियो, टर्रो र पचाउन कठिन हुन्छ । यो रुखो, आयुलाई स्थिर राख्ने, आँखाका लागि फाइदाजनक, लेखनी, वातविकार गर्ने तथा कफविकार, पित्तविकार, विषविकार, शूल, सुजन, अल्काई, फियोका रोग, पाण्डु, बोसोविकार, प्रमेह, कीरा र कुष्ठ नाश गर्ने गुणको हुन्छ । फलामको कीटका पनि फलामका जस्तै हुन्छन् ।

**षण्ढत्वकुष्ठामयमृत्युदं भवेद् हृद्रोगशूलौ कुरुतेऽश्मरीञ्च ॥४३॥**
**नानारुजानाञ्च तथा प्रकोपं करोति हृल्लासमशुद्धलोहम् ।**
**जीवहारि मदकारि चायसं चेदशुद्धिमदसंस्कृतं ध्रुवम् ॥४४॥**
**पाटवं न तनुते शरीरके दारुणां हृदि रुजाञ्च यच्छति ।**

राम्ररी शुद्ध नगरिएको लोहभष्मले नपुंसकता, कुष्ठ, मृत्यु, मुटुका रोग, शूल, पत्थरी, अनेक थरी रोग, केही गर्न मन नलाग्ने जस्ता असर गर्दछ । राम्ररी प्रशोधन नगरिएको लोहभष्मले जीवन नै समाप्त पार्न समेत सक्दछ । यसले नसा लगाउने, शरीरको जाँगर मार्ने र मुटुमा सहन नसक्ने पीडा दिने खालका रोग जन्माउने काम गर्दछ, यसमा कुनै शङ्का छैन ।

## लोहभस्म खाँदा बार्ने कुरा

**कूष्माण्डं तिलतैलञ्च माषान्नं राजिकां तथा ॥४५॥**
**मद्यम्लरसं चापि त्यजेल्लोहस्य सेवकः ।**

लोहभष्म खाने व्यक्तिले कुभिण्डो, तिलको तेल, माषका खानेकुरा, रायो, मदिरा र अमिलो रस भएका कुरा खान पिउन छोड्नु पर्दछ ।

## सारलोह

**क्षमाभृच्छिखराकाराण्यङ्गान्यम्लेन लेपिते ॥४६॥**
**लौहे स्युर्यत्र सूक्ष्माणि तत्सारमभिधीयते ।**
**लौहं साराह्वयं हन्याद् ग्रहणीमतिसारकम् ॥४७॥**
**अर्द्धं सर्वाङ्गजं वातं शूलं च परिणामजम् ।**
**छर्दिं च पीनसं पित्तं श्वासं कासं व्यपोहति ॥४८॥**

जुन फलाममाथि अमिलो पदार्थ दल्दा पर्वतका टाकुरा जस्ता मसिना मसिना भाग उठ्दछ, त्यस्तो फलामलाई सारलोह भनिन्छ । यसले ग्रहणी, अतिसार, आधा अङ्गको वा पूरा शरीरको वातरोग, परिणामशूल, वाकवाकी, पिनास, पित्तविकार, दम र खोकी नाश गर्दछ ।

## कान्तलौह

**यत्पात्रे न प्रसरति जले तैलविन्दुः प्रतप्ते**
**हिङ्गुर्गन्धं त्यजति च निजं तिक्ततां निम्बवल्कः ।**
**तप्तं दुग्धं भवति शिखराकारकंनैति भूमिं**
**कृष्णाङ्गः स्यात् सजलचणकः कान्तलोहंतदुक्तम् ॥४९॥**
**गुल्मोदरार्शःशूलाममामवातं भगन्दरम् ।**
**कामलाशोथकुष्ठानि क्षयं कान्तमयो हरेत् ॥५०॥**
**प्लीहानमम्लपित्तञ्च यकृच्चापि शिरोरुजम् ।**
**सर्वान् रोगान् विजयते कान्तलोहं न संशयः ॥५१॥**
**बलं वीर्यं वपुःपुष्टिं कुरुतेऽग्निं विवर्द्धयेत् ।**

जुन फलामको भाँडामा पानी राखेर त्यसमाथि तेलको थोपा हाल्दा फैलँदैन, जुन फलामको तातो भाँडामा भुटिएको वा फुराइएको हिङले आफ्नो गन्ध छोड्दछ, जुन फलामको भाँडामा उमालिएको वा तताइएको नीमका बोक्राले आफ्नो तीतोपन छोड्दछ अनि जुन फलामको भाँडामा आगो दन्काएर दूध उमाल्दा पनि उम्लेर भुइँमा खस्दैन अनि जुन फलामको भाँडामा चना भिजाउँदा कालो हुन्छ त्यस्तो फलामलाई "कान्तलौह" भनिन्छ । यो फलामले गुल्म, पेटका रोग, अल्काई, शूल, आमजन्य वातविकार, भगन्दर, कमलपित्त, सुजन, कुष्ठ, क्षयरोग, फियोका रोग, अम्लपित्त, कलेजोका रोग र टाउकाका रोग आदि सबै रोग निश्चय नै नाश गर्दछ । यसले शरीरमा बल, वीर्य बढाई शरीरलाई पुष्ट पार्दछ तथा पाचकाग्निलाई समेत बढाउँदछ ।

## किट

**ध्मायमानस्य लोहस्य मलं मण्डूर मुच्यते ॥५२॥**
**लोहसिंहानिका किट्टी सिंहानञ्च निगद्यते ।**
**यल्लोहं यद्गुणंप्रोक्तं तत्किट्टमपि तद्गुणम् ॥५३॥**

फलामलाई आगोमा पोल्दा निस्कने मललाई मण्डूर भनिन्छ । यसका लोहसिंहानिका, किट्टी र सिंहान संस्कृत पर्यायवाची नामहरू हुन् । वुन जुन फलामका जे जे गुण बताइए त्यो फलामको किटमा पनि त्यही त्यही गुण हुन्छ ।

## उपधातु

**सप्तोपधातवः स्वर्णमाक्षिकं तारमाक्षिकम् ।**

**तुत्थं कांस्यं च रीतिश्च सिन्दूरश्च शिलाजतु ॥५४॥**
**उपधातुषु सर्वेषु तत्तद्धातुगुणा अपि ।**
**सन्ति किन्त्वेषु ते गौणास्तत्तदंशाल्पभावतः ॥५५॥**

सुनामक्खी, रुपामक्खी, तुथो, काँस, पित्तल, सिन्दूर र शिलाजित : यी सात उपधातु हुन् । सबै उपधातुमा त्यही त्यही धातुका गुण हुन्छन् । तर धातुको भाग कम हुने हुनाले यिनमा कम गुण हुन्छ ।

## सुनामक्खी

**स्वर्णमाक्षिकमाख्यातं तापीजं मधुमाक्षिकम् ।**
**ताप्यं माक्षिकधातुश्च मधुधातुश्च स स्मृतः ॥५६॥**

स्वर्णमाक्षिक, तापीज, मधुमाक्षिक, ताप्य, माक्षिकधातु र मधुधातु : यी सुनामक्खीका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**किञ्चित्सुवर्णं साहित्यात्स्वर्णमाक्षिकमीरितम् ।**
**उपधातुः सुवर्णस्य किञ्चित्स्वर्णगुणान्वितम् ॥५७॥**

यसमा केही मात्रामा सुन हुने हुनाले यसलाई स्वर्णमाक्षिक भनिएको हो । यो केही सुनका गुण हुने सुनको उपधातु हो ।

**तथा च काञ्चनाभावे दीयते स्वर्णमाक्षिकम् ।**
**किन्तु तस्यानुकल्पत्वात्किञ्चिदूनगुणं ततः ॥५८॥**

सुन नहुँदा स्वर्णमाक्षिकको प्रयोग गरिन्छ । यसमा सुनको मात्रा कम हुनाले गर्दा सुनकोभन्दा कम गुण हुन्छ ।

**न केवलं स्वर्णगुणो वर्तते स्वर्णमाक्षिके ।**
**द्रव्यान्तरस्य संसर्गात्सन्त्यन्येऽपि गुणा यतः ॥५९॥**

स्वर्णमाक्षिकमा सुनको मात्र गुण हुँदैन । विभिन्न अन्य द्रव्य पनि यसमा मिसिएको हुनाले यसमा अन्य ( द्रव्यका) गुण पनि हुन्छ ।

**सुवर्णमाक्षिकं स्वादु तिक्तं वृष्यं रसायनम् ।**
**चक्षुष्यं बस्तिरुक्कुष्ठपाण्डुमेहविषोदरान् ॥**
**अर्शः शोथं विषं कण्डूं त्रिदोषमपि नाशयेत् ॥६०॥**
**मन्दानलत्वं बलहानिमुग्रां विष्टब्धतां नेत्रगदान्सकुष्ठान् ।**
**तथैव मालां व्रणपूर्विकां च करोति तापीजमशुद्धमेतत् ॥६१॥**

सुनामक्खी स्वादिलो, तीतो, वीर्यवर्धक र रसायनी हुन्छ । यो आँखाका लागि फाइदाजनक तथा तल्लो पेटका रोग, कुष्ठ, पाण्डु, प्रमेह, विषविकार, पेटका रोग, अल्काई, सुजन, दादलुतो र त्रिदोष नाशक हुन्छ । अशुद्ध वा अप्रशोधित सुनामक्खीको भस्मले पाचकाग्नि कमजोर बनाउने, बल घटाउने, जडता, आँखाका रोग, कुष्ठ र अनेक थरीका खटिरा निकाल्न सक्दछ ।

## रुपामक्खी :

**तारमाक्षिकमन्यत्तु तद्भवेद्रजतोपमम् ।**
**किञ्चिद्रजतसाहित्यात्तारमाक्षिकमीरितम् ॥६२॥**
**अनुकल्पतया तस्य ततो हीनगुणाः स्मृताः ।**
**न केवलं रूप्यगुणा यतः स्यात्तारमाक्षिकम् ॥६३॥**
**द्रव्यान्तरस्य संसर्गात्संत्यन्येऽपि गुणा यतः ।**
**स्वादु पाके रसे किञ्चित्तिक्तं वृष्यं रसायनम् ॥६४॥**
**चक्षुष्यं वस्तिरुक्कुष्ठपाण्डुमेहविषोदरान् ।**
**अर्शः शोथं क्षयङ्कण्डूं त्रिदोषमपि नाशयेत् ॥६५॥**

अर्को माक्षिकको नाम तारमाक्षिक हो । यो चाँदी जस्तै चम्किलो हुन्छ, यसमा केही भाग चाँदी पनि हुन्छ । त्यसैले यसलाई रुपामक्खी पनि भनिन्छ । थोरै चाँदी हुने हुनाले यो चाँदीभन्दा कम गुणस्तरीय हुन्छ । यसमा चाँदीका मात्र गुण नभई अन्य मिसिएका द्रव्यका गुण पनि हुन्छन् । रुपामक्खी पचेपछि गुलियो हुन्छ । शुरुमा खाँदा केही तीतो हुन्छ । यो वीर्यवर्धक र रसायनी हुन्छ । रुपामक्खी आँखाका लागि लाभदायक हुन्छ । यसले तल्लो पेटका रोग, कुष्ठ, पाण्डु, प्रमेह, विषविकार, पेटका रोग, अल्काई, सुजन, क्षयरोग, लुतो र त्रिदोष नाश गर्दछ ।

**मन्दानलत्वं बलहानिमुग्रां विष्टम्भितां नेत्रगदान्सकुष्ठान् ।**
**तथैव मालां व्रणपूर्विकाञ्च करोति तापीजमिदञ्च तद्वत् ॥६६॥**

अशुद्ध (राम्ररी प्रशोधन नगरिएको) रुपामक्खीले सुनामक्खीलेभैँ पाचकाग्नीलाई कमजोर बनाउँदछ, बल नाश गर्दछ, शरीर जकड्दछ तथा आँखाका रोग, कुष्ठ र गण्डमाला आदि रोग जन्माउँदछ ।

## नीलोतुथो

**तुत्थं वितुन्नकं चापि शिखिग्रीवं मयूरकम् ।**
**तुत्थं ताम्रोपधातुर्हि किञ्चित्ताम्रेण तद्भवेत् ॥६७॥**
**किञ्चित्ताम्रगुणं तस्माद्वक्ष्यमाणगुणं च तत् ।**
**तुत्थकं कटुकं क्षारं कषायं वामकं लघु ॥६८॥**
**लेखनं भेदनं शीतं चक्षुष्यं कफपित्तहृत् ।**
**विषाश्मकुष्ठकण्डूघ्नं खर्परं चापि तद्गुणम् ॥६९॥**

तुत्थ, वितुन्नक, शिखिग्रीव र मयूरक : यी तुथोका संस्कृत पर्यायवाची नामहरू हुन् । तुथो तामाको उपधातु हो । यसमा केही मात्रामा तामा हुन्छ । यसैले यसमा केही तामाका गुण हुन्छन् । अन्य द्रव्यको मिसावट हुँदा यसमा तल बताइएका गुण हुन्छन् । तुथो पिरो, टर्रो र नुनिलो हुन्छ । यो वमन गराउने, पचाउन हलुका, लेखनी, भेदनी, शीतल गर्ने, आँखाका लागि लाभदायक तथा कफविकार, वित्तविकार, विषविकार, पत्थरी, कुष्ठ र लुतो नाशक हुन्छ । यिनै गुण खर्पर (?) मा पनि हुन्छन् ।

## काँस

**ताम्रत्रपुजमाख्यातं कांस्यं घोषं च कंसकम् ।**
**उपधातुर्भवेत्कांस्यं द्वयोस्तरणिरङ्गयोः ॥७०॥**
**कांस्यस्य तु गुणा ज्ञेयाः स्वयोनिसदृशा जनैः ।**
**संयोगजप्रभावेण तस्यान्येऽपि गुणाः स्मृताः ॥७१॥**
**कांस्यं कषायं तिक्तोष्णं लेखनं विशदं सरम् ।**
**गुरु नेत्रहितं रूक्षं कफपित्तहरं परम् ॥७२॥**

ताम्रजपुत्र, कांस्य, घोष र कंसक : यी काँसका संस्कृत पर्यायवाची नामहरू हुन् । तामा र राँग मिलेर काँस बन्दछ । यसैले यो यिनै दुई धातुको उपधातु हो । काँसमा तामा र राँगकै गुण हुन्छन् । अन्य द्रव्यको संयोग हुँदा त्यो द्रव्यको गुण पनि यसमा समावेश हुन्छ । काँस टर्रो र तीतो हुन्छ । यसले गर्मी गर्दछ । यो लेखनी, चम्किलो र मलमूत्र सार्ने गुणको हुन्छ । काँस पचाउन कठिन, आँखाका लागि लाभदायक, रुखो तथा विशेषतः कफविकार र पित्तविकार नाशक हुन्छ ।

## पित्तल

**पित्तलं त्वारकूटं स्यादारो रीतिश्च कथ्यते ।**
**राजरीतिर्ब्रह्मरीतिः कपिला पिङ्गलापि च ॥७३॥**
**रीतिरप्युपधातुः स्यात्ताम्रस्य यशदस्य च ।**
**पित्तलस्य गुणा ज्ञेयाः स्वयोनिसदृशा जनैः ॥७४॥**
**संयोगजप्रभावेण तस्याप्यन्ये गुणाः स्मृताः ।**
**रीतिकायुगलं रूक्षं तिक्तञ्च लवणं रसे ॥७५॥**
**शोधनं पाण्डुरोगघ्नं कृमिघ्नं नातिलेखनम् ।**

पित्तल, आरकूट, आर र रीति : यी पित्तलका संस्कृत पर्यायवाची नामहरू हुन् । राजरीति, ब्रह्मरीति, कपिला र पिङ्गला यसका जातका नाम हुन् । पित्तल : तामा र जस्ताको उपधातु हो । यसैले यसमा तामा र जस्ताकै गुणहरू हुन्छन् । अन्य द्रव्य मिसाउँदा त्यो द्रव्यका गुण पनि यसमा समावेश हुन्छन् । दुबै खालका पित्तल तीता, नुनिला, रुखा, प्रशोधक, केही लेखनी तथा पाण्डु र कीरा नाशक हुन्छन् ।

## सिन्दूर

**सिन्दूरं रक्तरेणुश्च नागगर्भश्च सीसजम् ॥७६॥**
**सीसोपधातुः सिन्दूरं गुणैस्तत्सीसवन्मतम् ।**
**संयोगजप्रभावेण तस्यान्येऽपि गुणाः स्मृताः ॥७७॥**
**सिन्दूरमुष्णं वीसर्पकुष्ठकण्डूविषापहम् ।**
**भग्नसन्धानजननं व्रणशोधनरोपणम् ॥७८॥**

सिन्दूर, रक्तरेणु, नागगर्भ र सीसक : यी सिन्दूरका संस्कृत पर्यायवाची नामहरू हुन् । सिन्दूर सिसाको उपधातु हो । यसैले यसमा सिसाका गुणहरू हुन्छन् । अन्य द्रव्य मिसाउँदा त्यसका गुण पनि यसमा आउँदछन् । यसले गर्मी गर्दछ । सिन्दूरले वीसर्प, कुष्ठ, लुतो र विषविकार नाश गर्दछ । यसले भाँचिएका वा मर्किएका हाड जोर्ने तथा घाउ भर्ने एवं प्रशोधन गर्ने काम समेत गर्दछ ।

## शिलाजित

**निदाघे घर्मसन्तप्ता धातुसारं धराधराः ।**
**निर्यासवत्प्रमुञ्चन्ति तच्छिलाजतु कीर्त्तितम् ॥७९॥**
**सौवर्णं राजतं ताम्रमायसं तच्चतुर्विधम् ।**
**शिलाजत्वद्रिजतु च शैलनिर्यास इत्यपि ॥८०॥**
**गैरेयमश्मजं चापि गिरिजं शैलधातुजम् ।**
**शिलाजं कटु तिक्तोष्णं कटुपाकं रसायनम् ॥८१॥**
**छेदि योगवहं हन्ति कफमेहाश्मशर्कराः ।**
**मूत्रकृच्छ्रं क्षयं श्वासं वातार्शांसि च पाण्डुताम् ॥८२॥**
**अपस्मारं तथोन्मादं शोथकुष्ठोदरकृमीन् ।**

ग्रीष्म ऋतुमा घामले तातेर पर्वत (चट्टान) ले धातुको सारभाग चोपका रूपमा निकाल्दछ, यसैलाई शिलाजित भनिन्छ । शिलाजित : सौवर्ण, राजत, ताम्र र आयस गरी चार किसिमका हुन्छन् । शिलाजतु, अद्रिजतु, शैलनिर्यास, गैरेय, अश्मज, गिरिज र शैलधातुज : यी शिलाजितका संस्कृत पर्यायवाची नामहरू हुन् । शिलाजित पिरो र तीतो हुन्छ । यो पचेपछि पिरो हुन्छ । यो रसायनी, मलमूत्र खुकुल्याउने (छेदनी), र योगवाही हुन्छ । यसले कफविकार, प्रमेह, पत्थरी, मधुमेह, मूत्रकृच्छ्र, क्षयरोग, दम, वातविकार, अल्काई, पाण्डु, छारेरोग, उन्माद, सुजन, कुष्ठ र पेटका कीरा नाश गर्ने गुणको हुन्छ ।

**सौवर्णं तु जपापुष्पवर्णं भवति तद्रसात् ॥८३॥**
**मधुरं कटु तिक्तं च शीतलं कटुपाकि च ।**
**राजतं पाण्डुरं शीतं कटुकं स्वादुपाकि च ॥८४॥**
**ताम्रं मयूरकण्ठाभं तीक्ष्णमुष्णं च जायते ।**
**लौहं जटायुपक्षाभं सत्तिक्तं लवणं भवेत् ॥८५॥**
**विपाके कटुकं शीतं सर्वश्रेष्ठमुदाहृतम् ।**

सौवर्ण-शिलाजित बाह्मासे फूलजस्तै रातो; गुलियो, पिरो र तीतो स्वादको; पचेपछि पिरो र शीतल गर्ने गुणको हुन्छ । राजत-शिलाजित हल्का पहेँलो, पिरो, पचेपछि गुलियो, र शीतल गर्ने गुणको हुन्छ । ताम्र-शिलाजित मुजुरको घाँटीजस्तो नीलो हुन्छ । यो तिक्खर हुन्छ । यसले गर्मी गर्दछ । लौह-शिलाजित जटायुको प्वाँखजस्तो खैरो रङको हुन्छ । यो तीतो र नुनिलो हुन्छ  तथा पचेपछि पिरो हुन्छ । यसले शीतल गर्दछ र यसैलाई सर्वश्रेष्ठ शिलाजित भनिन्छ ।

## पारो

**रसायनार्थिभिर्लोकैः पारदो रस्यते यतः ॥८६॥**
**ततो रस इति प्रोक्तः स च धातुरपि स्मृतः ।**

रसायनका लागि मानिस पारोलाई खाने गर्दछन् । त्यसैले यसलाई रस भनिएको हो । कोही यसलाई धातुवर्गमा पनि गणना गर्दछन् ।

**शिवाङ्गात्प्रच्युतं रेतः पतितं धरणीतले ॥८७॥**
**तद्देहसारजातत्वाच्छुक्लमच्छमभूच्च तत् ।**
**क्षेत्रभेदेन विज्ञेयं शिववीर्यं चतुर्विधम् ॥८८॥**
**श्वेतं रक्तं तथा पीतं कृष्णं तत्तु भवेत्क्रमात् ।**
**ब्राह्मणः क्षत्रियो वैश्यः शूद्रश्च खलु जातितः ॥८९॥**
**श्वेतं शस्तं रुजां नाशे रक्तं किल रसायने ।**
**धातुवादे तु तत्पीतं खे गतौ कृष्णमेव च ॥९०॥**

शङ्करका अङ्गबाट पृथ्वीमा खसेको वीर्य उनकै शरीरको सार भएका कारण सेतो र स्वच्छ थियो, यो (पछि) पारो भनी चिनिन थालियो । स्थान अनुसार यसका चार जात हुन्छन् : सेतो, रातो, पहेँलो र कालो । यिनका क्रमशः ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र जात हुन् । सेतो पारो रोग नाश गर्न उत्तम हुन्छ । रसायनका लागि रातो पारो र धातु बनाउन पहेँलो पारो उत्तम हुन्छ । कालो पारोले आकाशमा उड्नसक्ने सम्मको शक्ति दिन्छ ।

**पारदो रसधातुश्च रसेन्द्रश्च महारसः ।**
**चपलः शिववीर्यश्च रसः सूतः शिवाह्वयः ॥९१॥**
**पारदः षड्रसः स्निग्धस्त्रिदोषघ्नो रसायनः ।**
**योगवाही महावृष्यः सदा दृष्टिबलप्रदः ॥९२॥**
**सर्वामयहरः प्रोक्तो विशेषात्सर्वकुष्ठनुत् ।**

पारद, रसधातु, रसेन्द्र, महारस, चपल, शिववीर्य, रस, सूत र शिववाचक शब्द : यी पारोका संस्कृत पर्यायवाची नामहरू हुन् । पारोमा छ वटै रसहरू हुन्छन् । यो चिल्लो हुन्छ । यसले त्रिदोष नाश गर्दछ ।

यो रसायनी, योगवाही, अति नै वीर्यवर्धक, हरदम आँखालाई दृष्टिशक्ति दिने र सबै खालका रोग नाशक हुन्छ भनी बताइएको छ । यसले विशेषतः सबै खालका कुष्ठरोग निको पार्दछ ।

**स्वस्थो रसो भवेद् ब्रह्मा बद्धो ज्ञेयो जनार्दनः ॥**
**रञ्जितः कामितश्चापि साक्षाद्देवो महेश्वरः ॥९३॥**
**मूर्च्छितो हरति रुजं बन्धनमनुभूय खे गतिं कुरुते ।**
**अजरीकरोति हि मृतः कोऽन्य करुणाऽकरः सूतात् ॥९४॥**
**असाध्यो यो भवेद्रोगो यस्य नास्ति चिकित्सितम् ।**
**रसेन्द्रो हन्ति तं रोगं नरकुञ्जरवाजिनाम् ॥९५॥**

पारोमध्ये स्वस्थ पारोलाई साक्षात् ब्रह्माको रूप, वद्ध (थुनिएको) पारोलाई साक्षात् विष्णुको रूप तथा रङ्गाइएको वा आकर्षक बनाइएको पारोलाई साक्षात् शिवको रूप मानिन्छ । पारोको भस्मले रोगलाई नाश गर्दछ, थुनिएको पारोले आकाशमा उड्ने शक्ति दिन्छ, मारित (भस्म गरिएको) पारोले शरीरलाई निरोगी र अमर बनाउँदछ । यसकारण मानिसका लागि पारोभन्दा उत्तम अरु के नै होला र ? (कुनै वस्तु छैन) । मानिस, घोडा, र हात्तीका जति पनि निको नहुने रोग छन्, ती सबैको तथा जुन रोग निको नहुने खालको हुन्छ, त्यो रोगको पनि पारो ओखती हुन्छ ।

**मलं विषं वह्निगिरित्वचापलं नैसर्गिकं दोषमुशन्ति पारदे ।**
**उपाधिजौ द्वौ त्रपुनागयोगजौ दोषौ रसेन्द्रे कथितौ मुनीश्वरैः ॥९६॥**
**मलेन मूर्च्छा मरणं विषेण दाहोऽग्निना कष्टतरः शरीरे ।**
**देहस्य जाड्यं गिरिणा सदा स्युश्चाञ्चल्यतो वीर्यहृतिश्च पुंसाम् ॥**
**वङ्गेन कुष्ठं भुजगेन षण्ढो भवेत्ततोऽसौ परिशोधनीयः ॥९७॥**
**वह्निर्विषं मलं चेति मुख्या दोषास्त्रयो रसे ।**
**एते कुर्वन्ति सन्तापं मृतिं मूर्च्छां नृणां क्रमात् ॥९८॥**
**अन्येऽपि कथिता दोषा भिषग्भिः पारदे यदि ।**
**तथाऽप्येते त्रयो दोषा हरणीया विशेषतः ॥९९॥**
**संस्कारहीनं खलु सूतराजं यः सेवते तस्य करोति बाधाम् ।**
**देहस्य नाशं विदधाति नूनं कष्टांश्च रोगाञ्जनयेन्नराणाम् ॥१००॥**

पारोमा मल, विष, अग्नि, गिरित्व (प्रतिष्ठित हुन चाहने) र चञ्चलता जस्ता प्राकृतिक गुण हुन्छन् । खनिज पारोमा राँग र सिसाको दोष पनि हुन्छन् । यसैले पारोलाई सात दोषयुक्त द्रव्य भनी रसायनशास्त्रीहरू बताउने गर्दछन् । अशुद्ध पारोमा हुने मलदोषले मानिस बेहोस हुन्छ, विषदोषले गर्दा मर्दछ, अग्निदोषले गर्दा शरीरमा अती कडा जलन हुन्छ, गिरित्व दोषले गर्दा शरीर निस्तब्ध (प्यारालाइसिस) हुन्छ, चञ्चलताले गर्दा मानिसको वीर्य नाश हुन्छ, राँगको दोषले गर्दा कुष्ठरोग हुन्छ तथा सिसाको दोषले गर्दा नपुंसकता हुन्छ । यसैले पारोलाई प्रशोधन गरेर मात्र प्रयोग गर्नु पर्दछ । यसका उपरोक्त सात दोषमध्ये अग्नि, विष र मल दोष प्रमुख दोष हुन् । यी दोषले क्रमशः डाह, मृत्यु र बेहोसी हुन्छ । महर्षिहरूले पारोका यस बाहेक अन्य दोष पनि बताएका छन् । तर, यी तीन दोष नाश गर्न पारोलाई प्रशोधन अवश्य गर्नु पर्दछ । अप्रशोधित पारो जसले प्रयोग गर्दछ, उसको शरीर नष्ट हुन्छ, उसलाई महारोग लाग्दछ र अनेक बाधा निकाल्दछ ।

## उपरस

**गन्धो हिङ्गुलमभ्रतालकशिलाः स्रोतोऽञ्जनं टङ्कणम्**
**राजावर्तकचुम्बकौ स्फटिकया शङ्खः खटी गैरिकम् ।**
**कासीसं रसकं कपर्दसिकताबोलाश्च कङ्कुष्ठकम्**
**सौराष्ट्री च मता अमी उपरसाः सूतस्य किञ्चिद्गुणैः ॥१०२॥**

गन्धक, हिङ्गुल, अभ्रक, हरिताल, मनशिला, गाजल विशेष, स्वाग, राजावर्त नामक पत्थर (यूँ ?), चुम्बक, स्फटिक, शङ्ख, खरी, गेरु, हीराकसी, फिटकिरी, कौडी, बालुवा, खोटो विशेष (बोला), कङ्कुष्ठ र सौराष्ट्रको माटो विशेष : यी सबै उपरस हुन् ।

## गन्धक

**श्वेतद्वीपे पुरा देव्याः क्रीडन्त्या रजसाप्लुतम् ।**
**दुकूलं तेन वस्त्रेण स्नातायाः क्षीरनीरधौ ॥१०३॥**
**प्रसृतं यद्रजस्तस्माद्गन्धकः समभूत्तदा ।**

श्वेतद्वीप (पुराण अनुसार क्षीरससागर नजिकको एक टापु जहाँ विष्णुको निवासस्थान छ) मा खेलिरहेकी देवी (महामाया दुर्गा) रजस्वला हुँदा उनको पातलो पछेउरा रजले भिज्न पुग्यो । त्यसपछि उनले कपडा सहित नै क्षीरसागरमा नुहाइन् । त्यसबेला त्यो वस्त्रबाट जुन रज फैलियो त्यसबाट गन्धक उत्पत्ति हुन पुग्यो ।

**गन्धको गन्धिकश्चापि गन्धपाषाण इत्यपि ॥१०४॥**
**सौगन्धिकश्च कथितो बलिर्बलरसोपि च ।**

गन्धक, गन्धिक, गन्धपाषाण, सौगन्धिक, बलि र बलरस : यी गन्धकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**चतुर्धा गन्धकः प्रोक्तो रक्तः पीतः सितोऽसितः ॥१०५॥**
**रक्तो हेमक्रियासूक्तः पीतश्चैव रसायने ।**
**व्रणादिलेपने श्वेतः कृष्णः श्रेष्ठः सुदुर्लभः ॥१०६॥**

रातो, पहेँलो, सेतो र कालो गरी चार प्रकारका गन्धक हुन्छन् । सुन बनाउनेले रातो, रसायनको काममा पहेँलो, घाउको उपचार गर्न सेतो र सबै काममा कालो गन्धक उत्तम हुन्छ । तर, कालो गन्धक दुर्लभ हुन्छ ।

**गन्धक कटुकस्तिक्तो वीर्योष्णस्तुवरः सरः ।**
**पित्तलः कटुकः पाके कण्डुवीसर्पजन्तुजित् ॥**

**हन्ति कुष्ठक्षयप्लीहकफवातान् रसायनः ॥१०७॥**

(प्रशोधित वा शुद्ध) गन्धक टर्रो, पिरो र तीतो हुन्छ । यसले गर्मी गर्दछ तथा मलमूत्रलाई तलतिर सार्दछ । गन्धकले पित्तविकार बढाउँदछ । यो पचेपछि पिरो हुन्छ । यसले लुतो, वीसर्प, कीरा, कुष्ठ, क्षयरोग, फियोका रोग, कफविकार र वातविकार नाश गर्दछ । यो रसायनी हुन्छ ।

**अशोधितो गन्धक एष कुष्ठं करोति तापं विषमं शरीरे ।**
**सौख्यं च रूपं बलं तथौजः शुक्रं निहन्त्येव करोति चास्रम् ॥१०८॥**

अप्रशोधित गन्धकले कुष्ठरोग तथा शरीरमा डाह वा विषमज्वर उत्पन्न गर्दछ । यसले सुख, रूप, बल, ओज र शुक्र नाश गर्नुका साथै रक्तविकार समेत उत्पन्न गर्दछ ।

**हिङ्गुल**

**हिङ्गुलं दरदं म्लेच्छमिङ्गुलं चूर्णपारदम् ।**
**मक्षिरङ्गं सुरङ्गं च नाम्ना कर्मारबन्धनम् ॥१०९॥**

हिङ्गुल, दरद, म्लेच्छ, इङ्गुल, चूर्णपारद, मक्षिरङ्ग, सुरङ्ग र कर्माबन्धन : यी हिङ्गुलका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**दरदस्त्रिविधः प्रोक्तश्चर्मारः शुकतुण्डकः ।**
**हंसपादस्तृतीयः स्याद् गुणवानुत्तरोत्तरम् ॥११०॥**

चर्मार, शुकतुण्डक र हंसपाद गरी हिङ्गुल तीन प्रकारको हुन्छ । यी क्रमशः बढी गुनिला हुन्छन् ।

**चर्मारः शुक्लवर्णः स्यात्स पीतः शुकतुण्डकः ।**
**जपाकुसुमसङ्काशो हंसपादो महोत्तमः ॥१११॥**

चर्मारको रङ सेतो हुन्छ, पहेँलोलाई शुकतुण्डक भनिन्छ अनि बाह्रमासे फूलजस्तो रङ हुने सबभन्दा उत्तम हिङ्गुललाई हंसपाद भनिन्छ ।

**तिक्तं कषायं कटु हिङ्गुलं स्यान्नेत्रामयघ्नं कफपित्तहारि ।**
**हृल्लासकुष्ठज्वरकामलाश्च प्लीहामवातौ च गरं निहन्ति ॥११२॥**

हिङ्गुल तीतो, टर्रो र पिरो हुन्छ । यसले आँखाका रोग, कफविकार, पित्तविकार, यसले हृल्लास, कुष्ठ, जरो, कमलपित्त, फियोका रोग, आमजन्य वातरोग र विषविकार नाश गर्दछ ।

**उर्ध्वपातनयुक्त्या तु डमरुयन्त्रपाचितम् ।**

**हिङ्गुलं तस्य तं सूतं शुद्धमेव न शोधयेत् ॥११३॥**

हिङ्गुललाई डमरुयन्त्रमा राखी शोधन वा प्रशोधन गरेर त्यसबाट निकालिएको पारो आफैं शुद्ध हुन्छ, यसलाई पुनः शुद्ध गर्न पर्दैन । (के.यन.शर्मा : (१) उर्ध्वपातन : पारो आदि शोधन गर्ने काम । (२) डमरुयन्त्र : डमरुको छाँटको रसादि ओखती पुट गर्ने (पकाउने) भाँडो ।)

**अभ्रक**

**पुरा वधाय वृत्रस्य वज्रिणा वज्रमुद्धृतम् ।**
**विस्फुलिङ्गास्ततस्तस्य गगने परिसर्पिताः ॥११४॥**
**ते निपेतुर्घनध्वानाच्छिखरेषु महीभृताम् ।**
**तेभ्य एव समुत्पन्नं तत्तद्गिरिषु चाभ्रकम् ॥११५॥**

परापूर्वकालमा जब वृत्रासुरलाई मार्न भनी इन्द्रले वज्र उठाए, तब त्यो बज्रबाट प्रकाश निस्की आकाशमा फैलियो । त्यो प्रकाश बादलको जस्तो शब्द गर्दै पहाडका टाकुरामा बज्रन पुग्यो । यसैबाट पर्वतहरूमा अभ्रकको जन्म हुन पुग्यो ।

**तद्वज्रं वज्रपातत्वादभ्रमभ्ररवोद्भवात् ।**
**गगनात्स्खलितं यस्माद्गगनं च ततो मतम् ॥११६॥**

वज्रपात भई जन्मिएको हुनाले अभ्रखको एक नाम वज्र रहन गयो । आकाश (गगन) बाट खसेको हुनाले यसलाई गगन पनि भनिन्छ ।

**विप्रक्षत्रियविट्शूद्र भेदात्तस्याच्चतुर्विधम् ।**
**क्रमेणैव सितं रक्तं पीतं कृष्णं च वर्णतः ॥११७॥**

अभ्रखका ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र गरी चार जात हुन्छन् । यी क्रमशः सेता, राता, पहैंला र काला हुन्छन् ।

**प्रशस्यते सितं तारे रक्तं तत्तु रसायने ।**
**पीतं हेमनि कृष्णं तु गदेषु द्रुतयेऽपि च ॥११८॥**

चाँदी आदि बनाउन सेतो, रसायन-कर्ममा रातो, सुन बनाउन पहैंलो र रोगको उपचार गर्न कालो अभ्रक उत्तम हुन्छ । पगाल्नका लागि पनि कालो अभ्रख नै उत्तम हुन्छ । (के.यन.शर्मा (द्रुति) : पग्लाई, भगाइ, गति) ।

**पिनाकं दर्दुरं नागं वज्रं चेति चतुर्विधम् ।**

**मुञ्चत्यग्नौ विनिक्षिप्तं पिनाकं दलसञ्चयम्॥११९॥**

कालो अभ्रख पनि पिनाक, दर्दुर, ना र वज्र गरी चार किसिमको हुन्छ । जुन अभ्रक आगोमा हाल्दा त्यसबाट पत्र निस्कन्छ त्यस्तो अभ्रखलाई पिनाक भनिन्छ ।

**अज्ञानाद्भक्षणं तस्य महाकुष्ठप्रदायकम् ।**
**दुर्दरं त्वग्निनिक्षिप्तं कुरुते दुर्दरध्वनिम्॥१२०॥**
**गोलकान्बहुशः कृत्वा स स्यान्मृत्युप्रदायकः ।**

थाहा नपाएर यस्तो अभ्रख खानाले कडाखालको कुष्ठरोग हुन्छ । जुन् अभ्रख आगोमा हाल्दा भ्यागुतो कराए जसरी आवाज निस्कन्छ त्यसलाई दर्दुर भनिन्छ । यसले शरीरमा अनेक थरी गाँठागुँठी निकालेर मानिसलाई मार्दछ ।

**नागं तु नागवद्वह्नौ फूत्कारं परिमुञ्चति ॥१२१॥**
**तद्भक्षितमवश्यं तु विदधाति भगन्दरम् ।**

जुन अभ्रख आगोमा हाल्दा सर्प सुसाए जसरी सुसाउँदछ त्यसलाई नाग भनिन्छ । यो खानाले निश्चितरूपमा भगन्दर रोग हुन्छ ।

**वज्रं तु वज्रवत्तिष्टेत्तन्नाग्नौ विकृतिं व्रजेत्॥१२२॥**
**सर्वाभ्रेषु वरं वज्रं व्याधिवार्द्धक्यमृत्युहृत् ।**

जुन अभ्रक आगोमा पोल्दा कुनै आवाज ननिकाली जस्ताका तस्तै रहन्छ त्यसलाई वज्र भनिन्छ । यो सर्वोत्तम अभ्रख हो । यसले रोग, बुढ्यौली र मृत्युलाई नाश गर्दछ ।

**अभ्रमुत्तरशैलोत्थं बहुसत्त्वं गुणाधिकम्॥**
**दक्षिणाद्रि भवं स्वल्पसत्वमल्पगुणप्रदम्॥१२३॥**

उत्तर दिशाका पर्वतमा उत्पन्न हुने अभ्रख गुनिला र शक्तिशाली हुन्छन् । दक्षिण दिशामा उत्पन्न हुने अभ्रख कम गुणस्तरका र कम शक्तिशाली हुन्छन् ।

**अभ्रं कषायं मधुरं सुशीतमायुष्करं धातुविवर्द्धधनं च ।**
**हन्यात्त्रिदोषं व्रणमेहकुष्ठप्लीहोदरग्रन्थिविषकृमींश्च॥१२४॥**

अभ्रख टर्रो र गुलियो हुन्छ । यसले शीतल गर्दछ तथा आयु र धातु बढाउँदछ । यसले त्रिदोष, घाउखटिरा, प्रमेह, कुष्ठ, फियोका रोग, पेटका रोग, गाँठागुँठी, विषविकार र कीरा नाश गर्दछ ।

**रोगान्हन्ति द्रढयति वपुर्वीर्यवृद्धिं विधत्ते**

**तारुण्याढ्यं रमयति शतं योषितां नित्यमेव ।**
**दीर्घायुष्काञ्जनयति सुतान्विक्रमैः सिंहतुल्यान्**
**मृत्योर्भीतिं हरति सततं सेव्यमानं मृताभ्रम् ॥१२५॥**

प्रशोधित शुद्ध अभ्रख भस्म नियमित सेवन गर्नाले रोगहरू नष्ट हुन्छन्, शरीर बलियो हुन्छ र वीर्य समेत बढ्दछ । सधैं तरुनो बनी सयवटी स्त्रीहरूसँग रमाउन सक्दछ । लामो आयु र सिंहजस्ता पुत्र जन्माउन सक्दछ । यसले अकालमृत्युको डर हटाउँदछ ।

**पीडां विधत्ते विविधां नराणां कुष्ठं क्षयं पाण्डुगदं च शोथम्**
**हृत्पार्श्वपीडां च करोत्यशुद्धमभ्रं त्वसिद्धं गुरु तापदं स्यात् ॥१२६॥**

अप्रशोधित र राम्ररी भस्म नगरिएको अभ्रखभस्म खानाले अनेक थरीका पीडा दिन्छ । यसले कुष्ठ, क्षयरोग, पाण्डु, सुजन, मुटुको पीडा, कोखको पीडा, भारीपन र डाह गराउँदछ ।

## हरिताल

**हरितालं तु तालं स्यादालं तालकमित्यपि ।**
**हरितालं द्विधा प्रोक्तं पत्राख्यं पिण्डसंज्ञकम् ॥१२७॥**
**तयोराद्यं गुणैः श्रेष्ठं ततो हीनगुणं परम् ।**
**स्वर्णवर्णं गुरु स्निग्धं सपत्रं चाभ्रपत्रवत् ॥१२८॥**
**पत्राख्यं तालकं विद्याद् गुणाढ्यं तद्रसायनम् ।**
**निष्पत्रं पिण्डसदृशं स्वल्पसत्त्वं तथा गुरु ॥१२९॥**
**स्त्रीपुष्पहारकं स्वल्पगुणं तत्पिण्डतालकम् ।**
**हरितालं कटु स्निग्धं कषायोष्णं हरेद्विषम् ॥**
**कण्डूकुष्ठास्यरोगास्रकफपित्तकचव्रणान् ॥१३०॥**
**हरति च हरितालं चारुतां देहजाताम् सृजति च बहुतापञ्चाङ्गसङ्कोचपीडाम् ।**
**वितरति कफवातौ कुष्ठरोगं विदध्यादिदमशितमशुद्धं मारितं चाप्यसम्यक् ॥१३१॥**

हरिताल, ताल, आल र तालक : यी हरितालका संस्कृत पर्यायवाची नामहरू हुन् । पत्र र पिण्ड गरी हरिताल दुई किसिमको हुन्छ । पहिलो अर्थात् पत्र हरिताल श्रेष्ठ हुन्छ । अर्को (पिण्ड) हरिताल भने गुणस्तरहीन हुन्छ । सुनजस्तो रङको, गह्रौं, चिल्लो र अभ्रककाभैं पत्र निस्कने पत्र-हरिताल गुनिलो र रसायनी हुन्छ । पत्र नआउने डल्लो खालको पिण्ड-हरितालमा कम शक्ति हुन्छ र यो पचाउन पनि कठिन हुन्छ । यसले स्त्रीको रजलाई नष्ट गर्दछ । यो कम गुनिलो हुन्छ । शुद्ध हरिताल पिरो, चिल्लो र टर्रो हुन्छ । यसले गर्मी गर्दछ तथा विषविकार, लुतो, कुष्ठ, मुखका रोग, रक्तविकार, कफविकार, पित्तविकार, कपालका विकार र घाउखटिरा नाश गर्दछ । अशुद्ध हरितालले शरीरको शोभालाई नष्ट पार्दछ, अति नै डाह गर्दछ, अङ्गप्रत्यङ्ग कस्दै वा खुम्च्याउँदै पीडा दिन्छ तथा कफजन्य रोग, वातजन्य रोग एवं कुष्ठरोगलाई जन्माउँदछ ।

## मनशिला

**मनःशिला मनोगुप्ता मनोह्वा नागजिह्विका ।**
**नैपाली कुनटी गोला शिला दिव्यौषधिः स्मृता ॥१३२॥**
**मनःशिला गुरुर्वर्ण्या सरोष्णा लेखनी कटुः ।**
**तिक्ता स्निग्धा विषश्वासकासभूतकफास्रनुत् ॥१३३॥**
**मनः शिला मन्दबलं करोति जन्तुं ध्रुवं शोधनमन्तरेण ।**
**मलानुबन्धं किल मूत्ररोधं सशर्करं कृच्छ्रगदं च कुर्यात् ॥१३४॥**

मनःशिला, मनोगुप्ता, मनोह्वा, नागजिह्विका, नैपाली, कुनटी, गोला, शिला र दिव्यौषधि : यी मनशिलाका संस्कृत पर्यायवाची नामहरू हुन् । शुद्ध मनशिला पचाउन कठिन, वर्णमा निखार लेराउने, मत्रमूत्र सार्ने, गर्मी गर्ने र लेखनी गुणको हुन्छ । यो पिरो र तीतो एवं चिल्लो हुन्छ । यसले विषविकार, दम, खोकी, भूतबाधा, कफविकार र रक्तविकार नाश गर्दछ । अशुद्ध मनशिलाले बल घटाउँदछ, पेटमा कीरा पार्दछ, मलमूत्रलाई रोक्दछ, मधुमेह जन्माउँदछ र कृच्छ्र रोगलाई उत्पन्न गर्दछ ।

## सुर्मा

**अञ्जनं यामुनं चापि कापोताञ्जनमित्यपि ।**
**तत्तु स्रोतोऽञ्जनं कृष्णं सौवीरं श्वेतमीरितम् ॥१३५॥**
**वल्मीकशिखराकारे भिन्नमञ्जनसन्निभम् ।**
**घृष्टं तु गैरिकाकारमेतत्स्रोतोऽञ्जनं स्मृतम् ॥१३६॥**
**स्रोतोऽञ्जनसमं ज्ञेयं सौवीरं तत्तु पाण्डुरम् ।**
**स्रोतोऽञ्जनं स्मृतं स्वादु चक्षुष्यं कफपित्तनुत् ॥१३७॥**
**कषायं लेखनं स्निग्धं ग्राहि च्छर्दिविषापहम् ।**
**सिध्मक्षयास्रहृच्छीतं सेवनीयं सदा बुधैः ॥१३८॥**
**स्रोतोऽञ्जनगुणाः सर्वे सौवीरेऽपि मता बुधैः ।**
**किन्तु द्वयोरञ्जनयोः श्रेष्ठं स्रोतोऽञ्जनं स्मृतम् ॥१३९॥**

अञ्जन, यामुन र कापोताञ्जन यी गाजलका संस्कृत पर्यायवाची नामहरू हुन् । कालो गाजललाई स्रोतोञ्जन भनिन्छ भने सेतो गाजललाई सौवीर भनिन्छ । कालो गाजल धमिराको गोलाको आकारको, फुटाउँदा अञ्जन जस्तै र घोट्दा गेरु समान हुन्छ । सौवीर भने फिका पहेँलो वा सेतो वर्णको हुन्छ । यसको गुण भने कालो अञ्जन समान हुन्छ । स्रोतोञ्जन स्वादिलो, आँखाका लागि लाभदायक तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यो टर्रो, लेखनी, चिल्लो, सङ्ग्राही तथा वाकवाकी र विषविकार नाशक हुन्छ । यसले सिध्म नामक कुष्ठरोग, क्षयरोग र रक्तविकार पनि नाश गर्दछ । यसले शीतल गर्दछ । यसैले बुद्धिमानबाट सधैं यो सेवनीय हुन्छ । विद्वानहरू कालो अञ्जनमा हुने गुण नै सौवीरमा पनि हुन्छ भन्दछन् । तर पनि दुई अञ्जनमध्ये स्रोतोञ्जनलाई नै उत्तम मानिन्छ ।

## सुहागा

**टङ्कणोऽग्निकरो रूक्षः कफघ्नो वातपित्तकृत् ।**

सुहागामा पाचकाग्नि बढाउने, रुखो, कफनाशक तथा वातविकार र कफविकार बढाउने गुण हुन्छ ।

## फट्किरी

**स्फटी च स्फटिका प्रोक्ता श्वेता शुभ्रा च रङ्गदा ॥१४०॥**
**दृढरङ्गा रङ्गदृढा रङ्गाङ्गापि च कथ्यते ।**
**स्फटिका तु कषायोष्णा वातपित्तकफव्रणान् ॥१४१॥**
**निहन्ति श्वित्रवीसर्पान् योनिसङ्कोचकारिणी ।**

स्फटी, स्फुटिका, श्वेता, शुभ्रा, रङ्गदा, दृढरङ्गा, सुरङ्गा, दृढा र रङ्गा : यी फिटकिरीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, गर्मी गर्ने तथा वातविकार, पित्तविकार, कफविकार र घाउखटिरा नाशक हुन्छ । यसले श्वित्र र वीसर्प रोगलाई नाश गर्नुका साथै योनीलाई समेत खुम्च्याउँदछ ।

## युँ

**राजावर्त्तो नृपावर्त्तो राजन्यावर्त्तकस्तथा ॥१४२॥**
**आवर्त्तमणिसंज्ञश्च ह्यावर्त्तोऽपि तथैव च ।**
**राजावर्त्तं कटुस्तिक्तः शिशिरः पित्तनाशनः ॥१४३॥**
**राजावर्त्तः प्रमेहघ्नश्छर्दिहिक्कानिवारणः ।**

राजावर्त्त, नृपावर्त्त, राजन्यावर्त्तक, आवर्त्तमणिसंज्ञक र आवर्त्त : यी युँका संस्कृत पर्यायवाची नामहरू हुन् । युँ (भस्म) पिरो र तीतो हुन्छ । यसले शीतल गर्दछ । यसले पित्तविकार, प्रमेह, वाकवाकी र बाडुली रोग नाश गर्दछ ।

## चुम्बक

**चुम्बकः कान्तपाषाणोऽयस्कान्तो लौहकर्षकः ॥१४४॥**
**चुम्बको लेखनः शीतो मेदोविषगरापहः ।**

चुम्बक, कान्तपाषाण, अयस्कान्त र लोहकर्षक : यी चुम्बकका संस्कृत पर्यायवाची नामहरू हुन् । चुम्बक (भस्म) लेखनी, शीतल गर्ने तथा बोसोविकार र कृत्रिम विषविकार (गरविष) नाशक हुन्छ ।

## गेरु

**गैरिकं रक्तधातुश्च गैरेयं गिरिजं तथा ॥१४५॥**

**सुवर्णगैरिकमन्यत्तु ततो रक्ततरं हि तत् ।**
**गैरिकद्वितयं स्निग्धं मधुरं तुवरं हिमम् ॥१४६॥**
**चक्षुष्यं दाहपित्तास्रकफहिक्काविषापहम् ।**

गैरिक, रक्तधातु, गैरेय र गिरिज : यी गेरुका संस्कृत पर्यायवाची नामहरू हुन् । गेरु रातो हुन्छ भने सुवर्णगेरु त्योभन्दा पनि रातो हुन्छ । दुबै गेरु चिल्ला, गुलिया, टर्रा र शीतल गर्ने गुणका हुन्छन् ।
यी आँखाका लागि लाभदायक तथा डाह, पित्तविकार, रक्तविकार, कफविकार, बाडुली रोग र विषविकार नाशक हुन्छन् ।

## चक

**खटिका कठिनी चापि लेखनी च निगद्यते ॥१४७॥**
**खटी दाहास्रजिच्छीता मधुरा विषशोथजित् ।**
**लेपादेतद्गुणा प्रोक्ता भक्षिता मृत्तिकासमा ॥१४८॥**
**खटी गौरखटी द्वे च गुणैस्तुल्ये प्रकीर्तिते ।**

खटिका, कठिनी र लेखनी : यी चकका संस्कृत पर्यायवाची नामहरू हुन् । चकले डाह र रक्तविकार नाश गर्नुका साथै शीतल गर्दछ । यो गुलियो हुन्छ । यसले विषविकार र सुजन नाश गर्दछ । यी गुण यसको लेप दल्नाले पाइने गुण हुन् । खाँदा भने माटाको जस्तै गुण प्राप्त हुन्छ । चक (खटीका) जस्तै अर्को गौरखटी भन्ने पनि हुन्छ । दुबैको गुण समान हुन्छ ।

## बालुवा

**बालुका सिकता प्रोक्ता शर्करा रेतजाऽपि च ॥१४९॥**
**वालुका लेखनी शीता व्रणोरःक्षतनाशिनी ।**

बालुका, सिकता, शर्करा र रेतजा : यी बालुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । बालुमा लेखनी, शीतल गर्ने, घाउखटिरा ठिक गर्ने र विभिन्न कारणले हुने छातीको भित्री घाउ ठिक गर्ने गुण हुन्छ ।

## खाप्रे

**खर्परी तुत्थकं तुत्थादन्यत्तद्रसकं स्मृतम् ॥१५०॥**
**ये गुणास्तुत्थके प्रोक्तास्ते गुणा रसके स्मृताः ।**

खर्परी, तुत्थक, रसक र तुत्थभेद : यी खाप्रेका संस्कृत पर्यायवाची नामहरू हुन् । जुन गुण नीलोतुथोको बताइएको छ, त्यही गुण खाप्रेको पनि हुन्छ ।

## हिराकसी

**काशीशं धातुकाशीशं पांशुकाशीशमित्यपि ॥१५१॥**
**तदेव किञ्चित्पीतं तु पुष्पकाशीशमुच्यते ।**
**काशीशमम्लमुष्णं च तिक्तञ्च तुवरं तथा ॥१५२॥**
**वातश्लेष्महरं केश्यं नेत्रकण्डूविषप्रणुत् ।**
**मूत्रकृच्छ्राश्मरीश्वित्रनाशनं परिकीर्त्तितम् ॥१५३॥**

काशीश, धातुकाशीश र पांशुकाशीश : यी हिराकसीका संस्कृत पर्यायवाची नामहरू हुन् । हल्का पहेँलो रङ हुने त्यही हिराकसीलाई पुष्पकाशीश भनिन्छ । हिराकसी अमिलो, तीतो र टर्रो हुन्छ । यसले गर्मी गर्दछ तथा वातविकार र कफविकार नाश गर्दछ । यो कपालका लागि फाइदाजनक हुन्छ । यसले आँखा चिलाउने रोग र विषविकार नाश गर्दछ । साथै यो मूत्रकृच्छ्र, पत्थरी र सेतो कुष्ठरोग नाशक हुन्छ समेत भनिएको छ ।

## गोपीचन्दन

**सौराष्ट्री तुवरी काली मृत्तालकसुराष्ट्रजे ।**
**आढकी चापि सा ख्याता मृत्स्ना च सुरमृत्तिका ॥१५४॥**
**स्फुटिकायागुणाः सर्वे सौराष्ट्र्या अपि कीर्त्तिताः ।**

सौराष्ट्री, तुवरी, काली, मृत्तालक, सुराष्ट्रजा, आढकी, मृत्स्ना र सुरमृत्तिका : यी गोपीचन्दनका संस्कृत पर्यायवाची नामहरू हुन् । जे गुण फट्किरीमा हुन्छ त्यो सबै गुण गोपीचन्दनमा पनि हुन्छ ।

## कालीमाटी

**मृन्मृदा मृत्तिका मृत्स्ना क्षेत्रजा कृष्णमृत्तिका ॥१५५॥**
**कृष्णमृत् क्षतदाहास्रप्रदरश्लेष्मपित्तनुत् ।**

मृत्, मृदा, मृत्तिका, मृत्स्ना, क्षेत्रजा, कृष्णमृत्तिका र कृष्णमृत् : यी कालीमाटीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले चोटपटक, डाह, रक्तविकार, पेटका रोग, कफविकार र पित्तविकार नाश गर्दछ ।

## हिलो

**पङ्कस्तु जलकल्कश्च चुलुकः कर्दमो मलः ॥१५६॥**
**चिकिलः पलितो द्रापः पललश्च निषद्वरः ।**
**कर्दमो दाहपित्तास्रशोथघ्नः शीतलः सरः ॥१५७॥**

पङ्क, जलकल्क, चुलुक, मल, चिकिल, पलित, द्राप, पलल र निषद्वर : यी हिलोको संस्कृत पयाएवाची नामहरू हुन् । हिलोले शीतल गर्दछ र दिसा लगाउँदछ । यसले डाह, पित्तमा हुने पीडा र सुजन नाश गर्दछ ।

## कौडी

**कपर्दको वराटश्च कपर्दी च वराटिका ।**
**कपर्दिका हिमा नेत्रहिता स्फोटक्षयापहा ॥**
**कर्णस्रावाग्निमान्द्यघ्नी पित्तास्रकफनाशिनी ॥१५८॥**

कपर्दक, वराट, कपर्द्दी र वराटिका : यी कौडीका संस्कृत पर्यायवाची नामहरू हुन् । कौडीले शीतल गर्दछ । यो आँखाका लागि लाभदायक हुन्छ । यसले खटिरा, क्षयरोग, कानबाट पानी-रगत-पीप बहने रोग, कमजोर पाचनशक्ति, रक्तपित्त र कफविकार नाश गर्दछ ।

## शङ्ख

**शङ्खः समुद्रजः कम्बुः सुनादः पावनध्वनिः ।**
**शङ्खो नेत्र्यो हिमः शीतो लघुः पित्तकफास्रजित् ॥१५९॥**

शङ्ख, समुद्रज, कम्बु, सुनाद र पावनध्वनि : यी शङ्खका संस्कृत पर्यायवाची नामहरू हुन् । शङ्ख आँखाका लागि फाइदाजनक हुन्छ । यसले शीतल गर्दछ । यो चिसो, पचाउन सहज तथा पित्तविकार र कफविकार नाशक हुन्छ ।

## बोल

**बोलं गन्धरसं प्राणपिण्डगोपरसाः स्मृताः ।**
**बोलं रक्तहरं शीतं मेध्यं दीपनपाचनम् ॥१६०॥**
**मधुरं कटु तिक्तं च दाहस्वेदत्रिदोषजित् ।**
**ज्वरापस्मारकुष्ठघ्नं गर्भाशयविशुद्धिकृत् ॥१६१॥**

बोल, गन्धरस, प्राण, पिण्ड र गोपरस : यी बोलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले रक्तविकार नाश गर्नुका साथै शीतल गर्दछ । बोलले दिमागको ग्रहण गर्ने बढाउनुका साथै दीपनी र पाचनी हुन्छ । यो गुलियो, पिरो र तीतो हुन्छ । यसले डाह, पसिना-रोग, त्रिदोष, जरो, छारेरोग र कुष्ठरोग नाश गर्दछ तथा गर्भाशयलाई शुद्ध बनाउँदछ ।

## कङ्कुष्ठ

**हिमवत्पादशिखरे (हिमवद्गोत्रशिखरे) कङ्कुष्ठमुपजायते ।**

तत्रैकं रक्तकालं स्यात्तदन्यद्दण्डकं (स्यादन्द्धेमप्रभं) स्मृतम् ॥१६२॥
पीतप्रभं गुरु स्निग्धं श्रेष्ठं कङ्कुष्ठमादिमम् ।
श्यामं पीतं लघु त्यक्तसत्त्वं नेष्टं तथाऽण्डकम् ॥१६३॥
कङ्कुष्ठं काककुष्ठं च विरङ्गं कोलकाकुलम् ।
कङ्कुष्ठं रेचनं तिक्तं कटूष्णं वर्णकारकम् ॥
कृमिशोथोदराध्मानगुल्मानाहकफापहम् ॥१६४॥

कङ्कुष्ठ हिमालय पर्वत र त्यस नजिकका पहाडका शिखरमा उत्पन्न हुन्छ । यो एउटा रातो रक्तकाल नामको र अर्को अण्डक नामको सुनझैं पहेँलो हुन्छ भनिन्छ । पहेँलो कङ्कुष्ठ पचाउन कठिन, चिल्लो र श्रेष्ठ हुन्छ । कालो मिसिएको पहेँलो वर्णको कङ्कुष्ठ पचाउन हलुका र गुणहीन हुन्छ । यसलाई अण्डक भनिन्छ र राम्रो हुँदैन । कङ्कुष्ठ, काककुष्ठ, विरङ्ग र कोलकाकुल : यी कङ्कुष्ठका संस्कृत पर्यायवाची नामहरू हुन् । कङ्कुष्ठ रेचनी, तीतो, पिरो, गर्मी गर्ने र वर्णमा निखार लेराउने गुणको हुन्छ । यसले कीरा, सुजन, पेटका रोग, आध्मान, गुल्म, आनाह र कफविकार नाश गर्दछ ।

## रत्न

धनार्थिनो जनाःसर्वे रमन्तेऽस्मिन्नतीव यत् ।
ततो रत्नमिति प्रोक्तं शब्दशास्त्रविशारदैः ॥१६५॥

धन चाहने सबै मानिस यसमा अति नै रम्दछन् (आनन्दित हुन्छन्), यसैले शब्दशास्त्रका विज्ञहरूले यसलाई 'रत्न' भनेका हुन् ।

रत्नं क्लीबे मणिः पुंसि स्त्रियामपि निगद्यते ।
तत्तु पाषाणभेदोऽस्ति मुक्तादि च तदुच्यते ॥१६६॥
रत्नं मणिर्द्वयोरश्मजातौ मुक्तादिकेऽपि च ।

रत्न शब्द नपुंसक लिङ्गमा तथा मणि पुंलिङ्ग र स्त्रिलिङ्ग दुबैमा प्रयोग हुन्छ । यी दुबै रत्नका संस्कृत नाम हुन् । रत्न शब्दले पत्थरका विभिन्न भेद तथा हीरा, मोती आदिलाई बुझाउँदछ ।

रत्नं गारुत्मतं पुष्परागो माणिक्यमेव च ॥१६७॥
इन्द्रनीलश्च गोमेदस्तथा वैदूर्यमित्यपि ।
मौक्तिकं विद्रुमश्चेति रत्नान्युक्तानि वै नव ॥१६८॥

हीरा, पन्ना, पुष्पराज, माणिक, नीलम, गोमेद, वैदूर्य, मोती र मुगा : यी नौ थरी रत्नलाई नवरत्न भनिन्छ ।

(विष्णुधर्मोत्तर पुराण)
मुक्ताफलं हीरकं च वैदूर्य्यं पद्मरागकम् ।
पुष्परागं च गोमेदं नीलं गारुत्मतं तथा ॥१६९॥

**प्रवालयुक्तान्येतानि महारत्नानि वै नव ।**

मोती, हीरा, वैदूर्य, माणिक, पुष्पराज, गोमेद, नीलम, पन्ना र मुगा : यी नौ महारत्न हुन् ।

## हिरा

**हीरकः पुंसि वज्रोऽस्त्री चन्द्रो मणिवरश्च सः ॥१७०॥**

हीरक (पुंलिङ्ग), वज्र (पुंलिङ्ग र नपुंसकलिङ्ग), चन्द्र र मणिवर : यी हीराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

**स तु श्वेतः स्मृतो विप्रो लोहितः क्षत्रियः स्मृतः ।**
**पीतो वैश्योऽसितः शूद्रश्चतुर्वर्णात्मकश्च सः ॥१७१॥**

यो सेतो भए ब्राह्मण, रातो भए क्षत्रिय, पहेँलो भए वैश्य र कालो भए शूद्र गरी चार जातको हुन्छ ।

**रसायने मतो विप्रः सर्वसिद्धिप्रदायकः ।**
**क्षत्रियो व्याधिविध्वंसी जरामृत्युहरः स्मृतः ॥१७२॥**

सबै खालका सिद्धि प्रदान गर्ने ब्राह्मण जातको हीरा रसायन कार्यमा उत्तम हुन्छ भनिएको छ । रोग संहार गर्ने क्षत्रिय जातको हीरालाई बुढ्यौली र मृत्यु (अकाल) नाशक भनिन्छ ।

**वैश्यो धनप्रदः प्रोक्तस्तथा देहस्यदार्ढ्यकृत् ।**
**शूद्रो नाशयति व्याधीन् वयःस्तम्भं करोति च ॥१७३॥**

वैश्य जातको हीरालाई धन प्रदायक तथा शरीरलाई बलियो बनाउने भनिएको छ । शूद्र जातको हीराले रोग नाश गर्नुका साथै उमेरलाई स्थिर राख्दछ ।

**पुंस्त्रीनपुंसकानीह लक्षणीयानि लक्षणैः ।**

लक्षण अनुसार पुरुष, स्त्री र नपुंसक गरी हीराका तीन भेद पनि हुन्छन् ।

**सुवृत्ताः फलसम्पूर्णास्तेजोयुक्ता बृहत्तराः ॥१७४॥**
**पुरुषास्ते समाख्याता रेखाविन्दु विवर्जिताः ।**

गोलो, खँदिलो, तेजिलो, ठूलो र कुनै पनि रेखा वा थोप्ला (एवं पाटा) नभएको हीरालाई पुरुष-हीरा भनिन्छ ।

**रेखाविन्दुसमायुक्ताः षडस्रास्ते स्त्रियः स्मृताः ॥१७५॥**

रेखा र थोप्ला भएको छ कुने हीरालाई स्त्री-हीरा भनिएको छ ।

**त्रिकोणाश्च सुदीर्घास्ते विज्ञेयाश्च नपुंसकाः ।**

तीनकुने र लामो खालको हीरालाई नपुंसक-हीरा भनी जान्नू ।

**तेषु स्युः पुरुषाः श्रेष्ठा रसबन्धनकारिणः ॥१७६॥**

ती तीन थरी हीरामध्ये पुरुष-हीरा श्रेष्ठ हुन्छ । यसले पारोलाई बन्धनमा राख्दछ (नियन्त्रण गर्दछ) । ( अर्थात् पारोलाई नियन्त्रण गरेर प्रयोग गर्नुपर्दा हीराको प्रयोग गर्नुपर्दछ) ।

**स्त्रियः कुर्वन्ति कायस्य कान्तिं स्त्रीणां सुखप्रदाः ।**

स्त्री जातको हीराले शरीरलाई तेजिलो बनाउँदछ र स्त्रीहरूका लागि सुखदायक हुन्छ ।

**नपुंसकास्त्ववीर्य्याः स्युरकामा सत्त्ववर्जिताः ॥१७७॥**

नपुंसकजातको हीरा तेजहीन, कामशक्ति नाशक र शक्तिहीन हुन्छ ।

**स्त्रियः स्त्रीभ्यः प्रदातव्याः क्लीबं क्लीबे प्रयोजयेत् ।**
**सर्वेभ्यः सर्वदादेयाः पुरुषा वीर्यवर्धनाः ॥१७८॥**

स्त्री-हीरा स्त्रीलाई तथा नपुंसक-हीरा नपुंसकलाई लगाउन दिनू । वीर्यवर्धक पुरुष-हीरा सबै पुरुषलाई सधैं लगाउन दिनू ।

**अशुद्धं कुरुते वज्रं कुष्ठं पार्श्वव्यथां तथा ।**
**पाण्डुतां पङ्गुलत्वं च तस्मात्संशोध्य मारयेत् ॥१७९॥**
**आयुः पुष्टिं बलं वीर्यं वर्णं सौख्यं करोति च ।**
**सेवितं सर्वरोगघ्नं मृतं वज्रं न संशयः ॥१८०॥**

राम्ररी प्रशोधन नगरिएको हीराको भस्म सेवन गर्नाले कुष्ठरोग, कोखका रोग र पाण्डुरोग लाग्ने तथा लुलोलङ्गडो हुने सम्भावना हुन्छ, त्यसैले राम्ररी प्रशोधन र भस्म गरिएको हीराको भस्म खाने गर्नू । राम्ररी प्रशोधन गरी विधिपूर्वक भस्म गरिएको हीराभस्मले आयु, पुष्टि, बल, वीर्य र सुख दिन्छ । यस्तो भस्मको सेवनले निश्चय नै सबै रोग नाश
हुन्छन् ।

## पन्ना

**गारुत्मतं मरकतमश्मगर्भो हरिन्मणिः ।**

गारुत्मत, मरकत, अश्मगर्भ र हरिन्मणि : यी पन्नाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## माणिक

**माणिक्यं पद्मरागः स्याच्छोणरत्नञ्च लोहितम् ॥१८१॥**

**माणिक्य,** पद्मराग, शोणरत्न र लोहित : यी माणिकका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## पुष्पराज

**पुष्परागो मञ्जुमणिः स्याद्वाचस्पतिवल्लभः ।**

पुष्पराग, मञ्जुमणि र वाचस्पतिवल्लभ : यी पुष्पराजका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## नीलमणि र गोमेद

**नीलं तथेन्द्रनीलञ्च गोमेदः पीतरत्नकम् ॥१८२॥**

नील र इन्द्रनील नीलमणिका तथा गोमेद र पीतरत्न गोमेदका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## वैदूर्यमणि

**वैदूर्यं दूरजं रत्नं स्यात्केतुग्रहवल्लभम् ।**

वैदूर्य, दूरज, रत्न र केतुग्रहवल्लभ : यी वैदूर्यमणिका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## मोती

**मौक्तिकं शौक्तिकं मुक्ता तथा मुक्ताफलञ्च तत् ॥१८३॥**
**शुक्तिः शङ्खो गजः क्रोडः फणी मत्स्यश्च दर्दुरः ।**
**वेणुरेते समाख्यातास्तज्ज्ञैर्मौक्तिकयोनयः ॥१८४॥**
**मौक्तिकं शीतलं वृष्यं चक्षुष्यं बलपुष्टिदम् ।**

मौक्तिक, शौक्तिक, मुक्ता र मुक्ताफल : यी मोतीका संस्कृत पर्यायवाची नामहरू हुन् । सीपि, शङ्ख, हात्ती, सुँगुर, सर्प, माछा, भ्यागुतो र बाँस गरी आठ स्थानमा मोती उत्पन्न हुन्छ । मोतीले शीतल गर्दछ । यसले वीर्य बढाउँदछ, आँखालाई फाइदा गर्दछ तथा बल र पुष्टि दिन्छ ।

## मुगा

**पुंसि क्लीबे प्रवालः स्यात्पुमानेव तु विद्रुमः ॥१८५॥**

प्रवाल (पुंलिङ्ग र नपुंसक लिङ्गमा) र विद्रुम (पुंलिङ्गमा मात्र) : यी मुगाका संस्कृत पर्यायवाची नामहरू हुन् ।

## रत्नका गुण

**रत्नानि भक्षितानि स्युर्मधुराणि सराणि च ।**
**चक्षुष्याणि च शीतानि विषघ्नानि धृतानि च ॥१८६॥**
**मङ्गल्यानि मनोज्ञानि ग्रहदोषहराणि च ।**

उल्लेखित (पन्ना, माणिक, पुष्पराज, नीलमणि, गोमेद, वैदूर्यमणि, मोती र मुगा) रत्नको भस्म मिठो हुन्छ । यसले मलमूत्र तलतिर सार्दछ । यो आँखाका लागि लाभदायक हुन्छ । यसले शीतल गर्दछ र विषविकार नाश गर्दछ । उल्लेखित रत्न लगाउनाले मङ्गल हुन्छ, मनलाई आनन्द दिन्छ तथा ग्रहदोष हटाउँदछ ।

## कुन ग्रहदोषका लागि कुन रत्न लगाउने

**रत्नमालायाम्-**
**माणिक्यं तरणेः सुजातममलं मुक्ताफलं शीतगो-**
**र्माहेयस्य तु विद्रुमो निगदितः सौम्यस्य गारुत्मतम् ।**
**देवेज्यस्य च पुष्परागमसुराचार्यस्य वज्रं शने-**
**र्नीलं निर्मलमन्ययोर्निगदिते गोमेदवैदूर्यके ॥१८७॥**

रत्नमालामा बताइए अनुसार सूर्यका लागि माणिक, चन्द्रमाका लागि निर्मल मोती, मङ्गलका लागि मुगा, बुधका लागि पन्ना, बृहस्पतिका लागि पुष्पराज, शुक्रका लागि हीरा, शनिका लागि नीलमणी, राहुका लागि गोमेद र केतुका लागि वैदूर्य लगाउनु पर्दछ ।

## उपरत्न

**उपरत्नानि काचश्च कर्पूराश्मा तथैव च ।**
**मुक्ताशुक्तिस्तथा शङ्ख इत्यादीनि बहून्यपि ॥१८८॥**
**गुणा यथैव रत्नानामुपरत्नेषु ते तथा ।**
**किन्तु किञ्चित्ततो हीना विशेषोऽयमुदाहृतः ॥१८९॥**

काँच, कर्पूराश्म, मोतीको सीपि, शङ्ख आदि धेरै उपरत्नहरू छन् । जे गुण रत्नका हुन्छन् उपरत्नका पनि तिनै गुण हुन्छन् । तर गुणको मात्रा कम हुन्छ, फरक यत्ति हो ।

## विष

**विषं तु गरलः क्ष्वेडस्तस्य भेदानुदाहरे ।**
**वत्सनाभः सहारिद्र : सक्तुकश्च प्रदीपनः ॥१९०॥**
**सौराष्ट्रिकः शृङ्गिकश्च कालकूटस्तथैव च ।**
**हालाहलो ब्रह्मपुत्रो विषभेदा अमी नव ॥१९१॥**

विष, गरल र क्ष्वेड : यी विषका संस्कृत पर्यायवाची नामहरू हुन् । वत्सनाभ, हारिद्र, सक्तुक, प्रदीपन, सौराष्ट्रिक, श्रृङ्गिक, कालकूट, हलाहल र ब्रह्मपुत्र : यी प्रमुख नौ प्रकारका विषका जात हुन् ।

## वत्सनाभ

**सिन्दुवारसदृक्पत्रो वत्सनाभ्याकृतिस्तथा ।**
**यत्पार्श्वे न तरोर्वृद्धिर्वत्सनाभः स भाषितः ॥१९२॥**

जुन वनस्पतिका सिमाली (वृक्ष) का जस्ता पात हुन्छन्, जुन वृक्षाको (जराको) आकार बाच्छाको नाइटो जस्तो हुन्छ र जुन वृक्षाका नजिक अरु बोटविरुवा हुर्कन सक्दैन त्यसलाई 'वत्सनाभ' भनी जान्नू ।

## हारिद्रा

**हरिद्रा तुल्यमूलो यो हारिद्रः स उदाहृतः ।**

जसको जरा वा गाना हलेदोको जस्तो हुन्छ त्यो हारिद्र (विष) हो ।

## सक्तुक

**यद्ग्रन्थिः सक्तुकेनैव पू(चू)र्णमध्यः स सक्तुकः ॥१९३॥**

जुन बोटको गाँठामा सातुजस्तो धुलो हुन्छ त्यसलाई 'सक्तुक' भनिन्छ ।

## प्रदीपन

**वर्णतो लोहितो यः स्याद्दीप्तिमान् दहनप्रभः ।**
**महादाहकरः पूर्वैः कथितं स प्रदीपनः ॥१९४॥**

जुन वनस्पति रातो हुन्छ, जसको कान्ति बलिरहेको अग्निसमान हुन्छ अनि जुन अति नै डाह गर्ने हुन्छ त्यस विषलाई पहिलेका विद्वानहरूले 'प्रदीपन' भनेका छन् ।

### सौराष्ट्रिक

**सुराष्ट्रविषये यः स्यात्स सौराष्ट्रिक उच्यते ।**

सुराष्ट्र (गुजरात) देशमा उत्पन्न हुने विषलाई सौराष्ट्रिक भनिन्छ ।

### शृङ्गिक

**यस्मिन् गोशृङ्गके बद्धे दुग्धं भवति लोहितम् ॥१९५॥**
**स शृङ्गिक इति प्रोक्तो द्रव्यतत्त्वविशारदैः ।**

जुन वनस्पति (विष) लाई गाईको सिङमा बाँध्दा गाईको दूध रातो हुन्छ त्यो विषलाई शृङ्गिक भनी द्रव्यको रहस्य जान्नेहरूले बताएका छन् ।

### कालकूट

**देवासुररणे देवैर्हतस्य पृथुमालिनः ॥१९६॥**
**दैत्यस्य रुधिराज्जातस्तरुरश्वत्थसन्निभः ।**
**निर्यासः कालकूटोऽस्य मुनिभिः परिकीर्त्तितः ॥१९७॥**
**सोऽहिक्षेत्रे शृङ्गवेरे कोङ्कणे मलये भवेत् ।**

देवता र दानवका बीचमा युद्ध हुँदा देवताले पृथुमालिन नाम गरेको एक दानवलाई मारे । त्यो दानवको रगतबाट एउटा पीपलजस्तै रूख उम्रियो । त्यो रूको चोपलाई मुनिजनले कालकूट विष भनी बताएका छन् । यो विष अहिक्षेत्र (नागपूर), श्रृङ्गवेर, कोंकणदेश र मलयाचलमा हुन्छ ।

### हलाहल

**गोस्तनाभफलो गुच्छस्तालपत्रच्छदस्तथा ॥१९८॥**
**तेजसा यस्य दह्यन्ते समीपस्था द्रुमादयः।**
**असौ हालाहलो ज्ञेयः किष्किन्धायां हिमालये ॥१९९॥**
**दक्षिणाब्धितटे देशे कोङ्कणेऽपि च जायते ।**

जुन वृक्षको फलको झुप्पा अंगुरको फलको झुप्पा जस्तो हुन्छ, जसका पात ताडका पात जस्ता हुन्छन् अनि जसको तेजले नजिक रहेका अरु रुखविरुवा ढड्दछन् त्यसलाई हलाहल भनी जान्नू । यो किष्किन्धा,

हिमालय पर्वत, दक्षिणी समुद्री किनारका देश र कोंकणमा उत्पन्न हुन्छ । (पेयर डी अमरकोशले गोस्तनाभको अर्थ गाईको थुन जस्तो भनेर लेखेको छ) ।

## ब्रह्मपुत्र

**वर्णतः कपिलो यः स्यात्तथा भवति सारतः ॥२००॥**
**ब्रह्मपुत्रः सविज्ञेयो जायते मलयाचले ।**

कैलो रङको भई सार पनि कैलो हुने विषलाई ब्रह्मपुत्र भनिन्छ । यो मलयाचलमा उत्पन्न हुन्छ ।

## विषका जात

**ब्राह्मणः पाण्डुरस्तेषु क्षत्रियो लोहितप्रभः ॥२०१॥**
**वैश्यः पीतोऽसितः शूद्रो विष उक्तश्चतुर्विधः ।**
**रसायने विषं विप्रं क्षत्रियं देहपुष्टये ॥२०२॥**
**वैश्यं कुष्ठविनाशाय शूद्रं दद्याद्वधाय हि ।**

विषका ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र गरी चार जात हुन्छन् । यसमध्ये ब्राह्मणको रङ सेतो, क्षत्रियको रङ रातो, वैश्यको रङ पहेँलो र शूद्रको रङ कालो हुन्छ । ब्राह्मण जातिको विष रसायन कर्ममा, क्षत्रिय जातको विष शरीर पुष्ट पार्न, वैश्य जातको विष कुष्ठरोगको उपचार गर्न र शूद्र जातको विष मार्नका लागि उपयोगी हुन्छ ।

**विषं प्राणहरं प्रोक्तं व्यवायि च विकाशि च ॥२०३॥**
**आग्नेयं वातकफहृद्योगवाहि मदावहम् ।**

विष प्राणनाशक, व्यवायी, विकाशी, डाह गर्ने, वातविकार तथा कफविकार नाशक, योगवाही र बुद्धिनाशक (नसालु) हुन्छ ।

**तदेव युक्तियुक्तं तु प्राणदायि रसायनम् ॥२०४॥**
**योगवाहि त्रिदोषघ्नं बृंहणं वीर्यवर्द्धनम् ।**

यही विषलाई प्रशोधन गरेर खाने हो भने यसले प्राणशक्ति बढाउँदछ तथा रसायनी र योगवाही हुन्छ । यो त्रिदोषनाशक, पौष्टिक र वीर्यवर्धक हुन पुग्दछ ।

**ये दुर्गुणा विषेऽशुद्धे ते स्युर्हीना विशोधनात् ॥२०५॥**
**तस्माद्विषं प्रयोगेषु शोधयित्वा प्रयोजयेत् ।**

जुन अवगुण अप्रशोधित विषका बारेमा बताइए ती अवगुण प्रशोधन गरेपछि अत्यन्त कम हुन पुग्दछन् । त्यसैले औषधीका लागि विषको प्रयोग गर्दा राम्ररी प्रशोधन गरेर मात्र प्रयोग गर्नु पर्दछ ।

## उपविष

**अर्कक्षीरं स्नुहीक्षीरं लाङ्गली करवीरकः ॥**
**गुञ्जाऽहिफेनो धत्तूरः सप्तोपविषजातयः ॥२०६॥**

आँकको दूध, सिउँडीको दूध, हलहले, करवीर, रातीगेडी, अफिम र धतुरो : यी उपविषका जात हुन् ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे धात्वादिवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको धातु आदि वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ धान्यवर्गः ॥
## (अनाज-वर्ग)
### अनाजका प्रकार :

**शालिधान्यं व्रीहिधान्यं शूकधान्यं तृतीयकम् ।**
**शिम्बीधान्यं क्षुद्रधान्यमित्युक्तं धान्यपञ्चकम् ॥१॥**

शालि, व्रीहि, शूक, शिम्बी र क्षुद्र गरी पाँच किसिमका अनाज (धान्य) हुन्छन् ।

**शालयो रक्तशाल्याद्या व्रीहयः षष्टिकादयः ।**
**यवादिकं शूकधान्यं मुद्गाद्यंशिम्बिधान्यकम् ॥२॥**
**कङ्ग्वादिकं क्षुद्र धान्यं तृणधान्यञ्च तत्स्मृतम् ।**

शालिका रक्तशालि आदि, व्रीहिका सठिया आदि, शूकका जौ आदि, शिम्बीका मुगी आदि र क्षुद्रका कागुनो आदि जात हुन्छन् । क्षुद्रधान्यलाई तृणधान्य पनि भनिन्छ ।

## शालिधान

**कण्डनेन विना शुक्ला हैमन्ताः शालयः स्मृताः ॥३॥**

हेमन्त ऋतुमा पाक्ने तथा नकुटिकन (धान नै) सेतो हुने धानका जातलाई शालिधान्य भनिन्छ । (कण्डनको अर्थ भुस वा कुट्नु हुन्छ । “कण्डनेन विना” को अर्थ कसैले भुस बिना त कसैले नकुटिकन भनी लगाएका छन्) ।

## शालिधानका जातहरू :

**रक्तशालि सकलमः पाण्डुकः शकुनाहृतः ।**
**सुगन्धकः कर्दमको महाशालिश्च दूषकः ॥४॥**
**पुष्पाण्डकः पुण्डरीकस्तथा महिषमस्तकः ।**
**दीर्घशूकः काञ्चनको हायनो लोध्रपुष्पकः ॥५॥**
**इत्याद्याः शालयः सन्ति बहवो बहुदेशजाः ।**
**ग्रन्थविस्तरभीतेस्ते समस्ता नात्र भाषिताः ॥६॥**

रक्तशालि, कलम, पाण्डुक, शकुनाहृत, सुगन्धक, कर्दमक, महाशालि, दूषक, पुष्पाण्डक, पुण्डरीक, महिषमस्तक, दीर्घशूक, काञ्चनक, हायन र लोध्रपुष्पक आदि अनेक देशमा उत्पन्न हुने अनेक थरी शालिधान्य हुन्छन्, ती सबैको वर्णन गर्दा ग्रन्थ ठूलो हुने डरले यहाँ वर्णन गरिएन ।

## शालिधानको चामलका गुण :

**शालयो मधुरा स्निग्धा बल्या बद्धाल्पवर्चसः ।**
**कषाया लघवो रुच्याः स्वर्या वृष्याश्च बृंहणाः ॥**
**अल्पानिलकफाः शीताः पित्तघ्ना मूत्रलास्तथा ॥७॥**

शालिधानको चामल गुलियो, टर्रो, चिल्लो बलदायक, हल्को दिसा लगाउने, पचाउन हलुका, रुचिवर्धक, स्वरलाई फाइदा गर्ने, वीर्यशाली, पौष्टिक, थोरै वातविकार र कफविकार गर्ने, शीतल गर्ने, पित्तविकार नाशक र पिसाब धेरै लगाउने गुणको हुन्छ ।

**शालयो दग्धमृज्जाताः कषाया लघुपाकिनः ।**
**सृष्टमूत्रपुरीषाश्च रूक्षाः श्लेष्मापकर्षणाः ॥८॥**

जुन शालिधान्य जलेको (डढेको) जमिनमा उम्रेको हुन्छ त्यो धानको चामल टर्रो चाँडै पच्ने, मलमूत्र निकाल्ने, रुखो तथा कफलाई तान्ने वा कम गर्ने गुणको हुन्छ ।

**कैदारा वातपित्तघ्ना गुरवः कफशुक्रलाः ।**
**कषायाश्चाल्पवर्चस्का मेध्याश्चैव बलावहाः ॥९॥**

जोतिएको खेतमा आफैं उम्रने शालिधानको चामल वातविकार कफविकार नाशक, पचाउन कठिन, कफ र शुक्र वर्धक, टर्रो, केही दिसा खुलाउने, दिमागको ग्रहण क्षमताका लागि हितकर र बलवर्धक हुन्छ ।

**स्थलजाः स्वादवः पित्तकफघ्ना वातपित्तदाः ।**
**किञ्चित्तिक्ताः कषायाश्च विपाके कटुका अपि ॥१०॥**

बाँझो जमिनमा नाभो उम्रेको शालिधानको चामल स्वादिलो, पित्तविकार र कफविकार नाशक, वातविकार र जठराग्नि वर्धक, केही तीतो र टर्रो तथा पचेपछि पनि पिरो हुन्छ ।

**वापिता मधुरा वृष्या बल्याः पित्तप्रणाशनाः ।**
**श्लेष्मलाश्चाल्पवर्चस्काः कषाया गुरवो हिमाः ॥११॥**

जोतेको वा बाँझो जग्गामा रोपिएको शालिधानको चामल मिठो, वीर्यवर्धक, बलदायक, पित्तविकार नाशक, कफविकार बढाउने, अलिअलि दिसा निकाल्ने, पचाउन कठिन र शीतल गर्ने गुणको हुन्छ ।

**वापितेभ्यो गुणैः किञ्चिद्धीनाः प्रोक्ता अवापिताः ॥१२॥**

जोतिएको वा नजोतिएको जमिनमा नरोपिएको (नाभो) शालिधानको चामलको गुणस्तर रोपिएको शालिधानको चामलको गुणस्तरभन्दा केही कम हुन्छ ।

**रोपितास्तु नवा वृष्या पुराणा लघवः स्मृताः ।**
**तेभ्यस्तुरोपिता भूयः शीघ्रपाका गुणाधिकाः ॥१३॥**

रोपिएको शालिधानको चामल नयाँ भए वीर्यवर्धक र पुरानो भए पचाउन हलुका हुन्छ । त्यही धान पुनः रोपेर हुने शालिधानको चामल चाँडै पच्ने र बढी गुनिलो हुन्छ ।

**छिन्नरूढा हिमा रूक्षा बल्याः पित्तकफापहाः ।**
**बद्धविट्काः कषायाश्च लघवश्चाल्पतिक्तकाः ॥१४॥**

धान काटिसकेपछि त्यही बोटमा पलाएको शालिधानको चामल शीतल गर्ने, रुखो, बलदायक, पित्तविकार नाशक, कफविकार नाशक, कब्जियत गराउने, टर्रो, पचाउन सहज र हल्का तीतो स्वादको हुन्छ ।

**रक्तशालिर्वरस्तेषु बल्यो वर्ण्यस्त्रिदोषजित् ।**
**चक्षुष्यो मूत्रलः स्वर्यः शुक्रलस्तृड्ज्वरापहः ॥१५॥**
**विषव्रणश्वासकासदाहनुद् वह्निपुष्टिदः ।**
**तस्मादल्पान्तरगुणाः शालयो महदादयः ॥१६॥**

रक्तशालि (रातोमार्सी) सबै खालका शालिधानमा श्रेष्ठ हुन्छ । यसले बल दिन्छ, वर्णमा निखार लेराउँदछ, त्रिदोष (कफ, पित्त र वात विकार) नाश गर्दछ, आँखाका लागि लाभदायक हुन्छ, पिसाब लगाउँदछ, स्वरका लागि फाइदाजनक हुन्छ र शुक्र बढाउँदछ । रातोमार्सीले तिर्खा, जरो, विषविकार, घाउखटिरा, दम, खोकी र डाह नाश गर्दछ । यसले पाचन-अग्निलाई पनि बलियो बनाउँदछ । यसको तुलनामा अन्य जातका शालिधान कम गुणस्तरका हुन्छन् ।

## व्रीहिधान्य

**वार्षिकाः कण्डिताः शुक्ला व्रीहयश्चिरपाकिनः ।**
**कृष्णव्रीहिः पाटलश्च कुक्कुटाण्डक इत्यपि ॥१७॥**
**शालामुखो जतुमुख इत्याद्या व्रीहयः स्मृताः ।**

वर्षा ॠतुमा पाक्ने, कुटेपछि सेता देखिने र ढिलो गरी पच्ने वा पाक्ने धानलाई व्रीहिधान्य भनिन्छ । यसमा कृष्णव्रीहि, पाटल, कुक्कुटाण्डक, शालामुख, जतुमुख आदि जात हुन्छन् ।

**कृष्णब्रीहिः स विज्ञेयो यत्कृष्णतुषतण्डुलः ॥१८॥**
**पाटलः पाटलापुष्पवर्णको ब्रीहिरुच्यते ।**
**कुक्कुटाण्डाकृतिव्रीहिः कुक्कुटाण्डक उच्यते ॥१९॥**
**शालामुखः कृष्णशूकः कृष्णतण्डुल उच्यते ।**
**लाक्षावर्णं मुखं यस्य ज्ञेयो जतुमुखस्तु सः ॥२०॥**

जुन व्रीहि धानका भुस र चामल दुबै काला हुन्छन् त्यो धानलाई कृष्णव्रीहि भनिन्छ । जुन व्रीहि धानको रङ पाडरीको फूल जस्तो हुन्छ त्यसलाई पाटलव्रीहि भनिन्छ । कुखुराको फुलजस्तो आकारको व्रीहि धानलाई कुक्कुटाण्डक व्रीहि भनिन्छ । धानको टुँडो र चामल दुबै कालो हुने व्रीहि धानलाई शालामुख व्रीहि भनिन्छ । धानको मुख लाहाजस्तो रातो हुने व्रीहि धानलाई जतुमुख व्रीहि भनिन्छ ।

**व्रीहयः कथिताः पाके मधुरा वीर्यतो हिमाः ।**
**अल्पाभिष्यन्दिनो बद्धवर्चस्काः षष्टिकैः समाः ॥२१॥**
**कृष्णव्रीहिर्वरस्तेषां तस्मादल्पगुणाः परे ।**

व्रीहि धानको चामल पचेपछि गुलियो हुन्छ । यसले शीतल गर्दछ । थोरै अभिष्यन्दी र दिसा कस्ने गर्दछ । अन्य गुण सठिया चामलका जस्तै हुन्छन् । यी व्रीहिमध्ये कृष्णव्रीहि सबभन्दा उत्तम हुन्छ, यसका तुलनामा अन्य व्रीहिधान्य कम गुनिला हुन्छन् ।

## षष्टिकाधान्य

**गर्भस्था एव ये पाकं यान्ति ते षष्टिका मताः ॥२२॥**

बाला बाहिर ननिस्की भित्रै पाक्ने धानलाई षष्टिक भनिएको छ ।

**षष्टिकः शतपुष्पश्च प्रमोदकमुकुन्दकौ ।**
**महाषष्टिक इत्याद्याः षष्टिकाः समुदाहृताः ॥२३॥**
**एतेऽपि व्रीहयः प्रोक्ता व्रीहिलक्षणदर्शनात् ।**

षष्टिक, शतपुष्प, प्रमोदक, मुकुन्दक, महाषष्टिक आदि षष्टिक धानका जात हुन् । यिनलाई पनि व्रीहिधान्यको लक्षण देखिएको हुनाले व्रीहिधान्य नै भन्ने गरिन्छ ।

**षष्टिका मधुरा शीता लघवो बद्धवर्चसः ॥२४॥**
**वातपित्तप्रशमनाः शालिभिः सदृशा गुणैः ।**

षष्टिक धानको चामल गुलियो, शीतल गर्ने, पचाउन हलुका, दिसा कस्ने, वातविकार र पित्तविकार नाशक र गुणमा शालिधान्य सहर हुन्छ ।

**षष्टिका प्रवरा तेषां लघ्वी स्निग्धा त्रिदोषजित् ॥२५॥**
**स्वाद्वी मृद्वी ग्राहिणी च बलदा ज्वरहारिणी ।**
**रक्तशालिगुणैस्तुल्या ततः स्वल्पगुणाः परे ॥२६॥**

षष्टिक जातमा पनि षष्टिक नामकै धानको चामल अन्य जातका षष्टिक धानको चामलभन्दा उत्तम हुन्छ । यो पचाउन हलुका, चिल्लो, त्रिदोषनाशक, स्वादिलो, नरम, सङ्ग्राही, बलदायक र जरो नाशक हुन्छ । यो रक्तशालि सरह नै गुनिलो हुन्छ । अन्य षष्टिकधानको चामल योभन्दा कम गुनिला हुन्छन् ।

## जौ

**यवस्तु सितशूकः स्यान्निःशूकोऽतियवः स्मृतः ।**
**तोक्यस्तद्वत्स हरितस्ततः स्वल्पश्च कीर्त्तितः ॥२७॥**

जौको टुँडो सेतो हुन्छ (वा जौलाई सितशूक पनि भनिन्छ) । टुँडो नहुने जौलाई 'अतियव' (मुडुले जौ) भनिन्छ । यसैगरी टुँडो नहुने, हरियो र छोटो खालको जौलाई 'तोक्य' भनिन्छ ।

**यवः कषायो मधुरः शीतलो लेखनो मृदुः ।**
**व्रणेषु तिलवत्पथ्यो रूक्षो मेधाऽग्निवर्धनः ॥२८॥**
**कटुपाकोऽनभिष्यन्दी स्वर्यो बलकरो गुरुः ।**
**बहुवातमलो वर्णस्थैर्यकारी च पिच्छिलः ॥२९॥**
**कण्ठत्वगामयश्लेष्मपित्तमेदःप्रणाशनः ।**
**पीनसश्वासकासोरुस्तम्भलोहिततृट्प्रणुत् ॥३०॥**
**अस्मादतियवो न्यूनस्तोक्यो न्यूनतरस्ततः ।**

जौ टर्रो र गुलियो स्वादको हुन्छ । यसले शीतल गर्दछ । यो लेखनी र कोमल हुन्छ । यो खटिरा हुँदा तिल झैं पथ्य हुन्छ । रुखो हुन्छ । जौले दिमागको ग्रहण गर्ने क्षमता र पाचनशक्ति बढाउँदछ । यो पचेपछि पिरो हुन्छ र अभिष्यन्दी पनि हुँदैन । यसलाई स्वरलाई फाइदा गर्दछ र बल दिन्छ । यो पचाउन कठिन हुन्छ । यसले वातविकार दिसा बढाउँदछ । शरीरको वर्णलाई स्थिर राख्दछ । यो लेस्याइलो हुन्छ । जौले घाँटी र छालाका रोग, कफविकार, पित्तविकार र बोसोविकार नाश गर्दछ । यसले पिनास, दम, खोकी, ऊरुस्तम्भ,

रक्तविकार र तिर्खा-रोग नाश गर्दछ । यो (जौ) भन्दा अतियव कम गुनिलो र अतियवभन्दा तोक्य अझ कम गुनिलो हुन्छ ।

**गोधूमः सुमनोऽपि स्यात्त्रिविधः स च कीर्त्तितः ॥३१॥**
**महागोधूम इत्याख्यः पश्चाद्देशात्समागतः ।**

गोधूम र सुमन : यी गहुँका संस्कृत पर्यायवाची नामहरू हुन् । यो तीन जातको हुन्छ भनिएको छ । पश्चिम देश (पञ्जाब आदि) बाट आएको गहुँलाई 'महागोधूम' भनिन्छ । (यसका ठुला दाना हुन्छन्) ।

**मधूली तु ततः किञ्चिदल्पा सा मध्यदेशजा ॥३२॥**
**निःशूको दीर्घगोधूमः क्वचिन्नन्दीमुखाभिधः ।**

मध्यदेश (आग्रा, मथुरा आदि) मा उब्जा हुने मध्यम आकारको महागोधूमभन्दा केही सानो दाना हुने गहुँलाई 'मधूली' भनिन्छ । टुँडो नहुने लामो जातको गहुँलाई 'दीर्घगोधूम' वा कसैले 'नन्दीमुख' पनि भन्दछन् ।

## गहुँ

**गोधूमः मधुरः शीतो वातपित्तहरो गुरुः ॥३३॥**
**कफशुक्रप्रदो बल्यः स्निग्धः सन्धानकृत्सरः ।**
**जीवनो बृंहणो वर्ण्यो व्रण्यो रुच्यः स्थिरत्वकृत् ॥३४॥**

गहुँले गुलियो, शीतल गर्ने, वातविकार नाशक, पित्तविकार नाशक, पचाउन कठिन, कफविकार बढाउने, शुक्र बढाउने, बलदायक, चिल्लो र छुट्टिएका हाड आदि जोड्ने गुणको हुन्छ । यसले मलमूत्रलाई तलतिर सार्दछ, जीवनशक्ति बढाउँदछ, पौष्टिक र वर्णमा निखार लेराउने खालको हुन्छ । यसले घाउखटिरा आउँदा लाभ गर्दछ, रुची जगाउँदछ र शरीरलाई स्थिर राख्न मद्दत गर्दछ ।

**मधूली शीतला स्निग्धा पित्तघ्नी मधुरा लघुः ।**
**शुक्रला वृंहणी पथ्या तद्वन्नन्दीमुखः स्मृतः ॥३५॥**

मधूलीले शीतल गर्दछ, चिल्लो हुन्छ, पित्तविकार नाश गर्दछ, गुलियो र पचाउन हलुका हुन्छ । यसले शुक्र वृद्धि गर्दछ । यो पौष्टिक र पथ्य हुन्छ । यिनै गुण नन्दीमुखका पनि हुन्छन् ।

## शिम्बीधान्य

**शमीजाः शिम्बिजाः शिम्बीभवाः सूप्याश्च वैदलाः ।**
**वैदला मधुरा रूक्षाः कषायाः कटुपाकिनः ॥३६॥**
**वातलाः कफपित्तघ्ना बद्धमूत्रमला हिमाः ।**

**ऋते मुद्गमसूराभ्यामन्ये त्वाध्मानकारिणः ॥३७॥**

शमीज, शिम्बिज, शिम्बीभव, सूप्य र वैदल : यी शिम्बीधान्यका संस्कृत पर्यायवाची नामहरू हुन् । यी गुलिया, रुखा, टर्रा र पचेपछि पिरा हुन्छन् । यी वातविकार गर्ने, कफविकार र पित्तविकार नाशक, मलमूत्रलाई कस्ने, शीतल गर्ने तथा मुगी र मसुरो बाहेक सबै आध्मान गर्ने गुणका हुन्छन् ।

## मुगी

**मुद्गो रूक्षो लघुर्ग्राही कफपित्तहरो हिमः ।**
**स्वादुरल्पानिलो नेत्र्यो ज्वरघ्नो वनजस्तथा ॥३८॥**
**मुद्गो बहुविधः श्यामो हरितः पीतकस्तथा ।**
**श्वेतो रक्तश्च तेषां तु पूर्वः पूर्वो लघुः स्मृतः ॥३९॥**
**सुश्रुतेन पुनः प्रोक्तो हरितः प्रवरो गुणैः ।**
**चरकादिभिरप्युक्त एष एव गुणाधिकः ॥४०॥**

मुगी रुखो, पचाउन सहज, सङ्ग्राही, कफविकार नाशक, पित्तविकार नाशक, शीतल गर्ने, स्वादिलो, हल्का वातविकार गर्ने, आँखाका लागि लाभकारी र जरो नाशक हुन्छ । यिनै गुण वनमुगीमा पनि हुन्छ । मुगी कालो, हरियो, पहेँलो, सेतो, रातो आदि अनेक किसिमको हुन्छ । यी मुगीमध्ये पहिलो पहिलो क्रमशः बढी पचाउन सहज हुन्छन् । सुश्रुतले भने हरियो मुगी सर्वोत्तम गुणको हुन्छ भनेका छन् । चरक आदि महर्षिले पनि यो कुरालाई समर्थन गरेका छन् ।

## मास

**माषो गुरुः स्वादुपाकः स्निग्धो रुच्योऽनिलापहः ।**
**स्रंसनस्तर्पणो बल्यः शुक्रलो वृंहणः परः ॥४१॥**
**भिन्नमूत्रमलः स्तन्यो मेदःपित्तकफप्रदः ।**
**गुदकीलार्दितश्वासपक्तिशूलानि नाशयेत् ॥४२॥**
**कफपित्तकरा माषाः कफपित्तकरं दधि ।**
**कफपित्तकरा मत्स्या वृन्ताकं कफपित्तकृत् ॥४३॥**

मास पचाउन कठिन, पचेपछि गुलियो, चिल्लो, रुचिकर र वातविकार नाशक हुन्छ । यसले संस्रन र तर्पण गर्दछ, बल दिन्छ र शुक्र बढाउँदछ । यो अति नै पौष्टिक हुन्छ । यसले मलमूत्रलाई खुकुलो पार्दछ तथा दूध, बोसो, पित्त र कफ बढाउँदछ । यसले गुदकील, अर्दितवात, दम र पक्तिशूल नाश गर्दछ । माष, दही, माछा र भण्टा : यी कफविकार र पित्तविकार बढाउने गुणका हुन्छन् ।

## बोडी

**राजमाषो महामाषश्चपलश्च बलः स्मृतः ।**

**राजमाषो गुरुः स्वादुस्तुवरस्तर्पणः सरः ॥४४॥**
**रूक्षो वातकरो रुच्यः स्तन्यो भूरिबलप्रदः ।**
**श्वेतो रक्तस्तथा कृष्णस्त्रिविधः स प्रकीर्त्तितः ॥४५॥**
**यो महांस्तेषु भवति स एवोक्तो गुणाधिकः ।**

राजमाष, महामाष, चपल र बल : यी राजमाषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचाउन कठिन, स्वादिलो, टर्रो, तृप्तिदायक, दिसा तलतिर सार्ने, रुखो, वातविकार गर्ने, रुचिप्रद, दूध बढाउने र अति नै बलवर्धक हुन्छ । सेतो, रातो र कालो गरी यो तीन किसिमको हुन्छ भनिएको छ । यीमध्ये जुन ठूलो हुन्छ, त्यो बढी गुनिलो हुन्छ ।

## सिमी

**निष्पावो राजशिम्बिः स्याद्वल्लकः श्वेतशिम्बिकः ॥४६॥**
**निष्पावो मधुरो रूक्षो विपाकेऽम्लो गुरुः सरः ।**
**कषायः स्तन्यपित्तास्रमूत्रवातविबन्धकृत् ॥४७॥**
**विदाह्युष्णो विषश्लेष्मशोथहृच्छुक्रनाशनः ।**

निष्पाव, राजशिम्बि, वल्लक र श्वेतशिम्बिक : यी सिमीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शुरुमा मिठो र टर्रो तथा पचेपछि अमिलो हुन्छ । सिमी रुखो, पचाउन कठिन र मलमूत्र तलतिर सार्ने गुणको हुन्छ । यो टर्रो हुन्छ । यसले दूध, पित्त, रगत, पिसाब र वायु बढाउँदछ । सिमीले कब्जियत गर्दछ । यसले डाह र गर्मी गर्दछ तथा विषविकार, कफविकार, सुजन र शुक्र नाश गर्दछ ।

## वनमुगी (गेडा ? वा जातविशेष ?)

**मकुष्ठो वनमुद्गः स्यान्मकुष्ठकमुकुष्ठकौ ॥४८॥**
**मकुष्ठो वातलो ग्राही कफपित्तहरो लघुः ।**
**वह्निजिन्मधुरः पाके कृमिकृज्ज्वरनाशनः ॥४९॥**

मकुष्ठ, वनमुद्ग, मकुष्ठक र मुकुष्ठक : यी बनमुगीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो वातविकार गर्ने, सङ्ग्राही, कफविकार नाशक, पित्तविकार नाशक र पचाउन हलुका हुन्छ । यसले पाचकाग्निलाई जित्दछ, पचेपछि गुलियो हुन्छ, कीरा पार्दछ र जरो नाश गर्दछ ।

## मुसुरो

**मङ्गल्यको मसूरः स्यान्मङ्गल्या च मसूरिका ।**
**मसूरो मधुरः पाके संग्राही शीतलो लघुः ॥५०॥**
**कफपित्तास्रजिद्रूक्षो वातलो ज्वरनाशनः ।**

मङ्गल्यक, मसूर, मङ्गल्या र मसूरिका : यी मुसुरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पचेपछि गुलियो, सङ्ग्राही, शीतल गर्ने र पचाउन सहज हुन्छ । यसले कफविकार, पित्तविकार र रक्तविकार नाश गर्दछ । यो रुखो हुन्छ । यसले वातविकार गर्दछ तर जरो नाश गर्दछ ।

## रहर

**आढकी तुवरी चापि सा प्रोक्ता शणपुष्पिका ॥५१॥**
**आढकी तुवरा रूक्षा मधुरा शीतला लघुः ।**
**ग्राहिणी वातजननी वर्ण्या पित्तकफास्रजित् ॥५२॥**

आढकी, तुवरी र शणपुष्पिका : यी रहरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो टर्रो, रुखो, गुलियो, शीतल गर्ने र पचाउन हलुका हुन्छ । रहर सङ्ग्राही, वातविकारकारी, वर्णमा निखार लेराउने तथा पित्तविकार, कफविकार र रक्तविकार नाशक हुन्छ ।

## चना

**चणको हरिमन्थः स्यात्सकलप्रिय इत्यपि ।**
**चणकः शीतलो रूक्षः पित्तरक्तकफापहः ॥५३॥**
**लघुः कषायो विष्टम्भी वातलो ज्वरनाशनः ।**

चणक, हरिमन्थ र सकलप्रिय : यी चनाका संस्कृत पर्यायवाची नामहरू हुन् । चना टर्रो, शीतल गर्ने, रुखो, तथा पित्तविकार, रक्तविकार र कफविकार नाशक हुन्छ । यो पचाउन सहज, टर्रो, मलमूत्र अवरोधक ( विष्टम्भी), वातविकार कारक र जरो नाशक हुन्छ ।

**स चाङ्गारेण सम्भृष्टस्तैलभृष्टश्च तद्गुणः ॥५४॥**
**आर्द्र भृष्टो बलकरो रोचनश्च प्रकीर्त्तितः ।**
**शुष्कभृष्टोऽतिरूक्षश्च वातकुष्ठप्रकोपणः ॥५५॥**
**स्विन्नः पित्तकफौ हन्यात् सूपः क्षोभकरो मतः ।**
**आर्द्रोऽतिकोमलो रुच्यः पित्तशुक्रहरो हिमः ॥५६॥**
**कषायो वातलो ग्राही कफपित्तहरो लघुः ।**

आगोमा केही नहाली सुक्खा भुटिएको र तेलमा भुटिएको चनामा उल्लेखित गुण हुन्छ । भिजाएर भुटिएको चना बलदायक र रुचिकारक हुन्छ । सुकेको भुटेको चना अति नै रुखो तथा वातविकार र कुष्ठरोगलाई बढाउने खालको हुन्छ । उमालिएको चना पित्तविकार र कफविकार नाशक हुन्छ । चनाको दालले क्षोभ उत्पन्न गर्दछ । भिजाइएको चना अति नरम, रुचिकारक, पितविकार नाशक, शुक्र नाशक, शीतल गर्ने, टर्रो, वातविकार गर्ने, सङ्ग्राही, कफविकार नाशक, पित्तविकार नाशक र पचाउन हलुका हुन्छ ।

## केराउ

**कलायो वर्त्तुलः प्रोक्तः सतीनश्च हरेणुकः ॥५७॥**
**कलायो मधुरः स्वादुः पाके रूक्षश्च शीतलः ।**

कलाय, वर्त्तुल, सतीन र हरेणुक : यी मटरकोसाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो शुरुमा र पचेपछि पनि गुलियो हुन्छ तथा रुखो र शीतल गर्ने गुणको हुन्छ ।

## खेसरी

**त्रिपुटः खण्डिकोऽपि स्यात्कथ्यन्ते तद्गुणा अथ ॥५८॥**
**त्रिपुटो मधुरस्तिक्तस्तुवरो रूक्षणो भृशम् ।**
**कफपित्तहरो रुच्यो ग्राहकः शीतलस्तथा ॥५९॥**
**किन्तु खञ्जत्वपङ्गुत्वकारी वातातिकोपनः ।**

त्रिपुट र खण्डिक : यी खेसरीका संस्कृत पर्यायवाची नामहरू हुन् । खेसरी गुलियो, तीतो र टर्रो हुन्छ । यो अति नै रुखो हुन्छ । यसले कफविकार र पित्तविकार नाश गर्दछ तथा रुची जगाउँदछ । खेसरी सङ्ग्राही हुन्छ । यसले शीतल गर्दछ । तर यसमा लङ्गडो बनाउने, पंगु (लुलो) बनाउने तथा विशेषतः वायुविकार बढाउने गुण हुन्छ ।

## गहत

**कुलत्थिका कुलत्थश्च कथ्यन्ते तद्गुणा अथ ॥६०॥**
**कुलत्थः कटुकः पाके कषायः पित्तरक्तकृत् ।**
**लघुर्विदाही वीर्योष्णः श्वासकासकफानिलान् ॥६१॥**
**हन्ति हिक्काऽश्मरीशुक्रदाहानाहान् सपीनसान् ।**
**स्वेदसंग्राहको मेदोज्वरकृमिहरः सरः ॥६२॥**

कुलत्थिका र कुलत्थ : यी गहतका संस्कृत पर्यायवाची नामहरू हुन् । गहत पिरो र पचेपछि टर्रो हुन्छ । यसले पित्तविकार र रक्तविकार गर्दछ । यो पचाउन हलुका, डाह गर्ने, गर्मी गर्ने तथा दम, खोकी, कफविकार र वातविकार नाशक हुन्छ । गहतले बाडुली, पत्थरी, शुक्र, डाह, आनाह र पिनास नाश गर्दछ । यसमा पसिना रोक्ने, बोसोविकार नाश गर्ने, जरो ठिक गर्ने, कीरा मार्ने र मलमूत्र तलतिर सार्ने गुण हुन्छ ।

## तिल

**तिलः कृष्णः सितो रक्तः स वन्योऽल्पतिलःस्मृतः ।**
**तिलो रसे कटुस्तिक्तो मधुरस्तुवरो गुरुः ॥६३॥**
**विपाके कटुकः स्वादुः स्निग्धोष्णः कफपित्तनुत् ।**
**बल्यः केश्यो हिमस्पर्शस्त्वच्यः स्तन्यो व्रणे हितः ॥६४॥**
**दन्त्योऽल्पमूत्रकृद् ग्राही वातघ्नोऽग्निमतिप्रदः ।**

**कृष्णः श्रेष्ठतमस्तेषु शुक्लो मध्यमः सितः ॥६५॥**
**अन्ये हीनतराः प्रोक्तास्तज्ज्ञै रक्तादयस्तिलाः ।**

तिल कालो, सेतो र रातो गरी तीन प्रकारको हुन्छ । जङ्गलमा हुने तिललाई वन्यतिल वा अल्पतिल भनिन्छ । तिल पिरो, तीतो, गुलियो र टर्रो हुन्छ । यो पचाउन कठिन, पचेपछि पिरो र गुलियो, चिल्लो, गर्मी गर्ने, तथा कफविकार र पित्तविकार नाशक हुन्छ । यसले बल दिन्छ । यो कपालका लागि लाभदायक, छुँदा शीतल गर्ने, छालाका लागि लाभकारी, दूध बढाउने, घाउमा फाइदा गर्ने, दाँतलाई लाभ गर्ने, हल्का पिसाब लगाउने, सङ्ग्राही, वातविकार नाशक तथा पाचकाग्नि र बुद्धि बढाउने गुणको हुन्छ । तिलमध्येमा कालो तिल वीर्यवर्धक र सर्वोत्तम हुन्छ । सेतो तिल गुणका दृष्टिले मध्यम खालको हुन्छ । यस बाहेकका राता आदि तिल निम्न गुणस्तरका हुन्छन् भनी निघण्टुका विद्वानहरूले बताएका छन् ।

## आलस

**अतसी नीलपुष्पी च पार्वती स्यादुमा क्षुमा ॥६६॥**
**अतसी मधुरा तिक्ता स्निग्धा पाके कटुर्गुरुः ।**
**उष्णा दृक्छुक्रवातघ्नी कफपित्तविनाशिनी ॥६७॥**

अतसी, नीलपुष्पी, पार्वती, उमा र क्षुमा : यी आलसका संस्कृत पर्यायवाची नामहरू हुन् । आलस गुलियो, तीतो, चिल्लो, पचेपछि पिरो र पचाउन कठिन हुन्छ । यसले गर्मी गर्दछ तथा दृष्टि, शुक्र, वातविकार, कफविकार र पित्तविकार नाश गर्दछ । (यस श्लोकमा प्रयोग भएको दृक्छुक्र शब्दको अर्थ कसैकसैले दृष्टिविकार र शुक्रविकार भनी लगाएका छन्) ।

## साग विशेष (तुवरी, तोरी)

**तुवरी ग्राहिणी प्रोक्ता लघ्वी कफविषास्रजित् ।**
**तीक्ष्णोष्णा वह्निदा कण्डूकुष्ठकोष्ठकृमिप्रणुत् ॥६८॥**

तुवरी कब्जियत गर्ने, पचाउन सहज तथा कफविकार, विषविकार र रक्तविकार नाशक हुन्छ भनी बताइएको छ । यो तिक्खर, गर्मी गर्ने, पाचकाग्नि वर्धक तथा लुतो, कुष्ठ, पेटका रोग र कीरा नाशक हुन्छ ।

## सर्सिउँ

**सर्षपः कटुकः स्नेहस्तुन्तुभश्च कदम्बकः ।**
**गौरस्तु सर्षपः प्राज्ञैः सिद्धार्थ इति कथ्यते ॥६९॥**
**सर्षपस्तु रसे पाके कटुः स्निग्धः सतिक्तकः ।**
**तीक्ष्णोष्णः कफवातघ्नो रक्तपित्ताग्निवर्धनः ॥७०॥**
**रक्षोहरो जयेत्कण्डूं कुष्ठकोष्ठकृमिग्रहान् ।**
**यथा रक्तस्तथा गौरः किन्तु गौरो वरो मतः ॥७१॥**

सर्षप, कटुक, स्नेह, तुन्तुभ र कदम्बक : यी सर्सिउँका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो (वा पहेँलो) सर्सिउँलाई विद्वानहरूले सिद्धार्थ भनी बताएका छन् । यो पचेपछि पिरो हुन्छ । सर्सिउँ चिल्लो, तीतो, तिक्खर, गर्मी गर्ने, कफविकार नाशक, वातविकार नाशक, तथा रक्तविकार, पित्तविकार र पाचकाग्नि वर्धक हुन्छ । यसले राक्षस बाधा हटाउँदछ तथा लुतो, कुष्ठ, पेटका रोग, पेटका कीरा र ग्रहदोष नाश गर्दछ । पहेँलो सर्सिउँ गुणमा रातो सरह नै भएपनि पहेँलो नै उत्तम हुन्छ ।

## रायो एवं कालो रायो

**राजीतु राजिका तीक्ष्णगन्धा क्षुज्जनिकाऽऽसुरी ।**
**क्षवः क्षुताभिजनकः कृष्णीका कृष्णसर्षपः ॥७२॥**
**राजिका कफपित्तघ्नी तीक्ष्णोष्णा रक्तपित्तकृत् ।**
**किञ्चित् रूक्षाऽग्निदा कण्डूकुष्ठकोष्ठकृमीन्हरेत् ॥७३॥**
**अतितीक्ष्णा विशेषेण तद्वत्कृष्णाऽपि राजिका ।**

राजी, राजिका, तीक्ष्णगन्धा, क्षुज्जनिका र आसुरी : यी रायोका संस्कृत पर्यायवाची नामहरू हुन् । क्षव, क्षुताभिजनक, कृष्णिका र कृष्णसर्षप : यी कालो रायोका संस्कृत पर्यायवाची नामहरू हुन् । रायो (गेडा) ले कफविकार र पित्तविकार नाश गर्दछ । यो तिक्खर हुन्छ । यसले गर्मी गर्दछ । रायोले रक्तपित्त गराउँदछ । यो केही रुखो हुन्छ । यसले जठराग्निलाई बढाउँदछ । रायोले दादलुतो, कुष्ठ र पेटका कीरा नाश गर्दछ । कालो रायोमा पनि रायोका जस्तै गुण हुन्छन् तर यो विशेष तिक्खर हुन्छ ।

## क्षुद्रधान्य

**क्षुद्रधान्यं कुधान्यं च तृणधान्यमिति स्मृतम् ॥७४॥**
**क्षुद्रधान्यमनुष्णं स्यात्कषायं लघु लेखनम् ।**
**मधुरं कटुकं पाके रूक्षं च क्लेदशोषकम् ॥७५॥**
**वातकृद् बद्धविट्कं च पित्तरक्तकफापहम् ।**

क्षुद्रधान्यलाई कुधान्य वा तृणधान्य पनि भनिन्छ । क्षुद्रधान्यले थोरै गर्मी गर्दछ । यो टर्रो, पचाउन सहज, लेखनी, गुलियो, पचेपछि पिरो, रुखो, चिसोपन (आर्द्रता) लाई सुकाउने, वातविकार बढाउने, दिसालाई कस्ने तथा पित्तविकार, रक्तविकार र कफविकारलाई नाश गर्ने गुणको हुन्छ ।

## कागुनु

**स्त्रियां कङ्गुप्रियङ्गु द्वे कृष्णारक्ता सिता तथा ॥७६॥**
**पीता चतुर्विधा कङ्गुस्तासां पीता वरा स्मृता ।**
**कङ्गुस्तु भग्नसन्धानवातकृद् बृंहणी गुरुः ॥७७॥**
**रूक्षा श्लेष्महराऽतीव वाजिनां गुणकृद् भृशम् ।**

स्त्रीलिङ्गमा प्रयोग हुने कङ्गु र प्रियङ्गु कागुनुका संस्कृत पर्यायवाची नामहरू हुन् । यो कालो, रातो, सेतो र पहेँलो गरी चार प्रकारको हुन्छ । यीमध्ये पहेँलो सर्वोत्तम हुन्छ । कागुनुले भाँचिएका वा मर्किएका हाड जोड्दछ र वातविकार बढाउँदछ । यो पौष्टिक, पचाउन कठिन, रुखो र कफविकार नाशक हुन्छ । यो विशेषतः घोडाका लागि गुणकारी हुन्छ ।

## चिना

**चीनाकः काककङ्गुश्च सुश्लक्ष्णः श्लक्ष्णकः स्मृतः ॥७८॥**
**चीनाकः कङ्गुभेदोऽस्ति स ज्ञेयः कङ्गुवद् गुणैः ।**

चीनाक, काककङ्गु, सुश्लक्ष्ण र श्लक्ष्णक : यी चिनाका संस्कृत पर्यायवाची नामहरू हुन् । चिना कागुनुकै एक जात हो र यसका गुण पनि कागुनुकै जस्ता हुन्छन् ।

## सामा (धान)

**श्यामाकः श्यामकः श्यामास्त्रिबीजः स्यादविप्रियः ॥७९॥**
**सुकुमारो राजधान्यं तृणबीजोत्तमश्च सः ।**
**श्यामाकः शोषणो रूक्षो वातलः कफपित्तहृत् ॥८०॥**

श्यामाक, श्यामक, श्याम, त्रिबीज, अविप्रिय, सुकुमार, राजधान्य र तृणबीजोत्तम : यी सामाका संस्कृत पर्यायवाची नामहरू हुन् । सामाले शरीरका रसलाई सोस्दछ, रुखो हुन्छ र वातविकार गर्दछ । यसले कफविकार र पित्तविकार भने नाश गर्दछ ।

## कोदो

**कोद्रवः कोरदूषः स्यादुद्दालो वनकोद्रवः ।**
**कोद्रवो वातलो ग्राही हिमः पित्तकफापहः ॥८१॥**
**उद्दालस्तु भवेदुष्णो ग्राही वातकरो भृशम् ।**

कोद्रव र कोरदूष कोदोको तथा उद्दाल र वनकोद्रव बनकोदोका संस्कृत पर्यायवाची नाम हुन् । कोदोले वातविकार बढाउँदछ र कब्जियत गर्दछ । यसले शीतल गर्नुका साथै पित्तविकार र कफविकार नाश गर्दछ । बनकोदोमा गर्मी र कब्जियत गर्ने तथा अती नै वातविकार बढाउने गुण हुन्छ ।

## चारुक (ढड्डी वा मुजका गेडा)

**चारुकः शरबीजः स्यात्कथ्यन्ते तद्गुणा अथ ॥८२॥**
**चारुको मधुरो रूक्षो रक्तपित्तकफापहः ।**

**शीतलो लघुवृष्यश्च कषायो वातकोपनः ॥८३॥**

चारुक र शरबीज ढड्ढी वा मुजका गेडाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र रुखो तथा रक्तविकार र कफविकार नाशक हुन्छ । यसले शीतल गर्दछ । यो पचाउन हलुका, वीर्यवर्द्धक, टर्रो र वातविकार बढाउने गुणको हुन्छ ।

## बाँसको बीज

**यवा वंशभवा रूक्षाः कषायाः कटुपाकिनः ।**
**बद्धमूत्राः कफघ्नाश्च वातपित्तकराः सराः ॥८४॥**

बाँसका गेडा रुखो, टर्रो र पचेपछि पिरो हुन्छ । यसले मलमूत्रलाई रोक्दछ, कफविकार नाश गर्दछ, वातविकार र पित्तविकार बढाउँदछ तथा दिसापिसाबलाई तलतिर सार्दछ ।

## कुसुमका गेडा

**कुसुम्भबीजं वरटा सैव प्रोक्ता वरट्टिका ।**
**वरटा मधुरा स्निग्धा रक्तपित्तकफापहा ॥८५॥**
**कषाया शीतला गुर्वी स्यादवृष्याऽनिलापहा ।**

कुसुम्भबीज, वरटा र वरट्टिका : यी कुसुम-बीजका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो र टर्रो तथा चिल्लो हुन्छ । यसले रक्तविकार, पित्तविकार र कफविकार नाश गर्दछ तथा शीतल गर्दछ । यो पचाउन कठिन, धेरै वीर्य नबढाउने र वातविकार नाशक हुन्छ ।

## बाजरा

**गवेधुका तु विद्वद्भिर्गवेधुः कथिता स्त्रियाम् ॥८६॥**
**गवेधुः कटुका स्वाद्वी कार्श्यकृत्कफनाशिनी ।**

गवेधुका र गवेधु (स्त्री लिङ्गमा) बाजरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पिरो र गुलियो हुन्छ । यसले दुब्लोपन गराउँदछ र कफविकार नाश गर्दछ ।

## निवार

**प्रसाधिका तु नीवारस्तृणान्नमिति च स्मृतम् ॥८७॥**
**नीवारः शीतलो ग्राही पित्तघ्नः कफवातकृत् ।**

प्रसाधिका, नीवार र तृणान्न : यी निवारका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल र कब्जियत गर्दछ । यसले पित्तविकार नाश गर्दछ तर कफविकार र वातविकार बढाउँदछ ।

## जुनेलो

**यावनालो हिमः स्वादुर्लोहितः श्लेष्मपित्तजित् ॥८८॥**
**अवृष्यस्तुवरो रूक्षः क्लेदकृत्कथितो लघुः ।**

जुनेलोले शीतल गर्दछ । यो स्वादिलो हुन्छ । यसले रक्तविकार, कफविकार र पित्तविकार नाश गर्दछ । जुनेलोले वीर्यवृद्धि गर्दैन । यो थोरै टर्रो, रुखो र पचाउन हलुका हुन्छ तर थोरै अमन (क्लेद) पनि गराउँदछ ।

## शण

**शण प्रोक्तो मातुलानी जन्तुतन्तुर्महाशना ।**
**शणो हिमो लघुर्ग्राही तत्पुष्पं प्रदरास्रजित् ॥८९॥**

शण, मातुलानी, जन्तुतन्तु र महाशना : यी शणका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो पचाउन हलुका र कब्जियत गर्ने खालको हुन्छ । यसको फूलले प्रदर र रक्तविकार नाश गर्दछ ।

## अनाजको समग्र गुण

**धान्यं सर्वं नवं स्वादु गुरु श्लेष्मकरं स्मृतम् ॥९०॥**
**तत्तु वर्षोषितं पथ्यं यतो लघुतरं हि तत् ।**
**वर्षोषितं सर्वधान्यं गौरवं परिमुञ्चति ॥९१॥**
**न तु त्यजति वीर्यं स्वं क्रमान्मुञ्चत्यतः परम् ।**
**एतेषु यवगोधूमतिलमाषा नवा हिताः ॥**
**पुराणा विरसा रूक्षा न तथा गुणकारिणः ॥९२॥**

सबै खाले नयाँ अन्न स्वादिला, पचाउन कठिन र कफवर्द्धक हुन्छन् भनिएको छ । एक वर्ष पुरानो भए यी पथ्य र पचाउन सहज हुन्छन् । एकवर्ष पछि सबै अनाजले आफूमा भएको गह्रौंपना छाड्दछन् तर वीर्य ( गुण) छाड्दैनन् । यसभन्दा बढी समय भएपछि यी वीर्यलाई पनि छाड्न थाल्दछन् । अनाजमध्ये जौ, गहुँ, तिल र माष नयाँमा गुनिला हुन्छन् । पुरानो भएपछि यी रसहीन, रुखा र गुणहीन हुन्छन् ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे धान्यवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको अनाज वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥

## अथ शाकवर्गः
## परिचय

**पत्रं पुष्पं फलं नालं कन्दं संस्वेदजं तथा ।**
**शाकं षड्विधमुदृष्टं गुरुं विद्याद्यथोत्तरम् ॥१॥**

पात, फूल, फल, डाँठ, कन्दमूल र च्याउ (पसिनाबाट उत्पन्न हुने) गरी सागपात छ थरीका बताइएको छ । यी क्रमशः पछिल्ला पचाउन कठिन हुन्छन् ।

## सागका दोष

**प्रायः शाकानि सर्वाणि विष्टम्भीनि गुरूणि च ।**
**रूक्षाणि बहुवर्चांसि सृष्टविण्मारुतानि च ॥२॥**
**शाकं भिनत्ति वपुरस्थि निहन्ति नेत्रं वर्णं विनाशयति रक्तमथापि शुक्रम् ।**
**प्रज्ञाक्षयं च कुरुते पलितं च नूनं हन्ति स्मृतिं गतिमिति प्रवदन्ति तज्ज्ञाः ॥३॥**
**शाकेषु सर्वेषु वसन्ति रोगास्ते हेतवो देहविनाशनाय ।**
**तस्माद् बुधः शाकविवर्जनं तु कुर्यात्तथाऽम्लेषु स एव दोषः ॥४॥**

प्रायः सबै खालका सागपात मलमूत्र अवरुद्ध गर्ने, पचाउन कठिन, रुखा, धेरै दिसा निकाल्ने, धेरै पटक दिसा लगाउने र धेरै अपानवायु निकाल्ने खालका हुन्छन् । द्रव्यका गुण जान्ने विज्ञहरू सागले शरीरका हाडलाई भेदन गर्दछ;आँखाको दृष्टिशक्ति, शरीरको वर्ण, रगत, शुक्र र बुद्धि घटाउँदछ; उमेर नपुग्दै कपाल फुलाउँदछ, सम्झनाशक्ति नाश गर्दछ, हिँडडुल वा हलचल गर्ने तागत मास्दछ, भन्दछन् । सबै खालका सागपातमा रोग बसेको हुन्छ, तिनै रोग शरीरलाई नष्ट पार्ने कारण हुन पुग्दछन् । यो कुरा बुझेर विद्वानले सागपात खान छोड्नू । अमिला कुरामा पनि उपरोक्त दोष हुने हुँदा त्यसलाई पनि खान छाड्नु उचित हुन्छ ।

## एतानि शाकनिन्दकवचनानि सामान्यानि

सागपातको निन्दा गर्दै बताइने यी कुरा सामान्य हुन् ।

(भावप्रकाश निघण्टुका टीकाकार विश्वनाथ द्विवेदी शास्त्री : सागपातमा काष्ठौज (Selulose) को मात्रा अधिक हुने हुँदा यसले अन्नलाई राम्रोसँग पच्न नदिई सँगै तलतिर धकेल्दै लैजान्छ । अर्थात् यसले आन्द्राको खुम्चने गति (Peristalsis) लाई कीराले जसरी बढाउँदछ । यसले गर्दा खाइएका कुराको जेजति पौष्टिक पदार्थ जति समय लगाएर शरीरले ग्रहण गर्नु पर्दथ्यो, त्यो ग्रहण गर्न पाउँदैन । सागपातमा क्षार (नुन) को मात्रा अधिक हुने कारणले सागपात धेरै खाने मानिसलाई मधुमेह आदि हुने सम्भावना पनि बढी हुन्छ । सागपातमा गुण त हुन्छन् नै तर आँखाको ज्योति बढाउँदछ वा दिसा खुलाउँदछ भनी अत्यधिक मात्रामा सागपात सेवन गर्न भने हुँदैन ।)

अथ पत्रशाक

## बेथे

वास्तूकं वास्तुकं च स्यात्क्षारपत्रं च शाकराट् ।
तदेव तु बृहत्पत्रं रक्तं स्याद्गौडवास्तुकम् ॥५॥
प्रायशो यवमध्ये स्याद्यवशाकमतः स्मृतम् ।
वास्तूकद्वितयं स्वादु क्षारं पाके कटूदितम् ॥६॥
दीपनं पाचनं रुच्यं लघु शुक्रबलप्रदम् ।
सरं प्लीहास्रपित्तार्शः कृमिदोषत्रयापहम् ॥७॥

वास्तूक, वास्तुक, क्षारपत्र र शाकराट् : यी बेथेका संस्कृत पर्यायवाची नामहरू हुन् । ठूलो पात हुन रातो खालको बेथेलाई 'गौडवास्तुक' भनिन्छ । प्रायजसो जौको खेतबारीमा उम्रने हुनाले बेथेलाई 'यवशाक' पनि भनिन्छ । दुबै खालका बेथे स्वादिला, नुनिला (क्षारयुक्त) र पचेपछि पिरा हुन्छन् भनिन्छ । बेथेले पाचक अग्नि बाल्दछ, खाएको कुरा पचाउँदछ र खानमा रुची बढाउँदछ । यो पचाउन हलुका हुन्छ । यसले शुक्र बढाउँदछ, बल दिन्छ र मत्रलमूत्रलाई तलतिर सार्दछ । बेथेले फियोका रोग, पित्तविकार, अल्काई, पेटका कीरा र त्रिदोष (वात, पित्त र कफ दोष) नाश गर्दछ ।

## पवै

पोतक्युपोदिका सा तु मालवाऽमृतवल्लरी ।
पोतकी शीतला स्निग्धा श्लेष्मला वातपित्तनुत् ॥८॥
अकण्ठ्या पिच्छिला निद्रा शुक्रदा रक्तपित्तजित् ।
बलदा रुचिकृत्पथ्या बृंहणी तृप्तिकारिणी ॥९॥

पोतकी, उपोदिका, मालवा र अमृतवल्लरी : यी पवैका संस्कृत पर्यायवाची नामहरू हुन् । पवैले शीतल गर्दछ । यो चिल्लो, कफकारक तथा वातविकार र पित्तविकार नाशक हुन्छ । यो घाँटीका लागि त्यति हितकर मानिन्न । पवै लेस्याइलो हुन्छ । यसले निद्रा र शुक्र बढाउँदछ । पवैले रक्तपित्त नाश गर्दछ । यसले बल दिन्छ र रुची जगाउँदछ । यो पथ्य, पौष्टिक र तृप्तिदायक हुन्छ ।

## लट्टे

मारिषो वाष्पको मार्ष श्वेतो रक्तश्च संस्मृतः ।
मारिषो मधुरः शीतो विष्टम्भी पित्तनुद् गुरुः ॥१०॥
वातश्लेष्मकरो रक्तपित्तनुद् विषमाग्निजित् ।
रक्तमार्षो गुरुर्नाति सक्षारो मधुरः सरः ॥११॥
श्लेष्मलः कटुकः पाके स्वल्पदोष उदीरितः ।

मारिष, वाष्पक र मार्ष : यी लट्टेका संस्कृत पर्यायवाची नामहरू हुन् । सेतो र रातो गरी लट्टे दुई किसिमको हुन्छ । सेतो लट्टे गुलियो, शीतल गर्ने, कब्जियत गर्ने, पित्तविकार नाशक, पचाउन कठिन, वातविकार गर्ने, कफविकार गर्ने, रक्तपित्त नाशक र पाचनशक्तिको घटबढलाई रोक्ने गुणको हुन्छ । रातो लट्टे पचाउन केही कठिन हुन्छ । यो नुनिलो र गुलियो तथा मलमूत्र तलतिर सार्ने गुणको हुन्छ । यसले कफविकार बढाउँदछ । यो पचेपछि पिरो हुन्छ । यसलाई कम दोष हुने लट्टे भनी बताइएको छ ।

## लुँडे

**तण्डुलीयो मेघनादः काण्डेरस्तण्डुलेरकः ॥१२॥**
**भण्डीरस्तण्डुलीबीजो विषघ्नश्चाल्पमारिषः ।**
**तण्डुलीयो लघुः शीतो रूक्षः पित्तकफास्रजित् ॥१३॥**
**सृष्टमूत्रमलो रुच्यो दीपनो विषहारकः ।**

तण्डुलीय, मेघनाद, काण्डेर, तण्डुलेरक, भण्डीर, तण्डुलीबीज, विषघ्न र अल्पमारिष : यी लुँडेका संस्कृत पर्यायवाची नामहरू हुन् । लुँडेको साग पचाउन हलुका हुन्छ । यसले शीतल गर्दछ । यो रुखो हुन्छ । यसले पित्तविकार, कफविकार र रक्तविकारलाई जित्दछ । यो सागले दिसापिसाब खुलाउँदछ, रुची जगाउँदछ, पाचकाग्निलाई बाल्दछ र विषविकार नाश गर्दछ ।

**पानीयतण्डुलीयं तु कञ्चटं समुदाहृतम् ॥१४॥**
**कञ्चटं तिक्तकं रक्तपित्तानिलहरं लघु ।**

पानी-लुँडेलाई 'कञ्चट' भनिन्छ । यो तीतो हुन्छ । यसले रक्तपित्त र वातविकार नाश गर्दछ तथा पचाउन हलुका हुन्छ ।

## पालुङ्गो

**पलक्या वास्तुकाकारा छुरिका चीरितच्छदा ॥१५॥**
**पलक्या वातला शीता श्लेष्मला भेदिनी गुरुः ।**
**विष्टम्भिनी मदश्वासपित्तरक्तकफापहा ॥१६॥**

पलक्या, वास्तुकाकारा, छुरिका र चीरितच्छदा : यी पालुङ्गो सागका संस्कृत पर्यायवाची नामहरू हुन् । पालुङ्गो वातविकार कारक, शीतल गर्ने, कफप्रकृति भएको, भेदन गुणको र पचाउन कठिन हुन्छ । यसले कब्जियत गर्दछ तथा नसा, दम, पित्तविकार, रक्तविकार र कफविकार नाश गर्दछ ।

## नरिचो

**नाडिकं कालशाकं च श्राद्धशाकं च कालकम् ।**
**कालशाकं सरं रुच्यं वातकृत्कफशोथहृत् ॥१७॥**

**बल्यं रुचिकरं मेध्यं रक्तपित्तहरं हिमम् ।**

नाडिक, कालशाक, श्राद्धशाक र कालक : यी नरिचोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले मलमूत्रलाई तलतिर सार्दछ । नरिचो रुचिकर, वातविकार गर्ने, कफविकार नाशक, सुजन नाशक, बलदायक, रुचि जगाउने, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, रक्तपित्त नाशक र शीतल गर्ने गुणको हुन्छ ।

## नरिचो विशेष

**पट्टशाकस्तु नाडीको नाडीशाकश्च स स्मृतः ॥१८॥**
**नाडीको रक्तपित्तघ्नो विष्टम्भो वातकोपनः ।**

पट्टशाक, नाडीक र नाडीशाक : यी नरिचो विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले रक्तपित्त नाश गर्दछ तर यो कब्जियत गर्ने र वातविकार बढाउने गुणको हुन्छ ।

## कर्मैया (कलम्बी)

**कलम्बी शतपर्वी च कथ्यन्ते तद्गुणा अथ ॥१९॥**
**कलम्बी स्तन्यदा प्रोक्ता मधुरा शुक्रकारिणी ।**

कलम्बी र शतपर्वी : यी कर्मैयाका संस्कृत पर्यायवाची नामहरू हुन् । यो दूधवर्धक, मिठो र शुक्र उत्पन्न गराउने गुणको हुन्छ ।

## नुनढिकी

**लोणा लोणी च कथिता बृहल्लोणी तु घोटिका ॥२०॥**
**लोणी रूक्षा स्मृता गुर्वी वातश्लेष्महरी पटुः ।**
**अर्शोघ्नी दीपनी चाम्ला मन्दाग्निविषनाशिनी ॥२१॥**
**घोटिकाऽम्ला सरा चोष्णा वातकृत्कफपित्तहृत् ।**
**वाग्दोषव्रणगुल्मघ्नी श्वासकासप्रमेहनुत् ॥२२॥**
**शोथे लोचनरोगे च हिता तज्ज्ञैरुदाहृता ।**

लोणा र लोणी नुनढिकीका तथा बृहत् लोणी र घोटिका ठूलो नुनढिकीका संस्कृत पर्यायवाची नामहरू हुन् । नुनढिकी रुखो, पचाउन कठिन, वातविकार नाशक, कफविकार नाशक, अल्काई नाशक, पाचकाग्नि वर्धक, अमिलो, कमजोर, मन्दाग्नि नाशक र विषविकार नाशक हुन्छ । ठूलो नुनढिकी अमिलो, दिसापिसाबलाई तलतिर सार्ने, गर्मी गर्ने, वातविकार गर्ने, कफविकार नाशक, पित्तविकार नाशक, लठेब्रोपन नाशक, घाउखटिरा नाशक, गुल्म नाशक, दम, खोकी र प्रमेह नाशक हुन्छ । वनस्पति विज्ञका अनुसार यसले सुजन र आँखाका रोगमा पनि फाइदा गर्दछ ।

## चरीअमिलो

**चाङ्गेरी चुक्रिका दन्तशठाम्बष्ठाऽम्ललोणिका ॥२३॥**
**अश्मन्तकस्तु शफरी कुशली चाम्लपत्रिका ।**
**चाङ्गेरी दीपनी रुच्या रुक्षोष्णा कफवातनुत् ॥२४॥**
**पित्तलाम्लग्रहण्यर्शः कुष्ठातीसारनाशिनी ।**

चाङ्गेरी, चुक्रिका, दन्तशठा, अम्बष्ठा, अम्ललोणिका, अश्मन्तक, शफरी, कुशली र अम्लपत्रिका : यी चरीअमिलोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पाचकाग्निलाई बाल्दछ र रुचि जगाउँदछ । यो रुखो र गर्मी गर्ने गुणको हुन्छ । चरीअमिलोले कफविकार र वातविकार नाश गर्दछ । यसले पित्तविकार बढाउँदछ । यो अमिलो हुन्छ यसले ग्रहणी, अल्काई, कुष्ठ र अतिसार नाश गर्दछ ।

**शतवेधिनी**

**चुक्रिका स्यात्तु पत्राम्ला रोचनी शतवेधिनी ॥२५॥**
**चुक्रा त्वम्लतरा स्वाद्वी वातघ्नी कफपित्तकृत् ।**
**रुच्या लघुतरा पाके वृन्ताकेनातिरोचनी ॥२६॥**

चुक्रिका, पत्राम्ला, रोचनी र शतवेधिनी : यी अमिली विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यो अति नै अमिलो र स्वादिलो हुन्छ । यसले वातविकार नाश गर्दछ तथा कफविकार र पित्तविकार गर्दछ । यो रुचिकर, पचाउन अति सहज र भण्टासँग खान अति स्वादिलो हुन्छ ।

**अमिली विशेष**

**चिञ्चा चञ्चुश्चञ्चुकी च दीर्घपत्रा सतिक्तका ।**
**चिञ्चुः शीता सरा रुच्या स्वाद्वी दोषत्रयापहा ॥२७॥**
**धातुपुष्टिकरी बल्या मेध्या पिच्छिलका स्मृता ।**

चिञ्चा, चञ्चु, चञ्चुकी, दीर्घपत्रा र सतिक्तका : यी अमिलीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । मलमूत्र तलतिर सार्दछ । रुचि जगाउँदछ । स्वादिलो हुन्छ र त्रिदोष नाश गर्दछ । यसले धातुलाई पुष्ट पार्दछ, बल दिन्छ र दिमागको प्रहण गर्ने शक्ति बढाउँदछ । यो लेस्याइलो हुन्छ । (अमिलीका बारेमा पहिले नै बताइ सकेकोमा फेरी यी शब्दले शाकवर्गमा त्यसकै सागको बारेमा बताउन खोजिएको हो वा यो अर्कै वनस्पति हो थाहा पाउन सकिएन) ।

**हिलमोचिका (हिल्सा झार)**

**ब्राह्मी शङ्खधराऽऽचारी मत्स्याक्षी हिलमोचिका ॥२८॥**
**शोथं कुष्ठं कफं पित्तं हरते हिलमोचिका ।**

ब्राह्मी, शङ्खधरा, आचारी, मत्स्याक्षी र हिलमोचिका यी हिल्सा नामक झारविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले सुजन, कुष्ठ, कफविकार र पित्तविकार नाश गर्दछ ।

## सुनिषण्णक

**शितिवारः शितिवरः स्वस्तिकः सुनिषण्णकः ॥२९॥**
**श्रीवारकः सूचिपत्रः पर्णकः कुक्कुटः शिखी ।**
**चाङ्गेरीसदृशः पत्रैश्चतुर्दल इतीरितः ॥३०॥**
**शाको जलान्विते देशे चतुष्पत्रीति चोच्यते ।**
**सुनिषण्णो हिमो ग्राही मेदो(मोह)दोषत्रयापहः ॥३१॥**
**अविदाही लघुः स्वादुः कषायो रूक्षदीपनः ।**
**वृष्यो रुच्यो ज्वरश्वासमेहकुष्ठभ्रमप्रणुत् ॥३२॥**

शितिवार, शितिवर, स्वस्तिक, सुनिषण्णक, श्रीवारक, सूचिपत्र, पर्णक, कुक्कुट र शिखी झारविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसका चरिअमिलाका जस्ता चारपात हुने हुनाले यसलाई चतुर्दल भनिन्छ । जलीय प्रदेशमा उत्पन्न हुने यो झारलाई चतुष्पत्री पनि भनिन्छ । यसले शीतल र कब्जियत गर्दछ । यसले बोसो (मोह) र त्रिदोष नाश गर्दछ । यसले डाह गर्दैन । यो पचाउन हलुका, स्वादिलो, टर्रो र रुखो हुन्छ । यसले पाचकाग्नि र वीर्य बढाउँदछ । रुची जगाउँदछ तथा जरो, दम, प्रमेह, कुष्ठ र भ्रम नाश गर्दछ ।

## मुलाको साग

**पाचनं लघु रुच्योष्णं पत्रं मूलकजं नवम् ।**
**स्नेहसिद्धं त्रिदोषघ्नमसिद्धं कफपित्तकृत् ॥३३॥**

मूलाका भर्खर पलाएका ताजा पात खाएको कुरा पचाउने, पचाउन सहज, रुचि जगाउने र गर्मी गर्ने गुणका हुन्छन् । चिल्लोमा भुटिएको मूलाको सागले त्रिदोष नाश गर्दछ । नभुटिएको मूलाको सागले भने कफविकार र पित्तविकार गर्दछ ।

## द्रोणपुष्पीको साग

**द्रोणपुष्पीदलं स्वादु रूक्षं गुरु च पित्तकृत् ।**
**भेदनं कामलाशोथमेहज्वरहरं कटु ॥३४॥**

द्रोणपुष्पीको पातको साग स्वादिलो, पिरो, रुखो, पचाउन कठिन, पित्तविकार गर्ने, मलमूत्र खुकुल्याउने, तथा कमलपित्त, सुजन, प्रमेह र जरो नाशक हुन्छ ।

## ज्वानुको साग

**यवानीशाकमाग्नेयं रुच्यं वातकफप्रणुत् ।**
**उष्णं कटु च तिक्तं च पित्तलं लघु शूलहृत् ॥३५॥**

ज्वानुको सागमा पाचनशक्ति बढाउने (आग्नेय) गुण हुन्छ । यो रुचिकारक, गर्मी गर्ने, पिरो, तीतो, पित्तविकार गराउने, पचाउन हलुका र शूलरोग नाशक हुन्छ ।

## ताप्रेको साग

**दद्रुघ्नपत्रं दोषघ्नमम्लं वातकफापहम् ।**
**कण्डूकासकृमिश्वासदद्रुकुष्ठप्रणुल्लघु ॥३६॥**

ताप्रेको साग दोषनाशक, अमिलो तथा वातविकार र कफविकार नाशक हुन्छ । यसले लुतो, खोकी, कीरा, दम, दाद र कुष्ठ नाश गर्दछ । यो पचाउन हलुका हुन्छ ।

## सिउँडीको साग

**सेहुण्डस्य दलं तीक्ष्णं दीपनं रेचनं हरेत् ।**
**आध्मानाष्ठीलिकागुल्मशूलशोथोदराणि च ॥३७॥**

सिउँडीको साग (पात) तिक्खर, अग्निवर्धक र दिसा लगाउने गुणको हुन्छ । यसले आध्मान, अष्ठीलिका, गुल्म, शूल, सुजन र पेटका रोग ठिक गर्दछ ।

## पित्तपापडाको साग

**पर्पटो हन्ति पित्तास्रज्वरतृष्णाकफभ्रमान् ।**
**संग्राही शीतलस्तिक्तो दाहनुद्वातलो लघुः ॥३८॥**

पित्तपापडाको सागले पित्तविकार, रक्तविकार, जरो, तिर्खा-रोग, कफविकार र भ्रम नाश गर्दछ । यसले कब्जियत र शीतल गर्दछ । यो तीतो हुन्छ । यसले डाह नाश गर्दछ तर वातविकार बढाउँदछ । यो पचाउन हलुका हुन्छ ।

## जभ्रेटो वा गाईजिभ्रेको साग

**गोजिह्वा कुष्ठमेहास्रकृच्छ्रज्वरहरी लघुः ।**

जभ्रेटो वा गाईजिभ्रेको सागले कुष्ठ, प्रमेह, कृच्छ्र र जरो नाश गर्दछ । यो पचाउन हलुका हुन्छ ।

## परबरको साग

**पटोलपत्रं पित्तघ्नं दीपनं पाचनं लघु ॥३९॥**
**स्निग्धं वृष्यं तथोष्णं च ज्वरकासकृमिप्रणुत् ।**

परबरको साग (पात) पित्तविकार नाशक, अग्निवर्धक, खाएको कुरा पचाउने र पचाउन हलुका हुन्छ । यो चिल्लो, वीर्यवर्धक, गर्मी गर्ने तथा जरो, खोकी र कीरा नाशक हुन्छ ।

## गुर्जोको साग

**गुडूचीपत्रमाग्नेयं सर्वज्वरहरं लघु ॥४०॥**
**कषायं कटुतिक्तं च स्वादुपाकं रसायनम् ।**
**बल्यमुष्णं च संग्राहि हन्याद्दोषत्रयं तृषाम् ॥४१॥**
**दाहप्रमेहवातासृक्कामलाकुष्ठपाण्डुताः ।**

गुर्जोको साग (पात वा मुण्टा) अग्निवर्धक गुणको (आग्नेय), सबै खालका जरो नाशक र पचाउन हलुका हुन्छ । यो टर्रो, पिरो र तीतो हुन्छ तथा पचेपछि गुलियो हुन्छ । यो रसायनी हुन्छ । यसले बल दिन्छ तर गर्मी र कब्जियत गर्दछ । यसले त्रिदोष र तिर्खा-रोग नाश गर्दछ । गुर्जोको सागले डाह, प्रमेह, वातविकार, रक्तविकार, कमलपित्त, कुष्ठ र पाण्डुरोग नाश गर्दछ ।

## ठूलो तापे्र

**कासमर्दोऽरिमर्दश्च कासारिः कर्कशस्तथा ॥४२॥**
**कासमर्ददलं रुच्यं वृष्यं कासविषास्रनुत् ।**
**मधुरं कफवातघ्नं पाचनं कण्ठशोधनम् ॥४३॥**
**विशेषतः कासहरं पित्तघ्नं ग्राहकं लघु ।**

कासमर्द, अरिमर्द, कासारि र कर्कश : यी ठूलो ताप्रेका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको पात रुचिकर, वीर्यवर्धक तथा खोकी, विषविकार र रक्तविकार नाशक हुन्छ । गो गुलियो, कफविकार नाशक र वातविकार नाशक हुन्छ । यसले खाएको कुरा पचाउँदछ र घाँटी सफा गर्दछ । विशेषगरी यसले खोकी र पित्तविकार नाश गर्दछ । यसले कब्जियत गर्दछ तर यो पचाउन हलुका हुन्छ ।

## चनाको साग

**रुच्यं चणकशाकं स्याद् दुर्जरं कफवातकृत् ॥४४॥**
**अम्लं विष्टम्भजनकं पित्तनुद्दन्तशोथहृत् ।**

चनाको साग रुचिकर र ढिलो पच्ने गुणको हुन्छ । यसले कफविकार र पित्तविकार गर्दछ । यो अमिलो हुन्छ । यसले कब्जियत गर्दछ । यो सागले पित्तविकार र गिजा सुन्निने रोग ठिक गर्दछ ।

## केराउको साग

**कलायशाकं भेदि स्याल्लघु तिक्तं त्रिदोषजित् ॥४५॥**

केराउको मुन्टा वा सागले दिसालाई खुकुलो पार्दछ । यो साग पचाउन हलुका, तीतो र त्रिदोष नाशक हुन्छ ।

## सर्सिउँको साग

**कटुकं सार्षपं शाकं बहुमूत्रमलं गुरु ।**
**अम्लपाकं विदाहि स्यादुष्णं रूक्षं त्रिदोषकृत् ॥४६॥**
**सक्षारलवणं तीक्ष्णं स्वादु शाकेषु निन्दितम् ।**

सर्सिउँको साग पिरो हुन्छ । यो सागले धेरै दिसापिसाब लगाउँदछ ।यो पचाउन कठिन हुन्छ । यो पचेपछि अमिलो हुन्छ । यसले डाह र गर्मी गर्दछ । यो रुखो हुन्छ । यसले त्रिदोष गर्दछ । यो क्षारसहितको नुनिलो र तिक्खर हुन्छ । यसलाई निन्दनीय साग भनिएको छ ।

॥ इति पत्रशाकानि ॥

॥ अथ पुष्पशाकानि ॥

## अगस्तिको फूल

**अगस्तिकुसुमं शीतं चातुर्थिकनिवारणम् ॥४७॥**
**नक्तान्ध्यनाशनं तिक्तं कषायं कटुपाकि च ।**
**पीनसश्लेष्मपित्तघ्नं वातघ्नं मुनिभिर्मतम् ॥४८॥**

अगस्तिको फूलले शीतल गर्दछ । यसले हरेक चौथो दिनमा आउने “चतुर्थक” नामक जरो र रतन्धो रोग नाश गर्दछ । यो तीतो, टर्रो र पिरो हुन्छ । मुनिजनका मत अनुसार यसले पिनास, कफविकार, पित्तविकार र वातविकार नाश गर्दछ ।

## केराको फूल

**कदल्याः कुसुमं स्निग्धं मधुरं तुवरं गुरु ।**
**वातपित्तहरं शीतं रक्तपित्तक्षयप्रणुत् ॥४९॥**

केराको फूल चिल्लो, गुलियो, टर्रो र पचाउन कठिन हुन्छ । यसले वातविकार, पित्तविकार, रक्तपित्त र क्षयरोग नाश गर्दछ । यो फूलले शीतल गर्दछ ।

## सैजन र रातो सैजनको फूल

**शिग्रोः पुष्पं तु कटुकं तीक्ष्णोष्णं स्नायुशोथनुत् ।**
**कृमिहृत्कफवातघ्नं विद्रधिप्लीहगुल्मजित् ॥५०॥**
**मधुशिग्रोस्त्वक्षिहितं रक्तपित्तप्रसादनम् ।**

सैजनको फूल पिरो र तिक्खर हुन्छ । यसले गर्मी गर्दछ तथा नसा (स्नायु) सुन्निएको ठिक गर्दछ । यसले कीरा, कफविकार, वातविकार, विद्रधि, फियोका रोग र गुल्म नाश गर्दछ । रातो सैजनको फूल आँखाका लागि फाइदाजनक तथा रक्तपित्त नाशक हुन्छ ।

## सिमलको फूल

**शाल्मलीपुष्पशाकं तु घृतसैन्धवसाधितम् ॥५१॥**
**प्रदरं नाशयत्येव दुःसाध्यं च न संशयः ।**
**रसे पाके च मधुरं कषायं शीतलं गुरु ॥५२॥**
**कफपित्तास्रजिद् ग्राहि वातलं च प्रकीर्त्तितम् ।**

सिमलको फूललाई घिउ र सिधेनुन हालेर पकाई खायो भने कठिन खालको प्रदररोग पनि निसन्देह ठिक गर्दछ । यो पचेपछि गुलियो र शुरुमा टर्रो र गुलियो हुन्छ । यसले शीतल गर्दछ तर पचाउन कठिन हुन्छ । सिमलको फूलले कफविकार, पित्तविकार र रक्तविकार ठिक गर्दछ । यो कब्जियत गराउने र वातविकार बढाउने गुणको हुन्छ भनिएको छ ।

॥ इति पुष्पशाकानि ॥

॥ अथ फलशाकानि ॥

## कुभिन्डो

**कूष्माडं स्यात्पुष्पफलं पीतपुष्पं बृहत्फलम् ॥५३॥**
**कूष्माण्डं बृंहणं वृष्यं गुरु पित्तास्रवातनुत् ।**
**बालं पित्तापहं शीतं मध्यमं कफकारकम् ॥५४॥**
**बृद्धंनातिहिमं स्वादु सक्षारं दीपनं लघु ।**
**बस्तिशुद्धिकरं चेतोरोगहृत्सर्वदोषजित् ॥५५॥**

कूष्माण्ड, पुष्पफल, पीतपुष्प र बृहत्फल : यी कुभिण्डोका संस्कृत पर्यायवाची नामहरू हुन् । यो पौष्टिक, वीर्यवर्धक, पचाउन कठिन तथा पित्तविकार, रक्तविकार र वातविकार नाशक हुन्छ । कलिलो कुभिण्डोले वातविकार नाश गर्नुका साथै शीतल गर्दछ । अलि हुर्केको कुभिण्डोले कफविकार बढाउँदछ । पाकेको कुभिण्डोले धेरै शीतल पनि गर्दैन, स्वादिलो र केही नुनिलो हुन्छ । यसले पाचकाग्निलाई बाल्दछ । यो पचाउन सहज हुन्छ । यसले तल्लो पेट (वा मूत्राशय) प्रशोधन गर्दछ, मानसिक रोग र सबै खालका दोष नाश गर्दछ ।

## सानो जातको कुभिन्डो

**कूष्माण्डी तु भृशं लघ्वी कर्कारुरपि कीर्त्तिता ।**
**कर्कारुग्राहिणी शीता रक्तपित्तहरा गुरुः ॥५६॥**
**पक्वा तिक्ताऽग्निजननी सक्षारा कफवातनुत् ।**

अति सानु कुभिन्डोलाई कूष्मान्डी भनिन्छ । यसैलाई कर्कारु पनि भन्दछन् । यो कब्जियत गराउने, शीतल गर्ने, रक्तविकार नाशक, पित्तविकार नाशक र पचाउन कठिन हुन्छ । पाकेको कूष्माण्डी तीतो, पाचकाग्नि वर्धक, नुनिलो (क्षार युक्त) तथा कफविकार र वातविकार नाशक हुन्छ ।

## लौका

**अलाबूः कथिता तुम्बी द्विधा दीर्घा च वर्तुला ॥५७॥**
**मिष्टतुम्बीफलं हृद्यं पित्तश्लेष्मापहं गुरु ।**
**वृष्यं रुचिकरं प्रोक्तं धातु पुष्टिविवर्धनम् ॥५८॥**

अलाबू र तुम्बी : यी लौकाका संस्कृत पर्यायवाची नामहरू हुन् । लौका लामो र डल्लो (गोलो) गरी दुई थरी हुन्छ । गुलियो लौका मुटुका लागि फाइदाजनक हुन्छ । यसले पित्तविकार र कफविकार नाश गर्दछ । यो पचाउन कठिन हुन्छ । यो वीर्यवर्धक, रुचिकर, धातुवर्धक र पुष्टिदायक हुन्छ भनिएको छ ।

## तुम्बा

**इक्ष्वाकुः कटुतुम्बी स्यात्सा तूम्बी च महाफला ।**
**कटुतुम्बी हिमा हृद्या पित्तकासविषापहा ॥५९॥**
**तिक्ता कटुर्विपाके च वातपित्तज्वरान्तकृत् ।**

इक्ष्वाकु, कटुतुम्बी, तुम्बी र महाफला : यी तुम्बीका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो मुटुका लागि फाइदाजनक हुन्छ । यसले पित्तविकार, खोकी र विषविकार नाश गर्दछ । यो तीतो हुन्छ र पचेपछि पिरो हुन्छ । यसले वातविकार र पित्तविकारजन्य जरो ठिक गर्दछ । (लौकाकै तीतो जात वा वन्यजातलाई तुम्बा भनिन्छ) ।

## एर्वारु वा ककडी

**एर्वारुः कर्कटी प्रोक्ता कथ्यन्ते तद्गुणा अथ ॥६०॥**
**कर्कटी शीतला रूक्षा ग्राहिणी मधुरा गुरुः ।**
**रुच्या पित्तहरा सामा पक्वा तृष्णाऽग्निपित्तकृत् ॥६१॥**

एर्वारु र कर्कटी : यी एर्वारुका संस्कृत पर्यायवाची नामहरू हुन् । अब त्यसका गुण बताइन्छन् । (काँचो) एर्वारु शीतल गर्ने, रुखो, कब्जियत गर्ने, गुलियो र पचाउन कठिन हुन्छ । यसले रुचि जगाउँदछ र पित्तविकार नाश गर्दछ । पाकेको एर्वारुले तिर्खा लगाउँदछ, पाचकाग्निलाई जगाउँदछ र पित्तविकार बढाउँदछ । (एर्वारुको अर्थ कसैले लिखुरे लामो काँक्रो, कसैले चिचिण्डो, कसैले अर्कै फल विशेष र कसैले घिरौंलो अर्थ लगाएको पाइन्छ । चिचिण्डोका विषयमा बेग्लै वर्णन गरिएको छ । तरकारी खाइने "फल शाक वर्ग" मा यसको गणना भएकोले यसको अर्थ घिरौंलो लगाइएको पनि पाइन्छ । हिन्दीमा भने यसलाई ककडी नाम दिइएको छ ।)

## चिचिन्डो

**चिचिण्डः श्वेतराजिः स्यात्सुदीर्घो गृहकूलकः ।**
**चिचिण्डो वातपित्तघ्नो बल्यः पथ्यो रुचिप्रदः ॥६२॥**
**शोषणोऽतिहितः किञ्चिद् गुणन्र्यूनः पटोलतः ।**

चिचिण्ड, श्वेतराजि, सुदीर्घ र गृहकूलक : यी चिचिण्डाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले वातविकार र पित्तविकार नाश गर्दछ । चिचिन्डोले बल दिन्छ । यो पथ्य र रुचि जगाउने गुणको हुन्छ । क्षयरोगमा यो अति नै लाभदायक हुन्छ । यो परबरभन्दा केही कम गुनिलो हुन्छ ।

## करेलो

**कारवेल्लं कठिल्लं स्यात्कारवेल्ली ततो लघुः ॥६३॥**
**कारवेल्लं हिमं भेदि लघु तिक्तमवातलम् ।**
**ज्वरपित्तकफास्रघ्नं पाण्डुमेहकृमीन् हरेत् ॥६४॥**
**तद्गुणा कारवेल्ली स्याद्विशेषाद्दीपनी लघुः ।**

कारवेल्ल र कठिल्ल : यी करेलाका संस्कृत पर्यायवाची नामहरू हुन् । सानो जातको करेलोलाई कारवेल्ली भनिन्छ । करेलोले शीतल गर्दछ, दिसालाई खुकुलो पार्दछ, पचाउन हलुका हुन्छ, तीतो हुन्छ र वातविकार पनि गर्दैन । यसले जरो, पित्तविकार, कफविकार, रक्तविकार, पाण्डु, प्रमेह र कीरा नाश गर्दछ । सानो खालको करेलामा पनि यिनै गुण हुन्छन् तापनि विशेषतः यसले पाचकाग्नि बाल्दछ र यो पचाउन बढी हलुका हुन्छ ।

## घिरौंलो

**महाकोशातकी प्रोक्ता हस्तिघोषा महाफला ॥६५॥**
**धामार्गवो घोषकश्च हस्तिपर्णश्च स स्मृतः ।**
**महाकोशातकीस्निग्धा रक्तपित्तानिलापहा ॥६६॥**

महाकोशातकी, हस्तिघोषा, महाफला, धामार्गव, घोषक र हस्तिपर्ण : यी घिरौंलाका संस्कृत पर्यायवाची नामहरू हुन् । घिरौंलो चिल्लो हुन्छ । यसले रक्तपित्त र वातविकार नाश गर्दछ ।

## पाटे घिरौंलो

**धामार्गवः पीतपुष्पो जालिनी कृतवेधना ।**
**राजकोशातकी चेति तथोक्ता राजिमत्फला ॥६७॥**
**राजकोशातकी शीता मधुरा कफवातकृत् ।**
**पित्तघ्नी दीपनी श्वासज्वरकासकृमिप्रणुत् ॥६८॥**

धामार्गव, पीतपुष्प, जालिनी, कृतवेधना, राजिमत्फा र राजकोशातकी : यी पाटेघिरौंलाका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले शीतल गर्दछ । यो गुलियो हुन्छ । यसले कफविकार र वातविकार गर्दछ । पाटे घिरौंलाले पित्तविकार नाश गर्दछ । यसले पाचकाग्निलाई बाल्दछ तथा दम, जरो, खोकी र कीरा नाश गर्दछ ।

## परबर

**पटोलः कुलकस्तिक्तः पाण्डुकः कर्कशच्छदः ।**
**राजीफलः पाण्डुफलो राजेयश्चामृतफलः ॥६९॥**
**बीजगर्भः प्रतीकश्च कुष्ठहा कासभञ्जनः ।**
**पटोलं पाचनं हृद्यं वृष्यं लघ्वग्निदीपनम् ॥७०॥**
**स्निग्धोष्णं हन्ति कासास्रज्वरदोषत्रयक्रिमीन् ।**
**पटोलस्य भवेन्मूलं विरेचनकरं सुखात् ॥७१॥**
**नालं श्लेष्महरं पत्रं पित्तहारी फलं पुनः ।**
**दोषत्रयहरं प्रोक्तं तद्वतिक्ता पटोलिका ॥७२॥**

पटोल, कुलक, तिक्त, पाण्डुक, कर्कशच्छद, राजीफल, पाण्डुफल, राजेय, अमृतफल, बीजगर्भ, प्रतीक, कुष्ठहा र कासमञ्जन : यी परबरका संस्कृत पर्यायवाची नामहरू हुन् । परबरले खाएको कुरा पचाउँदछ । यसले मुटुलाई फाइदा गर्दछ र वीर्य बढाउँदछ । यो पचाउन हलुका हुन्छ । यसले पाचनशक्ति बढाउँदछ । यो चिल्लो हुन्छ । यसले गर्मी गर्दछ । परबरले खोकी, रक्तविकार, जरो, त्रिदोष र कीरा नाश गर्दछ । परबरको जराले आनन्दसँग दिसा लगाउँदछ । यसको डाँठले कफविकार नाश गर्दछ । परबरका पातले पित्तविकार नाश गर्दछ । फलले पनि त्रिदोष नाश गर्दछ भनिएको छ । यिनै गुण “पटोलिका” नाम गरिएको तीतो परबरमा पनि हुन्छ ।

## गोलकाँक्री

**बिम्बी रक्तफला तुण्डी तुण्डीकेरी च बिम्बिका ।**
**ओष्ठोपमफला प्रोक्ता पीलुपर्णी च कथ्यते ॥७३॥**

**बिम्बीफलं स्वादु शीतं गुरु पित्तास्रवातजित् ।**
**स्तम्भनं लेखनं रुच्यं विबन्धाध्मानकारकम् ॥७४॥**

बिम्बी, रक्तफला, तुण्डी, तुण्डीकेरी, बिम्बिका, ओष्ठोपमाफला र पीलुपर्णी : यी गोलकाँक्रीका संस्कृत पर्यायवाची नामहरू हुन् । यो स्वादिलो, शीतल गर्ने, पचाउन कठिन तथा पित्तविकार, रक्तविकार र वातविकार नाशक हुन्छ । यसमा स्तम्भन, लेखन, रुचि जगाउने, कब्जियत गर्ने र आध्मान गर्ने गुण पनि हुन्छ ।

## सिमी विशेष (शिम्बी)

**शिम्बिः शिम्बी पुस्तशिम्बी तथा पुस्तकशिम्बिका ।**
**शिम्बीद्वयं च मधुरं रसे पाके हिमं गुरु ॥७५॥**
**बल्यं दाहकरं प्रोक्तं श्लेष्मलं वातपित्तजित् ।**

शिम्बि र शिम्बी सिमीका तथा पुस्तशिम्बी र पुस्तकशिम्बिका सिमीविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । (शास्त्रीले भने यी चारैवटालाई एउटै मानी अर्थ लगाएका छन्) । यी दुबै सिमी शुरुमा र पचेपछि गुलिया हुन्छन् । यिनले शीतल गर्दछन् । यी पचाउन कठिन, बलदायक, डाहकारी, कफविकार गर्ने, वातविकार नाशक र पित्तविकार नाशक हुन्छन् ।

## काउछेसिमी (कोलशिम्बि)

**कोलशिम्बिः कृष्णफला तथा पर्यङ्कपट्टिका ॥७६॥**
**कोलशिम्बिः समीरघ्नी गुर्व्युष्णा कफपित्तकृत् ।**
**शुक्राग्निसादकृत् वृष्या रुचिकृद् बद्धविड् गुरुः ॥७७॥**

कोलशिम्बी, कृष्णफला र पर्यङ्कपट्टिका : यी काउछेसिमीका संस्कृत पर्याययवाची नामहरू हुन् । यसले वातविकार नाश गर्दछ । यो पचाउन कठिन, गर्मी गर्ने तथा कफविकार र पित्तविकार गर्ने गुणको हुन्छ । यसले शुक्र र पाचकाग्निलाई घटाउँदछ । यसले वीर्य र रुचि बढाउँदछ । यसले दिसा कस्दछ ।

## सैजनको फल

**शोभाञ्जनफलं स्वादु कषायं कफपित्तनुत् ।**
**शूलकुष्ठक्षयश्वासगुल्महृद् दीपनं परम् ॥७८॥**

सैजनको फल स्वादिलो र टर्रो हुन्छ । यसले कफविकार, पित्तविकार, शूल, कुष्ठ, क्षयरोग, दम र गुल्म नाश गर्दछ । यो अति नै पाचन-अग्नि बाल्ने गुणको हुन्छ ।

## भन्टा

**वृन्ताकं स्त्री तु वार्ताकुर्भण्टाकी भाण्टिकाऽपि च ।**
**वृन्ताकं स्वादु तीक्ष्णोष्णं कटुपाकमपित्तलम् ॥७९॥**
**ज्वरवातबलासघ्नं दीपनं शुक्रलं लघु ।**
**तद्बालं कफपित्तघ्नं वृद्धं पित्तकरं गुरु ॥८०॥**
**वृन्ताकं पित्तलं किञ्चिदङ्गारपरिपाचितम् ।**
**कफमेदोऽनिलामघ्नमत्यर्थं लघु दीपनम् ॥८१॥**
**तदेव हि गुरु स्निग्धं सतैलं लवणान्वितम् ।**
**अपरं श्वेतवृन्ताकं कुक्कुटाण्डसमं भवेत् ॥८२॥**
**तदर्शःसु विशेषेण हितं हीनं च पूर्वतः ।**

वृन्ताक, वार्ताकु (स्त्रीलिङ्गमा), भण्टाकी र भाण्टिका : यी भन्टाका संस्कृत पर्यायवाची नामहरू हुन् । भन्टा स्वादिलो, तिक्खर, गर्मी गर्ने, पचेपछि पिरो हुने र थोरै पित्तविकार गर्ने गुणको हुन्छ । यसले जरो, वातविकार र कफ नाश गर्दछ तथा पाचकाग्निलाई बाल्दछ । यसले वीर्य बढाउँदछ । यो पचाउन हलुका हुन्छ । भन्टाका कलिला फल कफविकार र पित्तविकार नाशक हुन्छ । छिप्पिएको फल भने पचाउन कठिन र पित्तविकार गराउने गुणको हुन्छ । भुङ्ग्रोमा पोलिएको भन्टाले थोरै पित्तविकार गर्दछ । तर यो पचाउन अति नै हलुका, पाचकाग्नि बर्धक तथा कफविकार, बोसोविकार, वातविकार र आमविकार नाशक हुन्छ । आगोमा पोलेको त्यही भन्टामा तेल र नुन हाल्दा यो पचाउन कठिन र चिल्लो हुन्छ । एउटा अन्य जातको कुखुराको फुल जस्तो सेतो भन्टा पनि हुन्छ । यसलाई "श्वेतवृन्ताक" भनिन्छ । यो सेतो भन्टा विशेषतः अल्काईको रोगमा हितकर हुन्छ । उल्लेखित अन्य भन्टाभन्दा यो कम गुणस्तरको हुन्छ ।

## टिण्डा (डिण्डिश)

**डिण्डिशो रोमशफलो मुनिनिर्मित इत्यपि ॥८३॥**
**डिण्डिशो रुचिकृद्भेदी पित्तश्लेष्मापहः स्मृतः ।**
**सुशीतो वातलो रूक्षो मूत्रलश्चाश्मरीहरः ॥८४॥**

डिण्डिश, रोमशफल र मुनिनिर्मित : यी टिण्डा (तरकारी खाइने फल विशेष) का संस्कृत पर्यायवाची नामहरू हुन् । यो रुचिकारक, दिसा खुकुलो पार्ने तथा पित्तविकार र कफविकार नाशक हुन्छ भनिएको छ । यसले शीतल गर्दछ तर वातविकार बढाउँदछ । यो रुखो हुन्छ । यसले पिसाब धेरै लगाउँदछ र पत्थरी निको पार्दछ ।

## पिण्डार

**पिण्डारं शीतलं बल्यं पित्तघ्नंरुचिकारकम् ।**
**पाके लघु विशेषेण विषशान्तिकरं स्मृतम् ॥८५॥**

यसले शीतल गर्दछ, बल दिन्छ, पित्तविकार नाश गर्दछ र रुचि जगाउँदछ । यो पचेपछिको रस पचाउन हलुका हुन्छ । विशेषतः यसले विषविकारलाई शान्त पार्दछ ।

## चठेल

**कर्कोटकी पीतपुष्पा महाजालीति चोच्यते ।**
**कर्कोटी मलहृत्कुष्ठहृल्लासारुचिनाशिनी ॥८६॥**
**श्वासकासज्वरान्हन्ति कटुपाका च दीपनी ।**

कर्कोटकी, पीतपुष्पा र महाजाली : यी चठेलका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले दिसा नाश गर्दछ, कुष्ठरोग नाश गर्दछ, जीउ दुख्ने समस्या ठिक गर्दछ र अरुचि नाश गर्दछ । यसले दम, खोकी र जरो नाश गर्दछ । यो पचेपछि पिरो हुन्छ । यसले पाचक-अग्नि बाल्दछ ।

## डोडिका

**डोडिका विषमुष्टिश्च डोडित्यपि सुमुष्टिका ॥८७॥**
**डोडिका पुष्टिदा वृष्या रुच्या वह्निप्रदा लघुः ।**
**हन्ति पित्तकफार्शांसि कृमिगुल्मविषामयान् ॥८८॥**

डोडिका, विषमुष्टि, डोडी र सुमुष्टिका : यी वनस्पति विशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । यसले पुष्टि दिन्छ, वीर्य बढाउँदछ, रुचि जगाउँदछ, पाचकाग्निलाई बाल्दछ र पचाउन कठिन हुन्छ । यसले पित्तविकार, कफविकार, अल्काई, कीरा, गुल्म, विषविकार र आमविकार नाश गर्दछ ।

## कण्टकारीको फल

**कण्टकारीफलं तिक्तं कटुकं दीपनं लघु ।**
**रूक्षोष्णं श्वासकासघ्नं ज्वरानिलकफापहम् ॥८९॥**

कण्टकारीको फल तीतो र पिरो हुन्छ । यसले पाचकाग्निलाई बाल्दछ । यो पचाउन हलुका हुन्छ । यो रुखो हुन्छ । यसले गर्मी गर्दछ तथा दम, खोकी, जरो, वातविकार र कफविकार नाश गर्दछ ।

॥ इति फलशाकानि ॥

**॥ अथ नालशाकानि ॥**

## सर्सिउँको डाँठ

**तीक्ष्णोष्णं सार्षपं नालं वातश्लेष्मव्रणापहम् ।**
**कण्डूकृमिहरं दद्रुकुष्ठघ्नं रुचिकारकम् ॥९०॥**

सर्सिउँको डाँठ तिक्खर, गर्मी गर्ने तथा वातविकार, कफविकार, खटिरा, लुतो, कीरा, दाद र कुष्ठ नाश गर्दछ । यसले रुचि जगाउँदछ ।

॥ इति नालशाकानि ॥

॥ अथ कन्दशाकानि ॥

### ओल

**सूरणः कन्द ओलश्च कन्दलोऽर्शोघ्न इत्यपि ।**
**सूरणो दीपनो रूक्षः कषायः कण्डुकृत् कटुः ॥९१॥**
**विष्टम्भी विशदो रुच्यः कफार्शः कृन्तनो लघुः ।**
**विशेषादर्शसे पथ्यः प्लीहगुल्मविनाशनः ॥९२॥**
**सर्वेषां कन्दशाकानां सूरणः श्रेष्ठ उच्यते ।**
**दद्रूणां कुष्ठिनां रक्तपित्तिनां न हितो हि सः ॥९३॥**
**सन्धानयोगं सम्प्राप्तः सूरणो गुणवत्तरः ।**

सूरण, कन्द, ओल, कन्दल र अर्शोघ्न : यी ओलका संस्कृत पर्यायवाची नामहरू हुन् । ओलले पाचकाग्निलाई बाल्दछ । यो रुखो, टर्रो, शरीर चिलाउने बनाउने र पिरो हुन्छ । यसले कब्जियत गर्दछ । यो सेतो वा सफा हुन्छ । ओलले रुचि जगाउँदछ तथा कफविकार र अल्काई नाश गर्दछ । यो पचाउन हलुका हुन्छ । ओल विशेषतः अल्काई रोगमा पथ्य हुन्छ । यसले फियोका रोग र गुल्म नाश गर्दछ । सबै खालका कन्द-शाकमध्ये ओललाई श्रेष्ठ मानिन्छ । तर, दादका रोगी, कुष्ठका रोगी र रक्तपित्तका रोगीलाई ओल हितकर हुँदैन । अझ ओललाई साँधेर अचार आदि बनाउने हो भने यो बढी गुणकारी हुन्छ ।

### कन्दमूलविशेष

**आरूकं वीरसेनञ्च वीरं वीरारुकं तथा ॥९४॥**
**आरुकमप्यालुकं तत्कथितं वीरसेनकम् ।**
**काष्ठालुकशङ्खालुकहस्त्यालुकानि कथ्यन्ते ॥९५॥**
**पिण्डालुकमध्वालुक रक्तालुकानि चोक्तानि ।**

**(काष्ठालुकम् -काठिन्ययुक्तम् । शङ्खालुकम्-श्वेततायुक्तम् । हस्त्यालुकम्- दीर्घतायुक्तम्, महाशरीरम् । पिण्डालुकं-वर्त्तुलम्, पिण्डालू । मध्वालुकम्-मधुरतायुक्तं रोमान्वितम् (दीर्घसुथनी) । रक्तालुकम्-रक्तालू ।)**

आरूक, वीरसेन, वीर, वीरारुक, आरुक, आलुक र वीरसेनक : यी कन्दमूलविशेषका संस्कृत पर्यायवाची नामहरू हुन् । काष्ठालुक, शङ्खालुक, हस्त्यालुक, पिण्डालुक, मध्वालुक र रक्तालुक : यी उक्त कन्दमूलविशेषका जात हुन् ।

**आलुकं शीतलं सर्वं विष्टम्भि मधुरं गुरु ॥९६॥**

**सृष्टमूत्रमलं रूक्षं दुर्जरं रक्तपित्तनुत् ।**
**कफानिलकरं बल्यं वृष्यं स्वल्पाग्नि(स्तम्भवि)वर्द्धनम् ॥९७॥**

सबै जातका यी कन्दमूलविशेषले शीतल र कब्जियत गर्दछन् । यी मिठा हुन्छन् तर पचाउन कठिन हुन्छ । यिनले दिसापिसाब धेर लगाउँदछन् रुखा हुन्छन् । यी ढिलो पच्दछन् तर रक्तपित्त रोगलाई ठिक गर्दछन् । यिनले कफविकार र वातविकार गर्दछन् । बल दिन्छन्, वीर्य बढाउँदछन् तथा थोरै पाचनशक्ति (जडता) पनि बढाउँदछन् ।

**रक्तालुभेदो या दीर्घा तन्वी च प्रथिताऽऽलुकी ।**
**आलुकी बलकृत्स्निग्धा गुर्वी हृत्कफनाशिनी ॥९८॥**
**विष्टम्भकारिणी तैले तलिताऽतिरुचिप्रदा ।**

लामो र लिखुरो जातको रक्तालुको एक जातलाई आलुकी भनिन्छ । यसले बल दिलन्छ । यो चिल्लो, पचाउन कठिन , हृदयको कफ नाशक र कब्जियत गराउने गुणको हुन्छ । तेलमा तारिएको आलुकी अति नै रुचिकर हुन्छ ।

## मूला

**मूलकं द्विविधं प्रोक्तं तत्रैकं लघुमूलकम् ॥९९॥**
**शालामर्कटकं विस्रं शालेयं मरुसम्भवम् ।**
**चाणक्यमूलकं तीक्ष्णं तथा मूलकपोतिका ॥१००॥**
**नेपालमूलकं चान्यत्तद्भवेद्गजदन्तवत् ।**
**लघुमूलं कटूष्णं स्याद्रुच्यं लघु च पाचनम् ॥१०१॥**
**दोषत्रयहरं स्वर्यं ज्वरश्वासविनाशनम् ।**
**नासिकाकण्ठरोगघ्नं नयनामयनाशनम् ॥१०२॥**
**महत्तदेव रूक्षोष्णं गुरु दोषत्रयप्रदम् ।**
**स्नेहसिद्धं तदेव स्याद् दोषत्रयविनाशनम् ॥१०३॥**

मूला दुई प्रकारको हुन्छ, त्यसमध्येको एक सानो मूला हो । लघुमूलक, शालामर्कटक, विस्र, शालेय, मरुसम्भव, चाणक्यमूलक, तीक्ष्ण र मूलकपोतिका : यी सानोमूलाका संस्कृत पर्यायवाची नामहरू हुन् । अर्को हात्तीको दाँतजस्तो ठूलो मूलालाई नेपालीमूलक (नेपालीमूला) भनिन्छ । सानोमूला पिरो, गर्मी गर्ने, रुचिकारक, पचाउन हलुका, खाएको पचाउने, त्रिदोष नाशक, स्वरलाई उत्तम बनाउने, तथा जरो, दम, नाकका रोग, घाँटीका रोग र आँखाका रोग नाशक हुन्छ । ठूलो मूला रुखो, गर्मी गर्ने, पचाउन कठिन र त्रिदोषकारक हुन्छ । यसलाई तेलमा भुटेपछि भने यो त्रिदोषनाशक हुन्छ ।

## गाजर

**गृञ्जनं गाजरं प्रोक्तं तथा नारङ्गवर्णकम् ।**

**गाजरं मधुरं तीक्ष्णं तिक्तोष्णं दीपनं लघु ॥१०४॥**
**संग्राहि रक्तपित्तार्शोग्रहणीकफवातजित् ।**

गृञ्जन, गाजर र नारङ्गवर्णक : यी गाजरका संस्कृत पर्यायवाची नामहरू हुन् । यो गुलियो, तिक्खर, तीतो, गर्मी गर्ने, पाचकाग्नि बाल्ने र पचाउन हलुका हुन्छ । यसले कब्जियत गर्दछ तथा रक्तपित्त, अल्काई, ग्रहणी रोग, कफविकार र वातविकार नाश गर्दछ ।

## केराको गानु

**शीतलः कदलीकन्दो बल्यः केश्योऽम्लपित्तजित् ॥१०५॥**
**वह्निकृद्दाहहारी च मधुरो रुचिकारकः ।**

केराको गानु शीतल गर्ने, बलदायक, कपालका लागि हितकारी, अम्लपित्त नाशक, जठराग्नि वर्धक, डाह नाशक, मिठो र रुचिकारक हुन्छ ।

## मानेको गानु

**मानकः स्यान्महापत्रः कथ्यन्ते तद्गुणा अथ ॥१०६॥**
**मानकः शोथहृच्छीतो रक्तपित्तहरो लघुः ।**

मानक र महापत्र : यी मानेका संस्कृत पर्यायवाची नामहरू हुन् । अब यसका गुण बताइन्छ । यसले सुजन ठिक गर्दछ, शीतल गर्दछ र रक्तपित्त नाश गर्दछ । यो पचाउन हलुका हुन्छ ।

## गिठो (कन्द)

**वाराही पित्तला बल्या कटुवी तिक्ता रसायनी ॥१०७॥**
**आयुःशुक्राग्निकृन्मेहकफकुष्ठानिलापहा ।**

यसले पित्तविकार गर्दछ तर बल बढाउँदछ । यो पिरो, तीतो र रसायनी हुन्छ । यसले आयु, शुक्र र जठराग्निलाई बढाउँदछ । यसले प्रमेह, कफविकार, कुष्ठ र वातविकार नाश गर्दछ ।

## हस्तिकर्णी पलाँस (गजकर्ण)

**गजकर्णा तु तिक्तोष्णा तथा वातकफाञ्जयेत् ॥१०८॥**
**शीतज्वरहरी स्वादुः पाके तस्यास्तु कन्दकः ।**
**पाण्डुशोथकृमिप्लीहगुल्मानाहोदरापहः ॥१०९॥**
**ग्रहण्यर्शोविकारघ्नी वनसूरणकन्दवत् ।**

गजकर्ण तीतो, गर्मी गर्ने तथा वातविकार र कफविकारलाई जित्ने गुणको हुन्छ । यसले शीतज्वर नाश गर्दछ । पचेपछि गुलियो हुन्छ । यसको कन्दले ओलले जसरी नै पाण्डु, सुजन, कीरा, फियोका रोग, गुल्म, आनाह, पेटका रोग, ग्रहणी र अल्काईका विकार नाश गर्दछ ।

## बेतलौरी (केमुक)

**केमुकं कटुकं पाके तिक्तं ग्राहि हिमं लघु ॥११०॥**
**दीपनं पाचनं हृद्यं कफपित्तज्वरापहम् ।**
**कुष्ठकासप्रमेहास्रनाशनं वातलं कटु ॥१११॥**

यो शुरुमा पिरो र तीतो तथा पचेपछि पिरो हुन्छ । यसले कब्जियत र शीतल गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले पाचकाग्निलाई बाल्दछ र खाएको कुरा पचाउँदछ । यो मुटुका लागि फाइदाजनक हुन्छ । यसले कफविकार, पित्तविकार, जरो, कुष्ठ, खोकी, प्रमेह र रक्तविकार नाश गर्दछ । यसले वातविकार गर्दछ ।

## (कसुर) कसेरु

**कसेरु द्विविधं तत्तु महद्राजकसेरुकम् ।**
**मुस्ताकृति लघु स्याद्यत्तच्चिचोढमिति स्मृतम् ॥११२॥**
**कसेरुकद्वयं शीतं मधुरं तुवरं गुरु ।**
**पित्तशोणितदाहघ्नं नयनामयनाशनम् ॥११३॥**
**ग्राहि शुक्रानिलश्लेष्मारुचिस्तन्यकरं स्मृतम् ।**

कसेरु दुई किसिमको हुन्छ । ठूलो कसेरुलाई राजकसेरु भनिन्छ । सानो मोथेजस्तो कसेरुलाई चिचोढ भनिन्छ । यी दुबै कसेरुले शीतल गर्दछन् तथा गुलिया र टर्रा हुन्छन् । यी पचाउन कठिन हुन्छन् । यिनले पित्तविकार, रक्तविकार, डाह र आँखाका रोग नाश गर्दछन् । यिनले कब्जियत गर्दछन् तथा शुक्र, वातविकार, कफविकार, अरुचि र दूध बढाउँदछन् भनिन्छ ।

## कमलको नाल र गानु

**पद्मादिकन्दः शालूकं करहाटश्च कथ्यते ॥११४॥**
**मृणालमूलं भिस्साण्डं जलालूकञ्च कथ्यते ।**
**शालूकं शीतलं वृष्यं पित्तदाहास्रनुद् गुरु ॥११५॥**
**दुर्जरं स्वादुपाकश्च स्तन्यानिलकफप्रदम् ।**
**संग्राहि मधुरं रूक्षं भिस्साण्डमपि तद्गुणम् ॥११६॥**

कमल आदिका कन्दलाई संस्कृतमा शालूक र करहाट भनिन्छ । कमलको डाँठलाई मृणाल भनिन्छ । मृणालको मूल भागलाई संस्कृतमा मृणालमूल, भिस्साण्ड र जलालूक भनिन्छ । कमलकन्दले शीतल गर्दछ, वीर्य बढाउँदछ तथा पित्तविकार, डाह र रक्तविकार नाश गर्दछ । यो पचाउन कठिन हुन्छ । यो ढिलो

पच्दछ । पचेपछि गुलियो हुन्छ । यसले दूध, वातविकार र कफविकार बढाउँदछ । यसले कब्जियत गर्दछ । यो मिठो र रुखो हुन्छ । कमलको मूल डाँठमा पनि यिनै गुण हुन्छन् ।

## सागपात

**बालं ह्यनार्त्तवं जीर्णं व्याधितं कृमिभक्षितम् ।**
**कन्दं विवर्जयेत्सर्वं यद्वाऽग्न्यादिविदूषितम्॥११७॥**
**अतिजीर्णमकालोत्थं रूक्षसिद्धमदेशजम् ।**
**कर्कशं कोमलं चातिशीतव्यालादिदूषितम्॥**
**संशुष्कं सकलं शाकं नाश्नीयान्मूलकं विना॥११८॥**

कलिलो, बेमौसमको, पुरानो, रोग लागेको, कीरा परेको वा कीराले खाएको तथा आगो आदिले दूषित बनाएको सागपात खान हुँदैन । धेरै दिनको बासी, बेमौसममा उम्रिएको, चिल्लो नहाली सुक्खा भुटेको, अशुद्ध स्थान (मसान रछ्यान आदि) मा उम्रेको कडा भएको (वा धोत्रो पसेको), अति नरम, तुसारो वा शीतले खाएको र सर्पआदिले दूषित बनाएको सागपात खान हुँदैन । मूला बाहेक अरु कुनै पनि सागपात सुकेको खान हुन्न । (सागपातमा पात, डाँठ, मुन्टा, फूल, फल र कन्दमूल खाइने वनस्पतिहरू पर्दछन्) ।

॥ इति कन्दशाकानि ॥

**॥ अथ संस्वेदजशाकानि ॥**

## च्याउ

**उक्तं संस्वेदजं शाकं भूमिच्छत्रं शिलीन्द्रकम् ।**
**क्षितिगोमयकाष्ठेषु वृक्षादिषु तदुद्भवेत्॥११९॥**
**सर्वे संस्वेदजाः शीता दोषलाः पिच्छिलाश्च ते ।**
**गुरवश्छर्द्यतीसारज्वरश्लेष्मामयप्रदाः॥१२०॥**
**श्वेताशुचिस्थलीकाष्ठवंशगोमयसम्भवाः ।**
**नातिदोषकरास्ते स्युः शेषास्तेभ्यो विगर्हिताः॥१२१॥**

संस्वेदज, भूमिच्छत्र र शिलीन्ध्रक : यी च्याउका संस्कृत पर्यायवाची नामहरू हुन् । जमिन, गोबर, काठ, रूख आदि स्थानमा च्याउ उम्रन्छन् । सबै खालका च्याउ शीतल गर्ने, दोष बढाउने, लेस्याइला, पचाउन कठिन, वाकवाकी लगाउने, दिसा लगाउने, जरो निकाल्ने र कफ बढाउने गुणका हुन्छन् । सेता तथा काठ, बाँस, गोबर आदि पवित्र स्थानमा उम्रने च्याउ धेरै बैगुनी हुँदैनन् । अन्य च्याउ भने बैगुनी र त्याज्य हुन्छन् ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे शाकवर्गः समाप्तः॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको सागपात वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ॥

## ॥ अथैकादशो मांसवर्गः ॥

### मासुका पर्यायवाची नामहरू, मासुका फाइदा

**मासं तु पिशितं क्रव्यमामिषं पललं पलम् ।**
**मांसं वातहरं सर्वं बृंहणं बलपुष्टिकृत् ॥१॥**
**प्रीणनं गुरु हृद्यञ्च मधुरं रसपाकयोः ।**

मांस, पिशित, क्रव्य, आमिष, पलल तथा पल : यी मासुका संस्कृत पर्यायवाची नामहरू हुन् । सबै खालका मासु शुरुमा र पचेपछि पनि स्वादिला एवं गुलिया हुन्छन् । मासु पौष्टिक हुन्छ र यसले बल तथा पुष्टि दिन्छ । यसले शरीरका धातुलाई सन्तुष्टि दिन्छ अर्थात् तर्पण गर्दछ । मासु मुटुका लागि पनि लाभदायक हुन्छ र यसले वातविकार नाश गर्दछ ।

### मांसवर्गका प्रकार

**मांसवर्गो द्विधा ज्ञेयो जाङ्गलानूपभेदतः ॥२॥**

मासु जाङ्गल र आनूप गरी दुई किसिमको हुन्छ भनी जान्नू ।

### मांसको जाङ्गल-वर्ग

**मांसवर्गेऽत्र जङ्घाला बिलस्थाश्च गुहाशयाः ।**
**तथा पर्णमृगा ज्ञेया विष्किराः प्रतुदस्तथा ॥३॥**
**प्रसहा अथ च ग्राम्या अष्टौ जाङ्गलजातयः ।**
**जाङ्गला मधुरा रूक्षास्तुवरा लघवस्तथा ॥४॥**
**बल्यास्ते बृंहणं वृष्या दीपना दोषहारिणः ।**
**मूकतां मिन्मिनत्वं च गद्गदत्वार्दिते तथा ॥५॥**
**बाधिर्य्यमरुचिच्छर्दिप्रमेहमुखजान् गदान् ।**
**श्लीपदं गलगण्डञ्च नाशयत्यनिलामयान् ॥६॥**

जाङ्गल मासु पनि आठ किसिमको हुन्छ । (१) जङ्घाल (तिघ्राको बलमा हिँडडुल गर्ने जीवको मासु), (२) बिलस्थ (दुलोमा बस्ने जीवको मासु), (३) गुहाशय (गुफामा सुत्ने जीवको मासु), (४) पर्णमृग (रूख चढ्ने जीवको मासु), (५) विष्किर (खोस्री खोस्री आहारा खाने खालका जीवको मासु), (६) प्रतुद (चुच्चोले ठुँगेर आहारा खाने जीवको मासु), (७) प्रसह (बलपूर्वक खोसेर आहारा खाने जीवको मासु) र (८) ग्राम्य ( गाउँवस्तीमा वा त्यसको नजिक रहने जीवको मासु) । जाङ्गल मासु गुलियो र टर्रो मिश्रित स्वादको हुन्छ । यो रुखो र पचाउन हलुका हुन्छ । यस्तो मासु बलदायक, पौष्टिक, वीर्यवर्धक, पाचन शक्ति बढाउने र दोष

(रोग) नाशक हुन्छ । यसले लाटोपन, तोतेपन, लठेब्रोपन, अनुहारको जडता (फेसियल प्यारालाइसिस), बहिरोपन, अरुचि, वाकवाकी, प्रमेह, मुखका रोग, हात्तीपाइले रोग, गलगाँड र वातजन्य अन्य रोग नाश गर्दछ ।

## मांसको आनूप-वर्ग

**कूलेचराः प्लवाश्चापि कोशस्थाः पादिनस्तथा ।**
**मत्स्या एते समाख्याताः पञ्चधाऽनूपजातयः ॥७॥**
**अनूपा मधुराः स्निग्धा गुरवो वह्निसादनाः ।**
**श्लेष्मलाः पिच्छिलाश्चापि मांसपुष्टिप्रदा भृशम् ॥८॥**
**तथाऽभिष्यन्दिनस्ते हि प्रायः पथ्यतमाः स्मृताः ।**

आनूप मासु पाँच किसिमको हुन्छ । (१) कूलेचर (नदी आदि पानीका श्रोतका छेउछाउमा विचरण गर्ने जीवको मासु), (२) प्लव (पानीमा पौडने जीवको मासु), (३) कोशस्थ (खोल भित्र हुने जीवको मासु), (४) पादी (गोडा हुने जलचर जीवको मासु) र (५) माछाको मासु ।

## जङ्गाल-जीव र तिनको मासु

**हरिणैणकुरङ्गर्ष्यपृषतन्यङ्कुशम्बराः ॥९॥**
**राजीवोऽपि च मुण्डी चेत्याद्या जङ्गालसंज्ञकाः ।**

हरिण, एण, कुरङ्ग, ऋष्य, पृषत, न्यङ्कु, शम्बर, राजीव, मुण्डी आदि जङ्गाल नामका जीवहरू हुन् ।

**हरिणस्ताम्रवर्णः स्यादेणः कृष्णः प्रकीर्त्तितः ॥१०॥**

तामाको जस्तो वर्ण हुने मृगलाई हरिण भनिन्छ । कालो वर्णको मृगलाई एण भनिन्छ ।

**कुरङ्गईषत्ताम्रः स्यादेणतुल्याकृतिर्महान् ।**
**ऋष्यो नीलाङ्गको लोके स रोझ इति कीर्त्तितः ॥११॥**

हल्का तामाको जस्तो रङ हुने मृगलाई कुरङ्ग भनिन्छ । यो एण मृग जत्रै जत्रै तर केही ठूलो हुन्छ । ऋष्य नामक मृग नीलो वर्णको हुन्छ यसलाई मानिसहरू रोझ भन्दछन् ।

**पृषतश्चन्द्रबिन्दुः स्याद्धरिणात्किञ्चिदल्पकः ।**
**न्यङ्कुर्बहुविषाणोऽथ शम्बरो गवयो महान् ॥१२॥**

पृषत नामक मृगको शरीरमा चन्द्रबिन्दु जस्ता बुट्टा हुन्छन् । यो मृग हरिणभन्दा केही सानो हुन्छ । न्यङ्कुका हाँगा भएका सिङ हुन्छन् । (यसलाई बाह्रसिंगा भनिन्छ) । शम्बर नामक पशु (मृग) नीलगाईभन्दा ठूलो हुन्छ ।

**राजीवस्तु मृगो ज्ञेयो राजिभिः परितोवृतः ।**
**यो मृगः शृङ्गहीनः स्यात्स मुण्डीति निगद्यते ॥१३॥**

शरीरभरी धर्कैधर्का हुने मृगलाई राजीव भनिन्छ । जुन मृगको सिङ हुँदैन त्यसलाई मुण्डी भनिन्छ ।

**जङ्गालाः प्रायशः सर्वे पित्तश्लेष्महराः स्मृतः ।**
**किञ्चिद्वातकराश्चापि लघवो बलवर्द्धनाः ॥१४॥**

जङ्गाल जीवको मासु प्रायः पित्तविकार र कफविकार नाशक तथा थोरै वातविकार बढाउने गुणको हुन्छ । यो पचाउन हलुका र बलवर्धक हुन्छ ।

## दुलोमा बस्ने जीव

**गोधाशशभुजङ्गाखुशल्लक्याद्या बिलेशयाः ।**
**बिलेशया वातहरा मधुरा रसपाकयोः ॥१५॥**
**बृंहणा बद्धविण्मूत्रा वीर्योष्णाश्च प्रकीर्त्तिताः ।**

गोहोरो, खरायो, सर्प, मूसा, दुम्सी आदि जीव दुलोमा बस्ने जीव हुन् । यिनको मासुले वातविकार नाश गर्दछ । यो मासु शुरुमा र पचेपछि पनि गुलियो हुन्छ । बिलेशय जीवको मासु पौष्टिक, मलमूत्रलाई अवरोध गर्ने र गर्मी गर्ने गुणको हुन्छ भनिएको छ ।

## गुफामा बस्ने जीव र तिनको मासु

**सिंहव्याघ्रवृका ऋक्षतरक्षुद्वीपिनस्तथा ॥१६॥**
**बभ्रुजम्बूकमार्जारा इत्याद्याः स्युर्गुहाशयाः ।**

सिंह, बाघ, ब्वाँसो, भालु, निगाले चितुवा, चितुवा, न्याउरीमूसो, स्याल, बिरालो आदि गुफामा बस्ने जीव हुन् ।

**गुहाशया वातहरा गुरूष्णा मधुराश्च ते ॥१७॥**
**स्निग्धा बल्या हिता नित्यं नेत्र गुद विकारिणाम् ।**

गुफामा बस्ने जीवको मासु वातविकार नाशक, पचाउन कठिन, गर्मी गर्ने, गुलियो, चिल्लो, बलदायक तथा आँखा र गुदद्वारका रोगीका लागि सधैं लाभकारी हुन्छ ।

## पर्णमृगाः (रूख चढ्ने खालका प्राणी)

**वनौका वृक्षमार्जारो वृक्षमर्कटिकाऽऽदयः ॥१८॥**
**एते पर्णमृगाः प्रोक्ताः सुश्रुताद्यैर्महर्षिभिः ।**

वानर, वनबिरालो, रूषी वानर आदिलाई सुश्रुत आदि महर्षिहरूले रूख चढ्ने प्राणी भनी बताएका छन् ।

**स्मृताः पर्ण मृगा वृष्याश्चक्षुष्या शोषिणे हिताः ॥१९॥**
**श्वासार्शः कास शमनाः सृष्ट मूत्र पुरीषकाः ।**

पर्णमृगहरूको मासु वीर्यवर्धक, आँखाका लागि लाभदायक, क्षयरोगीका लागि फाइदाजनक तथा दम, अल्काई र खोकी नाशक एवं मलमूत्र निकाल्ने गुणको हुन्छ ।

## विष्किर वर्गका चरा

**वर्त्तका लाववर्त्तीरकपिञ्जलकतित्तिराः ॥२०॥**
**कुलिङ्गकुक्कुटाद्याश्च विष्किरा समुदाहृताः ।**

पोथी बट्टाई चरो, लाभे चरो, भाले बट्टाई चरो, सेतो तित्रो, तित्रो, भँगेरो वा कन्याङकुरुङ, कुखुरा आदि पंक्षीलाई विष्किर-वर्गका चरा भनिन्छ ।

**विकीर्य भक्षयन्त्येते यस्मात्तस्माद्धिविष्किराः ॥२१॥**
**कपिञ्जल इति प्राज्ञैः कथितो गौरतित्तिरिः ।**

पहिले चुचो आदिले आहारा छरी अनि त्यो आहारा खाने हुनाले यिनलाई विष्किर भनिएको हो । विशेषज्ञहरूले सेतो तित्रोलाई कपिञ्जल भनी बताएका छन् ।

**विष्किरा मधुराः शीताः कषायाः कटुपाकिनः ॥२२॥**
**बल्या वृष्यास्त्रिदोषघ्नाः पथ्यास्ते लघवः स्मृताः ।**

विष्किर वर्गमा पर्ने चराको मासु गुलियो, शीतल गर्ने, टर्रो र पचेपछि पिरो हुन्छ । यो मासु बलदायक, वीर्यवर्धक, त्रिदोष नाशक, पथ्य र पचाउन सहज हुन्छ ।

## प्रतुद वर्गका चरा

**कालकण्ठकहारीतकपोतशतपत्रकाः ॥२३॥**

**पारावतः खञ्जरीटः पिकाद्याः प्रतुदाः स्मृताः ।**

धुवाँ जस्तो वर्णको पानीकाग, हलेसो चरा, मलेवा, कठफोरुवा चरो, परेवा, मझौला जातको खञ्जन चरा, कोइली आदि चरालाई प्रतुद वर्गका चरा भनिन्छ ।

**प्रतुद्य भक्षयन्त्येते तुण्डेन प्रतुदास्ततः ॥२४॥**

चुच्चोले ठुँगेर वा फोरेर आहारा खाने हुनाले यिनलाई प्रतुद भनिएको हो ।

**प्रतुदा मधुराः पित्तकफघ्नास्तुवरा हिमाः ।**
**लघवो बद्धवर्चस्काः किञ्चिद्वातकराःस्मृताः ॥२५॥**

प्रतुद जातका चराको मासु गुलियो, पित्तविकार नाशक, कफविकार नाशक र शीतल गर्ने गुणको हुन्छ । यो टर्रो, पचाउन हलुका, दिसा गोटा पार्ने र थोरै वातविकार बढाउने खालको हुन्छ ।

## प्रसह वर्गका चराहरू

**काको गृध्र उलूकश्च चिल्लश्च शशघातकः ।**
**चाषो भासश्च कुरर इत्याद्याः प्रसहाः स्मृताः ॥२६॥**

काग, गिद्ध, लाटोकोसेरो, चिल, बाज, नीलकण्ठ(चाष), गिद्धविशेष, कुरर (चखेवा, न्याउली चरा) आदि चरालाई प्रसह जातका चरा भनिन्छ ।

**प्रसहाः कीर्त्तिता एते प्रसह्याच्छिद्य भक्षणात् ।**

अर्काको खोसेर खाने हुनाले यिनलाई प्रसहा भनिएको हो ।

**प्रसहाः खलु वीर्योष्णास्तन्मांसं भक्षयन्ति ये ॥२७॥**
**ते शोषभस्मकोन्मादशुक्रक्षीणा भवन्ति हि ।**

प्रसह वर्गका चराको मासुले गर्मी गर्दछ । यी चराको मासु जसले खान्छन् तिनलाई क्षयरोग, जति खाए पनि पच्दै जाने र भोक लागिरहने रोग (भस्मक), पागलपन र शुक्र कमजोर हुने वा घट्ने रोग लाग्दछ नै ।

## ग्राम्य पशु

**छागमेषवृषाश्वाद्या ग्राम्याः प्रोक्ता महर्षिभिः ॥२८॥**
**ग्राम्या वातहराः सर्वे दीपनाः कफपित्तलाः ।**
**मधुरा रसपाकाभ्यां बृंहणा बलवर्द्धनाः ॥२९॥**

बोका, भेडा, साँढे, घोडा आदि जनावरलाई महर्षिजनले ग्राम्य पशु बताएका छन् । ग्राम्य पशु सबैको मासु वातविकार नाशक, पाचकाग्नि वर्धक, कफविकार गर्ने, पित्तविकार गर्ने, शुरुमा खाँदा र पचेपछि गुलिया, पौष्टिक र बलवर्द्धक हुन्छ ।

## कूलेचर पशु

**लुलायगण्डवाराहचमरीवारणादयः ।**
**एते कूलेचराः प्रोक्ता यतः कूले चरन्त्यपाम् ॥३०॥**

राँगो, गैंडा, बँदेल, याक, हात्ती आदिलाई कूलेचर वर्गका जनावर भनिन्छ । जुन जनावर जलाशय नजिक चर्दछन् तिनलाई कूलेचर भनिन्छ ।

**कूलेचरा मरुत्पित्तहरा वृष्या बलावहाः ।**
**मधुराः शीतलाः स्निग्धामूत्रलाः श्लेष्मवर्धनाः ॥३१॥**

कूलेचर जीवको मासु वातविकार नाशक, पित्तविकार नाशक, वीर्यवर्धक, बलबर्धक, मिठो, शीतल गर्ने, चिल्लो, पिसाब लगाउने र कफविकार बढाउने गुणका हुन्छन् ।

## प्लव वर्गका चरा

**हंससारसकारण्डबकक्रौञ्चशरारिकाः ।**
**नन्दीमुखी सकादम्बा बलाकाद्याः प्लवाः स्मृताः ॥३२॥**
**प्लवन्ति सलिले यस्मादेते तस्मात्प्लवाः स्मृताः ।**

हाँस, सारस, सानो घरेलु हाँस (कारण्ड), बकुल्लो, कन्याङकुरुङ, चाँचर, चुच्चोको माथ्लो भाग सारो र बाटुलो हुने चरा (नन्दीमुखी), राजहाँस (कादम्ब), भुँडीफोर चरा (बलाक) आदि चरालाई प्लव जातका चरा भनिन्छ । जुन चरा पानीमा पौडने गर्दछन् ती चरालाई प्लव जातका चरा भनिन्छ ।

**(स्थूला कठोरा वृत्ता च यस्याश्चञ्चूपरि स्थिता ।**
**गुटिका जम्बुसदृशी प्रोक्ता नन्दीमुखीति सा ॥)**

जुन चराको चुच्चोमाथि जामुनुका आकारको गोलो, मोटो र साह्रो डल्लो हुन्छ त्यसलाई नन्दीमुखी भनिन्छ) ।

**प्लवाः पित्तहराः स्निग्धा मधुरा गुरवो हिमाः ॥३३॥**
**वातश्लेष्मप्रदाश्चापि बलशुक्रकराः सराः ।**

प्लव जातिका चराको मासु पित्तविकार नाशक, चिल्लो, मिठो, पचाउन कठिन, शीतल गर्ने, वातविकार गर्ने, कफविकार गर्ने, बलदायक, शुक्रवर्धक र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

## खोलभित्र रहने जीव

**शङ्खः शङ्खनखश्चापिशुक्तिशम्बूककर्कटाः ॥३४॥**
**जीवा एवंविधाश्चान्येकोशस्थाः परिकीर्त्तिताः ।**
**कोशस्था मधुराःस्निग्धा वातपित्तहरा हिमाः ॥३५॥**
**बृंहणा बहुवर्चस्का वृष्याश्च बलवर्द्धनाः ।**

शङ्ख, साना शङ्ख (शङ्खनख), सिपी (शुक्ति), सानो घोंघी (शम्बूक), गँगटो आदी जीवलाई कोशस्थ जीव वा खोलभित्र रहने जीव भनिन्छ । यिनको मासु मिठो, चिल्लो, वातविकार नाशक, पित्तविकार नाशक र शीतल गर्ने गुणको हुन्छ । यो मासु पौष्टिक, धेरै दिसा लगाउने, वीर्यवर्धक र बलवर्धक हुन्छ ।

## गोडा हुने जीव (पादीन)

**कुम्भीरकूर्मनक्राश्च गोधामकरशङ्कव ॥३६॥**
**घण्टिकः शिशुमारश्चेत्यादयः पादिनः स्मृताः ।**
**पादनोऽपि च ये तेतु कोशस्थानां गुणैः समाः ॥३७॥**

नाव जातको गोही (कुम्भीर), कछुवा (कूर्म), नाक नाम गरेको गोही (नक्र), गोहोरो (गोधा), मगर जातको गोही (मकर), सकुची माछो (शङ्कव), घडियाल गोही (घण्टिक), सोंस (शिशुमार) आदि जीवलाई पादीन जीव भनिन्छ । खोलभित्र हुने जीवको मासुमा हुने गुण नै पादीन जीवको मासुमा पनि हुन्छ ।

## माछा-वर्ग

**मत्स्यो मीनो विसारश्च झषो वैसारिणोऽण्डजः ।**
**शकुली पृथुरोमा च स सुदर्शन इत्यपि ॥३८॥**
**रोहिताद्यास्तु ये जीवास्ते मत्स्याः परिकीर्त्तिताः ।**
**मत्स्याः स्निग्धोष्णमधुरा गुरवः कफपित्तलाः ॥३९॥**
**वातघ्ना बृंहणा वृष्या रोचका बलवर्द्धनाः ।**
**मद्यव्यवायसक्तानां दीप्ताग्नीनाञ्च पूजिताः ॥४०॥**

मत्स्य, मीन, विसार, झष, वैसारिण, अण्डज, शकुली, पृथुरोमा र सुदर्शन : यी माछाका संस्कृत पर्यायवाची नामहरू हुन् । (पछि बताइने) रोहू आदि जीवलाई माछा वर्गका जीव भनी जान्नू । माछा चिल्लो, गर्मी गर्ने, मिठो, पचाउन कठिन, कफविकार बढाउने, पित्तविकार बढाउने, वातविकार नाशक, पौष्टिक, वीर्यवर्धक,

रुचिकर र बलवर्धक हुन्छ । मदिरा पिउने आदत भएका, मैथुन प्रति आशक्ति भएका र पाचनशक्ति बलियो भएका मानिसका लागि माछा हितकारी हुन्छ ।

### जङ्गाल वर्गमा पर्ने हरिण मृगको मासु

**हरिणः शीतलो बद्धविण्मूत्रो दीपनो लघुः ।**
**रसे पाके च मधुरः सुगन्धिः सन्निपातहा ॥४१॥**

हरिणको मासुले शीतल गर्दछ । यो मासुले दिसापिसाबलाई रोक्दछ र पाचकाग्निलाई बाल्दछ । यो पचाउन हलुका हुन्छ । हरिणको मासु शुरुमा र पचेपछि पनि स्वादिलो (गुलियो) हुन्छ । यो बास्ना आउने हुन्छ । यसले सन्निपात जरोलाई नाश गर्दछ ।

### जङ्गाल वर्गमा पर्ने एण मृगको मासु

**एणः कषायो मधुरः पित्तासृक्कफवातहृत् ।**
**संग्राही रोचनो बल्यो ज्वरप्रशमनः स्मृतः ॥४२॥**

एण मृगको मासु टर्रो र गुलियो हुन्छ । यसले पित्तविकार, रक्तविकार, कफविकार र वातविकार नाश गर्दछ । यो मासुले कब्जियत गर्दछ, रुचि जगाउँदछ, बल दिन्छ र जरो नाश गर्दछ ।

### जङ्गाल वर्गमा पर्ने कुरङ्ग मृगको मासु

**कुरङ्गो बृंहणो बल्यः शीतलः पित्तहृद् गुरुः ।**
**मधुरो वातहृद् ग्राही किञ्चित्कफकरः स्मृतः ॥४३॥**

कुरङ्ग मृगको मासु पौष्टिक, बलदायक, शीतल गर्ने, पित्तविकार नाशक र पचाउन कठिन हुन्छ । यो गुलियो, वातविकार नाशक, कब्जियत गर्ने र थोरै कफविकार गर्ने गुणको हुन्छ ।

### जङ्गाल वर्गमा पर्ने ऋष्य मृगको मासु

**ऋष्यो नीलाण्डकश्चापि गवयो रोभ्क इत्यपि ।**
**गवयो मधुरो बल्यः स्निग्धोष्णः कफपित्तलः ॥४४॥**

ऋष्य, नीलाण्डक, गवय र रोभ्क (?) : यी ऋक्ष्य मृगका संस्कृत पर्यायवाची नामहरू हुन् । ऋष्य मृगको मासु गुलियो, बलदायक, चिल्लो, गर्मी गर्ने, कफविकार गर्ने र पित्तविकार गर्ने गुणको हुन्छ ।

### जङ्गाल वर्गमा पर्ने चित्तलको मासु

**पृषतस्तु भवेत्स्वादुर्ग्राहकः शीतलो लघुः ।**
**दीपनो रोचनः श्वासज्वरदोषत्रयास्रजित् ॥४५॥**

चित्तलको मासु स्वादिलो, कब्जियत गराउने, शीतल गर्ने, पचाउन सहज, पाचकाग्नि बाल्ने, रुचि जगाउने तथा दम, जरो र त्रिदोष नाशक हुन्छ ।

### जङ्गाल वर्गमा पर्ने बाह्रसिङ्गे

**न्यङ्कुः स्वादुर्लघुर्बल्यो वृष्यो दोषत्रयापहः ।**

बाह्रसिङ्गेको मासु स्वादिलो, पचाउन हलुका, बलदायक, वीर्यवर्धक र त्रिदोष नाशक हुन्छ ।

### जङ्गाल वर्गमा पर्ने साबर मृग

**साबरं पललं स्निग्धं शीतलं गुरु च स्मृतम् ॥४६॥**
**रसे पाके च मधुरं कफदं रक्तपित्तहृत् ।**

साबर मृगको मासु चिल्लो, शीतल गर्ने, पचाउन कठिन, शुरुमा र पचेपछि गुलियो, कफविकार गर्ने तथा रक्तविकार र पित्तविकार नाशक हुन्छ ।

### जङ्गाल वर्गमा पर्ने राजीव मृग

**राजीवस्तु गुणैर्ज्ञेयः पृषतेन समो जनैः ॥४७॥**

राजीव मृगको मासु गुणमा चित्तलको मासु जस्तै हुन्छ भनी जान्नू ।

### जङ्गाल वर्गमा पर्ने मुण्डी मृग

**मुण्डी तु ज्वरकासास्रक्षयश्वासापहो हिमः ।**

मुण्डी मृगको मासु शीतल गर्ने गुणको तथा जरो, खोकी, रक्तविकार, क्षयरोग र दमरोग नाशक हुन्छ ।

### खरायो

**लम्बकर्णः शशः शूली लोमकर्णो बिलेशयः ॥४८॥**
**शशः शीतो लघुर्ग्राही रूक्षः स्वादुः सदा हितः ।**
**वह्निकृत्कफपित्तघ्नो वातसाधारणः स्मृतः ॥४९॥**

**ज्वरातीसारशोषास्रश्वासामयहरश्च सः ।**

लम्बकर्ण, शश, शूली, लोमकर्ण र बिलेशय : यी खरायोका संस्कृत पर्यायवाची नामहरू हुन् । खरायोको मासु शीतल गर्ने, पचाउन हलुका, कब्जियत गराउने, रुखो, स्वादिलो, सबै ऋतुमा खान हुने, पाचकाग्नि वर्धक, कफविकार नाशक, पित्तविकार नाशक, थोरै वातविकार गर्ने तथा जरो, अतिसार, सुजन, रक्तविकार र दम नाशक हुन्छ ।

## दुम्सी

**सेधा तु शल्यकः श्वावित्कथ्यन्ते तद्गुणा अथ ॥५०॥**
**शल्यकः श्वासकासास्रशोषदोषत्रयापहः ।**

सेधा, शल्यक र श्वावित् : यी दुम्सीका संस्कृत पर्यायवाची नामहरू हुन् । दुम्सीको मासुले दम, खोकी, रक्तविकार, सुजन र त्रिदोष नाश गर्दछ ।

## चरा

**पक्षी खगो विहङ्गश्च विहगश्च विहङ्गमः ॥५१॥**
**शकुनिर्विः पतत्री च विष्किरो विकिरोऽण्डजः ।**
**धान्याङ्कुरचरा येऽत्र तेषां मांसं लघूत्तमम् ॥५२॥**
**आनूपं बलकृन्मांसं स्निग्धं गुरुतरं स्मृतम् ।**

पक्षी, खग, विहङ्ग, विहग, विहङ्गम, शकुनि, वि, पत्रत्री, विष्किर, विकिर र अण्डज : यी चराका संस्कृत पर्यायवाची नामहरू हुन् । धानका अङ्कुरमा चर्ने चराको मासु पचाउन सहज र उत्तम हुन्छ । जलका छेउछाउमा बस्नने चराको मासु बलदायक, चिल्लो र धेरै नै पचाउन कठिन हुन्छ ।

## बट्टाई चरो

**वर्तीको वर्त्तकश्चित्रस्ततोऽन्या वर्त्तका स्मृता ॥५३॥**
**वर्त्तकोऽग्निकरः शीतो ज्वरदोषत्रयापहः ।**
**सुरुच्यः शुक्रदो बल्यो वर्त्तकाऽल्पगुणा ततः ॥५४॥**

वर्तीक, वर्त्तक र चित्र : यी बट्टाई चराका संस्कृत पर्यायवाची नामहरू हुन् । यस बाहेकको अन्य एक थरी बट्टाई पनि हुन्छ जसलाई वर्त्तका भनिन्छ । बट्टाईको मासु पाचकाग्नि वर्धक, शीतल गर्ने, जरो र त्रिदोष नाशक, रुचिकर, शुक्रवर्धक र बलवर्धक हुन्छ । वर्तकाको मासु योभन्दा कम गुनिलो हुन्छ ।

## लाभे चरो

**लावा विष्किरवर्गेषु ते चतुर्धा मता बुधैः ।**
**पांशुलोगौरकोऽन्यस्तु पौण्ड्रको दर्भरस्तथा ॥५५॥**
**लावा वह्निकराः स्निग्धा गरघ्ना ग्राहका हिताः ।**
**पांशुलः श्लेष्मलस्तेषु वीर्योऽष्णोनिलनाशनः ॥५६॥**
**गौरो लघुतरो रूक्षो वह्निकारी त्रिदोषजित् ।**
**पौण्ड्रकः पित्तकृत्किञ्चिल्लघुर्वातकफापहः ॥५७॥**
**दर्भरो रक्तपित्तघ्नो हृदामयहरो हिमः ।**

विद्वानहरूले विष्किर वर्गमा पर्ने लाभे चरा पांशुल, गौरक, पौण्ड्रक र दर्भर गरी चार किसिमको हुन्छ भनेका छन् । लाभे चराको मासु पाचकाग्नि वर्धक, चिल्लो, विषविकार नाशक, कब्जियत गर्ने र पथ्य हुन्छ । पांशुल (माटे रङ) जातको लाभे चराको मासु कफविकार गर्ने, गर्मी गर्ने र वातविकार नाश गर्ने गुणको हुन्छ । गौरक जातको लाभे चराको मासु पचाउन अत्यन्त सहज, रुखो, पाचकाग्नि वर्धक र त्रिदोष नाशक हुन्छ । पौण्ड्रक जातको लाभे चराको मासु पित्तविकार गर्ने, थोरै पचाउन सहज, वातविकार नाशक र कफविकार नाशक हुन्छ । दर्भर जातको लाभे चराको मासु रक्तपित्त नाशक, मुटुका रोग ठिक गर्ने र शीतल गर्ने गुणको हुन्छ ।

## भाले बट्टाईको मासु

**वर्त्तीको वर्त्तिचटको वार्त्तीकश्चैव स स्मृतः ॥५८॥**
**वर्त्तीको मधुरः शीतो रूक्षश्च कफपित्तनुत् ।**

वर्तीक, वर्तिचटक र वार्तीक यी भाले बट्टाई चराका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको मासु गुलियो, शीतल गर्ने, रुखो तथा कफविकार र पित्तविकार नाशक हुन्छ ।

## तित्राको मासु

**तित्तिरिः कृष्णवर्णः स्यात्स तु गौरः कपिञ्जलः ॥५९॥**
**तित्तिरिर्बलदो ग्राही हिक्कादोषत्रयापहः ।**
**श्वासकासज्वरहरस्तस्माद्गौरोऽधिको गुणैः ॥६०॥**

कालो तित्रोलाई तित्तिरि र सेतो तित्रोलाई कपिञ्जल भनिन्छ । तित्तिरिको मासु बलदायक, कब्जियत गर्ने तथा बाडुली, त्रिदोष, दम, खोकी र जरो नाशक हुन्छ । कालो तित्रोकोभन्दा सेतो तित्रोको मासु अधिक गुनिलो हुन्छ ।

## भँगेरोको मासु

**चटकः कलविङ्कः स्यात्कुलिङ्गः कालकण्ठकः ।**
**कुलिङ्गः शीतलः स्निग्धः स्वादुः शुक्रकफप्रदः ॥६१॥**

**सन्निपातहरो वेश्मचटकश्चातिशुक्रलः ।**

चटक, कलविङ्क, कुलिङ्ग र कालकण्ठक : यी भँगेरोका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको मासु शीतल गर्ने, चिल्लो, स्वादिलो, शुक्रवर्धक, कफवर्धक र सन्निपात जरो नाशक हुन्छ । घरतिर बस्ने भँगेराको मासु अति नै शुक्रवर्धक हुन्छ ।

## कुखुरो र बनकुखुरोको मासु

**कुक्कुटः कृकवाकुः स्यात्कालज्ञश्चरणायुधः ॥६२॥**
**ताम्रचूडस्तथा दक्षो यामनादी शिखण्डिकः ।**
**कुक्कुटो बृंहणः स्निग्धो वीर्योष्णोऽनिलहृद् गुरुः ॥६३॥**
**चक्षुष्यः शुक्रकफकृद् बल्यो वृष्यः कषायकः ।**
**आरण्यकुक्कुटः स्निग्धो बृंहणः श्लेष्मलो गुरुः ॥६४॥**
**वातपित्तक्षयवमिविषमज्वरनाशनः ।**

कुक्कुट, कृकवाकु, कालज्ञ, चरणायुध, ताम्रचूड, दक्ष, यामनादी र शिखण्डिक : यी कुखुराका संस्कृत पर्यायवाची नामहरू हुन् । यसको मासु पौष्टिक, चिल्लो, गर्मी गर्ने, वातविकार नाशक, पचाउन कठिन, आँखाका लागि फाइदाजनक, शुक्रवर्धक, कफवर्धक, बलदायक, वीर्यवर्धक र टर्रो हुन्छ । बनकुखुराको मासु चिल्लो, पौष्टिक, कफकारक, पचाउन कठिन, तथा वातविकार, पित्तविकार, क्षयरोग, वाकवाकी र विषमज्वर नाशक हुन्छ ।

## हलेसोको मासु

**हारीतो रक्तपीतः स्याद्धरितोऽपि स कथ्यते ॥६५॥**
**हारीतो रूक्ष उष्णश्च रक्तपित्तकफापहः ।**
**स्वेदस्वरकरः प्रोक्तः ईषद्वातकरश्च सः ॥६६॥**

हारीत, रक्तपीत र हरित : यी हलेसोका संस्कृत पर्यायवाची नामहरू हुन् । हलेसोको मासु रुखो, गर्मी गर्ने, रक्तपित्त नाशक, कफविकार नाशक, पसिना निकाल्ने, स्वर खुलाउने र थोरै वातविकार गर्ने गुणको हुन्छ ।

## मलेवाको मासु

**पाण्डुस्तु द्विविधो ज्ञेयश्चित्रपक्षः कलध्वनिः ।**
**द्वितीयो धवलः प्रोक्तः स कपोतः स्फुटध्वनिः ॥६७॥**
**चित्रपक्षः कफहरो वातघ्नो ग्रहणीप्रणुत् ।**
**धवलः पाण्डुरुद्दिष्टो रक्तपित्तहरो हिमः ॥६८॥**
**रसे पाके च मधुरः संग्राही वातशान्तिकृत् ।**

मलेवा दुई किसिमका हुन्छन् । एउटा चित्रविचित्र रङ्गको परखैंटा र मिठो स्वर हुने तथा अर्को सेतो रङको एवं परेवा जसरी स्पष्ट स्वरले कराउने खालको हुन्छ । पहिलोलाई पाण्डु र दोश्रोलाई कपोत भनिन्छ । पाण्डुको मासुले कफविकार, वातविकार र कब्जियत नाश गर्दछ । कपोतको मासुले रक्तपित्त नाश गर्नुका साथै शीतल गर्दछ । यो मासु शुरुमा र पचेपछि गुलियो हुन्छ । यसले कब्जियत गर्दछ तथा वातविकारलाई शान्त पार्दछ ।

## मयुर

**मयूरश्चन्द्रकी केकी मेघरावो भुजङ्गभुक् ॥६९॥**
**शिखी शिखावलो बर्ही शिखण्डी नीलकण्ठकः ।**
**शुक्लापाङ्गः कलापी च मेघनादानुलास्यपि ॥७०॥**
**रसे पाके च मधुरः संग्राही वातशान्तिकृत् ।**

मयूर, चन्द्रकी, केकी, मेघराव, भुजङ्गभुक्, शिखी, शिखावल, बर्ही, शिखण्डी, नीलकण्ठक, शुक्लापाङ्ग, कलापी र मेघनादानुलासी : यी मयूरका संस्कृत पर्यायवाची नामहरू हुन् । मयूरको मासु शुरुमा र पचेपछि गुलियो हुन्छ । यसले कब्जियत गर्दछ तथा वातविकारलाई शान्त पार्दछ ।

## परेवा

**पारावतः कलरवः कपोतो रक्तलोचनः ॥७१॥**
**पारावतो गुरुः स्निग्धो रक्तपित्तानिलापहः ।**
**संग्राही शीतलस्तज्ज्ञैः कथितो वीर्यवर्द्धनः ॥७२॥**

पारावत, कलरव, कपोत र रक्तलोचन : यी परेवाका संस्कृत पर्यायवाची नामहरू हुन् । परेवाको मासु पचाउन कठिन, चिल्लो, रक्तपित्त नाशक, वातविकार नाशक, कब्जियत गराउने, शीतल गर्ने र वीर्यवर्धक हुन्छ भनी त्यससम्बन्धी विशेषज्ञले बताएका छन् ।

## चराको फुल

**नातिस्निग्धानि वृष्याणि स्वादुपाकरसानि च ।**
**वातघ्नान्यतिशुक्राणि गुरूण्यण्डानि पक्षिणाम् ॥७३॥**

चराको फूल धेरै चिल्लो हुँदैन र वीर्यवर्धक हुन्छ । यो शुरुमा र पचेपछि पनि स्वादिलो वा गुलियो हुन्छ । यसले वातविकार नाश गर्दछ, अति नै शुक्र बढाउँदछ र पचाउन कठिन हुन्छ ।

## बोका आदिको मासु

**छागलो बर्करश्छागो बस्तोऽजश्छेलकः स्तुभः ।**
**अजा छागी स्तुभा चापि छेलिका च गलस्तनी ॥७४॥**

**छागमांसं लघु स्निग्धं स्वादुपाकं त्रिदोषनुत् ।**
**नातिशीतमदाहि स्यात्स्वादु पीनसनाशनम् ॥७५॥**
**परं बलकरं रुच्यं बृहणं वीर्यवर्द्धनम् ।**

छागल, बर्कर, छाग, बस्त, अज, छेलक र स्तुभ : यी बोकाका संस्कृत पर्यायवाची नामहरू हुन् । बाख्रीलाई अजा, छागी र स्तुभा भनिन्छ । जुन् बाख्रीको घाँटीमा मासुको लुर्कन हुन्छ त्यस्तो बोकालाई संस्कृतमा गलस्तनी वा छेलिका भनिन्छ । बोकाको मासु पचाउन हलुका, चिल्लो, पचेपछि गुलियो र त्रिदोषनाशक हुन्छ । यसले धेरै शीतल र डाह पनि गर्दैन । यो मासु स्वादिलो र पिनासनाशक हुन्छ । बोकाको मासु अति बलदायक, रुचिकर, पौष्टिक र वीर्यवर्धक हुन्छ ।

**अजायास्त्वप्रसूताया मांसं पीनसनाशनम् ॥७६॥**
**शुष्ककासेऽरुचौ शोषे हितमग्नेश्च दीपनम् ।**
**अजासुतस्य बालस्य मांसं लघुतरं स्मृतम् ॥७७॥**
**हृद्यं ज्वरहरं श्रेष्ठं सुखदं बलदं भृशम् ।**

नब्याएको बाख्रीको मासुले पिनास, सुक्खा खोकी र अरुचि ठिक गर्दछ । यसले सुजनमा फाइदा गर्दछ र पाचकाग्निलाई बाल्दछ । ससाना पाठाको मासु पचाउन अति सहज, मुटुका लागि लाभप्रद, जरोनाशक तथा अत्यन्त सुखदायक र बलदायक हुन्छ । यसैले यस्तो मासु श्रेष्ठ हुन्छ ।

**मासंनिष्कासिताण्डस्य छागस्य कफकृद् गुरु ॥७८॥**
**स्रोतःशुद्धिकरं बल्यं मांसदं वातपित्तनुत् ।**
**वृद्धस्य वातलं रूक्षं तथा व्याधिमृतस्य च ॥७९॥**
**ऊर्ध्वजत्रुविकारघ्नं छागमुण्डं रुचिप्रदम् ।**

खसीको मासु कफविकार गर्ने, पचाउन कठिन, स्रोतग्रन्थीलाई शुद्ध पार्ने, बलदायक, मासुवर्धक, वातविकार नाशक र पित्तविकार नाशक हुन्छ । (बूढो) छिप्पिएको बोकाको मासु वायुविकार बढाउने र रुखो हुन्छ । रोगी बोकाखसीको मासु पनि वातविकार गर्ने र रुखो हुन्छ । खसीबोकाको टाउकाको मासुले खगाल्नुमा हुने विकार वा रोग नाश गर्दछ र रुचि बढाउँदछ ।

## भेडो

**मेढ्रो मेढो हुडो मेष उरणोऽप्येडकोऽपि च ॥८०॥**
**अविर्वृष्णिस्तथोर्णायुः कथ्यन्ते तद्गुणा अथ ।**
**मेषस्य मांसं पुष्टौ स्यात्पित्तश्लेष्मकरं गुरु ॥८१॥**
**तस्यैवाण्डविहीनस्य मांसं किञ्चिल्लघु स्मृतम् ।**

मेढ्र, मेढ, हुड, मेष, उरण, एडक, अवि, वृष्णि र ऊर्णायु : यी भेडाका संस्कृत पर्यायवाची नामहरू हुन् । अब यसका गुणका बारेमा बताइन्छ । भेडाको मासु पुष्टिदायक, पित्तविकार नाशक, कफविकार नाशक र

पचाउन कठिन हुन्छ । खसी पारिएको भेडोको मासु अलि अलि पचाउन हलुका हुन्छ (अन्य गुण उस्तै हुन्छन्) ।

**एडकः पृथुशृङ्गः स्यान्मेदःपुच्छस्तु दुम्बकः ॥८२॥**
**एडकस्य पलं ज्ञेयं मेषामिषसमं गुणैः ।**
**मेदः पुच्छोद्भवं मांसं हृद्यं वृष्यं श्रमापहम् ॥८३॥**
**पित्तश्लेष्मकरं किञ्चिद्वातव्याधिविनाशनम् ।**

मोटा खालका सिङ हुने भेडोको जातलाई एडक र बोसोले भरिएको पुच्छर हुने भेडोको जातलाई दुम्बक ( दुम्बा) भनिन्छ । एडकको मासुमा सामान्य भेडाको मासुमा हुने गुणहरू नै हुन्छन् । दुम्बकको मासु मुटुका लागि लाभदायक, वीर्यवर्धक, थकाई मेट्ने, पित्तवर्धक, कफवर्धक र थोरै वातविकार नाशक हुन्छ ।

## गोरु वा बहर

**बलीवर्दस्तु वृषभः ऋषभश्च तथा वृषः ॥८४॥**
**अनड्वान्सौरभेयोऽपि गौरुक्षा भद्र इत्यपि ।**
**सुरभिः सौरभेयी च माहेयी गौरुदाहृता ॥८५॥**
**गोमांसं सुगुरु स्निग्धं पित्तश्लेष्मविवर्द्धनम् ।**
**बृंहणं वातहृत् बल्यमपथ्यं पीनसप्रणुत् ॥८६॥**

बलीवर्द, वृषभ, ऋषभ, वृष, अनड्वान्, सौरभेय, गौः, उक्षा र भद्र : यी बहर वा गोरु वा साँढेका संस्कृत पर्यायवाची नामहरू हुन् । सुरभि, सौरभेयी, माहेयी र गौः : यी गाईका संस्कृत पर्यायवाची शब्दहरू हुन् । गोमांस अति नै पचाउन कठिन, चिल्लो, पित्तवर्धक, कफवर्धक, पौष्टिक, वातविकार नाशक, बलदायक, अपथ्य र पिनास गराउने गुणको हुन्छ ।

## घोडा

**घोटकेऽप्यश्वतुरगास्तुरङ्गमाश्च तुरङ्गाः ।**
**बाजिवाहार्वगन्धर्वहयसैन्धवसप्तयः ॥८७॥**
**अश्वमांसन्तु तुवरं वह्निकृत्कफपित्तलम् ।**
**वातहृद् बृंहणं बल्यं चक्षुष्यं मधुरं लघु ॥८८॥**

घोटक, अश्व, तुरग, तुरङ्ग, तुरङ्गम, बाजि, वाह, अर्व (अर्वन्), गन्धर्व, हय, सैन्धव र सप्ति : यी घोडाका संस्कृत पर्यायवाची नामहरू हुन् । घोडाको मासु टर्रो र गुलियो मिश्रित स्वादको हुन्छ । यसले जठराग्निलाई बाल्दछ तथा कफविकार र पित्तविकार गर्दछ । यो मासुले वातविकार नाश गर्दछ । घोडाको मासु पौष्टिक, बलदायक, आँखाका लागि हितकारी र पचाउन सहज हुन्छ ।

## राँगो

**महिषो घोटकारिः स्यात्कासरश्च रजस्वलः ।**
**पीनस्कन्धः कृष्णकायो लुलायो यमवाहनः ॥८९॥**
**महिषस्यामिषं स्वादु स्निग्धोष्णं वातनाशनम् ।**
**निद्रा शुक्रप्रदं बल्यं तनुदार्ढ्यकरं गुरु ॥९०॥**
**वृष्यश्च सृष्टविण्मूत्रं वातपित्तास्रनाशनम् ।**

महिष, घोटकारि, कासर, रजस्वल, पीनस्कन्ध, कृष्णकाय, लुलाय र यमवाहन : यी राँगो (वा भैंसी) का संस्कृत पर्यायवाची नामहरू हुन् । राँगोको मासु स्वादिलो, चिल्लो, गर्मी गर्ने र वातविकार नाशक हुन्छ । यसले निद्रा लगाउँदछ, शुक्र बढाउँदछ, बल दिन्छ र शरीरलाई पुष्ट पार्दछ । यो मासु पचाउन कठिन हुन्छ । यसले वीर्य बढाउँदछ, मलमूत्रलाई निकाल्दछ तथा वातविकार, पित्तविकार र रक्तविकार नाश गर्दछ ।

## भ्यागुतो

**मण्डूकः प्लवगो भेको वर्षाभूर्दर्दुरो हरिः ॥९१॥**
**मण्डूकः श्लेष्मलो नातिपित्तलो बलकारकः ।**

मण्डूक, प्लवग, भेक, वर्षाभू, दर्दुर र हरि : यी भ्यागुतोका संस्कृत पर्यायवाची नामहरू हुन् । भ्यागुताको मासुले कफविकार गर्दछ तर धेरै पित्तविकार गर्दैन र बलदायक हुन्छ ।

## कछुवा

**कच्छपो गूढपात्कूर्मः कमठो दृढपृष्ठकः ॥९२॥**
**कच्छपो बलदो वातपित्तनुत्पुंस्त्वकारकः ।**

कच्छप, गूढपाद, कूर्म, कमठ र दृढपृष्ठक : यी कछुवाका संस्कृत पर्यायवाची नामहरू हुन् । कछुवाको मासु बलदायक, वातविकार नाशक, कफविकार नाशक र यौन क्षमता बढाउने गुणको हुन्छ ।

## मासु खाने विधि

**सद्योहतस्य मांसं स्याद्व्याधिघाति यथाऽमृतम् ॥९३॥**
**वयस्यं बृंहणं सात्म्यमन्यथा तद्विवर्जयेत् ।**

भर्खर मारिएका जीवको मासु अमृतसमान रोगनाशक हुन्छ । यसले आयुलाई स्थिर राख्दछ । यो पौष्टिक र शरीरले सहने गुणको हुन्छ । यदि यस्तो छैन वा मारिएको लामोसमय भएको छ भने त्यस्तो मासु नखानू ।

**स्वयं मृतस्य चाबल्यमतीसारकरं गुरु ॥९४॥**

आफैं मरेका जीवको मासु बलदायक हुँदैन । यसले हैजा लगाउँदछ । यस्तो मासु पचाउन कठिन हुन्छ ।

**वृद्धानां दोषलं मांसं बालानां बलदं लघु ।**

बूढा जीवको मासुले दोष (रोग) बढाउँदछ भने बच्चा जीवको मासु बलदायक र पचाउन हलुका हुन्छ ।

**सर्पदष्टस्य मांसञ्च शुष्कमांस त्रिदोषकृत् ॥९५॥**
**त्रिदोषकृद् व्यालदष्टं शुष्कं शूलकरं परम् ।**

सर्पले डसेका जीवको मासु, सुकेको मासु र हिंस्रक जीवले टोकेको मासु त्रिदोषकारक हुन्छ । सुकेको मासु अति नै शूलरोग गराउने गुणको हुन्छ ।

**विषाम्बुरुङ्मृतस्यैतन्मृत्युदोषरुजाकरम् ॥९६॥**
**क्लिन्नमुत्क्लेशजनकं कृशं वातप्रकोपणम् ।**
**तोयपूर्णं शिराराजं मृतमप्सु त्रिदोषकृत् ॥९७॥**

विषका कारण मरेका, पानीमा डुबेर मरेका र रोग लागेर मरेका जीवको मासु रोग निकाल्ने, रोग (दोष) बढाउने र मार्ने गुणको हुन्छ । सडेगलेको मासुले बान्ता (झाडाबान्ता) गराउँदछ । दुब्लो जीवको मासुले शरीरमा वातविकार बढाउँदछ । जलमा डुबेर मरेका जीवका सबै नसामा पानी पसेको हुने कारणले यस्तो मासु खानाले त्रिदोष गर्दछ ।

**विहङ्गेषु पुमाञ्छ्रेष्ठः स्त्री चतुष्पदजातिषु ।**
**परार्द्धं लघु पुंसां स्यात्स्त्रीणां पूर्वार्द्धमादिशेत् ॥९८॥**
**देहमध्यं गुरुप्रायं सर्वेषां प्राणिनां स्मृतम् ।**
**पक्षक्षेपाद्विहङ्गानां तदेव लघु कथ्यते ॥९९॥**
**गुरूण्यण्डानि सर्वेषां गुर्वी ग्रीवा च पक्षिणाम् ।**
**उरः स्कन्धोदरं कुक्षी पादौ पाणी कटी तथा ॥१००॥**
**पृष्ठत्वग्यकृदन्त्राणि गुरूणीह यथोत्तरम् ।**
**लघुवातकरं मांसं खगानां धान्यचारिणाम् ॥१०१॥**
**मत्स्याशिनां पित्तकरं वातघ्नं गुरु कीर्त्तितम् ।**
**फलाशिनां श्लेष्मकरं लघु रूक्षमुदीरितम् ॥१०२॥**
**बृंहणं गुरु वातघ्नं तेषामेव पलाशिनाम् ।**
**तुल्यजातिष्वल्पदेहा महादेहेषु पूजिताः ॥१०३॥**
**अल्पदेहेषु शस्यन्ते तथैव स्थूलदेहिनाः ।**

चराहरूमा भालेको र चौपायामा पोथीको मासु श्रेष्ठ हुन्छ । भाले जीवको शरीरको तल्लो भागको तथा पोथी जीवको शरीरको माथ्लो भागको मासु पचाउन सहज हुन्छ । सबै जीवको शरीरको बीच भागको मासु पचाउन कठिन हुन्छ तर चराहरूको भने परखैँटा चलाइरहने हुनाले पचाउन सहज हुन्छ । सबै खालका

चराको फुल र गर्दनको मासु पचाउन कठिन हुन्छ । छाती, काँध, पेट, दुबै कोखा, दुबै खुट्टा, दुबै हात ( अगाडिका खुट्टा), कम्मर, ढाड, छाला, कलेजो र आन्द्रा यी क्रमशः पचाउन कठिन हुन्छन् । अनाज खाने चराको मासु पचाउन सहज र वातविकार बढाउने गुणको हुन्छ । माछा खाने चराको मासु पित्तकारक, वातनाशक र पचाउन कठिन हुने गुणको हुन्छ । फलफूल खाने चराको मासु कफविकार बढाउने, पचाउन सहज र रुखो गुणको हुन्छ । मासु खाने चराको मासु पौष्टिक, पचाउन कठिन र वातविकार नाश गर्ने गुणको हुन्छ । समान जातका ठूलो शरीर हुने जीवमा शरीर सानो हुने जीवको तथा समान जातका सानो शरीर हुने जीवमा ठूलो शरीर हुने जीवको मासु श्रेष्ठ हुन्छ ।

## माछा वर्ग
## रोहित (रोहु)

**रक्तोदरो रक्तमुखो रक्ताक्षो रक्तपक्षतिः ॥१०४॥**
**कृष्णपुच्छो झषः श्रेष्ठो रोहितः कथितो बुधैः ।**
**रोहितः सर्वमत्स्यानां वरो वृष्योऽदितार्त्तिजित् ॥१०५॥**
**कषायानुरसः स्वादुर्वातघ्नो नातिपित्तकृत् ।**
**ऊर्ध्वजत्रुगतान् रोगान् हन्याद्रोहितमुण्डकम् ॥१०६॥**

पेट, मुख, आँखा र दायाँबायाँका ससाना पखेँटा रातो र पुच्छर कालो हुने उत्तम जातको माछालाई विद्वानहरूले रोहित (रहू) माछा भनेका छन् । सबै खालका माछामा रहू माछा उत्तम हुन्छ । यसको मासु वीर्यवर्धक, अनुहारको स्तब्धता (फेसियल प्यारालाइसिस) नाशक, शुरुमा थोरै टर्रो र स्वादिलो, वातविकार नाशक र धेरै पित्तविकार पनि नगर्ने गुणको हुन्छ । यसको टाउकाको मासुले मानिसको शरीरमा काँधको जोर्नीभन्दा माथिका रोगहरू ठिक गर्दछ ।

## शिलीन्ध्र माछा

**शिलीन्ध्रः श्लेष्मलो बल्यो विपाके मधुरो गुरुः ।**
**वातपित्तहरो हृद्यः आमवातकरश्च सः ॥१०७॥**

शिलीन्ध्र नामक माछाको मासु कफकारक, बलदायक, पछेपछि गुलियो, पचाउन कठिन, वातविकार नाशक, पित्तविकार नाशक, मुटुका लागि लाभदायक र आमजन्य वातविकार गराउने गुणको हुन्छ ।

## भाकुट माछा

**भाकुरो मधुरः शीतो वृष्यः श्लेष्मकरो गुरुः ।**
**विष्टम्भजनकश्चापि रक्तपित्तहरः स्मृतः ॥१०८॥**

भाकुर (ट) नामक माछाको मासु गुलियो, शीतल गर्ने, वीर्यवर्धक, कफविकार बढाउने, पचाउन कठिन, कब्जियत गराउने र रक्तपित्त नाशक हुन्छ ।

## मोचिका माछा

**मोचिका वातहृद् बल्या बृंहणी मधुरा गुरुः ।**
**पित्तहृत्कफकृद्रुच्या वृष्या दीप्ताग्नये हिता ॥१०९॥**

मोचिका नामक माछाको मासु वातविकार नाशक, बलदायक, पौष्टिक, गुलियो, पचाउन कठिन, पित्तविकार नाशक, कफविकार बढाउने, रुचि जगाउने, वीर्य वर्धक र जठराग्नि बलियो हुने मानिसका लागि हितकारी हुन्छ ।

## पाठीन माछा

**पाठीनः श्लेष्मलो बल्यो निद्रालुः पिशिताशनः ।**
**दूषयेद्रुधिरं पित्तं कुष्ठरोगं करोति च ॥११०॥**

पाठीन नामक माछाको मासु कफविकार गर्ने, बलदायक र निद्रा लगाउने गुणको हुन्छ । यो माछो मांसाहारी भएको हुनाले यसको मासुले रगतलाई र पित्तलाई दूषित बनाउँदछ तथा कुष्ठरोग पनि गराउँदछ ।

## शृङ्गी माछा

**शृङ्गी तु वातशमनी स्निग्धा श्लेष्मप्रकोपणी ।**
**रसे तिक्ता कषाया च लघ्वी रुच्या स्मृताबुधैः ॥१११॥**

श्रृङ्गी नामक माछाको मासु वातविकार नाशक, चिल्लो, कफविकार गर्ने, तीतो र टर्रो स्वादको, पचाउन हलुका र रुचिकर हुन्छ भनी विद्वानहरूले बताएका छन् ।

## इलिश माछा

**इल्लीसो मधुरः स्निग्धो रोचनो वह्निवर्द्धनः ।**
**पित्तहृत्कफकृत्किञ्चिल्लघुर्वृष्योऽनिलापहः ॥११२॥**

इल्लीस नामक माछाको मासु  गुलियो, चिल्लो, रुचिकर, जठराग्नि वर्धक, पित्तविकार नाशक, कफविकार गर्ने, थोरै पचाउन सहज, वीर्यवर्धक र वातविकार नाशक हुन्छ ।

## शष्कुली माछा

**शष्कुली ग्राहिणी हृद्या मधुरा तुवरा स्मृता ।**

शष्कुली नामक माछाको मासु कब्जियत गर्ने, मुटुका लागि लाभकारी तथा गुलियो र टर्रो स्वादको हुन्छ ।

### गर्गर माछा

**गर्गरः पित्तलः किञ्चिद्वातजित्कफकोपनः ॥११३॥**

गर्गर नामक माछाको मासु पित्तविकार बढाउने, थोरै वातविकार नाशक र कफविकार बढाउने गुणको हुन्छ ।

### कविका माछा

**कविका मधुरा स्निग्धा कफघ्नी रुचिकारिणी ।**
**किञ्चित्पित्तकरी वातनाशिनी वह्निवर्द्धिनी ॥११४॥**

कविका नामक माछाको मासु गुलियो, चिल्लो, कफविकार नाशक, रुचिकर, थोरै पित्तविकार गर्ने, वातविकार नाशक र पाचकाग्नि वर्धक हुन्छ ।

### वर्मि माछा

**वर्मिमत्स्यो हरेद्वातं पित्तं रुचिकरो लघुः ।**

वर्मी नामक माछाको मासु वातविकार नाशक, पित्तविकार नाशक, रुचिकर र पचाउन हलुका हुन्छ ।

### दण्ड माछा

**दण्डमत्स्यो रसे तिक्तः पित्तरक्तं कफं हरेत् ॥११५॥**
**वातसाधारणः प्रोक्तः शुक्रलो बलवर्द्धनः ।**

दण्ड नामक माछाको मासु तीतो स्वादको, रक्तपित्त नाशक, कफनाशक, वातविकारका लागि ठिकै, शुक्र वर्धक र बल वर्धक हुन्छ ।

### एरङ्ग माछा

**एरङ्गो मधुरः स्निग्धो विष्टम्भी शीतलो लघुः ॥११६॥**

एरङ्ग नामक माछाको मासु गुलियो, चिल्लो, कब्जियत गराउने, शीतल गर्ने र पचाउन सहज हुने गुणको हुन्छ ।

## महाशफर माछा

**महाशफरसंज्ञस्तु तिक्तः पित्तकफापहः ।**
**शिशिरो मधुरो रुच्यो वातसाधारणः स्मृतः ॥११७॥**

महाशफर नामक माछाको मासु तीतो, पित्तविकार नाशक, कफविकार नाशक, शीतल गर्ने, गुलियो, रुचिकर, र वातविकारका लागि ठिकै हुने गुणको हुन्छ ।

## गरघ्नी माछा

**गरघ्नी मधुरा तिक्ता तुवरा वातपित्तहृत् ।**
**कफघ्नी रुचिकृल्लघ्वी दीपनी बलवीर्यकृत् ॥११८॥**

गरघ्नीको मासु गुलियो-तीतो र टर्रो, वातविकार र पित्तविकार नाशक, कफनाशक, रुचिकर, पचाउन सहज, जठराग्नि वर्धक, बलवर्धक र वीर्यवर्धक हुन्छ ।

## मद्गुर माछा

**मद्गुरो वातहृद् बल्यो वृष्यः कफकरो लघुः ।**

मद्गुर नामक माछाको मासु वातनाशक, बलवर्धक, वीर्यवर्धक, कफकारक र पचाउन हलुका हुन्छ ।

## सपाद माछा

**सपादमत्स्यो मेधाकृन्मेदः क्षयकरश्च सः ॥११९॥**
**वातपित्तकरश्चापि रुचिकृत्परमो मतः ।**

सपादमाछाको मासु दिमागको ग्रहण क्षमता बढाउने, बोसो घटाउने, वातविकार गर्ने, पित्तविकार गर्ने र अति नै रुचिकारक हुन्छ ।

## प्रोष्ठी माछा

**प्रोष्ठी तिक्ता कटुः स्वादुः शुक्रदा कफवातजित् ॥१२०॥**
**स्निग्धाऽस्यकण्ठरोगघ्नी रोचनी च लघुः स्मृता ।**

प्रोष्ठी माछाको मासु तीतो, पिरो र स्वादिलो हुन्छ । यसले शुक्रवृद्धि गर्दछ तथा कफविकार र पित्तविकार ठिक गर्दछ । यो चिल्लो, मुख र घाँटीका रोग नाशक, रुचिकर र पचाउन हलुका हुन्छ ।

## साना माछा

**क्षुद्रमत्स्याः स्वादुरसा दोषत्रयविनाशनाः ॥१२१॥**
**लघुपाका रुचिकरा बलदास्ते हिता मताः ।**

साना माछाको मासु स्वादिलो, त्रिदोष नाशक, पचेपछिको रस पचाउन सहज, रुचिकारक, बलदायक र फाइदाजनक हुन्छ ।

## अति साना माछा

**अतिसूक्ष्माः पुंस्त्वहरा रुच्याः कासानिलापहाः ॥१२२॥**

धेरै साना माछाको मासुले यौन क्षमता घटाउँदछ, रुची जगाउँदछ तथा खोकी र वायुविकारलाई नाश गर्दछ ।

## माछाको फुल

**मत्स्यगर्भो भृशं वृष्यः स्निग्धः पुष्टिकरो लघुः ।**
**कफमेदःप्रदो बल्यो ग्लानिकृन्मेहनाशनः ॥१२३॥**

माछाको फुल अति नै वीर्यवर्धक, चिल्लो, पुष्टिदायक, पचाउन सहज, कफ बढाउने, बोसो बढाउने, बलदायक, ग्लानिकारक र प्रमेह नाशक हुन्छ ।

## माछाको सिद्रा

**शुष्कमत्स्या नवा बल्या दुर्जरा विड्विबन्धिनः ।**

ताजा माछाका सिद्रा बलदायक, ढिलो पच्ने र दिसा कस्ने गुणको हुन्छ ।

## पोलिएको माछा

**दग्धमत्स्यो गुणैः श्रेष्ठः पुष्टिकृद् बलवर्द्धनः ॥१२४॥**

पोलिएको माछाको मासु गुणमा श्रेष्ठ हुन्छ । यसले पुष्टि गर्दछ र बल बढाउँदछ ।

## स्थान अनुसार माछाको मासुका गुण

**कौपमत्स्याः शुक्रमूत्रकुष्ठश्लेष्मविवर्द्धनाः ।**
**सरोजा मधुराः स्निग्धा बल्या वातविनाशनाः ॥१२५॥**
**नादेया बृंहणा मत्स्या गुरवोऽनिलनाशनाः ।**
**रक्तपित्तकरा वृष्याः स्निग्धोष्णाः स्वल्पवर्चसः ॥१२६॥**
**चौञ्ज्याः पित्तकराः स्निग्धा मधुरा लघवो हिमाः ।**
**तडागा गुरवो वृष्याः शीतला मलमूत्रदाः ॥१२७॥**
**ताडागवन्निर्झरजा बलायुर्मतिदृक्कराः ।**

कुवामा हुने माछाको मासुले शुक्र, पिसाब, कुष्ठ र कफ बढाउँदछ । पोखरीमा हुने माछाको मासु चिल्लो, बलदायक र वातविकार नाशक हुन्छ । नदीमा हुने माछाको मासु पौष्टिक, पचाउन कठिन र वातविकार नाशक हुन्छ । यो मासु रक्तपित्त गराउने, वीर्यवर्धक, चिल्लो, गर्मीगर्ने र हल्का दिसा लगाउने गुणको हुन्छ । चौञ्ज्यमा हुने माछाको मासु पितविकार गर्ने, चिल्लो, मिठो, पचाउन सहज र शीतल गर्ने गुणको हुन्छ । (लहरा आदिले ढाकेको ठाउँमा आफैं मूल पलाएको, जीर्ण (छरिएका वा टुक्रिएका) पत्थरले युक्त तथा कालो बादल वा नीलकमलको जस्तो कान्ति भएको पानीलाई "चौण्ड्य (चौदेय वा चौञ्ज्य)" भनिन्छ ।) । तलाउमा हुने माछाको मासु पचाउन कठिन, वीर्यवर्धक, शीतल गर्ने र दिसापिसाब बढी लगाउने गुणको हुन्छ । झरनाको पानीमा हुने माछाको मासुमा तलाउमा हुने माछाको मासुमा हुने गुण नै हुन्छ । यो विशेषतः बल, आयु, बुद्धि र दृष्टिशक्ति वर्धक हुन्छ ।

### ॠतु अनुसार खानुपर्ने माछा

**हेमन्ते कूपजा मत्स्याः शिशिरे सारसा हिताः ॥१२८॥**
**वसन्ते ते तु नादेया ग्रीष्मे चौञ्ज्यसमुद्भवाः ।**
**तडागजाता वर्षासु तास्वपथ्या नदीभवाः ॥**
**नैर्झरा शरदि श्रेष्ठा विशेषोऽयमुदाहृतः ॥१२९॥**

हेमन्त ॠतुमा कुवाको, शिशिर ॠतुमा पोखरीको, वसन्त ॠतुमा नदीको र ग्रीष्म ॠतुमा चौञ्ज्यको माछा हितकर हुन्छ । वर्षा ॠतुमा तलाउको माछा हितकर र नदीको माछा अहितकर हुन्छ । झरनाको माछा शरद ॠतुमा खानु हितकारी हुन्छ । यसरी माछाका मासुका विशेषताका बारेमा बताइयो ।

**॥ इति श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे मांसवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको मासु वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ कृतान्नवर्गः ॥
## (परिकार वर्ग)

### परिकारमा हुने गुण

**समवायिनि हेतौ ये मुनिभिर्गणिता गुणाः ।**
**कार्येऽपि तेऽखिलाज्ञेयाः परिभाषेति भाषिताः ॥१॥**
**क्वचित्संस्कारभेदेन गुणभेदो भवेद्यतः ।**
**भक्तं लघु पुराणस्यशालेस्तच्चिपिटो गुरुः ॥२॥**
**क्वचिद्योगप्रभावेण गुणान्तरमपेक्षते ।**
**कदन्नं गुरु सर्पिश्च तद्युक्तं सुपचं भवेत् ॥३॥**

मुनिजनले अनाजमा जेजस्ता प्राकृतिक गुण हुन्छन् भनी बताएका छन् सामान्यतः ती सबै गुण त्यो अनाजबाट बनाइने परिकारमा पनि हुन्छ । तर कहिलेकाहीँ बनाइने परिकार अनुसार पनि गुणमा भिन्नता हुने गर्दछ । जस्तै : पुरानो मार्सी चामलको भात पचाउन हलुका हुन्छ तर त्यही धानको चिउरा पचाउन कठिन हुन्छ । कहिलेकाहीँ संयोग गरिने पदार्थ अनुसार पनि गुणमा विभिन्नता हुने गर्दछ । जस्तै : बेग्लाबेग्लै हुँदा कोदो र घिउ दुबै पचाउन कठिन हुन्छन् । तर यी दुई मिसाउँदा भने यी दुबै पचाउन सहज हुने बन्दछन् ।

## भात

**भक्तमन्नं तथाऽन्धश्च क्वचित्कूरं च कीर्त्तितम् ।**
**ओदनोऽस्त्री स्त्रियां भिस्सा दीदिविः पुंसि भाषितः ॥४॥**
**सुधौतांस्तण्डुलान् स्फीतांस्तोये पञ्चगुणे पचेत् ।**
**तदुक्तं प्रस्तुतं चोष्णं विशदं गुणवन्मतम् ॥५॥**
**भक्तं वह्निकरं पथ्यं तर्पणं रोचनं लघु ।**
**अधौतमस्रुतं शीतं गुर्वरुच्यं कफप्रदम् ॥६॥**

भक्त, अन्न, अन्ध (अन्धस्), क्रूर (कतै कतै यसलाई भातको नाम बताइएको छ), ओदन (स्त्रीलिङ्ग बाहेकका लिङ्गमा प्रयोग हुने), भिस्सा (स्त्रीलिङ्गमा मात्र प्रयोग हुने) र दीदिवि (पुंलिङ्गमा मात्र प्रयोग हुने) : यी भातका संस्कृत पर्यायवाची नामहरू हुन् । राम्ररी पखालिएको र केहीबेर ढड्याइएको चामललाई चामलको पाँचगुना पानी हालेर पकाउनू । पाकेपछि झिक्नू र माड निकाल्नू । यस्तो तातातातो भात अत्यन्त गुणकारी हुन्छ । भातले पाचकाग्निलाई बाल्दछ । यो पथ्य, तृप्तिदायक, रुचिकारक र पचाउन सहज हुन्छ । राम्ररी नपखालिएको चामलको, माड नझिकिएको र सेलाएको भात पचाउन कठिन, अमन गराउने र कफ बढाउने गुणको हुन्छ ।

## दाल

**दलितन्तु शमीधान्यं दालिर्दाली स्त्रियामुभे ।**
**दाली तु सलिले सिद्धा लवणार्द्रकहिङ्गुभिः ॥७॥**
**संयुक्ता सूपनाम्नी स्यात्कथ्यन्ते तद्गुणा अथ ।**
**सूपो विष्टम्भको रूक्षः शीतस्तु स विशेषतः ॥८॥**

**निस्तुषो भृष्टसंसिद्धो लाघवं सुतरां व्रजेत् ।**

दलहनलाई दलेपछि त्यो दाल बन्दछ । दालि र दाली : यी दालका संस्कृत पर्यायवाची नामहरू हुन् । यी दुबै शब्द स्त्रीलिङ्गी शब्द हुन् । दाललाई नुन, अदुवा र हिङ हाली पकाएर तयार हुने रसलाई सूप भनिन्छ । अब यसको गुणका बारेमा बताइन्छ । दाल वा सूपले कब्जियत गर्दछ । यो रुखो हुन्छ तर शीतल गर्दछ । दलहनलाई पहिले भुटी बोक्रा निकालेर त्यसपछि पकाइएको दाल भने अति नै पचाउन सहज हुन्छ ।

## खिचडी

**तण्डुला दालिसंमिश्रा लवणार्द्रकहिङ्गुभिः ॥९॥**
**संयुक्ताः सलिले सिद्धाः कृशरा कथिता बुधैः ।**
**कृशरा शुक्रला बल्या गुरुः पित्तकफप्रदा ॥१०॥**
**दुर्जरा बुद्धिविष्टम्भमलमूत्रकरी स्मृता ।**

चामलमा त्यही बराबर दाल मिसाएर आवश्यकता अनुसार नुन, अदुवा, हिङ हाली पानीमा पकाइएको खाने कुरालाई खिचडी भनिन्छ । खिचडी शुक्रजनक, बलदायक, पचाउन कठिन, पित्तविकार गर्ने, कफविकार गर्ने, ढिलो पच्ने, बुद्धिवर्धक, कब्जियत गर्ने र दिसापिसाब लगाउने गुणको हुन्छ ।

## तापहरी

**घृते हरिद्रा संयुक्ते माषजा भर्जयेद्वटीम् ॥११॥**
**तण्डुलांश्चापि निर्धौतान्सहैव परिभर्जयेत् ।**
**सिद्धयोग्यं जलं तत्र प्रक्षिप्य कुशलः पचेत् ॥१२॥**
**लवणार्द्रकहिङ्गूनि मात्रया तत्र निक्षिपेत् ।**
**एषा सिद्धि समायाता प्रोक्ता तापहरी बुधैः ॥१३॥**
**भवेत्तापहरी बल्या वृष्या श्लेष्माणमाचरेत् ।**
**बृंहणी तर्पणी रुच्या गुर्वी पित्तहरी स्मृता ॥१४॥**

माषलाई पिँधेर यसकाससाना गोली बनाउनू । अनि घिउ तताएर बेसार फुराउनू र यी गोली त्यसमा हालेर मज्जाले भुट्नू । यसैमा पखालिएको चामल पनि हालेर भुट्नू । अनि पाक्ने जति पानी हालेर यसलाई राम्ररी पकाउनू । आवश्यकता अनुसार नुन, अदुवा र हिङ हाल्नू । जब पाक्दछ तब यसलाई विद्वानहरू तापहरी भन्दछन् । तापहरी बलदायक, वीर्यवर्धक, कफकारक, पौष्टिक, तृप्तिदायक, रुचिकर, पचाउन कठिन र पित्तविकार नाशक हुन्छ ।

## खीर

**पायसं परमान्नं स्यात्क्षीरिकाऽपि तदुच्यते ।**
**शुद्धेऽर्द्धपक्वे दुग्धे तु घृताक्तांस्तण्डुलान् पचेत् ॥१५॥**

**ते सिद्धाः क्षीरिका ख्याताः ससिताऽऽज्ययुतोत्तमा ।**
**क्षीरिका दुर्जरा प्रोक्ता बृंहणी बलवर्द्धिनी ॥१६॥**
**विष्टम्भिनी हरेत् पित्तं रक्तपित्ताग्निमारुतान् ।**

पायस, परमान्न र क्षीरिका : यी खीरका संस्कृत पर्यायवाची नामहरू हुन् । आधा पाकेको शुद्ध दूधमा घिउमा भुटेको चामल हाल्नू र पुनः (वा राम्ररी) पकाउनू । पाक्न आँटेपछि त्यसमा मिस्रीको धुलो र घिउ हाल्नू । पूरा पाकेपछि यसलाई खीर भनिन्छ । खीर ढिलो पच्दछ, पौष्टिक र बलवर्धक हुन्छ । यसले कब्जियत गर्दछ तथा पित्तविकार, रक्तपित्त, पाचनशक्ति र वातविकार नाश गर्दछ ।

## नरिवलको खिर

**नारिकेरं तनूकृत्य छिन्नं पयसि गोः क्षिपेत् ॥१७॥**
**सितागव्याज्यसंयुक्ते तत्पचेन्मृदुनाऽग्निना ।**
**नारिकेरोद्भवा क्षीरी स्निग्धा शीताऽतिपुष्टिदा ॥१८॥**
**गुर्वी सुमधुरावृष्या रक्तपित्तानिलापहा ।**

नरिवललाई गुदीलाई मसिना टुक्रा पारेर (वा कोरेसोमा कोरेर) चिनी मिस्री तथा गाईको घिउ हाली दूधमा मन्द आँचमा पकाउनू । पाकेपछि झिक्नू । यसैलाई नरिवलको खिर भनिन्छ । यो खिर चिल्लो, शीतल गर्ने, अति पौष्टिक, पचाउन कठिन, मिठो, वीर्यवर्धक तथा रक्तपित्त र वातविकार नाशक हुन्छ ।

## सेवई

**समितावर्त्तिकाः कृत्वा सुसूक्ष्मा यवसन्निभा ॥१९॥**
**शुष्काः क्षीरेणसंसाध्या भोज्यावृत्तसिताऽन्विताः ।**
**सेविका तर्पणी बल्या गुर्वी पित्तानिलापहा ॥२०॥**
**ग्राहिणी सन्धिकृद्रुच्या तां खादेन्नातिमात्रया ।**

मैदा मुछेर जौ आकारका लामा बत्ती जस्ता अती मसिना (चाउचाउ जस्ता) त्यान्द्रा बनाएर घाममा सुकाउनू । सुकेपछि दूधमा पकाउनू र घिउ र चिनी मिसाएर खानू । सेवई तृप्तिदायक, बलदायक, पचाउन कठिन, पित्तविकार नाशक र वातविकार नाशक हुन्छ । यसले कब्जियत गर्दछ । सेवईले भाँच्चिएका हाड र छुट्टिएका जोर्नीलाई जोड्न वा यथास्थानमा स्थिर बनाएर राख्न मद्दत गर्दछ । यसले रुचि पनि बढाउँदछ । तर यो धेरै खान हुँदैन ।

## मैदा (समिता)

**गोधूमा धवला धौताः कुट्टिताः शोषितास्ततः ॥२१॥**
**प्रोक्षितायन्त्रनिष्पष्टाश्चालिताः समिताः स्मृताः ।**

सेतो गहुँलाई राम्ररी पखालेर ओखलमा कुट्नू र सुकाउनू । त्यसपछि निखनेर जाँतोमा मसिनु हुनेगरी पिँध्नू । अनि चाल्नु वा कपडामा हालेर छान्नू । यसरी तयार पारिएको मसिनो पिठोलाई 'मैदा' (समिता) भनिन्छ ।

## मण्डक

**वारिणा कोमलां कृत्वा समितां साधु मर्दयेत् ॥२२॥**
**हस्तचालनया तस्या लोप्त्रीं सम्यक्प्रसारयेत् ।**
**अधोमुखघटस्यैतद्विस्तृतं प्रक्षिपेद् बहिः ॥२३॥**
**मृदुना वह्निना साध्या सिद्धो मण्डक उच्यते ।**

मैदामा पानी हालेर नरम नहुँदासम्म माड्नू । अनि हातले रोटी बनाउन बनाइने जस्ता थेप्चा गोला बनाउनू । अनि हातैले यसलाई बढाएर रोटीजस्तो पार्नू । यसपछि घोप्टो मुख पारिएका माटाका भाँडाको पिँधमा राखेर मन्द आँचमा पकाउनू । पाकेपछि झिक्नू । यसलाई 'मण्डक' भनिन्छ ।

**दुग्धेन साज्यखण्डेन मण्डकं भक्षयेन्नरः ॥२४॥**
**अथवा सिद्धमांसेन सतक्रवटकेन वा ।**
**मण्डको बृंहणो वृष्यो बल्यो रुचिकरो भृशम् ॥२५॥**
**पाकेऽपि मधुरो ग्राही लघुर्दोषत्रयापहः ।**

मानिसले मण्डकलाई घिउ र सखर मिसाइएको दुधसँग, पकाइएको मासुसँग वा दहीबारासँग खानू । मण्डक पौष्टिक, वीर्यवर्धक, बलदायक र अति नै रुचिकर हुन्छ । यो पचेपछि गुलियो, कब्जियत गराउने, पचाउन सहज र त्रिदोष नाशक हुन्छ ।

## मैदाको रोटी (पोलिका)

**कुर्यात्समितयाऽतीव तन्वी पर्पटिका ततः ॥२६॥**
**स्वेदयेत्तप्तके तां तु पोलिकां जगदुर्बुधाः ।**
**तां खादेल्लप्सिकायुक्तां तस्या मण्डकवद् गुणाः ॥२७॥**

मैदा मुछेर बेली पापड जस्ता पातला रोटी बनाउनू । यो रोटीलाई ताईमा पकाउनू । पाकेपछिको यस्तो रोटीलाई विद्वानहरू पोलिका भन्ने गर्दछन् । पोलिका लप्सीसँग खानू । यसको गुण मण्डकको गुण समान हुन्छ ।

## लप्सिका

**समितां सर्पिषा भृष्टां शर्करां पयसि क्षिपेत् ।**
**तस्मिन्घनीकृते न्यस्येल्लवङ्गं मरिचादिकम् ॥२८॥**

**सिद्धषा लप्सिका ख्याता गुणानस्या वदाम्यहम् ।**
**लप्सिका बृंहणी वृष्या बल्या पित्तानिलापहा ॥२९॥**
**स्निग्धा श्लेष्मकरी गुर्वी रोचनी तर्पणी परम् ।**

मैदालाई पहिला घिउमा भुट्नू अनि आवश्यकता अनुसार सक्खर हाली पानीमा पकाउनू । लदरो हुन थालेपछि ल्वाङ, मरिच आदि हाल्नू र झिक्नू । यसलाई लप्सिका भनिन्छ । अब यसका गुणका बारेमा बताइन्छ । लप्सिका पौष्टिक, वीर्यवर्धक, बलदायक, पित्तविकार नाशक र वातविकार नाशक हुन्छ । यो चिल्लो, कफविकार गर्ने, पचाउन कठिन, रुचिकर र अत्यन्त तृप्तिदायक हुन्छ ।

## रोटी (रोटिका)

**शुष्कगोधूमचूर्णेन किञ्चित्पुष्टाञ्च पोलिकाम् ॥३०॥**
**तप्तके स्वेदयेत्कृत्वा भूर्यङ्गारेऽपि तां पचेत् ।**
**सिद्धैषारोटिका प्रोक्ता गुणानस्याः प्रचक्ष्महे ॥३१॥**
**रोटिका बलकृद्रुच्या बृंहणी धातुवर्द्धनी ।**
**वातघ्नी कफकृद् गुर्वी दीप्ताग्नीनां प्रपूजिता ॥३२॥**

सुकेको (सुक्खा) गहुँको पिठोलाई पानी हालेर राम्ररी मुछी पिठो दल्दै मैदाको रोटीभन्दा केही बाक्ला रोटी बनाएर बेल्नू । अनि ताईमा हालेर सामान्य किसिमले केहीबेर पकाउनू । त्यसपछि आगाको भुङ्ग्रोमा सेक्नू वा पकाउनू । पाकेपछि यसलाई रोटी भनिन्छ । रोटी बलदायक, रुचिकर, पौष्टिक, धातुवर्धक, वातविकार नाशक, कफविकार गर्ने र पचाउन कठिन हुन्छ । रोटी पाचनशक्ति बलियो हुनेहरूका लागि खान उत्तम हुन्छ ।

## अङ्गारकर्कटी

**शुष्कगोधूमचूर्णन्तु साम्बु गाढं विमर्दयेत् ।**
**विधाय वटकाकारं निर्धूमेऽग्नौ शनैः पचेत् ॥३३॥**
**अङ्गारकर्कटी ह्येषा बृंहणी शुक्रला लघुः ।**
**दीपनी कफकृद्बल्या पीनसश्वासकासजित् ॥३४॥**

सुक्खा गहुँको पिठोमा पानी हालेर राम्ररी मुछ्नू । अनि बारा जस्ता गोला चक्की बनाएर धुवाँ नआउने आगाको भुङ्ग्रोमा बिस्तार बिस्तार सेक्नू । जब पाक्दछ तब यसलाई अङ्गारकर्कटी भनिन्छ । यो पौष्टिक, शुक्रवर्धक, पचाउन हलुका, पाचकाग्नि वर्धक, कफविकार गर्ने, बलदायक तथा पिनास, दम र खोकी नाशक हुन्छ ।

## जौको रोटी

**यवजा रोटिका रुच्या मधुरा विशदा लघुः ।**

**मलशुक्रानिलकरी बल्या हन्ति कफामयान्॥३५॥**

जोको रोटी रुचिकर, मिठो, रहर लाग्दो, पचाउन सहज, दिसा बढाउने, शुक्र बढाउने, वातविकार गर्ने, बलदायक र कफजन्य विकार नाशक हुन्छ ।

## माषको रोटी

**चूर्णयच्छुष्कमाषाणां चमसी साऽभिधीयते ।**
**चमसीरचिता रोटी कथ्यते बलभद्रिका॥३६॥**
**रूक्षोष्णा वातला बल्या दीप्ताग्नीनां सुपूजिता ।**

सुकेको माषलाई पिँधेर बनाइएएको धुलोलाई 'चमसी' भनिन्छ । यसको रोटीलाई 'बलभद्रिका' भनिन्छ । यो रोटी रुखो, गर्मी गर्ने, वातविकार गर्ने र बलदायक हुन्छ । यो रोटी पाचन्शक्ति बलियो हुनेका लागि अति उत्तम हुन्छ ।

## धूमसीको परिकार

**माषाणां दालयस्तोये स्यापितास्त्यक्तकञ्चुकाः॥३७॥**
**आतपे शोषिता यन्त्रे पिष्टास्ता धूमसी स्मृता ।**

माषलाई पानीमा हालेर ढड्याउनू । त्यसपछि बोक्रा निकालेर घाममा सुकाउनू । सुकेपछि पिँध्नू । यो पिठोलाई धूमसी भनिन्छ ।

**धूमसीरचिता चैव प्रोक्ता झर्झरिका बुधैः॥३८॥**
**झर्झरी कफपित्तघ्नी किञ्चिद्वातकरी स्मृता ।**

विज्ञहरूले धूमसीको रोटीलाई 'झर्झरिका' भनेका छन् । यो रोटी कफविकार र पित्तविकार नाशक र थोरै वातविकार गर्ने गुणको हुन्छ ।

## चनाको रोटी

**चणक्या रोटिका रूक्षा श्लेष्मपित्तास्रनुद्गुरुः॥३९॥**
**विष्टम्भिनी न चक्षुष्या तद्गुणा चापि शष्कुली ।**

चनाको रोटी रुखो तथा कफविकार, पित्तविकार र रक्तविकार नाशक हुन्छ । यो पचाउन कठिन, कब्जियत गर्ने, आँखाका लागि फाइदा नगर्ने गुणको हुन्छ । चनाको पुरीमा पनि यिनै गुण हुन्छन् ।

## पिष्टिका

**दालि संस्थापिता तोये ततोऽपहृतकञ्चुका ॥४०॥**
**शिलायां साधु सम्पिष्टा पिष्टिका कथिता बुधैः ।**

कुनै पनि दाललाई भिजाएर बोक्रा निकाली सिलौटामा राम्ररी पिसेपछि त्यसलाई 'पिष्टिका' भनिन्छ भनेर विज्ञहरूले बताएका छन् । (मासको भए त्यसलाई मस्यौटो भनिन्छ) ।

## बेढमिका

**माषपिष्टिकया पूर्णगर्भा गोधूमचूर्णतः ॥४१॥**
**रचिता रोटिका सैव प्रोक्ता बेढमिका बुधैः ।**
**भवेद् बेढमिका बल्या वृष्या रुच्याऽनिलापहा ॥४२॥**
**उष्णा सन्तर्पणी गुर्वी बृंहणी शुक्रला परम् ।**
**भिन्नमूत्रमला स्तन्यमेदःपित्तकफप्रदा ॥४३॥**
**गुदकीलार्दितश्वासपक्तिशूलानि नाशयेत् ।**

गहुँको पीठो मुछेर बेली त्यसभित्र माषको पीठो हालेर बनाइने रोटीलाई विज्ञहरूले 'बेढमिका' नाम दिएका छन् । यो बलदायक, वीर्यवर्धक, रुचिकर, वातविकार नाशक, गर्मी गर्ने, तृप्तिदायक, पचाउन कठिन, पौष्टिक र अति नै शुक्रवर्धक हुन्छ । यसले मलमूत्रलाई खुकुलो बनाउँदछ तथा दूध, बोसो, पित्त र कफ बढाउँदछ । यसले गुदकील (अल्काई रोग हुँदा मलद्वारमा पलाउने मासुका डल्ला), अर्दित (मुखको कुनै भाग वातदोषले गर्दा नचल्ने हुने एक रोग विशेष (फेसियल प्यारालाइसिस) ।), दम र पक्तिशूल (खाना पच्ने बेलामा पेटमा हुने शूल वा दुखाइ) नाश गर्दछ ।

## पापड

**धूमसीरचिता हिङ्गुहरिद्रा लवणैर्युताः ॥४४॥**
**जीरकस्वर्जिकाभ्याञ्च तनूकृत्य च वेल्लिताः ।**
**पर्पटास्तु सदाऽङ्गारभृष्टाः परमरोचकाः ॥४५॥**
**दीपनाः पाचनाः रूक्षा गुरवः किञ्चिदीरिताः ।**

धूमसीलाई पानीमा राम्ररी मुछेर त्यसमा आवश्यकता अनुसार हिङ, बेसार, सिधे नुन, जीराको धुलो र सज्जिखार हाली पातला रोटी बेलेर हुने खाद्यलाई पापड भनिन्छ । पापडलाई सधैं आगोमा सेकेर खानाले अति नै रुचिकर हुन्छ । यसले पाचनशक्तिलाई बढाउँदछ र खाएको कुरा पचाउँदछ । यो रुखो हुन्छ र पचाउन केही कठिन हुन्छ

## विभिन्न पापडका गुण

**मौद्गाश्च तद्गुणाः प्रोक्ता विशेषाल्लघवो हिताः ॥४६॥**

**चणकस्य गुणैर्युक्ताः पर्पटाश्चणकोद्भवाः ।**
**स्नेहभृष्टास्तु ते सर्वे भवेयुर्मध्यमा गुणैः ॥४७॥**

मुगीको पापडमा माषकै पापडका गुण भएपनि विशेषतः यो पचाउन हलुका र लाभकारी हुन्छ । चनाको पापडमा चनाकै गुण हुन्छ । तेल आदि चिल्लोमा तारिएका पापडमा पापड जेको त्यसैको गुण भएपनि यसमा गुण कम (मध्यम) हुन्छ ।

## कचौडी (पूरिका)

**माषाणां पिष्टिकां पूर्याल्लवणार्द्रकहिङ्गुभिः ।**
**तया पिष्टिकया पूर्णा समिता कृतपोलिका ॥४८॥**
**ततस्तैलेन पक्वा सा पूरिका कथिता बुधैः ।**
**रुच्या स्वादी गुरुः स्निग्धा बल्या पितास्रदूषिका ॥४९॥**
**चक्षुस्तेजोहरी चोष्णा पाके वातविनाशिनी ।**
**तथैव घृतपक्वाऽपि चक्षुष्या रक्तपित्तहृत् ॥५०॥**

मस्यौटामा आवश्यकता अनुसार सिधेनुन, अदुवा र हिङ हाली मैदाको बेल्न ठिक्क पारिएका गोलाकार चक्की भित्र राखी पातला रोटी (पोलिका) बेल्नू । यसपछि यसलाई तेलमा पकाउनू । पाकेपछिको यो रोटीलाई विज्ञहरूले कचौडी (पूरिका) भनेका छन् । कचौडी रुचिकर, स्वादिलो, पचाउन कठिन, चिल्लो, बलदायक तथा पित्तविकार तथा रक्तविकार गर्ने गुणको हुन्छ । यसले आँखाको तेज नाश गर्दछ, पचेपछि गर्मी गर्दछ र वातविकार नाशक हुन्छ । घिउमा पकाएको कचौडीमा पनि यिनै गुण हुन्छन् । विशेषतः यो आँखाका लागि लाभदायक र रक्तपित्त नाशक हुन्छ ।

## माषका फुरौला

**माषाणां पिष्टकायुक्तां लवणार्द्रकहिङ्गुभिः ।**
**कृत्वा विदध्याद्वटकांस्तांस्तैलेषु पचेच्छनैः ॥५१॥**
**विशुष्का वटका बल्या बृंहणा वीर्य्यवर्द्धनाः ।**
**वातामयहरा रुच्या विशेषादर्दितापहाः ॥५२॥**
**विबन्धभेदिनः श्लेष्मकारिणोऽत्यग्निपूजिताः ।**
**संचूर्ण्यनिक्षिपेत्तक्रे भृष्टं जीरकहिङ्गु च ॥५३॥**
**लवणं तत्र वटकान्सकलानपि मज्जयेत् ।**
**शुक्रलस्तत्र वटको बलकृद्रोचनो गुरुः ॥५४॥**
**विबन्धहृद्विदाही च श्लेष्मलः पवनापहः ।**
**राज्यक्तयाऽतिरोचन्या पाचन्या तांस्तु भक्षयेत् ॥५५॥**

मस्यौटामा आवश्यकता अनुसार सिधेनुन, अदुवा र हिङ हालेर राम्ररी फिटी ठूलाठूला गोला बनाउनू । अनि यसलाई तेलमा मन्द आँच दिएर पकाउनू । पाकेपछि झिक्नू । यसलाई सुक्खा फुरौला भनिन्छ । यो

फुरौला बलदायक, पौष्टिक, वीर्यवर्धक, वातविकार नाशक, रुचिकारक र विशेष गरी अर्दित (मुखको कुनै भाग वातदोषले गर्दा नचल्ने हुने एक रोग विशेष,फेसियल प्यारालाइसिस) नाशक हुन्छ । यसले कब्जियत नाश गर्दछ र कफविकार बढाउँदछ । यो पाचनशक्ति बलियो हुनेका लागि उत्तम हुन्छ । भुटेको जिरा, हिङको धुलो र सिधेनुन तक्रमा हालेर त्यसैमा माषको सुक्खा फुरौला डुबाएपछि रसदार फुरौला तयार हुन्छ । यस्तो फुरौला शुक्रवर्धक, बलदायक, रुचिवर्धक र पचाउन कठिन हुन्छ । यसले कब्जियत हटाउँदछ तर डाह गर्दछ । कफविकार बढाउँदछ तर वातविकार नाश गर्दछ । यसलाई राइता (राज्यक्ता) मा हालेर खाए यो अत्यन्त रुचिकर र पाचक हुन्छ ।

## काँजी-फुरौला

**मन्थनी नूतना धार्या कटुतैलेन लेपिता ।**
**निर्मलेनाम्बुनाऽऽपूर्य तस्यां चूर्णं विनिक्षिपेत् ॥५६॥**
**राजिकाजीरकलवणहिङ्गुशुण्ठीनिशाकृतम् ।**
**निक्षिपेद्वटकांस्तत्र भाण्डस्यास्यञ्च मुद्रयेत् ॥५७॥**
**ततो दिनत्रयादूर्ध्वमम्लाः स्युर्वटका ध्रुवम् ।**
**काञ्जिकावटको रुच्यो वातघ्नः श्लेष्मकारकः ॥५८॥**
**शूलघ्नोऽजीर्णदाहनुद् नेत्ररोगे तु नो हितः ।**

एउटा नयाँ र बलियो माटाको हाँडीलाई पिरो तेलले पोत्नू । अनि त्यो हाँडीमा भरी पानी हाली त्यसमा रायो, जीरा, सिधेनुन, हिङ, सुठो र बेसार हाली अन्तमा मासका फुरौला डुबाएर त्यो भाँडाको मुख बन्द गर्नू । तीन दिन बितेपछि चौथो दिन फुरौला अमिलो भएपछि हाँडीको मुख खोल्नू । यो फुरौलालाई काँजी-फुरौला भनिन्छ । यो फुरौला रुचिकर, वातविकार नाशक, कफकारक, शूल नाशक, अजीर्ण नाशक र डाह नाशक हुन्छ । यो आँखाका लागि भने त्यति हितकर मानिँदैन ।

## अमिली-फुरौला

**अम्लिकां स्वेदयित्वा तु जलेन सह मर्दयेत् ॥५९॥**
**तन्नीरे कृतसंस्कारे वटकान्मज्जयेज्जनः ।**
**अम्लिकावटकास्ते तु रुच्या वह्निप्रदीपनाः ॥६०॥**
**वटकस्य गुणैः पूर्वैरेतेऽपि च समन्विताः ।**

अमिलीलाई उमालेर पानीमा मोल्नू र रस निकाल्नू । अनि यसमा सर्सिउँ, हिङ, जीरा, सिधेनुन, सुठो, बेसार आदि मसला हाली अन्तमा मासका सुक्खा फुरौला डुबाउनू । जब फुरौला भिज्दछ तब खान तयार हुन्छ । यसलाई अमिली-फुरौला भनिन्छ । यो फुरौला रुचिकारक र पाचकाग्नि वर्धक हुन्छ । यसमा मासको सुक्खा फुरौलामा हुने गुण पनि समावेश भएको हुन्छ ।

## मुगीको फुरौला

**मुद्गानां वटकास्तक्रे मज्जिता लघवो हिमाः ॥६१॥**

**संस्कारजप्रभावेण त्रिदोषशमना हिताः ।**

मासका फुरौला जसरी नै मुगीका फुरौला पनि तक्रमा डुबाउनू अनि भुटेको जीरा, हिङ, र सिधेनुनको धुलो त्यसमा हाल्नू । पूरा भिजेपछि मुगीको फुरौला तयार हुन्छ । यो फुरौला पचाउन सहज, शीतल गर्ने तथा मसला आदि हालेका कारण त्रिदोष नाशक र लाभदायक हुन्छ ।

## मासका गोली (माष-वटिका)

**माषाणां पिष्टिका हिङ्गुलवणार्द्रकसंस्कृता ॥६२॥**
**तया विरचिता वस्त्रे वटिकाः साधु शोषिताः ।**
**भर्जितास्तप्ततैलैस्ता अथवाऽम्बुप्रयोगतः ॥६३॥**
**वटकस्य गुणैर्युक्ता ज्ञातव्या रोचना भृशम् ।**

मस्यौटोमा आवश्यकता अनुसार हिङ, सिधेनुन, अदुवा आदि हाली राम्ररी फिट्नू । अनि यसका ससाना गोली बनाएर कपडामा राखी घाममा मज्जाले सुकाउनू । सुकेपछि तेलमा तार्नू अथवा पानीमा उमाल्नू, मासको गोली तयार हुन्छ । यसको गुण मासको फुरौलाको जस्तै हुन्छ र अति नै रुचिकर हुन्छ ।

## कुभिण्डोको गोली (कूष्माण्डक-वटी)

**कूष्माण्डकवटी ज्ञेया पूर्वोक्तवटिकागुणा ॥६४॥**
**विशेषात्पित्तरक्तघ्नी लघ्वी च कथिता बुधैः ।**

मासको गोली बनाउने बेलामा जस्तै पीठोमा कुभिण्डोको भुजुरी मिसाउनू । अनि पहिले बताएकै मसला हाल्नू र गोली बनाई कपडामा सुकाउनू । अनि यसलाई तेल वा घिउमा भुट्नू । कुभिण्डोको गोली तयार हुन्छ । यसको गुण पहिले बताइएको मासको गोलीको जस्तै हुन्छ । विशेषतः यो रक्तविपकार नाशक र र पचाउन हलुका हुन्छ भनेर विज्ञहरू भन्दछन् ।

## मुगीको गोली (मुद्ग-वटिका)

**मुद्गानां वटिका तद्वद्रचिता साधिता तथा ॥६५॥**
**पथ्या रुच्या तथा लघ्वी मुद्गसूपगुणा स्मृता ।**

मासको गोली बनाए जसरी नै मुगीको गोली बनाएर पकाइन्छ । यो पथ्य, रुचिकर, पचाउन हलुका तथा मुगको दालमा हुने गुण सहितको हुन्छ ।

## आलीकमत्स्य

**माषपिष्टिकया लिप्तं नागवल्लीदलं महत् ॥६६॥**

**तत्तु संस्वेदयेद्युक्त्या स्थाल्यामास्तारकोपरि ।**
**ततो निष्कास्य तं खण्डचं ततस्तैलेन भर्जयेत् ॥६७॥**
**अलीकमत्स्य उक्तोऽयं प्रकारः पाकपण्डितैः ।**
**तं वृन्ताकभटित्रेण वास्तूकेन च भक्षयेत् ॥६८॥**

ठूलठूला पानका पातमा मस्यौटो बेरेर त्यसलाई एउटा भाँडामा जल भरी त्यसको मुखमा कपडा बेरेर त्यसमाथि राख्नू र त्यो भाँडोलाई आगोमा बसाल्नू । बाफले त्यसलाई सावधानीपूर्वक पकाउनू । जब पाक्दछ तब झिकेर त्यसलाई टुक्रा टुक्रा पारी तेलमा पकाउनू । पाकशास्त्रका विज्ञले आलीकमत्स्य बनाउने यही विधि बताएका छन् । यसलाई भन्टाको कवाबसँग वा वा बेथेसँग खानू । (यसको स्वाद माछाको जस्तै हुन्छ) ।

## कढी (क्वथिता)

**स्थाल्यां घृते वा तैले वा हरिद्रां हिङ्गु भर्जयेत् ।**
**अवलेहनसंयुक्तं तक्रं तत्रैव निक्षिपेत् ॥६९॥**
**एषा सिद्धा समरिचा क्वथिता कथिता बुधैः ।**

कराईमा घिउ वा तेल हालेर त्यसमा बेसार र हिङ फुराउनू । अनि यसमा अवलेहनम् (पानी घोलिएको चनाको पीठो) र तक्र पनि हालेर पकाउनू । आवश्यकता अनुसार मरिच र सिधेनुनको धुलो पनि हाल्नू । जब पाक्दछ तब झिक्नू । यसैलाई विज्ञहरू कढी भन्दछन् ।

**क्वथिता पाचनी रुच्या लघ्वी वह्निप्रदीपनी ॥७०॥**
**कफानिलाविबन्धघ्नी किञ्चित्पित्तप्रकोपणी ।**

कढी पाचक, रुचिकर, पचाउन हलुका, जठराग्नि वर्धक तथा कफविकार, वातविकार र कब्जियत नाशक हुन्छ । यसले थोरै पित्तविकार गर्दछ ।

## अलीकमत्स्यको गुण

**अलीकमत्स्याः शुष्का वा किं वा क्वथितया पुनः ॥७१॥**
**बृंहणा रोचना वृष्या बल्या वातगदापहः ।**
**कोष्ठशुद्धिकराः शुष्काः किञ्चित्पित्तप्रकोपणाः ॥७२॥**
**अर्दिते सहनुस्तम्भे विशेषेण हिताः स्मृताः ।**

सुक्खा होस् वा कढीमा भिजाइएको होस् दुबै खालका अलीकमत्स्य पौष्टिक, रुचिकर, वीर्यवर्धक, बलदायक, वातविकार नाशक र पेट शुद्ध पार्ने गुणका हुन्छन् । सुक्खा अलीकमत्स्यले केही पित्तविकार गरेपनि विशेषतः यसले अर्दित ( मुखको कुनै भाग वातदोषले गर्दा नचल्ने हुने एक रोग विशेष,फेसियल प्यारालाइसिस) र हनुस्तम्भ ( चिउँडो र कञ्चटको बीचको हाड नचल्ने रोग) मा फाइदा गर्दछ ।

## मुगी-अदुवाको बारा

मुद्गपिष्टीविरचितान् वटकांस्तैलपाचितान् ॥७३॥
हस्तेन चूर्णयेत्सम्यक् तस्मिंश्चूर्णं विनिक्षिपेत् ।
भृष्टं हिङ्ग्वार्द्रकं सूक्ष्मं मरिचं जीरकं तथा ॥७४॥
निम्बूरसं यवानीं च युक्त्या सर्वं विमिश्रयेत् ।
मुद्गपिष्टिं पचेत्सम्यक् स्थाल्यामास्तारकोपरि ॥७५॥
तस्यास्तु गोलकं कुर्यात्तन्मध्ये पूरण क्षिपेत् ।
तैले तान्गोलकान्पक्त्वा क्वथितायां निमज्जयेत् ॥७६॥
गोलकाः पाचकैः प्रोक्तास्ते त्वार्द्रकवटा अपि ।
मुद्गार्द्रकवटा रुच्या लघवो बलकारकाः ॥७७॥
दीपनास्तर्पणाः पथ्यास्त्रिषु दोषेषु पूजिताः ।

मुगीको दाललाई पिसेर ससाना गोली बनाई तेलमा पकाउनू । यो गोलीलाई हातले माडेर धुलो बनाउनू । यसमा भुटेको हिङको धुलो, पातला र मसिना अदुवाका टुक्रा, मरिचको धुलो, जीराको धुलो, कागतीको रस र ज्वानुको धुलो आवश्यकता अनुसार मिसाउनू । पुनः मुगी पिसी त्यसलाई एउटा भाँडामा पानी भरी त्यसको मुखमा कपडा बेरेर त्यसमाथि राखी पानी उमालेर बाफमा पकाउनू । पाकेपछि यसका ठूलठूला डल्ला बनाउनू र त्यो डल्लाभित्र अघि बनाएको धूलो हाल्नू । यसलाई पुनः तेलमा पकाउनू । पाकेपछि यसलाई कढीमा ढुबाउनू । राम्ररी भिजेपछिको यो खानेकुरालाई पाकशास्त्रका विज्ञले अदुवाको बारा भनेका छन् । यो बारा रुचिकारक, पचाउन हलुका, बलदायक, पाचकाग्नि वर्धक, तृप्तिदायक, पथ्य र त्रिदोषमा खान उत्तम हुन्छ ।

## वेसन

दालयश्चणकानां तु निस्तुषा यन्त्रपेषिताः ॥७८॥
तच्चूर्णं बेसनं प्रोक्तं पाकशास्त्रविशारदैः ।

बोक्रा नभएको चनाको दाललाई पिँधेर तयार पारिएको पीठोलाई पाकशास्त्रका विज्ञहरूले वेसन नाम दिएका छन् ।

## वेसनको फुरौला वा बारा

वटिका वेसनस्यापि क्वथितायां निमज्जिता ॥७९॥
रुच्या विष्टम्भजननी बल्या पुष्टिकरी स्मृता ।

वेसनको डल्लो तेलमा पकाएर कढीमा डुबाएपछि बेसनको फुरौला तयार हुन्छ । यो रुचिकर, कब्जियत गर्ने, बलदायक र पुष्टिदायक हुन्छ ।

**(एवमन्येऽपि वेसनभवाः प्रकाराः खण्डनखण्डप्रभृतयो बोद्धव्याः ।**

वेसनले बनाइने अन्य खण्डन आदि खानेकुरा आफैंले थाहा पाउनू) ।

## शुद्ध मासुको परिकार

**पाकपात्रे घृतं दद्यात्तैलञ्च तदभावतः ॥८०॥**
**तत्र हिङ्गुहरिद्रां च भर्जयेत्तदनन्तरम् ।**
**छागादेरस्थिरहितं मांसं तत्खण्डितं ध्रुवम् ॥८१॥**
**धौतं निर्गालितं तस्मिन्घृते तद्भर्जयेच्छनैः ।**
**सिद्धयोग्यं जलं दत्वा लवणन्तु पचेत्ततः ॥८२॥**
**सिद्धे जलेन सम्पिष्य वेशवारं परिक्षिपेत् ।**

मासु पकाउने भाँडामा घिउ वा तेल हालेर त्यसमा हिङ र बेसार फुराउनू । यसपछि बोको आदिको मासु टुक्रा पारेर काट्नू । टुक्रा पार्दा हाड भए त्यसलाई फाल्नू । अनि यो मासु राम्ररी पखाल्नू र पूरै पानी निथार्नू । यसपछि ओइरेर बिस्तारै भुट्नू । पाक्न पुग्नेजति पानी र सिधेनुन हाली पकाउनू । पाकेपछि चाहिने जति पानी र वेशवार (मसलाको विशेष सम्मिश्रण) पिँधेर हाल्नू र केहीबेर पकाउनू ।

## वेसवार (गरम मसलाको सम्मिश्रण)

**द्रव्याणि वेशवारस्य नागवल्लीदलानि च ॥८३॥**
**तण्डुलाश्च लवङ्गानि मरिचानि समासतः ।**

पानको पात, चामल, ल्वाङ र मरिचलाई संक्षेपमा वेसवारमा हालिने पदार्थ भनी जान्नू ।

**अनेन विधिना सिद्धं शुद्धमांसमिति स्मृतम् ॥८४॥**
**शुद्धमांसं परं वृष्यं बल्यं रुच्यञ्च बृंहणम् ।**
**त्रिदोषशमनं श्रेष्ठं दीपनं धातुवर्द्धनम् ॥८५॥**

यसरी पकाइएको मासुलाई शुद्ध मासु भनिन्छ । यस्तो मासु अति वीर्यवर्धक, बलदायक, रुचिकर र पौष्टिक हुन्छ । यसले त्रिदोष नाश गर्नुका साथै यो अति पाचनशक्ति बढाउने र धातुवर्धक हुन्छ ।

## सहद्रकम् (मासुको परिकार विशेष, किमा)

**छागादेर्मांसमूर्वादेः कुट्टितं खण्डितं पुनः ।**
**शुद्धमांसविधानेन पचेदेतत्सहर्द्रकम् ॥८६॥**
**सहर्द्रकं गुणैर्ग्रन्थे शुद्धमांसगुणं स्मृतम् ।**

बोका आदिको फिला आदिको मासु कुटेर मसिना टुक्रा पारी (माथि बताइएको) शुद्ध मासु पकाउने विधिले पकाउनू । यसलाई सहद्रक (किमा) भनिन्छ । द्रव्यगुण ग्रन्थमा यसको गुण शुद्ध मासु समान हुन्छ भनी बताइएको छ ।

### तक्रमांस (मासुको परिकार विशेष)

**पाकपात्रे घृतं दत्त्वा हरिद्रां हिङ्गु भर्जयेत्॥८७॥**
**छागादेः सकलस्यापि खण्डान्यपि च भर्जयेत् ।**
**सिद्धयोग्यं जलं दत्त्वा पचेन्मृदुतरं तथा॥८८॥**
**जीरकादियुते तक्रे मांसखण्डानि भावयेत् ।**
**तक्रमांसन्तु वातघ्नं लघु रुच्यं बलप्रदम्॥८९॥**
**कफघ्नं पित्तलं किञ्चित्सर्वाहारस्य पाचनम् ।**

पकाउने भाँडामा तेल तताएर बेसार र हिङ फुराउनू । यसपछि बोका आदिको सबै अङ्गको मासुका टुक्रा हालेर भुट्नू । अनि पाक्न पुग्नेजति पानी हालेर मन्द आँचमा पकाउनू । पाकेपछि जीरा आदि मसला हालिएको तक्रमा मासुका टुक्रा हाल्नू । यसलाई तक्रमांस भनिन्छ । यो मासु वातविकार नाशक, पचाउन सहज, रुचिकर, बलदायक, कफविकार नाशक, थोरै पित्तविकार गर्ने र खाएका अन्य सबै कुरा पचाउने गुणको हुन्छ ।

### हरीसा (मासुको परिकार विशेष)

**पाकपात्रे तु बृहति मांसखण्डानि निक्षिपेत्॥९०॥**
**पानीयं प्रचुरं सर्पिः प्रभूतं हिङ्गु जीरकम् ।**
**हरिद्रामार्द्रकं शुण्ठीं लवणं मरिचानि च॥९१॥**
**तण्डुलांश्चापि गोधूमाञ्जम्बीराणां रसान् बहून् ।**
**यथा सर्वाणि वस्तूनि सुपक्वानि भवन्ति हि॥९२॥**
**तथा पचेत्तु निपुणो बहुमण्डस्थितिर्यथा ।**
**एषा हरीसा बलकृद्वातपित्तापहा गुरुः॥९३॥**
**शीतोष्णा शुक्रदा स्निग्धा सरा सन्धानकारिणी ।**

एउटा पकाउने ठूलो भाँडामा मासुका टुक्रा हाली त्यसमा अलि धेरै पानी, हिङ, जीरा, बेसार, अदुवा, सुठो, सिधेनुन, मरिच, चामल, गहुँ र ज्यामिरको रस हाल्नू र मोल्नू । अनि यी सबै कुरा राम्ररी पाक्ने र रस पनि प्रशस्त बाँकी हुने गरी पकाउनू । यसलाई हरीसा भनिन्छ । यो मासुले बल दिनुका साथै वातविकार र पित्तविकार नाश गर्दछ । यो पचाउन कठिन हुन्छ । यो शीतोष्ण (केही ठण्डी र केही गर्मी गर्ने), शुक्रवर्धक, चिल्लो, मलमूत्र तलतिर सार्ने र मर्किएका वा भाँचिएका हाड जोड्ने गुणको हुन्छ ।

### तारिएको मासु

**शुद्धमांसविधानेन मांसं सम्यक्प्रसाधितम् ॥९४॥**
**पुनस्तदाज्ये सम्भृष्टं तलितं प्रोच्यते बुधैः ।**
**तलितं बलमेधाऽग्निमांसौजःशुक्रवृद्धिकृत् ॥९५॥**
**तर्पणं लघु सुस्निग्धं रोचनं दृढताकरम् ।**

शुद्धमासु पकाउने विधिले पकाइएको मासुलाई पुनः घिउमा हालेर भुटेपछि त्यो तारिएको मासु हुन्छ । यस्तो मासु बल, दिमागको ग्रहण गर्ने क्षमता, पाचकाग्नि, मासु, ओज र शुक्र वर्धक हुन्छ । यसले तृप्ति दिन्छ तथा यो पचाउन पनि सहज हुन्छ । यो चिल्लो, रुचिवर्धक र शरीरलाई बलियो बनाउने गुणको हुन्छ ।

## सेकुवा (शूल्य)

**कालखण्डादिमांसानि ग्रथितानि शलाकया ॥९६॥**
**घृतं सलवणं दत्त्वा निर्धूमे दहने पचेत् ।**
**तत्तु शूल्यमिति प्रोक्तं पाककर्मविचक्षणैः ॥९७॥**
**शूल्यं पलं सुधातुल्यं रुच्यं बह्निकरं लघु ।**
**कफवातहरं बल्यं किञ्चित्पित्तकरं हि तत् ॥९८॥**

मासुको कलेजो आदि भागलाई टुक्रा पारी त्यसैमा घिउ, नुन (आदि) मिसाएर फलामको भिरमा उनी धुवाँ नआउने खालको आगोमा केही माथि राखेर बिस्तारै पकाउनू, पाकेपछिको यो परिकारलाई पाकशास्त्रका विज्ञहरू सेकुवा (शूल्य) भन्दछन् । सेकुवा अमृतसमान, रुचिकर, पाचकाग्नि वर्धक, पचाउन सहज, कफविकार नाशक, वातविकार नाशक तथा थोरै पित्तविकार बढाउने गुणको हुन्छ ।

## मासुको सिँगडा

**शुद्धमांसं तनूकृत्य कर्त्तितं स्वेदितं जले ।**
**लवङ्गहिङ्गुलवणमरिचार्द्रकसंयुतम् ॥९९॥**
**एलाजीरकधान्याकनिम्बूरससमन्वितम् ।**
**घृते सुगन्धे तद् भृष्टं पूरणं प्रोच्यते बुधैः ॥१००॥**
**शृङ्गाटकं समितया कृतं पूरणपूरितम् ।**
**पुनः सर्पिषि सभृष्टं मांसशृङ्गाटकं वदेत् ॥१०१॥**
**मांसशृङ्गाटकं रुच्यं बृंहणं बलकृद् गुरु ।**
**वातपित्तहरं वृष्यं कफघ्नं वीर्यवर्धनम् ॥१०२॥**

शुद्ध मासुका पातला र साना टुक्रालाई पानीमा केहीबेर उमाल्नू । अनि बाहिर निकाली मासुका टुक्रा जति झिकेर अर्को भाँडोमा राख्नू । त्यसमा ठिक्क मात्रामा ल्वाङ, हिङ, सिधेनुन, मरिच, अदुवा, सुकुमेल, जीरा र धनियाको धूलो तथा कागतीको रस हाल्नू । यसलाई राम्ररी मोलेर सुगन्धित घिउमा भुट्नू । यसैलाई पाकशास्त्रका विज्ञहरू मासुको सिँगडा बनाउने द्रव्य वा पूरण भन्ने गर्दछन् । यसपछि मैदा मुछेर कचौरी बनाउनू र यो मासुलाई त्यसभित्र राखेर सिँगडा बनाई घिउमा तार्नू । अब मासुको सिँगडा तयार भयो । यो

सिँगडा रुचिकर, पौष्टिक, बलदायक, पचाउन कठिन, वातविकार नाशक, पित्तविकार नाशक, यौनशक्तिवर्धक, कफविकार नाशक र वीर्यवर्धक हुन्छ ।

## मासुको रस, सुरुवा

**सिद्धमांसरसो रुच्यः श्रमश्वासक्षयापहः ।**
**प्रीणनो वातपित्तघ्नः क्षीणानामल्परेतसाम् ॥१०३॥**
**विश्लिष्टभग्नसन्धीनां शुद्धानां शुद्धिकाङ्क्षिणाम् ।**
**स्मृत्योजोबलहीनानां ज्वरक्षीणक्षतोरसाम् ॥१०४॥**
**शस्यते स्वरहीनानां दृष्ट्यायुःश्रवणार्थिनाम् ।**
**प्रकाराः कथिताः सन्ति बहवो मांससम्भवाः ॥१०५॥**
**ग्रन्थविस्तरभीतेस्ते मया नात्र प्रकीर्त्तिताः ।**

सुरुवा रुचिकारक, थकाई मेटाउने, दम नाशक, क्षयरोग नाशक, तृप्तिदायक, वातविकार नाशक र पित्तविकार नाशक हुन्छ । शरीर दुब्लाएका, वीर्य घटेका, जोर्नी खुस्किएका वा भाँचिएका, वमन वा विरेचन आदि उपचारबाट शुद्ध भएका, वमन वा विरेचन आदि गरी शुद्ध हुन चाहने, सम्झनाशक्ति कमजोर भएका, तेजहीन भएका, निर्बल भएका, जरोले गालेका, क्षमताभन्दा बढी परिश्रम गरी छातीमा घाउ भएका, स्वर खिइएका, दृष्टि क्षमता बढाउन चाहने, आयु बढाउन चाहने र सुन्ने क्षमता बढाउन चाहने व्यक्तिका लागि सुरुवा उत्तम हुन्छ । मासुका अनेकौं परिकार बनाउने विधि अन्यत्र बताइएको छ, ग्रन्थ ठूलो हुने डरले यहाँ ती सबैको वर्णन गरिएन ।

## साग पकाउने विधि

**हिङ्गुजीरयुते तैले क्षिपेच्छाकं सुखण्डितम् ॥१०६॥**
**लवणं चात्र चूर्णादि सिद्धे हिङ्गूदकं क्षिपेत् ।**
**इत्येवं सर्वशाकानां साधनेऽभिहितो विधिः ॥१०७॥**

सागलाई पहिला काटेर पखाली तेलमा हिङ र जीरा फुराएर ओइरनू । जब गल्दछ तब त्यसमा नुन, अमिलोको धूलो, हिङको घोल र पानी हाली पाकेपछि झिक्नू । सबै साग पकाउनका लागि प्रायः यही विधि प्रयोग गरिन्छ ।

## मण्ठ (परिकार विशेष)

**समितां मर्दयेदाज्यैर्जलेनापि च सन्नयेत् ।**
**तस्यास्तु वटिकां कृत्वा पचेत्सर्पिषि नीरसम् ॥१०८॥**
**एलालवङ्गकर्पूरमरिचाद्यैरलङ्कृते ।**
**मज्जयित्वा सितापाके ततस्तच्च समुद्धरेत् ॥१०९॥**
**अयं प्रकारः संसिद्धौ मण्ठ इत्यभिधीयते ।**

**मण्ठस्तु बृंहणो वृष्यो बल्यः सुमधुरो गुरुः ॥११०॥**
**पित्तानिलहरो रुच्यो दीप्ताग्नीनां सुपूजितः ।**
**समिताशर्करासर्पिर्निर्मिता अपरेऽपि ये ॥१११॥**
**प्रकारा अमुना तुल्यास्तेऽपि चेत्तद्गुणाः स्मृताः ।**

मैदालाई घिउ र पानी हालेर बेस्सरी माड्नू । यसका ससाना गोली बनाएर घिउमा खरो हुने गरेर तार्नू । चिनीको चास्नी बनाएर त्यसमा सुकुमेल, ल्वाङ, कपूर, मरिच आदि हालेर यी खारिएका गोली त्यसैमा डुबाउनू । राम्ररी भिजेपछि झिकेर प्रयोग गर्नू । यसरी बनाइएको पक्वान्नलाई मण्ठ भनिन्छ । मण्ठ पौष्टिक, वीर्यवर्धक, बलदायक, अति मिठो, पचाउन कठिन, पित्तविकार नाशक, वातविकार नाशक, रुचिकर र पाचनशक्ति बलियो हुनेहरूका लागि अति नै उत्तम खानेकुरा हो । अन्य मैदा, चिनी र घिउ मिसाएर बनाइने परिकारको पनि यसका जस्तै गुण हुन्छन् भनी जान्नू ।

## सम्पाव

**पर्पटयः साज्यसमिता निर्मिता घृतभर्जिताः ॥११२॥**
**कुट्टिताश्चालिताः शुद्धशर्कराभिर्विमर्दिताः ।**
**तत्र चूर्णं क्षिपेदेलालवङ्गमरिचानि च ॥११३॥**
**नारिकेरं सकर्पूरं चारबीजान्यनेकधा ।**
**घृताक्तसमिता पुष्टरोटिका रचिता ततः ॥११४॥**
**तस्यान्तः पूरणं तस्य कुर्यान्मुद्रां दृढां सुधीः ।**
**सर्पिषि प्रचुरे तान्तु सुपचेन्निपुणो जनः ॥११५॥**
**प्रकारज्ञैः प्रकारोऽयं सम्पाव इति कीर्त्तितः ।**
**मण्ठकेन समो ज्ञेयः सम्पावोऽपि गुणैर्जनैः ॥११६॥**

मैदालाई घिउहालेर मुछी पातला रोट बनाएर घिउमै खरो हुने गरी तार्नू । अनि यसलाई कुटेर धूलो बनाउनू र चाल्नुमा चाल्नू । चालिएको धूलोमा आवश्यकता अनुसार चिनी हाली बेस्सरी माड्नू । अनि यसैमा अलैंची, ल्वाङ, मरिच, नरिवल, कपूर, चिरौंजी आदिको धूलो पनि हालेर मोल्नू । अनि पुनः घिउमा मुछिएको मैदाको बाक्लो रोटी बेलेर त्यसभित्र यो धूलो हाली टम्म हुने गरी मोर्नू । यो डल्लोलाई घिउमै पुनः पकाउनू । पाकशास्त्रका विज्ञले यसलाई "सम्पाव" नाम दिएका छन् । तिनले यसको गुण मण्ठको गुण समान हुन्छ पनि भनेका छन् ।

## कर्पूरनालिका

**घृताढ्यया समितया लम्बं कृत्वा पुटं ततः ।**
**लवङ्गोषणकर्पूरयुतया सितयाऽन्वितम् ॥११७॥**
**पचेदाज्येन सिद्धैषा ज्ञेया कर्पूरनालिका ।**
**सम्पावसदृशा ज्ञेया गुणैः कर्पूरनालिका ॥११८॥**

घिउ हालेर मोलिएको मैदाको पीठोलाई लामो पारेर बेल्नू । त्यसलाई कचौरी जस्तो बनाएर त्यसभित्र ल्वाङ, मरिच, कपूर र चिनी हाल्नू । वरिपरि टम्म हुने गरी बन्द गरेर घिउमा पकाउनू । पाकेपछि यसलाई "कर्पूरनालिका" भनिन्छ । यसको गुण सम्पाव समान हुन्छ ।

## फिनी (परिकारविशेष)

**समितायां घृताढ्याया वर्त्तीर्दीर्घाः समाचरेत् ।**
**तास्तु सन्निहिता दीर्घाः पीठस्योपरि धारयेत् ॥११९॥**
**वेल्लयेद्वेल्लनेनैता यथैका पर्पटी भवेत् ।**
**ततश्छुरिकया तान्तु संलग्नामेव कर्त्तयेत् ॥१२०॥**
**ततस्तु वेल्लयेद्भूयः सट्टकेन च लेपयेत् ।**
**शालिचूर्णं घृतं तोयं मिश्रितं सट्टकं वदेत् ॥१२१॥**
**ततः संवृत्य तल्लोप्त्रीं विदधीत पृथक्पृथक् ।**
**पुनस्तां वेल्लययेल्लोप्त्रीं यथा स्यान्मण्डलाकृतिः ॥१२२॥**
**ततस्तां सुपचेदाज्ये भवेयुश्च स्फुटाः स्फुटाः ।**
**सुगन्धया शर्करया तद्धूलनमाचरेत् ॥१२३॥**
**सिद्धैषा फेनिकानाम्नी मण्ठकेन समा गुणैः ।**
**ततः किञ्चिल्लघुरियं विशेषोऽयमुदाहृतः ॥१२४॥**

घिउ हाली माडिएको मैदाको पिठोको मसिना लामा (बत्ती जस्ता) त्यान्द्रा बनाई बेलनामा एक अर्को टाँसिने गरी राखेर लामो पारी बेल्नू । बेल्दा यसरी बेल्नु कि यो एउटा रोटी जस्तै देखियोस् । यसपछि एक अर्कासँग जोडिएको भागलाई छुरीले काट्नू । अनि पुनः बेग्लाबेग्लै बेल्नू । यसमाथि चामलको पीठो, घिउ र पानी फिटेर बनेको लेस्याइलो घोल दल्नू । फेरी यसलाई बेग्लाबेग्लै बटुलेर डल्लो पारी गोलो रोटी बेल्नू । यसपछि यसलाई घिउमा पकाउनू । पाकेपछि यसमा फोका फोका जस्ता देखिन्छन् । पुनः यसलाई सुगन्धी शक्खर वा चास्नीमा डुबाउनू र केहीबेरमा झिक्नू । यसरी तयार भएको परिकारलाई फिनी भनिन्छ । यसको मण्ठ समान गुण हुन्छ । तर त्यसको तुलनामा यो केही पचाउन सहज हुन्छ ।

## शष्कुली (परिकार विशेष)

**समितायां घृताक्तायां लोप्त्रीं कृत्वा च वेल्लयेत् ।**
**आज्ये तां भर्जयेत्सिद्धा शष्कुली फेनिकागुणा ॥१२५॥**

घिउ र पानी हाली मुछिएको मैदालाई गोला बनाएर बेल्नू र घिउमा पकाउनू । पाकेपछि शष्कुली तयार हुन्छ । यसको फिनी समान गुण हुन्छ ।

## मोदक (परिकारविशेष)

**घृताढ्यया समितया कृत्वा सूत्राणि तानि तु ।**

**निपुणो भर्जयेदाज्ये खण्डपाकेन योजयेत् ॥१२६॥
युक्तेन मोदकान् कुर्यात्ते गुणैर्मण्ठका यथा ।**

घिउ हालेर मोलिएको मैदाको त्यान्द्रा निकाली घिउमा तार्नू र झिकी चास्नीमा डुबाउनू । केही बेर पछि झिकेर यसको लड्डू बनाउनू । यसलाई मोदक भनिन्छ । यसको गुण मण्ठको जस्तै हुन्छ ।

## मुगीको लड्डु (मोतीचूर)

**मुद्गानां धूमसीं सम्यग्घोलयेन्निर्मलाऽम्बुना ॥१३७॥
कटाहस्य घृतस्योर्ध्वं झर्झरं स्थापयेत्ततः ।
धूमसीन्तु द्रवीभूतां प्रक्षिपेज्झर्झरोपरि ॥१३८॥
पतन्ति बिन्दवस्तस्मात्तान्सुपक्वान्समुद्धरेत् ।
सितापाकेन संयोज्य कुर्याद्धस्तेन मोदकान् ॥१३९॥
लघुर्ग्राही त्रिदोषघ्नः स्वादुः शीतो रुचिप्रदः ।
चक्षुष्यो ज्वरहृद्बल्यस्तर्पणो मुद्गमोदकः ॥१४०॥**

मुगीको धूमसी (मुगीलाई पानीमा हालेर ढड्याउनू । त्यसपछि बोक्रा निकालेर घाममा सुकाउनू । सुकेपछि पिँध्नू । यो पिठोलाई धूमसी भनिन्छ ।) लाई सफा पानीमा लदरो हुने गरी धेरै बेर फिट्नू । कराहीमा घिउ तताई त्यसमाथि झाँझर राख्नू । झाँझर माथि बिस्तारै बिस्तारै त्यो मुगीको लेदो हाल्नू ता कि त्यो लेदो पीठो थोपा थोपा गरेर त्यो कराहीमा खसोस् । पाकेपछि झिकेर यसलाई चास्नीमा डुबाउनू । पछि यसलाई निकालेर हातले लड्डू बनाउनू । यसलाई मुगीको लड्डू भनिन्छ । यो पचाउन सहज, कब्जियत गर्ने, त्रिदोष नाशक, स्वादिलो, शीतल गर्ने, रुचिकर, आँखाका लागि लाभदायक, जरो नाशक, बलदायक र तृप्तिदायक हुन्छ ।

## बेसनको लड्डू

**एवमेव प्रकारेण कार्या वेसनमोदकाः ।
ते बल्या लघवः शीताः किञ्चिद्वातकरास्तथा ॥
विष्टम्भिनो ज्वरघ्नाश्च पित्तरक्तकफापहाः ॥१४१॥**

मुगीको बनाए जसरी नै बेसनको लड्डू बनाउनु पर्दछ । यो बलदायक, पचाउन सहज, शीतल गर्ने, थोरै वातविकार गर्ने, कब्जियग गर्ने, जरो नाशक, तथा पित्तविकार, रक्तविकार र कफविकार नाशक हुन्छ ।

## दुग्धकूपिका

**तण्डुलचूर्णविमिश्रितनष्टक्षीरेण सान्द्रपिष्टेन ।
दृढकूपिकां विदध्यात्ताञ्च पचेत्सर्पिषा सम्यक् ॥१४२॥
अथ तां कोरितमध्यां घनपयसा पूर्णगर्भाञ्च ।**

**सट्टकमुदितवदनां तप्तघृते सुपक्ववदनाञ्च ॥१४३॥**
**अथ पाण्डुखण्डपाके स्नपयेत्कर्पूरवासिते कुशलः ।**
**अथ दुग्धकूपिका सा बल्या पित्तानिलापहाचैव ॥१४४॥**
**वृष्या शीता गुर्वी शुक्रकरी च तर्पणी रुच्या ।**
**विदधाति कायपुष्टिं दृष्टिं दूरप्रसारिणीं सुचिरम् ॥१४५॥**

चामलको पीठोमा छेना मिसाएर राम्ररी मोल्नू । त्यसपछि यसको बलिया कचौरी बनाउनू र घिउमा पकाउनू । पाकेको कचौरीको बीचमा प्वाल पारी त्यसमा बाक्लो दूध भर्नू । अनि त्यो प्वाल मोलिएको त्यही पीठोले बलियोसँग बन्द गर्नू । पुनः घिउमा पकाई कपूर हालेर सुगन्धित बनाइएको पागमा डुबाउनू । यसैलाई दुग्धकूपिका भनिन्छ । यो बलदायक, पित्तविकार नाशक, वातविकार नाशक, वीर्यवर्धक, शीतल गर्ने, पचाउन कठिन, शुक्रवर्धक, तृप्तिदायक, रुचिकर, शरीरलाई पुष्टि गर्ने र लामो समयसम्म टाढाटाढा देख्न सक्ने दृष्टिक्षमता प्रदायक हुन्छ ।

## जिलेबी

**नूतनं घटमानीय तस्यान्तः कुशलो जनः ।**
**प्रस्थार्द्धपरिमाणेन दध्नाऽम्लेन प्रलेपयेत् ॥१४६॥**
**द्विप्रस्थां समितां तत्र दध्यम्ल प्रस्थसम्मितम् ।**
**घृतमर्द्धशरावञ्च घोलयित्वा घटे क्षिपेत् ॥१४७॥**
**आतपे स्थापयेत्तावद् यावद्याति तदम्लताम् ।**
**ततस्तत्प्रक्षिपेत्पात्रे सच्छिद्रे भाजने तु तत् ॥१४८॥**
**परिभ्राम्य परिभ्राम्य सुसन्तप्ते घृते क्षिपेत् ।**
**पुनः पुनस्तदावृत्त्या विदध्यान्मण्डलाकृतिम् ॥१४९॥**
**तां सुपक्वां घृतान्नीत्वा सितापाके तनुद्रवे ।**
**कर्पूरादिसुगन्धे च स्नापयित्वोद्धरेत्ततः ॥१५०॥**
**एषा कुण्डलिनी नाम्ना पुष्टिकान्तिबलप्रदा ।**
**धातुवृद्धिकरी वृष्या रुच्या चेन्द्रियतर्पणी ॥१५१॥**

पाकशास्त्रमा पोख्त भएको मानिसले एउटा नयाँ माटाको घैँटो लिनू । अनि करिब अस्सी ग्राम (आधा प्रस्थ) अमिलो दही लिएर त्यो घैँटोको भित्रपट्टि वरिपरि दल्नू । अनि तीन सय बीस ग्राम (दुई प्रस्थ) मैदा, एक सय साठी ग्राम (एक प्रस्थ) अमिलो दही र बत्तीस तोला (अर्द्धशराव) घिउ राम्ररी घोलेर त्यस घैँटोमा हाल्नू । त्यसपछि यो घैँटोलाई त्यसभित्र हालिएका पदार्थ अमिलो नहुँदासम्म (दुई वा तीन दिन) घाममा राख्नू । त्यसपछि यसलाई निकाल्नू । एउटा कान्छी औंला छिर्ने भन्दा अलि सानो प्वाल भएको भाँडो लिनू र त्यसमा यो लेदो हाली घिउ उम्लिरहेको कराहीमा घुमाई घुमाई गोलो बनाएर एउटा माथि अर्को गर्दै नटुटाई लेदो चुहाउनू । चाहिने जत्रो आकार भएपछि त्यसलाई पकाउनू र पाकेपछि चिनीको पातलो पागमा डुबाउनू अनि माथिबाट कपूर आदि सुगन्धित पदार्थको धूलो छर्नू । यसपछि बिस्तारै निकालेर अर्को भाँडामा राख्नू । यसलाई जिलेबी (जेरी) भनिन्छ । यसले पुष्टि, कान्ति र बल दिन्छ तथा धातु बढाउँदछ । यो वीर्यवर्धक, रुचिकर र इन्द्रियलाई तृप्त पार्ने गुणको हुन्छ ।

## सिखर्नी

आदौ माहिषमम्लमम्बुरहितं दध्याढकं शर्करां
शुभ्रां प्रस्थयुगोन्मितां शुचिपटे किञ्चिच्च किञ्चित्क्षिपेत् ।
दुग्धेनार्द्धघटेन मृण्मयनवंस्थाल्यां दृढं स्रावये
देलाबीजलवङ्गचन्द्रमरिचैर्योग्यैश्च तद्योजयेत् ॥१५२॥
भीमेन प्रियभोजनेन रचिता नाम्ना रसाला स्वयं
श्रीकृष्णेन पुरा पुनः पुनरियं प्रीत्या समास्वादिता ।
एषा येन वसन्तवर्जितदिने संसेव्यते नित्यश-
स्तस्य स्यादतिवीर्य्यवृद्धिरनिशं सर्वेन्द्रियाणां बलम् ॥१५३॥
ग्रीष्मे तथाशरदि ये रविशोषिताङ्गा ये च प्रमत्तवनितासुरतातिखिन्नाः ।
ये चापि मार्गपरिसर्पणशीर्णगात्रास्तेषामियं वपुषि पोषणमाशु कुर्यात् ॥१५४॥
रसाला शुक्रला वल्या रोचनी वातपित्तजित् ।
दीपनी बृंहणी स्निग्धा मधुरा शिशिरा सरा ॥१५५॥
रक्तपित्तं तृषां दाहं प्रतिश्यायं विनाशयेत् ।

भैंसीको पानी निथारिएको अमिलो दही करिब ३.७३ किलोग्राम (एक आढक), सेतो सक्खरको धूलो वा चिनी १.५४ किलोग्राम (दुई प्रस्थ) र ७.४६ किलोग्राम दूध जम्मा पारी मिसाएर रगड्दै कपडछान गरी एउटा माटाको भाँडामा राख्नू । अनि त्यसमा सुकुमेलका गेडा, ल्वाङ, कपूर, मरिच आदिको धूलो आवश्यकताहनुसार हाल्नू । यसलाई सिखर्नी भनिन्छ । यसलाई सर्वप्रथम उत्तम भोजन बनाउने र खाने कुन्तीपुत्र भीमसेनले बनाएका थिए र स्वयं भगवान् श्रीकृष्णले अति स्वादिलो भएका कारण थपीथपी मिठो मान्दै खाएका थिए । वसन्त बाहेकका अरु ऋतुमा हरेक दिन यस्तो सिखर्नी खाने जोसुकैको पनि अति नै वीर्यवृद्धि हुन्छ र सबै इन्द्रियमा बल बढ्दछ । ग्रीष्म र शरद ऋतुमा जसको घामले गर्दा शरीर सुकेको छ, जो मदोन्मत्त स्त्रीसँग रतिरमण गरेर लखतरान भएका छन् तथा जो लामो बाटो हिँडेर थकित भएका छन् तिनका लागि यो सिखर्नी तुरुन्त शरीरलाई पुष्टि दिने गुणको हुन्छ । सिखर्नी शुक्रवर्धक, बलदायक, रोचक, वातविकार नाशक, पित्तविकार नाशक, पाचकाग्नि वर्धक, पौष्टिक, चिल्लो, मिठो, शीतल गर्ने, मलमूत्र तलतिर धकेल्ने तथा रक्तपित्त, तिर्खा, डाह र पिनास नाशक हुन्छ ।

## सखरको सर्बत

जलेन शीतलेनैव घोलिता शुभ्रशर्करा ॥१५६॥
एलालवङ्गकर्पूरमरिचैश्च समन्विता ।
शर्करोदकनाम्ना तत्प्रसिद्धं विदुषां मुखैः ॥१५७॥
शर्करोदकमाख्यातं शुक्रलं शिशिरं सरम् ।
बल्यं रुच्यं लघु स्वादु वातपित्तप्रणाशनम् ॥१५८॥
मूर्च्छाछर्दितृषादाहज्वरशान्तिकरं परम् ।

चिनी वा सेतो सखरलाई चिसो पानीमा घोली त्यसमा अलैंची, कपूर र मरीच पिँधेर हाल्नू अनि छानेर पिउनू । यसलाई विज्ञहरू सर्बत भन्दछन् । सर्बत शुक्रउत्पादक, शीतल गर्ने, मलमूत्रलाई तलतिर धकेल्ने, बलदायक, रुचिकर, पचाउन सहज, स्वादिलो तथा वातविकार, पित्तविकार, बेहोसी, वाकवाकी, तिर्खा, डाह र जरोलाई शान्त पार्ने गुणको हुन्छ ।

## आँपको सर्बतविशेष

**आम्रमामं जले स्विन्नं मर्दितं दृढपाणिना ॥१५९॥**
**सिताशीताम्बुसंयुक्तं कर्पूरमरिचान्वितम् ।**
**प्रपाणकमिदं श्रेष्ठं भीमसेनेन निर्मितम् ॥१६०॥**
**सद्यो रुचिकरं बल्यं शीघ्रमिन्द्रियतर्पणम् ।**

काँचो आँपलाई पानीमा उमाली निकालेर रस निचोर्नू । यो रसमा चिनी, चिसो पानी, कपूरको धूलो र मरिचको धूलो हाल्नू र घोल्नू । यसलाई आँपको सर्बत भनिन्छ । यो उत्तम पेय हो । यसलाई सबभन्दा पहिले भीमसेनले बनाएका थिए । यो सर्बत पिउनाले तुरुन्त रुचि बढ्दछ, बल दिन्छ र तुरुन्त इन्द्रियलाई तृप्ति दिन्छ ।

## अमिलीको सर्बत

**अम्लिकायाः फलं पक्वं मर्दितं वारिणा दृढम् ॥१६१॥**
**शर्करामरिचैर्मिश्रं लवङ्गेन्दुसुवासितम् ।**
**अम्लिकाफलसम्भूतं पानकं वातनाशनम् ॥१६२॥**
**पित्तश्लेष्मकरं किञ्चित्सुरुच्यं वह्निबोधनम् ।**

अमिलीलाई पानीमा भिजाई हातले बेस्सरी माड्नू र रस छान्नू । यो रसमा चिनी, मरिच, ल्वाङ र कपूरको धूलो हाल्नू । अमिलीको सर्बत तयार हुन्छ । यो सर्बत वातविकार नाशक, केही पित्तविकार गर्ने, केही कफविकार गर्ने, रुचिकर र जठराग्निलाई बाल्ने गुणको हुन्छ ।

## कागतीको सर्बत

**भागैकं निम्बुजं तोयं षड्भागं शर्करोदकम् ॥१६३॥**
**लवङ्गमरिचैर्मिश्रं पानं पानकमुत्तमम् ।**
**निम्बूकफलभवं पानमत्यम्लं वातनाशनम् ॥१६४॥**
**वह्निदीप्तिकरं रुच्यं समस्ताहारपाचकम् ।**

कागती रस एक भाग र चिनीको घोल छ भाग मिसाई त्यसमा ल्वाङ र मरिच हाल्नू । यो उत्तम पेय हो । कागतीको सर्बत अती अमिलो, वातविकार नाशक, जठराग्नि वर्धक, रुचिकर र सबै खालका आहार पचाउने गुणको हुन्छ ।

## धनियाँको सर्बत

**शिलायां साधु सम्पिष्टं धान्याकं वस्त्रगालितम्॥१६५॥**
**शर्करोदकसंयुक्तं कर्पूरादिसुसंस्कृतम्।**
**नूतने मृण्मये पात्रे स्थितं पित्तहरं परम्॥१६६॥**

सिलौटामा राम्ररी पिसेको धनियालाई कपडामा छान्नू। त्यो रसमा मात्रा अनुसार चिनीको घोल मिसाउनू र कपूर आदिको धूलो हाली सुगन्धित बनाई नयाँ माटाको भाँडामा राख्नू। पछि यो सर्बत इच्छा अनुसार पिउने गर्नाले पित्तजन्य विकारलाई धेरै नै नाश गर्दछ।

## काँजी

**काञ्जिकं रोचनं रुच्यं पाचनं वह्निदीपनम्।**
**शूलाजीर्णविबन्धघ्नं कोष्ठशुद्धिकरं परम्॥१६७॥**
**न भवेत्काञ्जिकं यत्र तत्र जालि प्रदीयते।**

काँजीले रुचि बढाउँदछ र आफैं पनि रुचिकर हुन्छ। यो पाचक, जठराग्नि बाल्ने तथा शूल, अजिर्ण र गोटा परेको ठिक गर्ने गुणको हुन्छ। यसले विशेषतः पेट सफा गर्दछ। काँजी नपाउँदा जालि (तल उल्लेखित) प्रयोग गर्नु पर्दछ।

## जालि (पेय विशेष)

**आममाम्रफलं पिष्टं राजिकालवणान्वितम्॥१६८॥**
**भृष्टहिङ्गुयुतं पूतं घोलितं जालिरुच्यते।**
**जालिर्हरति जिह्वायाः कुण्ठत्वं कण्ठशोधिनी॥**
**मन्दं मन्दन्तु पीता सा रोचनी वह्निबोधिनी॥१६९॥**

काँचो आँपलाई पिसेर त्यसमा मात्राअनुसार रायो र सिधेनुन हाली घोल्नू। अनि कपडाले छानी त्यसमा फुराएको हिङको धूलो मिसाउनू। यसलाई जालि भनिन्छ। जालिले जिभ्रोको लाटोपन नाश गर्दछ र घाँटी सफा गर्दछ। यसलाई बिस्तारै पिउनाले यो रुचिकर र पाचकाग्नि वर्धक हुन्छ।

## तक्र

**तुर्यांशेन जलेन संयुतमतिस्थूलं सदम्लं दधि**
**प्रायोमाहिषमम्बुकेन विमले मृद्भाजने गालयेत्।**
**भृष्टं हिंगुच जीरकञ्चलवणं राजीञ्च किञ्चिन्मितां**
**पिष्टां तत्र विमिश्रयेद्द्रवति तत्तक्रं न कस्य प्रियम्॥१७०॥**
**तक्रं रुचिकरं वह्निदीपनं पाचनं परम्।**

**उदरे ये गदास्तेषां नाशनं तृप्तिकारकम् ॥१७१॥**

भैंसीको बाक्लो र अमिलो दहीमा दहीको एक चौथाई पानी हाली घोलेर कपडाले छानी एउटा माटाको भाँडामा राख्नू । यसमा मात्राअनुसार फुराएको हिङ, जीरा, सिधेनुन आदिको धूलो तथा थोरै रायोका गेडा पनि पिँधेर हाल्नू । यस्तो तक्र कसलाई पो नमिठो होला र ? तक्र रुचिकारक, जठराग्नि वर्धक, अति नै पाचक, पेटका सबै रोग नाशक र तृप्तिदायक हुन्छ ।

## दूधपान

**विदाहीन्यन्नपानानि यानि भुङ्क्ते हि मानवः ।**
**तद्विदाहप्रशान्त्यर्थं भोजनान्ते पयः पिबेत् ॥१७२॥**

मानिसले जेजस्ता शरीरलाई डाह गर्ने कुरा खान्छ वा पिउँदछ, त्यस्ता खानपिनका कारण हुने डाह नाश गर्न उसले खानपिन पछि दूध पिउने गर्नू । (विदाही : शरीरमा भएको पित्त प्रदूषित भई हात, गोडा, छाती आदि पोल्नुलाई विदाह भनिन्छ । जेजस्ता खानपिनले विदाह गर्दछन् त्यस्ता खानपिनलाई विदाही भनिन्छ ।)

## सातु

**धान्यानि भ्राष्ट-भृष्टानि यन्त्रपिष्टानि सक्तवः ।**

कुनै भाँडामा भुटेर कुनै यन्त्रमा पिँधिएको अनाजलाई सातु भनिन्छ ।

## जौको सातु

**यवजाः सक्तवः शीता दीपना लघवः सराः ॥१७३॥**
**कफपित्तहरा रूक्षा लेखनाश्च प्रकीर्त्तिताः ।**
**ते पीता बलदा वृष्या बृंहणा भेदनास्तथा ॥१७४॥**
**तर्पणा मधुरा रुच्याः परिणामे बलावहाः ।**
**कफपित्तश्रमक्षुत्तृड्व्रणनेत्रामयापहाः ॥१७५॥**
**प्रशस्ता घर्मदाहाध्वव्यायामार्त्तशरीरिणाम् ।**

जौको सातुले शीतल गर्दछ र पाचक अग्निलाई बाल्दछ । यो पचाउन हलुका हुन्छ । यसले मलमूत्रलाई धकेलेर तलतिर सार्दछ । जौको सातुले कफविकार र पित्तविकार नाश गर्दछ । यो रुखो हुन्छ । यसले रस आदि धातु वा वात आदि दोषलाई (भित्रभित्रै) सुकाएर (वा घटाएर) शरीरबाट बाहिर निकाली दिन्छ । यो सातुलाई पानीमा घोलेर पिए यो बलदायक, वीर्यवर्धक, पौष्टिक, वात आदि दोषले पेटभित्र अड्किएका वा गोटा परेर बसेका मलमूत्रलाई टुक्राटुक्रा पारी मलद्वार वा मूत्रनली मार्फत बाहिर निकाल्ने, तृप्तिदायक, मिठो, रुचिकर, पचेपछि बलदायक तथा कफविकार, पित्तविकार, थकाई, भोक, तिर्खा, खटिरा र आँखाको रोग नाशक हुन्छ

। जौको सातु घामले पीडित, डाह हुने, हिँडेर थाकेका र व्यायाम गरेर लखतरान भएका मानिसलाई लाभदायक हुन्छ ।

## जौ मिसाइएको चनाको सातु

**निस्तुषैश्चणकैर्भृष्टैस्तुर्यांशैश्च यवैः कृताः ॥१७६॥**
**सक्तवः शर्करासर्पिर्युक्ता ग्रीष्मेऽपि पूजिता ।**

चनालाई भुट्नू र बोक्रा निकाल्नू अनि चनाको एक चौथाई जौ भुटेर मिसाई पिँध्नू, जौ मिसाइएको चनाको सातु तयार हुन्छ । यो सातुमा सखर र चिनी मिसाएर खानु ग्रीष्म ऋतुमा पनि उत्तम हुन्छ ।

## चामलको सातु

**सक्तवः शालिसम्भूता वह्निदा लघवो हिमाः ॥१७७॥**
**मधुरा ग्राहिणो रुच्याः पथ्याश्च बलशुक्रदा ।**

चामलको सातुले पाचकाग्निलाई बाल्दछ, पचाउन हलुका हुन्छ र शीतल गर्दछ । यो मिठो, कब्जियत गराउने, रुचिकर, पथ्य, बलदायक र शुक्रवर्धक हुन्छ ।

## सातु खाँदा ध्यान दिनुपर्ने कुरा

**न भुक्त्वा न रदैश्छित्वा न निशायां न वा बहून् ॥१७८॥**
**नजलान्तरितानद्भिः सक्तूनद्यान्न केवलान् ।**
**पृथक्पानं पुनर्दानं सामिषं पयसा निशि ॥१७९॥**
**दन्तच्छेदनमुष्णञ्च सप्त सक्तुषु वर्जयेत् ।**

खाना खाएर, चपाएर, रातमा, धेरै, बीचबीचमा पानी पिउँदै र पानीमा सातुमात्र घोलेर खान हुँदैन । १.सातु खाँदा बेग्लै पानी पिउन, २. एकपटक सातु खाइसकेका व्यक्तिलाई तुरुन्त फेरी सातु खान दिन, ३.मासुसँग सातु खान, ४. पानीसँग मात्र सातु खान, ५.रातमा सातु खान, ५. दाँतले चपाएर सातु खान र ७. तताएर सातु खान : यी सात कुरा सातु खाँदा वा खुवाउँदा नगर्नू ।

## बौर

**यवास्तु निस्तुषा भृष्टाः स्मृता धाना इति स्त्रियाम् ॥१८०॥**
**धानाः स्युर्दुर्जरा रुक्षास्तृट्प्रदा गुरवश्च ताः ।**
**तथा मेहकफच्छर्दिनाशिन्यः सम्प्रकीर्त्तिताः ॥१८१॥**

जौलाई भुस निकाली भुटेर बन्ने खाने कुरालाई बौर (धाना) भनिन्छ । धाना शब्द स्त्रीलिङ्गमा मात्र प्रयोग हुन्छ । बौर ढिलो पच्दछ, रुखो हुन्छ, तिर्खा लगाउँदछ र पचाउन कठिन हुन्छ । यसले प्रमेह, कफविकार र वाकवाकी
नाश गर्दछ ।

## लाजा

**येषां स्युस्तण्डुलास्तानि धान्यानि सतुषाणि च ।**
**भृष्टानि स्फुटितान्याहुर्लाजा इति मनीषिणः ॥१८२॥**
**लाजाः स्युर्मधुराः शीता लघवो दीपनाश्च ते ।**
**स्वल्पमूत्रमला रूक्षा बल्याः पित्तकफच्छिदः ॥१८३॥**
**छर्द्यतीसारदाहास्रमेहमेदस्तृषाऽपहाः ।**

धानलाई बोक्रै समेत भुट्दा फूल उठ्दछ, यसैलाई विद्वानहरूले लाजा भनेका छन् । लाजा गुलियो, शीतल गर्ने, पचाउन सहज, पाचकाग्नि वर्धक, केही दिसापिसाब गराउने, रुखो, बलदायक तथा पित्तविकार, कफविकार, वाकवाकी, अतिसार, डाह, रक्तविकार, प्रमेह, बोसोविकार र तिर्खा नाशक हुन्छ ।

## चिउरा

**शालयः सतुषा आर्द्रा भृष्टा अस्फुटितास्ततः ॥१८४॥**
**कुट्टिताश्चिपिटाःप्रोक्तास्ते स्मृताः पृथुका अपि ।**
**पृथुका गुरवो वातनाशनाः श्लेष्मला अपि ॥१८५॥**
**सक्षीरा बृंहणा वृष्या बल्या भिन्नमलाश्च ते ।**

धानलाई पानीमा भिजाएर चिसै भुटी फूल नउठ्दै निकाली ओखलमा कुटेर भुस अलग्याएपछि बन्ने खाद्य पदार्थलाई चिउरा भनिन्छ । यसलाई संस्कृतमा चिपिट वा पृथुक भनिन्छ । चिउरा पचाउन कठिन, वातविकार नाशक र कफविकार गर्ने गुणको हुन्छ । चिउरा दूधसँग खानाले यो पौष्टिक, वीर्यवर्धक, बलदायक र दिसा पातल्याउने गुणको हुन्छ ।

## होलक (परिकारविशेष)

**अर्द्धपक्वैः शमीधान्यैस्तृणभृष्टैश्च होलकः ॥१८६॥**
**होलकोऽल्पानिलोः मेदः कफदोषत्रयापहः ।**
**भवेद् यो होलको यस्य स च तत्तद्गुणो भवेत् ॥१८७॥**

आधा पाकेको चना आदि शमीधान्यलाई झासझुस बालेर भुटेपछि त्यसलाई होलक भनिन्छ । यसले थोरै वातविकार गर्दछ तथा बोसोविकार, कफविकार र त्रिदोष नाश गर्दछ । जुन अन्नको होलक बनाइएको हो त्यसमा त्यही अन्नको गुण हुन्छ ।

## ऊची (परिकारविशेष)

**मञ्जरी त्वर्द्धपक्वा वा यवगोधूमयोर्भवेत् ।**
**तृणानलेन संभृष्टा बुधैरूचीति सा स्मृता ॥१८८॥**
**ऊची कफप्रदा बल्या लघ्वी पित्तानिलापहा ।**

जौ वा गहुँको आधा पाकेको बालालाई झासझुस बालेर भुटेपछि हुने खाने कुरालाई विद्वानहरूले ऊची नाम दिएका छन् । यो कफविकार गर्ने, बलदायक, पचाउन सहज तथा पित्तविकार र वातविकार नाशक हुन्छ ।

## कुल्माष (परिकारविशेष)

**अर्धस्विन्नास्तु गोधूमा अन्येऽपि चणकादयः ॥१८९॥**
**कुल्माषा इति कथ्यन्ते शब्दशास्त्रेषु पण्डितैः ।**
**कुल्माषागुरवो रूक्षा वातला भिन्नवर्चसः ॥१९०॥**

आधा पाकेको गहुँ, चना आदिलाई पानीमा उसिनेर वा भुटेर बन्ने खानेकुरालाई शब्दशास्त्रका विद्वानहरू कुल्माष भन्दछन् । यो पचाउन कठिन, रुखो, वातविकार गर्ने र दिसा खुकुल्याउने गुणको हुन्छ ।

## पलल (परिकारविशेष)

**पललन्तु समाख्यातं सैक्षवं तिलपिष्टकम् ।**
**पललं मलकृद् वृष्यं वातघ्नं कफपित्तकृत् ॥१९१॥**
**बृंहणं च गुरु स्निग्धं मूत्राधिक्यनिवर्त्तकम् ।**

तिललाई पिँधेर त्यसमा सखर आदि मिसाएपछि त्यो पलल हुन्छ । पलल दिसा लगाउने, वीर्यवर्धक, वातविकार नाशक, कफकारक, पित्तकारक, पौष्टिक, पचाउन कठिन, चिल्लो, र धेरै पिसाब आउने समस्या वा रोग ठिक गर्ने गुणको हुन्छ ।

## तिलको पिना

**तिलकिट्टन्तु पिण्याकस्तथा तिलखलि स्मृता ॥१९२॥**
**पिण्याको लेखनो रूक्षो विष्टम्भी दृष्टिदूषणः ।**

तिलको पिनालाई संस्कृतमा तिलकिट्ट, पिण्याक वा तिलखलि भनिन्छ । यो पिना लेखनी, रुखो, कब्जियत गराउने र दृष्टिशक्तिलाई दूषित पार्ने गुणको हुन्छ ।

## चामल

**तण्डुलो मेहजन्तुघ्नः स नवस्त्वतिदुर्जरः ॥१९३॥**

चामल प्रमेह र कीरा नाशक हुन्छ । तर यो नयाँ भए अति नै ढिलो पच्दछ ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे कृतान्नवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको परिकार वर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## अथ वारिवर्गः
## (पानी वर्ग)
## पर्यायवाची शब्द र लाभ

**पानीयं सलिलं नीरं कीलालं जलमम्बु च ।**
**आपो वार्वारि कं तोयं पयः पाथस्तथोदकम् ॥१॥**
**जीवनं वनमम्भोऽर्णोऽमृतं घनरसोऽपि च ।**
**पानीयं श्रमनाशनं क्लमहरं मूर्च्छापिपासापहं**
**तन्द्राच्छर्दिविबन्धहृद्‌बलकरं निद्राहरं तर्पणम् ।**
**हृद्यं गुप्तरसं ह्यजीर्णशमकं नित्यं हितं शीतलं**
**लघ्वच्छं रसकारणं निगदितं पीयूषवज्जीवनम् ॥२॥**

पानीय, सलिल, नीर, कीलाल, जल, अम्बु, आप (अप् शब्द सधैं बहुवचनान्त हुन्छ), वार, वारि, क, तोय, पय (पयस्), पाथ (पाथस्), उदक, जीवन, वन, अम्भ, अर्ण, अमृत र घनरस : यी पानीका संस्कृत पर्यायवाची नामहरू हुन् । पानीले थकाई, बिना परिश्रमको थकाई, बेहोसी र तिर्खा नाश गर्दछ । यसले उँग, वाकवाकी र कब्जियतलाई हटाउँदछ । पानीले बल दिन्छ र निद्रा भगाउँदछ । यसले तृप्ति दिन्छ । यो मुटुका लागि हितकर, स्वाद नहुने, अजीर्ण नाशक, सधैं फाइदा गर्ने र शीतल गर्ने गुणको हुन्छ । यो पचाउन सहज, स्वच्छ र मिठो हुने हुनाले यसलाई अमृत समान जीवनदाता भनिएको छ ।

### पानीका प्रकार

**पानीयं मुनिभिः प्रोक्तं दिव्यं भौममिति द्विधा ।**
**दिव्यं चतुर्विधं प्रोक्तं धाराजं करकाभवम् ॥३॥**
**तौषारञ्च तथा हैमं तेषु धारं गुणाधिकम् ।**

मुनिजनले दिव्य र भौम गरी पानी दुई किसिमको हुन्छ भनेका छन् । दिव्य पानी पनि धाराज, करकाभव, तौषार र हैम गरी चार किसिमको हुन्छ भनेका छन् । यी पानीमध्ये धाराज पानी अरुभन्दा बढी गुनिलो हुन्छ ।

## धाराज जल (वर्षाको पानी)

**धाराभिः पतितं तोयं गृहीतं स्फीतवाससा ॥४॥**
**शिलायां वसुधायां वा धौतायां पतितञ्च तत् ।**
**सौवर्णे राजते ताम्रे स्फाटिके काचनिर्मिते ॥५॥**
**भाजने मृण्मये वाऽपि स्थापितं धारमुच्यते ।**
**धारं नीरं त्रिदोषघ्नमनिर्देश्यरसं लघु ॥६॥**
**सौम्यं रसायनं बल्यं तर्पणं ह्लादि जीवनम् ।**
**पाचनं मतिकृन्मूर्च्छातन्द्रादाहश्रमक्लमान् ॥७॥**
**तृष्णां हरति तत् पथ्यं विशेषात्प्रावृषि स्मृतम् ।**

आकाशबाट धारा जसरी सफा ढुङ्गा वा जमिनमा खसेको (परेको) पानी उठाई बाक्लो कपडाले छानेर सुन, चाँदी, तामा, स्फटिक, सिसा वा माटाका भाँडामा राख्नू । यस्तो पानीलाई धाराज पानी भनिन्छ । यो पानी त्रिदोषनाशक, स्वाद जान्न नसकिने, पचाउन सहज, शीतल गर्ने, रसायनी, बलदायक, तृप्तिदायक, मन प्रसन्न पार्ने, जीवनरूपी, पाचक र बुद्धिवर्धक हुन्छ । यसले बेहोसी, उँग वा भुँगी, डाह, थकाई, बिना परिश्रमको थकाई र तिर्खा नाश गर्दछ । यस्तो पानी विशेष गरी वर्षा ऋतुको पथ्य हुन्छ ।

**धाराजलं च द्विविधं गाङ्गसामुद्र भेदतः ॥८॥**

गाङ्ग र सामुद्र गरी धाराज पानी दुई किसिमको हुन्छ ।

**आकाशगङ्गासम्बन्धिजलमादाय दिग्गजाः ।**
**मेघैरन्तरिता वृष्टिं कुर्वन्तीति वचः सताम् ॥९॥**
**गाङ्गमाश्वयुजे मासि प्रायो वर्षति वारिदः ।**
**सर्वथा तज्जलं ज्ञेयं तथैव चरके वचः ॥१०॥**
**स्थापिते हेमजे पात्रे राजते मृण्मयेऽपि वा ।**
**शाल्यन्नं येन संसिक्तं भवेदक्लेदि वर्णवत् ॥११॥**
**तद्गाङ्गं सर्वदोषघ्नं ज्ञेयं सामुद्रमन्यथा ।**
**तत्तु सक्षारलवणं शुक्रदृष्टिबलापहम् ॥१२॥**
**विस्रञ्च दोषलं तीक्ष्णं सर्वकर्मसु नो हितम् ।**
**सामुद्रं त्वाश्विने मासि गुणैर्गाङ्गवदादिशेत् ॥१३॥**

सत्पुरुषहरु भन्दछन् कि दिग्गजहरू आकाशगङ्गाबाट पानी लिई बादलमा लुकेर वर्षा गराउँदछन् । विशेषतः असोज महिनामा पर्ने पानी आकाशगङ्गाकै पानी हुन्छ । त्यसैले यो पानीलाई गाङ्गजल समझिनु पर्दछ । चरक पनि भन्दछन् कि-सुन, चाँदी वा माटाको भाँडामा राखिएको जुन धाराज पानीमा भिजाइएको सेतो चामलको रङमा परिवर्तन हुँदैन भने त्यो सबै खालको दोष नाशक गाङ्गजल भनी जान्नू । अन्यथा भए (वा चामलको रङ बदलिए) त्यो जल सामुद्र धाराज जल हुन्छ । यस्तो सामुद्र जल क्षार र नुन मिसिएको; शुक्र, दृष्टिक्षमता र बल नाशक; गनाउने, दूषित र तिक्खर हुन्छ । यो जल कुनै पनि कार्यमा प्रयोग गर्नु

फाइदाजनक हुँदैन । तर यही जल पनि यदि असोज महिनामा सङ्कलन गरिएको छ भने त्यो गाङ्गजल समान गुनिलो हुन्छ भनी जान्नू ।

**यतोऽगस्त्यस्य दिव्यर्षेरुदयात्सकलं जलम् ।**
**निर्मलं निर्विषं स्वादु शुक्रलं स्याददोषलम् ॥१४॥**

शरद ऋतुमा अगस्त्य नामको तारा उदाउँदछ । यो ताराले गर्दा आकाशको सबै पानी स्वच्छ, विषरहीत, स्वादिलो र शुक्रजनक बन्दछ । दोषजनक पनि हुँदैन ।

व्याख्या : नेपाली बृहत् शब्दकोश (अगस्ति) : एक तारा; अगस्तितारो । उर्वशी नामकी अप्सरालाई देखि पतन भएको मित्रावरुणको वीर्य नजिकै रहेको एउटा कलशमा र भुइँमा पर्न गयो । कलशमा परेको वीर्यबाट अगस्त्य ऋषि र जमिनमा परेको वीर्यबाट वसिष्ठ ऋषि जन्मिए । अगस्त्य ऋषिले एकपटक सबै समुद्रको जल पिई सुकाइ दिए । यिनै अगस्त्य ऋषि ताराको रूपमा असोजमा उदाउँछन् र सोसिएर बादल बनेको समुद्रको जललाई शुद्ध पार्दछन् । अगस्त्यका सम्बन्धमा कथाहरु यस्तै यस्तै छन् । अब प्रश्न उठ्दछ यो अगस्त्य नामक तारा कुनै बेला पृथ्वीको अति नजिकै आएको त थिएन ? ताराहरु टाढाका सूर्य हुन्, विज्ञान यसै भन्दछ । पृथ्वीको नजिकै अर्को सूर्य (अगस्त्य तारा) आउँदा कुनै बेला पृथ्वीको पूरै जल सुकेको पो हो कि ? यो तारोमा कुनै विशेष गुण वा विशेषता वा विकिरण उत्सर्जन गर्ने क्षमता त छैन ? जसले अन्तरीक्षमा रहेको पानीलाई शुद्ध पार्दछ । यी कुरा विज्ञानले मन्थन गर्ने विषय हुन्, मैले भेटिएका ज्ञानका आधारमा विषयवस्तु उत्थान मात्र गर्न सकैं ।

**फूत्कारविषवातेन नागानां व्योमचारिणाम् ।**
**वर्षासु सविषं तोयं दिव्यमप्याश्विनं विना ॥१५॥**

वर्षाऋतुमा आकाशमा विचरण गर्ने दिव्य नागका निःश्वासबाट निस्कने विषालु वायुले प्रदूषित भई आकाशको पानी विषाक्त हुन्छ । असोजमा हुँदैन । यसैले असोजको आकाशको पानी सर्वोत्तम र पिउन योग्य हुन्छ ।

**अनार्त्तवं प्रमुञ्चन्ति वारि वारिधरास्तु यत् ।**
**तत्त्रिदोषाय सर्वेषां देहिनां परिकीर्त्तितम् ॥१६॥**

पानी पर्ने बाहेकका ऋतुमा (बेमौसम) मा बादलले बर्साउने पानी सबै शरीरधारी जीवका लागि त्रिदोषकारक हुन्छ भनिएको छ । (अनार्त्तव भनेको पुष, माघ, फागुन र चैत महिना हुन्) ।

### असिनाको पानी

**दिव्यवाय्वग्निसंयोगात् संहताः खात् पतन्ति याः ।**
**पाषाणखण्डवच्चापस्ताः कारक्योऽमृतोपमाः ॥१७॥**
**करकाजं जलं रूक्षं विशदं गुरु च स्थिरम् ।**

**दारुणं शीतलं सान्द्रं पित्तहृत्कफवातकृत् ॥१८॥**

आकाशमा रहेका वायु र अग्निको संयोगले ठोस जस्तै बनेर जुन पत्थर जस्ता असिना पर्ने गर्दछ कारक नामले चिनिने त्यो असिनाको जल अमृतसमान हुन्छ । यस्तो जल रुखो, सफा, पचाउन कठिन, शरीरलाई स्थिर बनाउने, कठोर, बाक्लो, पित्तविकार नाशक, कफविकारकारक र वातविकार गर्ने गुणको हुन्छ ।

## तुसारोको पानी (तौषार जल)

**अपि नद्याः समुद्रान्ते वह्निरापस्तदुद्भवाः ।**
**धूमावयवनिर्मुक्तास्तुषाराख्यास्तु ताः स्मृताः ॥१९॥**

नदीदेखि समुद्रसम्मको पानीमा हुने अग्निबाट उत्पन्न हुने धुवाँको अंश नभएको जललाई तुषार भनिन्छ ।

**अपथ्याः प्राणिनां प्रायो भूरुहाणान्तु ता हिताः ।**
**तुषाराम्बु हिमं रूक्षं स्याद्वातलमपित्तलम् ॥२०॥**
**कफोरुस्तम्भकण्ठाग्निमेहगण्डादिरोगनुत् ।**

सामान्यतः तुसारोको पानी प्राणीका लागि अपथ्य र वृक्षका लागि हितकर हुन्छ । यो पानी शीतल गर्ने, रुखो, वातविकार गर्ने, केही पित्तविकार गर्ने तथा कफविकार, ऊरुस्तम्भ, घाँटीका रोग, पाचनशक्तिसम्बन्धी रोग, प्रमेह, गलगाँड आदि जस्ता रोग नाशक हुन्छ ।

## हिउँको पानी (हैम जल)

**हिमवच्छिखरादिभ्यो द्रवीभूयाभिवर्षति ॥२१॥**
**यत्तदेव हिमं हैमं जलमाहुर्मनीषिणः ।**
**हिमाम्बु शीतं पित्तघ्नं गुरु वातविवर्द्धनम् ॥२२॥**

विद्वानहरूले हिमाल आदि स्थानको हिउँ पग्लेर बहने पानीलाई हिमजल वा हैमजल भनिन्छ भनेका छन् । यस्तो पानी शीतल गर्ने, पित्तविकार नाशक, पचाउन कठिन र वातविकार बढाउने गुणको हुन्छ ।

**और्वानलधूमेरितमम्बु समुद्रस्य यद्घनीभूतम् ।**
**पवनानीतमुदीच्यां तद्धिममिति कथ्यते सद्भिः ॥२३॥**

सज्जनहरु भन्दछन् कि-वडवानलको धुवाँबाट प्रेरित भई समुद्रको जुन पानी हावाद्वारा उत्तर दिशामा लगेर ठोसजस्तो हुन्छ त्यसैलाई हिउँ भनिन्छ ।

**हिमन्तु शीतलं रूक्षं दारुणं सूक्ष्ममित्यपि ।**
**न तद् दूषयते वातं न च पित्तं न वा कफम् ॥२४॥**

हिउँ शीतल गर्ने, रुखो, कठोर र सूक्ष्म हुन्छ । यसले न पित्त, न वात र न त कफविकार नै गर्दछ ।

## जमिनको पानी (भौमजल)

**भौममम्भो निगदितं प्रथमं त्रिविधं बुधैः ।**
**जाङ्गलं परमानूपं ततः साधारणं क्रमात्॥२५॥**

विद्वानहरूले भौम वा जमिनको पानी जाङ्गल, आनूप र साधारण गरी तीन प्रकारको हुन्छ भनी बताएका छन् । यिनका बारेमा क्रमैले बताइन्छ ।

## जाङ्गल जल

**अल्पोदकोऽल्पवृक्षश्च पित्तरक्तामयान्वितः ।**
**ज्ञातव्यो जाङ्गलो देशस्तत्रत्यं जाङ्गलं जलम्॥२६॥**

जहाँ थोरै पानी र थोरै रूख हुन्छन् तथा पित्तजन्य र रक्तजन्य रोग धेरै हुन्छ त्यस्तो स्थानलाई जाङ्गल देश भनिन्छ । यस्तो स्थानको पानीलाई जाङ्गल जल भनिन्छ ।

## आनूप जल

**वह्वम्बुर्बहुवृक्षश्च वातश्लेष्मामयान्वितः ।**
**देशोऽनूप इति ख्यात आनूपं तद्भवं जलम्॥२७॥**

जहाँ धेरै पानी र धेरै रूख हुन्छन् तथा वात र कफजन्य रोग बढी हुन्छ त्यस्तो स्थानलाई आनूप देश भनिन्छ । आनूप देशमा हुने पानीलाई आनूप जल भनिन्छ ।

## साधारण जल

**मिश्रचिह्नस्तु यो देशः स हि साधारणः स्मृतः ।**
**तस्मिन्देशे यदुदकं तत्तु साधारणं स्मृतम्॥२८॥**

जहाँ जाङ्गल र आनूपको लक्षण मिश्रित हुन्छ, त्यसलाई साधारण देश र यस्ता देशमा हुने जललाई साधारण जल भनिन्छ ।

## जाङ्गल जलका गुण

**जाङ्गलं सलिलं रूक्षं लवणं लघु पित्तनुत् ।**

**वह्निकृत्कफहृत्पथ्यं विकारान्हरते बहून्॥२९॥**

जाङ्गल जल रुखो, नुनिलो, पचाउन हलुका, पित्तविकार नाशक, पाचकाग्नि वर्धक, कफविकार नाशक, पथ्य र अनेक थरी रोग नाशक हुन्छ ।

## आनूप जलका गुण

**आनूपं वार्यभिष्यन्दि स्वादु स्निग्धं घनं गुरु ।**
**वह्निहृत्कफकृद्धृद्यं विकारान्कुरुते बहून्॥३०॥**

आनूप जल कब्जियत गराउने, स्वादिलो, चिल्लो, गह्रौं, पचाउन कठिन, वातविकार नाशक, कफविकार गर्ने, र अनेक थरी रोग निकाल्ने गुणको हुन्छ ।

## साधारण जलका गुण

**साधारणं तु मधुरं दीपनं शीतलं लघु ।**
**तर्पणं रोचनं तृष्णादाहदोषत्रयप्रणुत्॥३१॥**

साधारण जल मिठो, दीपनी, शीतल गर्ने, पचाउन सहज, तृप्तिदायक, रुचिकर तथा तिर्खा, डाह र त्रिदोष नाशक हुन्छ ।

## नदीको पानी (नादेय)

**नद्या नदस्य वा नीरं नादेयमिति कीर्त्तितम् ।**
**नादेयमुदकं रूक्षं वातलं लघु दीपनम्॥३२॥**
**अनभिष्यन्दि विशदं कटुकं कफपित्तनुत् ।**

नदी वा नद (खोला) को जललाई नादेय भनिन्छ । यो जल रुखो, वातविकार गर्ने, पचाउन सहज, पाचकाग्नि वर्धक, थोरै कब्जियत गर्ने, विशद, पिरो तथा कफविकार र पित्तविकार नाशक हुन्छ ।

**नद्यः शीघ्रवहा लघ्व्यः सर्वायाश्चामलोदकाः॥३३॥**
**गुर्व्यः शैवलसंछन्ना मन्दगाः कलुषाश्च याः ।**
**हिमवत्प्रभवाः पथ्या नद्योऽश्माहतपाथसः॥३४॥**
**गङ्गाशतद्रुसरयूयमुनाऽऽद्या गुणोत्तमाः ।**
**सह्यशैलभवा नद्यो वेणागोदावरीमुखाः॥३५॥**
**कुर्वन्ति प्रायशः कुष्ठमीषद्वातकफावहाः ।**

तिव्र गतिमा बहने नदीको पानी पचाउन हलुका र स्वच्छ हुन्छ । मन्द गतिमा बहने तथा लेउ लागेका नदीको पानी पचाउन कठिन र दूषित हुन्छ । हिमालबाट निस्केका र चट्टानसँग ठोक्किँदै बहेका गङ्गा, शतद्रु, सरयू, यमुना आदि नदीको पानी उत्तम गुणको हुन्छ । सह्य पर्वतबाट निस्कने वेणा, गोदावरी आदि नदीको पानी कुष्ठरोग निकाल्ने तथा थोरै वातविकार र कफविकार गर्ने गुणको हुन्छ ।

## नदी आदिको पानीको गुण

**नदीसरस्तडागस्थे कूपप्रस्रवणादिजे ॥३६॥**
**उदके देशभेदेन गुणान्दोषांश्च लक्षयेत् ।**

नदी, पोखरी, तलाउ, कूप आदिको पानी ती जाङ्गल, आनूप र साधारण जुन देशमा हुन्छन् त्यही देशमा हुने पानीको गुण अनुसारका गुण र अवगुण ले युक्त हुन्छन् भनी जान्नू ।

## औद्भिद जल (मूलको पानी)

**विदार्य भूमिं निम्नां यन्महत्या धारया स्रवेत् ॥३७॥**
**तत्तोयमौद्भिदं नाम वदन्तीति महर्षयः ।**
**औद्भिदं वारि पित्तघ्नमविदाह्यतिशीतलम् ॥३८॥**
**प्रीणनं मधुरं बल्यमीषद्वातकरं लघु ।**

होचो जमिनलाई छेडेर (निस्की) जुन पानी ठूलो धारा भएर बहन्छ त्यसलाई महर्षिहरूले औद्भिद जल भनेका छन् । यो पानी पित्तविकार नाशक, डाह नगर्ने र अति शीतल गर्ने गुणको हुन्छ । यो तृप्तिदायक, मिठो, बलदायक, थोरै वातविकार गर्ने र पचाउन हलुका हुन्छ ।

## झरनाको पानी

**शैलसानुस्रवद्वारिप्रवाहो निर्झरो झरः ॥३९॥**
**स तु प्रस्रवणश्चापि तत्रत्यं नैर्झरं जलम् ।**
**नैर्झरं रुचिकृन्नीरं कफघ्नं दीपनं लघु ॥४०॥**
**मधुरं कटुपाकं च वातलं स्यादपित्तलम् ।**

पहाडका अग्ला भागबाट झरिरहेको जलको प्रवाह (झरना) लाई संस्कृतमा निर्झर, झर वा प्रस्रवण भनिन्छ । झरनाको पानी रुचिकर, कफविकार नाशक, दीपनी, पचाउन हलुका, मिठो, पचेपछि पिरो, वातविकार गर्ने र थोरै पित्तविकार गर्ने गुणको हुन्छ ।

## तलाउको पानी (सारस जल)

**नद्याः शैलादिरुद्धायाः यत्र संस्रुत्य तिष्ठति ॥४१॥**

**तत्सरो जलजच्छन्नं तदम्भः सारसं स्मृतम् ।**
**सारसं सलिलं बल्यं तृष्णाघ्नं मधुरं लघु ॥४२॥**
**रोचनं तुवरं रूक्षं बद्धमूत्रमलं स्मृतम् ।**

पर्वत आदिका कारण थुनिएको नदीको पानी जहाँ झरेर जम्मा हुन्छ, त्यस्तो कमलका पातले ढाकेको ताल (सर) को पानीलाई सारस जल भनिन्छ । यस्तो जल बलदायक, तिर्खा मेट्ने, मिठो, पचाउन सहज, रुचिकर, टर्रो स्वादको, रुखो र मलमूत्रलाई रोक्ने गुणको हुन्छ ।

## तालको पानी (ताडाग जल)

**प्रशस्तभूमिभागस्थो बहुसंवत्सरोषितः ॥४३॥**
**जलाशयस्तडागः स्यात्ताडागं तज्जलं स्मृतम् ।**
**ताडागमुदकं स्वादु कषायं कटुपाकि च ॥४४॥**
**वातलं बद्धविण्मूत्रमसृक्पित्तकफापहम् ।**

उत्तम भूमि (प्रशस्त भूमि) मा रहेको धेरै वर्ष पुरानो जलाशयलाई ताल भनिन्छ । यस्ता तालको पानीलाई तडाग जल भनिन्छ । यो पानी स्वादिलो, टर्रो, पचेपछि पिरो, वातविकार गर्ने, मलमूत्र रोक्ने तथा रक्तपित्त र कफविकार नाश गर्ने गुणको हुन्छ ।

## वापीको पानी (वाप्य)

**पाषाणैरिष्टकाभिर्वा बद्धः कूपो बृहत्तरः ॥४५॥**
**ससोपानो भवेद्वापी तज्जलं वाप्यमुच्यते ।**
**वाप्यं वारि यदि क्षारं पित्तकृत्कफवातहृत् ॥४६॥**
**तदेव मिष्टं कफकृद्वातपित्तहरं भवेत् ।**

ढुङ्गा वा इँटाले वरिपरि घेरिएको र सिँढी समेत भएको ठूलो कुवालाई वापी भनिन्छ । यस्तो कुवाको पानीलाई वाप्य जल भनिन्छ । वापीको पानी नुनिलो भए पित्तकारक तथा कफविकार र वातविकार नाशक हुन्छ । यस्तो पानी मिठो भए कफकारक तथा वातविकार र पित्तविकार नाशक हुन्छ ।

## कुवा वा इनारको पानी (कौप)

**भूमौ खातोऽल्पविस्तारो गम्भीरो मण्डलाकृतिः ॥४७॥**
**बद्धोऽबद्धः स कूपः स्यात्तदम्भः कौपमुच्यते ।**
**कौपं पयो यदि स्वादु त्रिदोषघ्नं हितं लघु ॥४८॥**
**तत्क्षारं कफवातघ्नं दीपनं पित्तकृत्परम् ।**

कम फराकिलो, गहिरो, गोलाकार र वरिपरि इँट्टाले घेरिएका वा नघेरिएको जलाशयलाई कुवा (कूप) भनिन्छ । यसको पानीलाई कौपजल भनिन्छ । कुवाको पानी मिठो भए त्रिदोषनाशक, हितकारी र पचाउन सहज हुन्छ । यदि यो पानी नुनिलो छ भने यो कफविकार नाशक, वातविकार नाशक, पाचकाग्नि वर्धक र धेरै नै पित्तविकार वर्धक हुन्छ ।

## चौञ्ज्य जल

**शिलाकीर्णं स्वयं श्वभ्रं नीलाञ्जनसमोदकम् ॥४९॥**
**लतावितानसंच्छन्नं चौञ्ज्यमित्यभिधीयते ।**
**अश्मादिभिरबद्धं यत्तच्चौञ्ज्यमिति वा परे ॥५०॥**
**तत्रत्यमुदकं चौञ्ज्यं मुनिभिस्तदुदाहृतम् ।**
**चौञ्ज्यं वह्निकरं नीरं रूक्षं कफहरं लघु ॥५१॥**
**मधुरं पित्तनुद्रुच्यं पाचनं विशदं स्मृतम् ।**

आफैं बनेको, पत्थरका टुक्रा भएको, नीलो गाजल जस्तो पानी हुने र लहराहरू फैलिएर ढाकेको जलाशयलाई चौञ्ज्य भनिन्छ । अन्य विद्वानले ढुङ्गा आदिले नघेरिएको जलाशयलाई चौञ्ज्य भनेका छन् । यसको पानीलाई मुनिजनहरूले चौञ्ज्य जल नाम दिएका छन् । यसको पानी पाचकाग्नि वर्धक, रुखो, कफविकार नाशक, पचाउन सहज, मिठो, पित्तविकार नाशक, रुचिकर, खाएको कुरा पचाउने र विशद गुणको हुन्छ ।

## सानातिना पोखरी (पल्वल) को पानी

**अल्पं सरः पल्वलं स्याद्यत्र चन्द्रर्क्षगे रवौ ॥५२॥**
**न तिष्ठति जलं किञ्चित्तत्रत्यं वारि पाल्वलम् ।**
**पाल्वलं वार्यभिष्यन्दि गुरु स्वादु त्रिदोषकृत् ॥५३॥**

सानातिना त्यस्ता पोखरी जसमा चन्द्रमाको राशिमा सूर्य हुँदा थोपो पानी हुँदैन त्यस्तो जलाशयलाई पल्वल र त्यस्तो जलाशयमा हुने पानीलाई पाल्वल जल भनिन्छ । यो पानी अभिष्यन्दी, पचाउन कठिन, स्वादिलो र त्रिदोषकारक हुन्छ ।
चुनेकर : चन्द्रमाको राशि कर्कट हो । कर्कटमा सूर्य हुँदा पोखरी सुक्दैनन्, झनै भरिन्छन् । अतः यहाँ चन्द्रमाको राशि नभई चन्द्रमाको नक्षत्र मृगशिरा नक्षत्रमा सूर्य हुँदा भनी अर्थ लगाउनु उपयुक्त हुन्छ । यो भनेको जेठ महिना हो ।

## विकिरजल

**नद्यादिनिकटे भूमिर्या भवेद्वालुकामयी ।**
**उद्धाव्यते ततो यत्तु तज्जलं विकिरं विदुः ॥५४॥**
**विकिरं शीतलं स्वच्छं निर्दोषं लघु च स्मृतम् ।**

**तुवरं स्वादु पित्तघ्नं क्षारं तत्पित्तलं मनाक् ॥५५॥**

नदी आदिका नजिकै रहेको बलौटे जमिनमा खनेर निकालिएको पानीलाई विकिरजल भनिन्छ । यस्तो जल शीतल गर्ने, स्वच्छ, दोषरहीत, पचाउन हलुका, टर्रो, स्वादिलो र पित्तविकार नाशक हुन्छ । यदि यो नुनिलो छ भने यसले थोरै पित्तविकार गर्दछ ।

## खेतको पानी (कैदार)

**केदारः क्षेत्रमुद्दिष्टं कैदारं तज्जलं स्मृतम् ।**
**कैदारं वार्यभिष्यन्दि मधुरं गुरु दोषकृत् ॥५६॥**

केदार भनेको खेत हो । खेतमा हुने पानीलाई कैदार भनिन्छ । खेतको पानी अभिष्यन्दि, मिठो, पचाउन कठिन र दोषकारक हुन्छ ।

## वर्षाको पानी (वार्षिकं)

**वार्षिकं तदहर्वृष्टं भूमिस्थमहितं जलम् ।**
**त्रिरात्रमुषितं तत्तु प्रसन्नममृतोपमम् ॥५७॥**

भर्खर परेर जमिनमा जमेको पानीलाई वर्षात्को पानी (वार्षिकं) भनिन्छ । यो पानी हितकारी हुँदैन । तर यही पानी तीन रात बिती निथ्रेर स्वच्छ भएको छ भने अमृतसमान गुनिलो हुन्छ ।

## ऋतुअनुसारका पेय जल

**हेमन्ते सारसं तोयं ताडागं वा हितं स्मृतम् ।**
**हेमन्ते विहितं तोयं शिशिरेऽपि प्रशस्यते ॥५८॥**
**वसन्तग्रीष्मयोः कौपं वाप्यं वा नैर्झरं जलम् ।**
**नादेयं वारि नादेयं वसन्तग्रीष्मयोर्बुधैः ॥५९॥**
**विषवद्वनवृक्षाणां पत्राद्यैर्दूषितं यतः ।**
**औद्भिदं वाऽन्तरिक्षं वा कौपं वा प्रावृषि स्मृतम् ॥६०॥**
**शस्तं शरदि नादेयं नीरमंशूदकं परम् ।**

हेमन्त ऋतु (मंसिर-पुष) मा तलाउ वा तालको पानी हितकारी हुन्छ । हेमन्त ऋतुमा हितकर भनिएको पानी शिशिर (माघ-फागुन) मा पनि हितकारी हुन्छ । विद्वानले वसन्त र ग्रिष्म ऋतुमा नदीको जल नपिउनू किन कि जङ्गली वृक्षका पात आदि परेर यो पानी विषाक्त भएको हुन्छ (वसन्त ऋतुमा बोटविरुवाका पुराना पात झरेर नयाँ पात पलाउने गर्दछ) । वर्षा ऋतुमा जमिनको (औद्भिद), आकाशबाट परेको (आन्तरिक्ष) वा कुवाको पानी (कौप्य) पिउनु उत्तम हुन्छ । शरद ऋतुमा नदीको वा अंशूदक नामक पानी पिउनु हितकर हुन्छ ।

## अंशूदक जल

**दिवा रविकरैर्जुष्टं निशि शीतकरांशुभिः ॥६१॥**
**ज्ञेयमंशूदकं नाम स्निग्धं दोषत्रयापहम् ।**
**अनभिष्यन्दि निर्दोषमान्तरिक्षजलोपमम् ॥६२॥**
**बल्यं रसायनं मेध्यं शीतं लघु सुधासमम् ।**

जुन जलमा दिनभर सूर्यको र रातभर चन्द्रमाको किरण पर्दछ त्यो जललाई 'अंशूदक जल' भनिन्छ । यो पानी चिल्लो, त्रिदोषनाशक, अनभिष्यन्दि, दोषरहीत, अन्तरिक्ष जलसमान, बलदायक, रसायनी, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, शीतल गर्ने, पचाउन हलुका र अमृतसमान हुन्छ ।

## शरद ऋतुमा पानी स्वच्छ हुने कारण

**शरदि स्वच्छमुदयादगस्त्यादखिलं हितम् ॥६३॥**

शरद् ऋतुमा अगस्त्य तारा उदाउनाले गर्दा सबै किसिमका जल स्वच्छ हुन्छन्, त्यसैले हितकर हुन्छन् ।

## महिनाअनुसारका पेय जल

**पौषे वारि सरोजातं माघे तत्तु तडागजम् ।**
**फाल्गुने कूपसम्भूतं चैत्रे चौञ्ज्यं हितम् मतम् ॥६४॥**
**वैशाखे नैर्झरं नीरं ज्येष्ठे शस्तं तथौद्भिदम् ।**
**आषाढे शस्यते कौपं श्रावणे दिव्यमेव च ॥६५॥**
**भाद्रे कौपं पयः शस्तमाश्विने चौञ्ज्यमेव च ।**
**कार्त्तिके मार्गशीर्षे च जलमात्रं प्रशस्यते ॥६६॥**

पुसमा तलाउको, माघमा तालको, फागुनमा कुवाको, चैतमा चौञ्ज्यको, वैशाखमा झर्नाको, जेठमा मूलको, असारमा कुवाको, साउनमा अन्तरिक्षको, भदौमा कुवाको, असोजमा चौञ्ज्यको र र कात्तिक वा मंसिरमा सबैतिरको जल हितकर हुन्छ ।

## भौम जल सङ्कलन गर्ने समय

**भौमानामम्भसां प्रायो ग्रहणं प्रातरिष्यते ।**
**शीतत्वं निर्मलत्वञ्च यतस्तेषां मतो गुणः ॥६७॥**

प्रायः भौमजल अरुबेलामा भन्दा बिहान सङ्कलन गर्नु उत्तम हुन्छ किन कि यतिखेर यो जल शीतल र स्वच्छ हुने हुनाले बढी गुनिलो हुने गर्दछ ।

## खाना खाँदा पिउने पानीको मात्रा

**अत्यम्बुपानान्न विपच्यतेऽन्नं निरम्बुपानाच्च स एव दोषः ।**
**तस्मान्नरो वह्निविवर्द्धनाय मुहुर्मुहुर्वारि पिबेदभूरि ॥६८॥**

खाना खाँदा धेरै पानी पिए खाएको खाना पच्दैन । पानी पिउँदै नपिए पनि यही दोष हुन्छ । त्यसैले मानिसले पाचनशक्ति बढाउनका लागि यो बेलामा पटकपटक थोरै थोरै पानी पिउनू ।

## चिसो पानी पिउन योग्य अवस्था

**मूर्च्छापित्तोष्ण दाहेषु विषे रक्ते मदात्यये ।**
**श्रमे भ्रमे विदग्धेऽन्नेतमके वमथौ तथा ॥६९॥**
**ऊर्ध्वगे रक्तपित्ते च शीतमम्भः प्रशस्यते ।**

बेहोस हुँदा, पित्तजन्य रोगमा, गर्मी हुँदा, शरीरमा डाह हुँदा, विषविकारमा, रक्तविकारमा, मदात्ययमा , थकाई लाग्दा, भ्रम हुँदा वा झुँगी लाग्दा, तमक रोगमा, वाकवाकी लाग्दा नाक मुख आदि घाँटीभन्दा माथिका प्वालदबाट रगत निस्कने रक्तपित्त रोगमा चिसो पानी पिउनु हितकर हुन्छ ।

## चिसो पानी पिउन नहुने अवस्था

**पार्श्वशूले प्रतिश्याये वातरोगे गलग्रहे ॥७०॥**
**आध्माने स्तिमिते कोष्ठे सद्यःशुद्धौ नवज्वरे ।**
**अरुचिग्रहणीगुल्मश्वासकासेषु विद्रधौ ॥७१॥**
**हिक्कायां स्नेहपाने च शीताम्बु परिवर्जयेत् ।**

सहनै नसक्ने गरी छातीका करङ दुख्ने रोगमा, पिनास भएको वा रुघाखोकीले च्यापेका बेलामा, शरीरमा वायुजन्य रोग (वातरोग) भए, घाँटी बस्दा वा घाँटीमा कफ जम्मा हुँदा, अपानवायु रोकिएर छालाको थैलो फुले जसरी पेट फुल्ने रोग भए, शरीरका कुनै इन्द्रियले काम नगर्ने अवस्था हुँदा वा जडता (प्यारालाइसिस) हुँदा, कुनै रोगविशेषको उपचारका लागि औषधी खाएर बान्ता गरिएको वा दिसा लगाइएको भए, भर्खर जरो आउन थाल्दा, खानमा अरुचि हुँदा, खाएपिएको नपची बाहिर निस्कने वा पचेपनि पटकपटक गरेर बाहिर निस्कने रोग भए, नसा सुन्निएर गाँठो पर्ने वा वात आदि दोषले छाती वा पेटमा हावाको गोला पर्ने रोग ( गानुगोला) भए, दमको रोग भए, खोकी लागेको भए, गुदद्वार, वस्ति, नाभि, कोखा, तिघ्राका जोर्नी, मिर्गौला, मुटु, कलेजो, फियोमा पैदा भएर कालान्तरमा फुट्ने खटिरा विशेष आएको भए, बाडुली लागिरहने रोगमा र कुनै पनि किसिमको चिल्लो तताएर खाएका बेलामा चिसो पानी नपिउनू ।

## थोरै पानी पिउनुपर्ने अवस्था

**अरोचके प्रतिश्याये मन्देऽग्नौ श्वयथौ क्षये ॥७२॥**

**मुखप्रसेके जठरे कुष्ठे नेत्रामये ज्वरे ।**
**व्रणे च मधुमेहे च पिबेत्पानीयमल्पकम् ॥७३॥**

अरुचि हुँदा, रुघाखोकी वा पिनास हुँदा, पाचनशक्ति कमजोर हुँदा, शरीर सुन्निदा, क्षयरोग हुँदा, मुखप्रसेक हुँदा, पेटमा कुनै रोग हुँदा, कुष्ठरोग हुँदा, आँखामा कुनै रोग हुँदा, जरो आउँदा, घाउखटिरा आएका बेलामा र मधुमेह हुँदा थोरै पानी पिउनु हितकर हुन्छ ।

## पानीको महत्व

**जीवनं जीविनां जीवो जगत् सर्वन्तु तन्मयम् ।**
**नातोऽत्यन्तनिषेधेन कदाचिद्वारि वार्य्यते ॥७४॥**

जल प्राणीका लागि जीवन हो । सारा जगत् जलमय छ । यसैले पानी पिउन नै हुँदैन भनेर कुनै पनि अवस्थामा नियम बसाउन हुँदैन, नबसाउनू ।

**तृष्णा गरीयसी घोरा सद्यःप्राणविनाशिनी ।**
**तस्माद् देयं तृषाऽऽर्त्ताय पानीयं प्राणधारणम् ॥७५॥**
**तृषितो मोहमायाति मोहात्प्राणान्विमुञ्चति ।**
**अतः सर्वास्ववस्थासु न क्वचिद्वारि वारयेत् ॥७६॥**

धेरै तिर्खा खप्नु अत्यन्त डरलाग्दो हुन्छ किन कि यसले फ्याट्ट ज्यान जान सक्दछ । यसैले धेरै तिर्खाएका व्यक्तिलाई  ज्यान बचाउनका लागि पानी पिउन दिनू । धेरै तिर्खाएको मानिस बेहोस हुन्छ र बेहोसीमा उसको ज्यान सक्दछ त्यसैले सबै अवस्थामा पानी पिउन रोक्नु हुँदैन ।

## उत्तम पानीका गुण

**अगन्धमव्यक्तरसं सुशीतं तर्षनाशनम् ।**
**स्वच्छं लघु च हृद्यञ्च तोयं गुणवदुच्यते ॥७७॥**

गन्धरहीत, स्वाद थाहा नहुने, शीतल, तुरुन्त तिर्खा मेट्ने, स्वच्छ, पचाउन सहज हुने र मुटुका लागि लाभदायक पानीलाई उत्तम पानी भनी जान्नू ।

## खराब पानीका गुण

**पिच्छिलं कृमिलं क्लिन्नं पर्णशैवालकर्दमैः ।**
**विवर्णं विरसं सान्द्रं दुर्गन्धं न हितं जलम् ॥७८॥**
**कलुषं छन्नमम्भोजपर्णनीलीतृणादिभिः ।**
**दुःस्पर्शनमसंस्पृष्टं सौरचान्द्रमरीचिभिः ॥७९॥**

**अनार्त्तवं वार्षिकं तु प्रथमं तच्च भूमिगम् ।**
**व्यापन्नं परिहर्त्तव्यं सर्वदोषप्रकोपणम् ॥८०॥**
**तत् कुर्यात्स्नानपानाभ्यां तृष्णाऽध्मानचिरज्वरान् ।**
**कासाग्निमान्द्याभिष्यन्दकण्डूगण्डादिकं तथा ॥८१॥**

लेस्याइलो, कीरा परेको, पात लेउ र हिलोले गर्दा मैलो भएको, रङ खराब भएको, स्वाद बिग्रेको, बाक्लो र गनाउने पानी हितकर हुँदैन । फोहोर, कमलका पात लेउ घाँसपात आदिले ढाकेका स्थानको, छुँदा शरीर चिलाउने, सूर्य र चन्द्रमाको किरण नपरेको, बेमौसममा परेको र वर्षा लाग्ने शुरु हुँदा जमिनमा परी प्रदूषित भएको जल सबै अवस्थामा नपिउनू, त्याज्य हुन्छ, यसले सबै खालका दोष उत्पन्न गर्दछ । यस्तो पानी जसले पिउन वा नुहाउन प्रयोग गर्दछ उसलाई तिर्खारोग, आध्मान, चिरज्वर, खोकी, मन्दाग्नि, अभिष्यन्द, शरीर चिलाउने र गलगाँड आदि रोग लाग्दछ ।

## पानी प्रशोधनका विधि

**निन्दितं चापि पानीयं क्वथितं सूर्यतापितम् ।**
**सुवर्णं रजतं लौहं पाषाणं सिकतामपि ॥८२॥**
**भृशं सन्ताप्य निर्वाप्य सप्तधा साधितं तथा ।**
**कर्पूरजातिपुन्नागपाटलादिसुवासितम् ॥८३॥**
**शुचिसान्द्र पटस्रावि क्षुद्रजन्तुविवर्जितम् ।**
**स्वच्छं कनकमुक्ताऽऽद्यै शुद्धं स्याद्दोषवर्जितम् ॥८४॥**
**पर्णमूलविसग्रन्थिमुक्ताकनकशैवलैः ।**
**गोमेदेन च वस्त्रेण कुर्य्यादम्बुप्रसादनम् ॥८५॥**

प्रदूषित पानीलाई काढापानी पकाए जसरी (एक चौथाई बाँकी नभएसम्म) पकाउनू वा घाममा राख्नू वा सुन, चाँदी, फलाम, पत्थर र बालुवा बेस्सरी तताउँदै सात पटक त्यस्तो पानीमा चोपल्नू । यसपछि कपूर, चमेलीको फूल, पुन्नागको फूल, पाडरीको फूल आदि हालेर बास्नादार बनाउनू । यसपछि ससाना कीरा हटाउनका लागि शुद्ध र सफा कपडाले छान्नू । यसरी स्वच्छ बनाइएको पानी वा सुन अथवा मोती आदिले शुद्ध पारिएको पानी स्वच्छ र दोषरहीत हुन्छ । पात, जरा, कमलको डाँठ वा जरा, मोती, सुन, सिवाँली, गोमेद र कपडाले पानीलाई स्वच्छ बनाउनु पर्दछ ।

## पानी पच्न लाग्ने समय

**पीतं जलं जीर्य्यति याममुग्माद्यामैकमात्राच्छृतशीतलञ्च ।**
**तदर्धमात्रेण शृतं कदुष्णं पयःप्रपाके त्रय एव कालाः ॥८६॥**

पिइएको पानी सामान्यतः छ घण्टा (दुई प्रहर वा याम) मा पच्दछ । उमालेर सेलाएको पानी त्यसको आधा अर्थात् तीन घण्टामा पच्दछ । उमालेर मनतातो भएको पानी त्यसको पनि आधा अर्थात् डेढ घण्टामा पच्दछ । यही नै पानी पच्ने तीन थरी समय हो ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकणे वारिवर्गः समाप्त ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको पानीवर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ दुग्धवर्गः ॥

### दूधका पर्यायवाची शब्द र गुण

**दुग्धं क्षीरं पयः स्तन्यं बालजीवनमित्यपि ।**
**दुग्धं सुमधुरं स्निग्धं वातपित्तहरं सरम् ॥१॥**
**सद्यः शुक्रकरं शीतं सात्म्यं सर्वशरीरिणाम् ।**
**जीवनं बृहणं बल्यं मेध्यं वाजीकरं परम् ॥२॥**
**वयःस्थापनमायुष्यं सन्धिकारि रसायनम् ।**

दुग्ध, क्षीर, पय, स्तन्य र बालजीवन : यी दूधका संस्कृत पर्यायवाची नामहरू हुन् । दूध गुलियो, चिल्लो, वातविकार नाशक, पित्तविकार नाशक र दिसापिसाबलाई तलतिर सार्ने गुणको हुन्छ । यसले तुरुन्त शुक्र उत्पादन गर्दछ । यो शीतल गर्ने, सबै जीवका लागि अनुकूल, जीवनशक्ति प्रदायक, पौष्टिक, बलदायक, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, यौनक्षमता बढाउने, उमेरलाई स्थिर राख्ने, आयु बढाउने, टुटेफुटेका अङ्गलाई जोड्ने र रसायनी हुन्छ ।

### दूधले फाइदा गर्ने रोगहरू

**विरेकवान्तिवस्तीनां सेव्यमोजोविवर्द्धनम् ॥३॥**
**जीर्णज्वरे मनोरोगे शोषमूर्च्छाभ्रमेषु च ।**
**ग्रहण्यां पाण्डुरोगे च दाहे तृषि हृदामये ॥४॥**
**शूलोदावर्त्तगुल्मेषु वस्तिरोगे गुदाङ्कुरे ।**
**रक्तपित्तेऽतिसारे च योनिरोगे श्रमे क्लमे ॥५॥**
**गर्भस्रावे च सततं हितं मुनिवरैः स्मृतम् ।**
**बालवृद्धक्षतक्षीणाः क्षुद्व्यवायकृशाश्च ये ॥६॥**
**तेभ्यः सदाऽतिशयितं हितमेतदुदाहृतम् ।**

जसले ओखती प्रयोग गरी विरेचन, वमन र वस्ति गरेका छन् तिनका लागि दूध सेवन गर्न योग्य र ओजवर्धक हुन्छ । जीर्णज्वर, मानसिक रोग, सुजन, बेहोसी, भ्रम, ग्रहणी, पाण्डुरोग, डाह, तिर्खा, मुटुका रोग, शूल, उदावर्त, गुल्म, तल्लो पेटका रोग, अल्काई, रक्तपित्त, अतिसार, योनिका रोग, थकाई बिना परिश्रमको थकाई, र गर्भस्रावमा यो सधैं हितकर हुन्छ भनी मुनिजनले बताएका छन् । बालक, वृद्ध र क्षतक्षीण तथा भोक र सहवासले दुब्लाएका व्यक्तिका लागि दूध सधैं लाभदायक हुन्छ भनिएको छ ।

## गाईको दूध

**गव्यं दुग्धं विशेषेण मधुरं रसपाकयोः ॥७॥**
**दोषधातुमलस्रोतः किञ्चित्क्लेदकरं गुरु ।**
**शीतलं स्तन्यकृत्स्निग्धं वातपित्तास्रनाशनम् ॥८॥**
**जरासमस्तरोगाणां शान्तिकृत् सेविनां सदा ।**

गाईको दूध विशेषगरी शुरुमा र पचेपछि पनि गुलियो हुन्छ । यसले दोष, धातु, मल र नसामा थोरै आर्द्रता (क्लेद) उत्पन्न गर्दछ र पचाउन कठिन हुन्छ । यो शीतल गर्ने, दूध बढाउने, चिल्लो तथा वातविकार, पित्तविकार र रक्तविकार नाशक हुन्छ । दूध सधैं सेवन गर्नेलाई बेलै नभई बुढ्यौलीले सताउँदैन र सबै खालका रोगलाई शान्त पार्दछ ।

**कृष्णाया गोर्भवेद् दुग्धं वातहारि गुणाधिकम् ॥९॥**
**पीताया हरते पित्तं तथा वातहरं भवेत् ।**
**श्लेष्मलं गुरु शुक्लाया रक्ता चित्रा च वातहृत् ॥१०॥**

कालो गाईको दूध वातविकार नाशक र अन्य गाईको दुधको तुलनामा बढी गुनिलो हुन्छ । पहेँलो गाईको दूध पित्तविकार र वातविकार नाशक हुन्छ । सेतो गाईको दूध कफविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ । रातो र माली गाईको दूध वातविकार नाशक हुन्छ ।

**बालवत्सविवत्सानां गवां दुग्धं त्रिदोषकृत् ।**

भर्खर ब्याएको लैनू तथा हतुवा गाईको दूध त्रिदोषकारक हुन्छ ।

**वष्कयिण्यास्त्रिदोषघ्नं तर्पणं बलकृत्पयः ॥११॥**

बकेर्नो गाईको दूध त्रिदोष नाशक, तृप्तिदायक र बलदायक हुन्छ ।

**जाङ्गलानूपशैलेषु चरन्तीनां यथोत्तररम् ।**
**पयो गुरुतरं स्नेहो यथाऽहारं प्रवर्त्तते ॥१२॥**

जाङ्गल, आनूप र पर्वते गाईको दूध क्रमशः पचाउन कठिन हुन्छ । आहार अनुसार नै दूधमा चिल्लो हुन्छ र बढी चिल्लो हुने दूध पचाउन बढी कठिन हुन्छ ।

**स्वल्पान्नभक्षणाज्जातं क्षीरं गुरु कफप्रदम् ।**
**तत्तु बल्यं परं वृष्यं स्वस्थानां गुणदायकम् ॥१३॥**
**पलालतृणकार्पासबीजजं रोगिणे हितम् ।**

आहारसँगै अलिअलि अनाज पनि खाने गाईको दूध पचाउन कठिन, कफविकार गर्ने, बलदायक, अति वीर्यवर्धक र स्वस्थ मानिसका लागि हितकर हुन्छ । पराल, घाँस र कपासका गेडा खाने गाईको दूध रोगी मानिसका लागि हितकर हुन्छ ।

## भैंसीको दूध

**माहिषं मधुरं गव्यात्स्निग्धं शुक्रकरं गुरु ॥१४॥**
**निद्राकरमभिष्यन्दि क्षुधाऽधिक्यहरं हिमम् ।**

भैंसीको दूध गाईको दूधभन्दा मिठो, चिल्लो र शुक्रवर्धक हुन्छ । यो पचाउन कठिन, निद्रा लगाउने, अभिष्यन्दि, धेरै नै भोक मेटाउने र शीतल गर्ने गुणको हुन्छ ।

## बाख्राको दूध

**छागं कषायं मधुरं शीतं ग्राहि तथा लघु ॥१५॥**
**रक्तपित्तातिसारघ्नं क्षयकासज्वरापहम् ।**
**अजानामल्पकायत्वात्कटुतिक्तनिषेवणात् ॥१६॥**
**स्तोकाम्बुपानाद्व्यायामात्सर्वरोगापहं पयः ।**

बाख्रीको दूध टर्रो र गुलियो हुन्छ । यसले शीतल गर्दछ । यो सङ्ग्राही, पचाउन हलुका तथा रक्तपित्त, अतिसार, क्षयरोग, खोकी र जरो नाशक हुन्छ । सानो शरीर हुने, पिरो र तीतो घाँससेउला खाने, थोरै पानी पिउने तथा धेरै व्यायाम गर्ने हुनाले यो दूध सबै खालका रोग नाशक हुन्छ ।

## मृगीको दूध

**मृगीणां जाङ्गलोत्थानामजाक्षीरगुणं पयः ॥१७॥**

जाङ्गल देशमा हुने मृगीको दूधमा बाख्रीको दूध सरहको गुण हुन्छ ।

## भेडीको दूध

**आविकं लवणं स्वादु स्निग्धोष्णं चाश्मरीप्रणुत् ।**
**अहृद्यं तर्पणं केश्यं शुक्रपित्तकफप्रदम् ॥१८॥**
**गुरु कासानिलोद्भूते केवले चानिले वरम् ।**

भेडीको दूध नुनिलो र गुलियो हुन्छ । यो चिल्लो, गर्मी गर्ने, पत्थरी नाशक, मुटुका लागि फाइदा नगर्ने, तृप्तिदायक, कपालका लागि फाइदाजनक, शुक्र उत्पादक, पित्तविकार गर्ने, कफविकार गर्ने र पचाउन कठिन हुने गुणको हुन्छ । यो दूध वातजन्य खोकीमा वा वातरोगमा मात्र हितकर हुन्छ ।

## घोडीको दूध

रूक्षोष्णं वडवाक्षीरं बल्यं शोषानिलापहम् ॥१९॥
अम्लं पटु लघु स्वादु सर्वमेकशफं तथा ।

घोडीको दूध रुखो, गर्मी गर्ने, बलदायक, शोष नाशक, वातविकार नाशक, अमिलो, नुनिलो, पचाउन सहज र स्वादिलो हुन्छ । सबैखाले एकखुरे जनावरको दूध यही गुणको हुन्छ ।

## उँटको दूध

औष्ट्रं दुग्धं लघु स्वादु लवणं दीपनं तथा ॥२०॥
कृमिकुष्ठकफानाहशोथोदरहरं सरम् ।

ऊँटको दूध पचाउन सहज, स्वादिलो, नुनिलो, दीपन, मलमूत्र तलतिर सार्ने तथा कीरा, कुष्ठ, कफविकार, आनाह, सुजन र पेटका विकार नाशगर्ने गुणको हुन्छ ।

## ढोईको दूध

बृंहणं हस्तिनीदुग्धं मधुरं तुवरं गुरु ॥२१॥
वृष्यं बल्यं हिमं स्निग्धं चक्षुष्यं स्थिरताकरम् ।

ढोईको दूध मिठो र टर्रो हुन्छ । यो पौष्टिक, पचाउन कठिन, वीर्यवर्धक, बलदायक, शीतल गर्ने, चिल्लो, आँखाका लागि लाभदायक र शरीरलाई स्थिर राख्ने गुणको हुन्छ ।

## स्त्रीको दूध

भार्या लघु पयः शीतं दीपनं वातपित्तजित् ॥२२॥
चक्षुः शूलाभिघातघ्नं नस्याश्च्योतनयोर्वरम् ।

आइमाईको दूध पचाउन सहज, शीतल गर्ने, दीपनी, वातविकार नाशक, पित्तविकार नाशक, आँखाको शूल नाशक, चोटपटक ठिक गर्ने गुणको तथा नस लिन र आश्च्योतन गर्न उत्तम हुन्छ ।

## काँचो र तताइएको दूध

धारोष्णं गोपयो बल्यं लघु शीतं सुधासमम् ॥२३॥
दीपनञ्च त्रिदोषघ्नं तद्धाराशिशिरं त्यजेत् ।

गाईको धारोष्ण दूध बलदायक, पचाउन सहज, शीतल गर्ने र अमृतसमान हुन्छ । यसले पाचनशक्ति बढाउँदछ र त्रिदोष नाश गर्दछ । तर दुहेको धेरै समय भएपछि यस्तो दूध परित्याग गर्नू (चिसै नखानू, तताएर मात्र खानू) ।

**धारोष्णं शस्यते गव्यं धाराशीतन्तु माहिषम् ॥२४॥**

गाईको धारोष्ण र भैंसीको दुहुँदादुहुँदैको तातो हराइ सकेको दूध उत्तम हुन्छ ।

**शृतोष्णमाविकं पथ्यं शृतशीतमजापयः ।**

भेडीको उमालेको तातततातो दूध र बाख्रीको उमालेर सेलाएको दूध पथ्य हुन्छ ।

**आमं क्षीरमभिष्यन्दि गुरु श्लेष्मामवर्द्धनम् ॥२५॥**
**ज्ञेयं सर्वमपथ्यं तु गव्यमाहिषवर्जितम् ।**

गाईभैंसी बाहेक अन्य सबै जनावरको काँचो दूध थलथले गुणले गरुङ्गोपनबाट रस निकाल्ने चौबीस थरी शिरा नामका नसाहरू थुनेर शरीरलाई भारी (गरुङ्गो) बनाउने (अभिष्यन्दी), पचाउन कठिन, कफविकार बढाउने, आमविकार बढाउने र अपथ्य हुन्छ ।

**नारीक्षीरं त्वाममेव हितं न तु शृतं हितम् ॥२६॥**

स्त्रीको दूध काँचो नै हितकर हुन्छ तताएको हितकर हुँदैन ।

**शृतोष्णं कफवातघ्नं शृतशीतन्तु पित्तनुत् ।**
**अर्द्धोदकं क्षीरशिष्टमामाल्लघुतरं पयः ॥२७॥**
**जलेन रहितं दुग्धमतिपक्वं यथा यथा ।**
**तथा तथा गुरु स्निग्धं वृष्यं बलविवर्धनम् ॥२८॥**

सामान्यतः तताएको तातो दूध कफविकार वातविकार नाशक हुन्छ भने तताएर सेलाएको दूध पित्तविकार नाशक हुन्छ । दूधमा आधा पानी हालेर तताई पानी जति सकेर दूध मात्र बाँकी भएपछि झिकिएको दूध काँचोभन्दा बढी पचाउन सहज हुन्छ । दूधमा पानी नहाली जति धेरै समय तताइन्छ उती यो बढी पचाउन कठिन, बढी चिल्लो, बढी वीर्यवर्धक र बढी बलवर्धक हुँदै जान्छ ।

## पीयूष

**क्षीरं तत्कालसूताया घनं पीयूषमुच्यते ।**

भर्खर बिहाएको गाईभैंसी आदिको बाक्लो दूधलाई 'पियूष' भनिन्छ ।

## किलाटक

**नष्टदुग्धस्य पक्वस्य पिण्डः प्रोक्तः किलाटकः ॥२९॥**

तताउँदा फाटेको दूधको डल्लोलाई 'किलाटक' भनिन्छ ।

## क्षीरशाक

**अपक्वमेव यन्नष्टं क्षीरशाकं हि तत्पयः ।**

नतताउँदै फाटेको दूधलाई 'क्षीरशाक' भनिन्छ ।

## छेना र छेनापानी

**दध्ना तक्रेण वा नष्टं दुग्धं बद्धं सुवाससा ॥३०॥**
**द्रवभावेन सहितं तक्रपिण्डः स उच्यते ।**
**नष्टदुग्धभवं नीरं मोरटं जेज्जटोऽब्रवीत् ॥३१॥**

दही वा तक्र हालेर फाटेको वा फटाइएको दूधलाई कपडामा बाँधी रस निथारेर बाँकी भएको छोक्रालाई 'छेना (तक्रपिण्ड)' भनिन्छ । यसरी निधारिएको रसलाई 'छेनापानी (मोरट)' भन्दछन् भनी जेज्जट नामका आचार्यले बताएका छन् ।

## पीयूष, किलाटक, क्षीरशाक र छेनाको गुण

**पीयूषश्च किलाटश्च क्षीरशाकं तथैव च ।**
**तक्रपिण्ड इमे वृष्या बृंहणा बलवर्द्धनाः ॥३२॥**
**गुरवः श्लेष्मला हृद्या वातपित्तविनाशनाः ।**
**दीप्ताग्नीनां विनिद्राणां विद्रधौ चाभिपूजिताः ॥३३॥**
**मुखशोषतृषादाहरक्तपित्तज्वरप्रणुत् ।**
**लघुर्बलकरो रुच्यो मोरटः स्यात्सितायुतः ॥३४॥**

पीयूष, किलाटक, क्षीरशाक र छेना : यी सबै पौष्टिक, बलवर्धक, पचाउन कठिन, कफविकार गर्ने, मुटुका लागि लाभदायक, वातविकार नाशक र पित्तविकार नाशक हुन्छन् । पाचनशक्ति बलियो हुने, निद्रा नलाग्ने र गुदद्वार, वस्ति, नाभि, कोखा, तिघ्राका जोर्नी, मिर्गौला, मुटु, कलेजो, फियोमा पैदा भएर कालान्तरमा फुट्ने खटिरा विशेष आएका मानिसलाई यी अति उत्तम हुन्छन् । चिनी मिसाइएको छेनापानी (मोरट) पचाउन सहज, बलदायक र रुचिकर हुन्छ । यसले मुख सुक्ने रोग, तिर्खारोग, डाह, रक्तपित्त र जरो नाश गर्दछ ।

## दूधको तर

सन्तानिका गुरुः शीता वृष्या पित्तास्रवातनुत् ।
तर्पणी वृंहणी स्निग्धा बलासबलशुक्रला ॥३५॥

दूधको तर पचाउन कठिन, शीतल गर्ने, वीर्यवर्धक तथा पित्तविकार, रक्तविकार र वातविकार नाशक हुन्छ । यसले तृप्ति दिन्छ । यो पौष्टिक र चिल्लो हुन्छ । यसले कफविकार, बल र शुक्र वृद्धि गर्दछ ।

## दूधमा गुलियो मिसाउँदा हुने गुण

खण्डेन सहितं दुग्धं कफकृत्पवनापहम् ।
सितासितोपलायुक्तं शुक्रलं त्रिमलापहम् ॥३६॥
सगुडं मूत्रकृच्छ्रघ्नं पित्तश्लेष्मकरं परम् ।

खुँदो हालिएको दूध कफविकार वर्धक र वातविकार नाशक हुन्छ । चिनी वा मिस्री हालिएको दूध शुक्रवर्धक र त्रिदोष नाशक हुन्छ । सखर हालिएको दूध मूत्रकृच्छ्र नाशक तथा अति नै पित्तविकार र कफविकार गर्ने गुणको हुन्छ ।

## पिउने समय अनुसार दूधका गुण

रात्रौ चन्द्र गुणाधिक्याद्व्यायामाकरणात्तथा ॥३७॥
प्राभातिकं पयः प्रायः प्रादोषाद् गुरु शीतलम् ।
दिवाकरकराघाताद्व्यायामानिलसेवनात् ॥
प्राभातिकात्तु प्रादोषं लघु वातकफापहम् ॥३८॥

बिहानको दूध साँझकोभन्दा बढी पचाउन कठिन र शीतल गर्ने हुन्छ किन कि रातमा चन्द्रमाको गुण अधिक हुन्छ र व्यायाम पनि गरिन्न । साँझको दूध बिहानकोभन्दा पचाउन सहज र वातविकार तथा कफविकार नाशक हुन्छ किन कि दिनमा सूर्यको किरण परिरहन्छ, व्यायाम पनि हुने गर्दछ र स्वच्छ वायुको सेवन पनि भइरहन्छ ।

## दूध पिउने समय र गुण

वृष्यं बृंहणमग्निदीपनकरं पूर्वाह्नकाले पयो
मध्याह्ने तु बलावहं कफहरं पित्तापहं दीपनम् ।
बाले बृद्धिकरं क्षयेऽक्षयकरं वृद्धेषु रेतोवहं
रात्रौ पथ्यमनेकदोषशमनं चक्षुर्हितं संस्मृतम् ॥३९॥
वदन्ति पेयं निशि केवलं पयो भोज्यं न तेनेह सहौदनादिकम् ।
भवत्यजीर्णं न शयीत शर्वरीं क्षीरस्य पीतस्य न शेषमुत्सृजेत् ॥४०॥

**विदाहीन्यन्नपानानि दिवा भुङ्क्ते हि यन्नरः ।**
**तद्विदाहप्रशान्त्यर्थं रात्रौ क्षीरं सदा पिबेत् ॥४१॥**
**दीप्तानले कृशे पुंसि बाले वृद्धे पयःप्रिये ।**
**मतं हिततमं दुग्धं सद्यःशुक्रकरं यतः ॥४२॥**

दिनको पूर्व भाग (पूर्वाह्न, बिहान १० बजेसम्म) मा गरिने दूधपान वीर्यवर्धक, पौष्टिक र पाचकाग्नि वर्धक हुन्छ । मध्याह्नमा पिइने दूध बलवर्धक, कफविकारनाशक, पित्तविकार नाशक र पाचकाग्नि वर्धक हुन्छ । बाल्यावस्थामा पिइने दूध शरीर-वर्धक हुन्छ । क्षयरोग हुँदा पिइने दूध क्षयरोग नाशक हुन्छ । बुढेशकालमा पिइने दूधले वीर्य रक्षा गर्दछ । रातमा गरिने दूधपानले अनेक रोग नाश गर्नुका साथै आँखालाई पनि फाइदा गर्दछ भनी मुनिजनले बताएका छन् । केही आचार्यले "रातमा दूधमात्र पिउनू, दूधसँग भात आदि नखानू, अजीर्ण हुन्छ, निद्रा पनि लाग्दैन । दूध पिउँदा बाँकी नराख्नू, दूध केही बढी पिएर बेफाइदा गर्दैन (खेर नफाल्नू)" पनि भनेका छन् । मानिस दिनभर जेजस्ता शरीरलाई डाह गर्ने कुराको खानपिन गर्दछ, त्यस्ता खानपिनले गर्ने डाहलाई शान्त पार्न उसले हरेक दिन रातमा दूध पिउने गर्नू । जसको पाचनशक्ति बलियो छ, जो दुब्लाएका छन् ती सबैका लागि तथा  बालक, वृद्ध र दूध मनपर्नेहरूका लागि दूध पिउनु अति नै लाभदायक हुन्छ किन कि दूध तुरुन्त शुक्रवृद्धि गर्ने गुणको हुन्छ ।

## मथेको दूध

**क्षीरं गव्यमथाजं वा कोष्णं दण्डाहतं पिबेत् ।**
**लघु वृष्यं ज्वरहरं वातपित्तकफापहम् ॥४३॥**

गाई वा बाख्रीको दूध तताई त्यसलाई मथेर मनतातो पिए त्यो दूध पचाउन सहज, वीर्यवर्धक तथा जरो, वातविकार, पित्तविकार र कफविकार नाशक हुन्छ ।

## दूधको फिँज

**गोदुग्धप्रभवं किं वा छागीदुग्धसमुद्भवम् ।**
**भवेत् फेनं त्रिदोषघ्नं रोचनं बलवर्द्धनम् ॥४४॥**
**वह्निवृद्धिकरं वृष्यं सद्यस्तृप्तिकरं लघु ।**
**अतीसारेऽग्निमान्द्ये च ज्वरे जीर्णे प्रशस्यते ॥४५॥**

गाई वा बाख्रीको दूधको फिँज त्रिदोषनाशक, रुचिकर, बलवर्धक, जठराग्नि वर्धक, वीर्यवर्धक, तुरुन्त तृप्त पार्ने, पचाउन सहज तथा अतिसार, कमजोर पाचनशक्ति र धेरै दिनको जरोमा हितकारी हुन्छ ।

## खराब दूध

**विवर्णं विरसं चाम्लं दुर्गन्धं ग्रथितं पयः ।**
**वर्जयेदम्ललवणयुक्तं कुष्ठादिकृद् यतः ॥४६॥**

रङ बदलिएको, स्वाद बिग्रेको, अमिलो, गनाउने, फाटेको, अमिलो परेको र नुन परेको दूध खानाले कुष्ठ ( आदि छालाका रोग) रोग हुन्छ । (यही भएर नुन हालिएका दाल तरकारी आदिसँग भात खाँदा सँगै दूध नखानु भनिएको हो) ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे दुग्धवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको दूधवर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ दधिवर्गः ॥

## दहीका गुण र दोष :

**दध्युष्णं दीपनं स्निग्धं कषायानुरसं गुरु ।**
**पाकेऽम्ल ग्राहि पित्तास्रशोथमेदः कफप्रदम् ॥१॥**
**मूत्रकृच्छ्रे प्रतिश्याये शीतगे विषमज्वरे ।**
**अतीसारेऽरुचौ कार्श्ये शस्यते बलशुक्रकृत् ॥२॥**

दहीले गर्मी गर्दछ । दहीले आम (खाएको कुरा पचेर बनेको रस) लाई पचाउँदैन तर पाचकाग्निलाई बाल्दछ (दीपन) । यो चिल्लो एवं थोरै टर्रो हुन्छ । दही पचाउन कठिन हुन्छ र पचेपछि अमिलो हुन्छ । दहीले पेटभित्रको अग्निलाई बाल्दछ, "आम" आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ (ग्राही) । यसले पित्तविकार, रक्तविकार, सुजन, बोसो र कफ उत्पन्न गर्दछ । मूत्रकृच्छ्र (पिसाबले च्याप्ने तर गर्न खोज्दा थोपा थोपा मात्र हुने रोग), पिनास, चिसोले हुने विषमज्वर, अतिसार (खाएका कुरा नपची पातलो दुर्गन्धी दिसा भइरहने रोग; आउँको रोग । यसका कफजन्य, वातजन्य, पित्तजन्य, आमजन्य, सन्निपातजन्य र शोकजन्य गरी छ किसिम हुन्छ । यो रोगमा सामान्यतः आमाशय सुन्निएर खाएको कुरा नपची पातलो दिसा र डकार आइरहन्छ, अमन हुन्छ र शरीर लखतरान भएर गल्दछ ।) र अरुचीले हुने दुब्लोपनमा दही उत्तम हुन्छ । यसले बल र शुक्र वृद्धि पनि गर्दछ ।

## दहीका किसिम

**आदौ मन्दं ततः स्वादु स्वाद्वम्लञ्च ततःपरम् ।**
**अम्लं चतुर्थमत्यम्लं पञ्चमं दधि पञ्चधा ॥३॥**

मन्द, स्वादु, स्वाद्वम्ल, अम्ल र अत्यम्ल गरी दही पाँच किसिमको हुन्छ ।

## मन्द दही

**मन्दं दुग्धवदव्यक्तरसं किञ्चिद्घनं भवेत् ।**
**मन्दं स्यात्सृष्टविण्मूत्रं दोषत्रयविदाहकृत् ॥४॥**

दूधजस्तै (राम्ररी नजमेको), स्वाद थाहा नहुने र केही बाक्लो दहीलाई 'मन्द दही' भनिन्छ । यसले दिसापिसाब गराउँदछ तथा त्रिदोष र डाह उत्पन्न गर्दछ ।

## स्वादु दही

**यत्सम्यग्घनतां यातं व्यक्तस्वादुरसं भवेत् ।**
**अव्यक्ताम्लरसं तत्तु स्वादु विज्ञैरुदाहृतम् ॥५॥**

राम्ररी जमेको, गुलियो स्वाद प्रष्ट थाहा हुने र अमिलो भइनसकेको (अमिलो थाहा नहुने) दहीलाई विद्वानहरूले 'स्वादु दही' भनेका छन् ।

**स्वादु स्यादत्यभिष्यन्दि वृष्यं मेदःकफावहम् ।**
**वातघ्नं मधुरं पाके रक्तपित्तप्रसादनम् ॥६॥**

स्वादु दही अति नै अभिष्यन्दि हुन्छ । यो वीर्यवर्धक तथा बोसो र कफ उत्पादक हुन्छ । यस्तो दहीले वातविकार नाश गर्दछ । यो दही पचेपछि गुलियो हुन्छ । यसले रक्तपित्तलाई ठिक गर्दछ ।

## स्वाद्वम्ल दही

**स्वाद्वम्लं सान्द्र मधुरं कषायानुरसं भवेत् ।**
**स्वाद्वम्लस्य गुणा ज्ञेया सामान्यदधिवज्जनैः ॥७॥**

बाक्लो, गुलियो र खँदा अन्तमा टर्रो हुने दहीलाई 'स्वाद्वम्ल दही' भनिन्छ । विद्वानहरूका मतमा यो सामान्य दही सरह गुनिलो हुन्छ ।

## अम्ल दही

**यत्तिरोहितमाधुर्यं व्यक्ताम्लत्वं तदम्लकम् ।**
**अम्लं तु दीपनं पित्तरक्तश्लेष्मविवर्द्धनम् ॥८॥**

गुलियो स्वाद लुकेको र अमिलो स्वाद मात्र थाहा पाइने दहीलाई 'अम्ल दही' भनिन्छ । यस्तो दही पाचनशक्ति, पित्तविकार, रक्तविकार र कफविकार बढाउने गुणको हुन्छ ।

## अत्यम्ल दही

**तदत्यम्लं दन्तरोमहर्षकण्ठादिदाहकृत् ।**
**अत्यम्लं दीपनं रक्तवातपित्तकरं परम् ॥९॥**

जुन दही खाँदा दाँत र रौँ सिरिङ्ङ हुन्छ तथा घाँटी आदि पोल्दछ त्यस्तो दहीलाई 'अत्यम्ल दही' भनिन्छ । यस्तो दहीले पाचनशक्ति बढाउँदछ तर रक्तविकार, वातविकार र पित्तविकारलाई धेरै नै बढाउँदछ ।

## गाईको दही

**गव्यं दधि विशेषेण स्वाद्वम्लं च रुचिप्रदम् ।**
**पवित्रं दीपनं हृद्यं पुष्टिकृत्पवनापहम् ॥१०॥**
**उक्तं दध्नामशेषाणां मध्ये गव्यं गुणाधिकम् ।**

गाईको दही विशेषतः गुलियो, अमिलो, रुचिकर, पवित्र, पाचनशक्ति वर्धक, मुटुका लागि लाभदायक, पौष्टिक, र वातविकार नाशक हुन्छ । सबै दहीमध्येमा गाईको दही बढी गुनिलो हुन्छ भनिएको छ ।

## भैँसीको दही

**माहिषं दधि सुस्निग्धं श्लेष्मलं वातपित्तनुत् ॥११॥**
**स्वादुपाकमभिष्यन्दि वृष्यं गुर्वस्रदूषकम् ।**

भैँसीको दही चिल्लो, कफविकार गर्ने तथा वातविकार र पित्तविकार ठिक गर्ने गुणको हुन्छ । यो पचेपछि गुलियो, अभिष्यन्दि, वीर्यवर्धक, पचाउन कठिन र रक्तविकार गर्ने गुणको हुन्छ ।

## बाख्रीको दही

**आजं दध्युत्तमं ग्राहि लघु दोषत्रयापहम् ॥१२॥**
**शस्यते श्वासकासार्शः क्षयकार्श्येषु दीपनम् ।**

बाख्रीको दही उत्तम, कब्जियत गर्ने, पचाउन सहज र त्रिदोषनाशक हुन्छ । यो दम, खोकी, अल्काई, क्षयरोग र दुब्लोपनमा हितकर हुन्छ । यसले पाचनशक्ति बढाउँदछ ।

## राम्ररी तताइएको दूधको दही

**पक्वदुग्धभवं रुच्यं दधि स्निग्धं गुणोत्तमम् ॥१३॥**
**पित्तानिलापहं सर्वधात्वग्निबलवर्द्धनम् ।**

राम्ररी उमालिएको दूधको दही रुचिकर, चिल्लो, उत्तम गुणको, पित्तविकार नाशक, वातविकार नाशक तथा सबै धातु, पाचनशक्ति र बल बढाउने गुणको हुन्छ ।

## तर निकालिएको दही

**असारं दधि सङ्ग्राहि शीतलं वातलं लघु ॥१४॥**
**विष्टम्भि दीपनं रुच्यं ग्रहणीरोगनाशनम् ।**

तर निकालिएको दही कब्जियत गर्ने, शीतल गर्ने, वातविकार बढाउने, पचाउन सहज, दिसा रोक्ने, पाचनशक्ति बढाउने, रुचिकर र ग्रहणीरोग नाशक हुन्छ ।

## कपडाले छानिएको दही

**गालितं दधि सुस्निग्धं वातघ्नं कफकृद् गुरु ॥१५॥**
**बलपुष्टिकरं रुच्यं मधुरं नातिपित्तकृत् ।**

कपडाले छानिएको (गालित) दही अति चिल्लो, वातविकार नाशक, कफविकार गर्ने, पचाउन कठिन, बलदायक, पौष्टिक, रुचिकर, मिठो र धेरै पित्तविकार पनि नगर्ने गुणको हुन्छ ।

## सखर आदि मिसाइएको दही

**सशर्करं दधि श्रेष्ठं तृष्णापित्तास्रदाहजित् ॥१६॥**
**सगुडं वातनुद् वृष्यं बृंहणं तर्पणं गुरु ।**

चिनी मिसाइएको दही उत्तम हुन्छ । यसले तिर्खा, पित्तविकार, रक्तविकार र डाह नाश गर्दछ । सखर मिसाइएको दही वातविकार नाशक, वीर्यवर्धक, पौष्टिक, तृप्तिदायक र पचाउन कठिन हुन्छ ।

## रातमा दही सेवन

**न नक्तं दधि भुञ्जीत न चाप्यघृतशर्करम् ॥१७॥**
**नामुद्गसूपं नाक्षौद्रं नोष्णं नामलकैर्विना ।**

रातमा दही नखानू । घिउ र सखर वा मुगीको दाल वा मह वा नतताइएको वा अमला नमिसाइएको दही नखानू ।

**रात्रौ दधि न भुञ्जीत, भुञ्जीत चेत्तदा-अघृतशर्करमुद्गसूपमक्षौद्रमुष्णं विनाऽऽमलकश्च दधि न भुञ्जीत । तेन घृतशर्कराऽऽदियुक्तं दधि रात्रावपि भुञ्जीतेत्यर्थः ॥**

रातमा दही नखानू । खाने भए घिउ, सखर, मुगीको दाल, मह वा अमला हालेर खानू । तातो नखानू ।

**शस्यते दधि नो रात्रौ शस्तं चाम्बुघृतान्वितम् ।**
**रक्तपित्तकफोत्थेषु विकारेषु तु नैव तत् ॥**

रातमा दही खानु हितकर हुँदैन । पानी र घिउ मिसाएर खान भने हुन्छ । तर रक्तविकार, पित्तविकार र कफविकार हुनेले यसरी पनि रातमा दही नखानू ।

## ऋतु अनुसारको दही सेवन

**हेमन्ते शिशिरे चापि वर्षासु दधि शस्यते ।**
**शरद्ग्रीष्मवसन्तेषु प्रायशस्तद्विगर्हितम् ॥१८॥**

हेमन्त, शिशिर र वर्षा ऋतुमा दही खानु उत्तम हुन्छ । शरद्, ग्रीष्म र वसन्त ऋतुमा सामान्यतः दही खानु हितकर हुँदैन ।

## नियम मिचेर दही खाँदाका बेफाइदा :

**ज्वरासृक्पित्तवीसर्पकुष्ठपाण्ड्वामयभ्रमान् ।**
**प्राप्नुयात्कामलां चोग्रां विधिं हत्वा दधिप्रियः ॥१९॥**

दही मन पर्ने मानिस यदि खाने विधि नमानेर सधैं दही खाने गर्दछ भने उसलाई जरो, रक्तपित्त, विसर्प, कुष्ठ, पाण्डु र भ्रम तथा कडा खालको कमलपित्त रोग हुन्छ ।

## तर र मस्तु

**दध्नस्तूपरि यो भागो घनः स्नेहसमन्वितः ।**
**स लोके सर इत्युक्तो दध्नो मण्डस्तु मस्त्विति ॥२०॥**
**सरः स्वादुर्गुरुर्वृष्यो वातवह्निप्रणाशनः ।**
**सोऽम्लो वस्तिप्रशमनः पित्तश्लेष्मविवर्द्धनः ॥२१॥**
**मस्तु क्लमहरं बल्यं लघु भक्ताभिलाषकृत् ।**
**स्रोतोविशोधनं ह्लादि कफतृष्णानिलापहम् ॥**
**अवृष्यं प्रीणनं शीघ्रं भिनत्ति मलसञ्चयम् ॥२२॥**

दहीको माथितिर हुने बाक्लो र चिल्लो भागलाई तर (सर) भनिन्छ । दहीको पानीलाई मस्तु भनिन्छ । स्वादिलो दहीको तर पचाउन कठिन, वीर्यवर्धक तथा वातविकार र जठराग्नि नाशक हुन्छ । यदि यो अमिलो छ भने यसले तल्लोपेटका रोग शान्त गर्दछ तथा पित्तविकार र कफविकार बढाउँदछ । मस्तुले बिना परश्रमको थकाई नाश गर्दछ र बल दिन्छ । यो पचाउन हलुका हुन्छ । यसले भात खाने रुचि बढाउँदछ । मस्तुले रस बहने नसाहरूलाई प्रशोधन गर्दछ, मन प्रसन्न पार्दछ तथा कफविकार, तिर्खा र वातविकार नाश गर्दछ । यो थोरै वीर्यवर्धक र थुप्रिएको दिसालाई तुरुन्त भेदन गर्ने गुणको हुन्छ ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे दधिवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको दहीवर्गको मोहन प्रसाद
सापकोटाद्धारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ तक्रवर्गः ॥

### पाँच प्रकारका तक्र

**घोलं तु मथितं तक्रमुदश्विच्छच्छिकाऽपि च ।**
**ससरं निर्जलं घोलं मथितं त्वसरोदकम् ॥१॥**
**तक्रं पादजलं प्रोक्तमुदश्वित्त्वर्द्धवारिकम् ।**
**छच्छिका सारहीना स्यात्स्वच्छा प्रचुरवारिका ॥२॥**

फरक फरक लक्षण अनुसार तक्रका घोल, मथित, तक्र, उदश्वित् र छच्छिका गरी पाँच भेद हुन्छन् । पानी नमिसाई दहीलाई यसमा भएको तर सहित घोल्दा हुने पेयलाई 'घोल' भनिन्छ । दहीलाई तर निकालेर मथ्दा हुने पेयलाई 'मथित' भनिन्छ । दहीलाई एक चौथाई पानी हालेर मथ्दा हुने पेयलाई 'तक्र' भनिन्छ । आधा पानी हालेर मथिएको दहीलाई 'उदश्वित्' भनिन्छ । दहीलाई मथेर नौनी निकाली त्यसैमा पुनः पानी हालेर मथेको पेयलाई 'छच्छिका' (मोही) भनिन्छ ।

### पाँच प्रकारका तक्रका गुण र अवगुण

**घोलं तु शर्करायुक्तं गुणैर्ज्ञेयं रसालवत् ।**
**वातपित्तहरं ह्लादि मथितं कफपित्तनुत् ॥३॥**

घोलमा सखर वा चिनी मिसाए यो रसाल वा सिखर्नी समान गुनिलो हुन्छ । यसले वातविकार पित्तविकार नाश गर्दछ र मनलाई आनन्द पार्दछ । मथितले कफविकार र पित्तविकार नाश गर्दछ ।

**तक्रं ग्राहि कषायाम्लं स्वादुपाकरसं लघु ।**
**वीर्योष्णं दीपनं वृष्यं प्रीणनं वातनाशनम् ॥४॥**
**ग्रहण्यादिमतां पथ्यं भवेत्संग्राहि लाघवात् ।**
**किञ्च स्वादुविपाकित्वान्न च पित्तप्रकोपणम् ॥५॥**
**अम्लोष्णं दीपनं वृष्यं प्रीणनं वातनाशनम् ।**
**कषायोष्णविकाशित्वाद्रौक्ष्याच्चापि कफापहम् ॥६॥**
**न तक्रसेवी व्यथते कदाचिन्न तक्रदग्धाः प्रभवन्ति रोगाः ।**
**यथा सुराणाममृतं सुखाय तथा नराणां भुवि तक्रमाहुः ॥७॥**

तक्रले पेटभित्रको अग्निलाई बाल्दछ, “आम” आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ अर्थात् ग्राही हुन्छ । यसको स्वाद केही टर्रो र केही अमिलो हुन्छ भने यसको पचेपछिको रस गुलियो हुन्छ । यो सजिलै पच्दछ । तक्रले गर्मी गर्दछ । तक्रले आम (खाएको कुरा पचेर बनेको रस) लाई पचाउँदैन तर पाचकाग्निलाई बाल्दछ अर्थात् यो दीपन गुणको हुन्छ । यसले वीर्य बढाउँदछ, तृप्ति दिन्छ र वातविकार नाश गर्दछ । यसले ग्रहणी (जठराग्निको आधार भएकी नाइटोभन्दा केही माथि ग्रहणी (खानपिन ग्रहण गर्ने) एउटा नाडी हुन्छे । यिनको काम नपचेको कुरा पचाई मलमूत्र मनाएर शरीर बाहिर निकाल्नु हो । यो नाडीमा कुनै विकार भई खाएपिएको नपची बाहिर निस्कने वा पचेपनि पटकपटक गरेर बाहिर निस्कने रोगलाई ग्रहणी भनिन्छ । अन्य अर्थ : खाएको चिजमा बोसे आन्द्रोले गर्नुपर्ने काम गर्न नसक्दा हुन जाने पेटको रोग । यसले पेट फुल्ने, दुख्ने, दिसा लागिरहने र भोक नलाग्ने समस्या हुन्छ ।) आदि रोग हुनेलाई फाइदा गर्दछ । यो पचाउन हलुका हुनाले ग्राही हुन्छ । पचेपछि गुलियो हुनाले यसले पित्तविकार पनि गर्दैन । यो अमिलो, गर्मी गर्ने, पाचकाग्नि बर्धक, वीर्य वर्धक र तृप्तिदायक हुने हुँदा यसले वातविकार नाश गर्दछ । टर्रो, गर्मी गर्ने, नपच्दै शरीरका सबै बन्धनलाई खुकुलो पार्ने र रसादि धातुका तेजलाई त्यो धातुबाट सोस्ने (विकाशी) तथा रुखो हुनाले यसले कफविकार पनि नाश गर्दछ । नियमित तक्र पिउने व्यक्ति कहिल्यै बिरामी पर्दैन । तक्र पिउनाले निको भएका रोग पुनः बल्भिन सक्दैनन् । जसरी देवताका लागि सुखकारी पेय अमृत हुन्छ त्यसरी नै पृथ्वीमा बस्ने मानिसका लागि सुखकारी पेय तक्र हुन्छ भनी ऋषिहरूले बताएका छन् ।

**उदश्वित् कफकृद् बल्यमामघ्नं परमं मतम् ।**
**छच्छिका शीतला लघ्वी पित्तश्रमतृषाहरी ॥८॥**
**वातनुत् कफकृत् सा तु दीपनी लवणान्विता ।**

उदश्वित्ले कफविकार र बल बढाउँदछ तर धेरै नै आमविकार नाश गर्दछ । मोहीले शीतल गर्दछ । यो पचाउन हलुका हुन्छ । यसले पित्तविकार, थकाई र तिर्खा नाश गर्दछ । मोहीले वातविकार नाश गर्दछ तर कफविकार गर्दछ । मोहीमा सिधेनुन हालेर पिउने गरे यसले पाचनशक्ति बढाउँदछ ।

## घिउ निकालेको र ननिकालेको तक्र

**समुद्धृतघृतं तक्रं पथ्यं लघु विशेषतः ॥९॥**
**स्तोकोद्धृतघृतं तस्माद् गुरु वृष्यं कफापहम् ।**
**अनुद्धृतघृतं सान्द्रं गुरुपुष्टिकफप्रदम् ॥१०॥**

घिउ निकालिएको तक्र पथ्य अर्थात् रोगीका लागि पनि उत्तम र पचाउन सहज हुन्छ । आधा घिउ निकालिएको तक्र पूरै घिउ निकालिएको तक्रभन्दा पचाउन कठिन, वीर्यवर्धक र कफविकार नाशक हुन्छ । घिउ ननिकालिएको बाक्लो तक्र पचाउन कठिन, पौष्टिक र कफविकार गर्ने गुणको हुन्छ ।

## तक्र खाने विधि

**वातेऽम्ल शस्यते तक्रं शुण्ठीसैन्धवसंयुतम् ।**
**पित्ते स्वादु सितायुक्तं व्योषक्षारयुतं कफे ॥११॥**

**हिङ्गुजीरयुतं घोलं सैन्धवेन च संयुतम् ।**
**भवेदतीव वातघ्नमर्शोऽतीसारहृत्परम् ॥१२॥**
**रुचिदं पुष्टिदं बल्यं वस्तिशूलविनाशनम् ।**
**मूत्रकृच्छ्रे तु सगुडं पाण्डुरोगे सचित्रकम् ॥१३॥**

शरीरमा वातविकार बढी भए अमिलो तक्रमा सुठो र सिधेनुन हालेर खानु हितकर हुन्छ । शरीरमा पित्तविकार बढी भए गुलियो तक्रमा चिनी हालेर खानु हितकर हुन्छ । शरीरमा कफविकार बढी भए सुठो, मरिच र पिप्ला हालेर तक्र खानु हितकर हुन्छ । फुराइएको हिङ, भुटिएको जीरा र सिधेनुनको धुलो हालिएको घोलले वातविकार धेरै नै ठिक गर्दछ । यसले धेरै मात्रा अल्काई र अतिसारलाई नाश गर्दछ । यसले रुचि बढाउँदछ, पुष्टि दिन्छ, बल दिन्छ र तल्लो पेटको शूल नाश गर्दछ । चिनी हालेर बनाइएको घोलले मूत्रकृच्छ्रमा र चितू मिसाइएको घोलले पाण्डुरोगमा फाइदा गर्दछ ।

## काँचो र पकाएको तक्र

**तक्रमामं कफं कोष्ठे हन्ति कण्ठे करोति च ।**
**पीनसश्वासकासादौ पक्वमेव प्रयुज्यते ॥१४॥**

काँचो तक्रले पेटको कफ नाश गर्दछ तर घाँटीमा कफ जम्मा गर्दछ । यसैले पकाएको तक्र नै पिनास, दम, खोकी आदिमा प्रयोग गर्नु उचित र लाभदायक हुन्छ ।

## तक्रका लाभ

**शीतकालेऽग्निमान्द्ये च तथा वातामयेषु च ।**
**अरुचौ स्रोतसां रोधे तक्रं स्यादमृतोपमम् ॥१५॥**
**तत्तु हन्ति गरच्छर्दिप्रसेकविषमज्वरान् ।**
**पाण्डुमेदोग्रहण्यर्शोमूत्रग्रहभगन्दरान् ॥१६॥**
**मेहं गुल्ममतीसारं शूलप्लीहोदरारुचीः ।**
**श्वित्रकोष्ठगतव्याधीन् कुष्ठशोथतृषाकृमीन् ॥१७॥**

जाडो याममा, पाचनशक्ति कमजोर हुँदा, वातविकार हुँदा, अरुचि हुँदा र नसा अवरुद्ध हुँदा तक्र अमृतसमान हुन्छ । तक्रले संयोगजन्य विषविकार, वाकवाकी, कफविकारले राल आदि चुहिने रोग, विषमज्वर, पाण्डरोग, बोसोविकार, ग्रहणी, अल्काई, पिसाब बन्द हुने रोग, भगन्दर, प्रमेह, गानुगोला, अतीसार, शूल, फियोका रोग, पेटका रोग, अरुचि, सेतो कुष्ठरोग, कोष्ठमा हुने रोग, कुष्ठरोग, सुजन, तिर्खा र पेटका कीरा नाश गर्दछ ।

## तक्र खान नहुने अवस्था

**नैव तक्रं क्षये दद्यान्नोष्णकाले न दुर्बले ।**

**न मूर्च्छाभ्रमदाहेषु न रोगे रक्तपित्तजे ॥१८॥**

क्षयरोगमा, ग्रीष्म ऋतुमा, कमजोर व्यक्तिलाई, बेहोसीमा, डाह हुँदा र रक्तपित्तका रोगीलाई तक्र नदिनू ।

## दही अनुसार तक्रमा हुने गुण

**यान्युक्तानि दधीन्यष्टौ तद्गुणं तक्रमादिशेत् ॥१९॥**

जे कुरा आठ थरी दहीका बारेमा बताइए, त्यस्ता दहीबाट बनाइने तक्रमा पनि तिनै गुण हुन्छन् ।

**॥ इति श्रीमिश्रलटक ननतय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे तक्रवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको मोहीवर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ नवनीत वर्गः ॥
## (नौनी वर्ग)

## नौनीका पर्यायवाची शब्द र गुण अवगुण

**म्रक्षणं सरजं हैयङ्गवीनं नवनीतकम् ।**
**नवनीतं हितं गव्यं वृष्यं वर्णबलाग्निकृत् ॥१॥**
**संग्राहि वातपित्तासृक्क्षयार्शोऽर्दितकासहृत् ।**
**तद्धितं बालके वृद्धे विशेषादमृतं शिशोः ॥२॥**

म्रक्षण, सरज, हैयङ्गवीन र नवनीत : यी नौनीका संस्कृत पर्यायवाची नामहरू हुन् । गाईको नौनी हितकर, वीर्यवर्धक, वर्णमा निखार लेराउने, बलदायक र पाचनशक्ति बढाउने गुणको हुन्छ । यसले पेटभित्रको अग्निलाई बाल्दछ, "आम" आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ अर्थात् ग्राही हुन्छ । नौनी वातविकार, पित्तविकार, रक्तविकार, क्षयरोग, अल्काई, अर्दित र खोकी नाशक हुन्छ । यो बालक र वृद्धका लागि हितकर र विशेषतः ससाना बालकका लागि अमृतसमान गुनिलो हुन्छ ।

## भैंसीको नौनी

**नवनीतं महिष्यास्तु वातश्लेष्मकरं गुरु ।**
**दाहपित्तश्रमहरं मेदः शुक्रविवर्द्धनम् ॥३॥**

भैँसीको नौनी वातविकार गर्ने, कफविकार गर्ने, पचाउन कठिन तथा डाह, पित्तविकार र थकाई नाशक हुन्छ । यसले बोसो र शुक्र बढाउँदछ ।

## दूधबाट निकालिएको नौनी

**दुग्धोत्थं नवनीतं तु चक्षुष्यं रक्तपित्तनुत् ।**
**वृष्यं बल्यमतिस्निग्धं मधुरं ग्राहि शीतलम् ॥४॥**

दूधबाट निकालिएको नौनी आँखाका लागि फाइदाजनक, रक्तपित्तनाशक, वीर्यवर्धक, बलदायक, अति चिल्लो र मिठो हुन्छ । यसले पेटभित्रको अग्निलाई बाल्दछ, "आम" आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ अर्थात् ग्राही हुन्छ । यो शीतल गर्ने गुणको हुन्छ ।

## ताजा नौनी

**नवनीतं तु सद्यस्कं स्वादु ग्राहि हिमं लघु ।**
**मेध्यं किञ्चित्कषायाम्लमीषत्तक्रांश सङ्क्रमात् ॥५॥**

ताजा नौनी स्वादिलो हुन्छ यसले पेटभित्रको अग्निलाई बाल्दछ, "आम" आदिलाई पचाउँदछ, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्दछ अर्थात् ग्राही हुन्छ । यो शीतल गर्ने, पचाउन सहज, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, तक्रको केही भाग मिसिएको हुनाले केही टर्रो र केही अमिलो हुन्छ ।

## पुरानो नौनी

**सक्षारकटुकाम्लत्वाच्छर्द्यर्शःकुष्ठकारकम् ।**
**श्लेष्मलं गुरु मेदस्यं नवनीतं चिरन्तमम् ॥६॥**

पुरानो नौनी नुनिलो, पिरो र अमिलो हुने हुनाले यसले बान्ता गराउने तथा अल्काई र कुष्ठरोग जन्माउने काम गर्दछ । यसले कफविकार गर्दछ, पचाउन कठिन हुन्छ र बोसो बढाउँदछ ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे नवनीतवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको नौनीवर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ घृतवर्गः ॥
## (घिउवर्ग)

## घिउका पर्यायवाची नाम र गुण

**घृतमाज्यं हविः सर्पिः कथ्यन्ते तद्गुणा अथ ।**
**घृतं रसायनं स्वादु चक्षुष्यं वह्निदीपनम् ॥१॥**
**शीतवीर्यं विषालक्ष्मीपापपित्तानिलापहम् ।**
**अल्पाभिष्यन्दि कान्त्योजस्तेजोलावण्यवृद्धिकृत् ॥२॥**
**स्वरस्मृतिकरं मेध्यमायुष्यं बलकृद्गुरु ।**
**उदावर्त्तज्वरोन्मादशूलानाहव्रणान् हरेत् ॥३॥**
**स्निग्धं कफकरं रक्षःक्षयवीसर्परक्तनुत् ।**

घृत, आज्य, हविस् र सर्पिस् : यी घिउका संस्कृत पर्यायवाची नामहरू हुन् । अब त्यसका गुण बताइन्छ । घिउ रसायन (बुढ्यौली आउन नदिने वा बूढालाई तन्नेरी गराउने ओखती वा गुण । जुन औषधीले शरीरको बुढ्यौली (सत्तरी वर्ष पछि) मा हुने रोग र (सबै उमेरका) जरो आदि रोगलाई निको पार्दछ त्यसलाई वा त्यस्तो गुणलाई "रसायन" भनिन्छ ।) , स्वादिलो, आँखाका लागि लाभदायक, जठराग्नि वर्धक (जुन औषधीले आम (खाएको कुरा पचेर बनेको रस) लाई पचाउँदैन तर पाचकाग्निलाई बाल्दछ त्यस्ता औषधीलाई "दीपन" भनिन्छ), ठण्डी गर्ने तथा विषविकार, दरिद्रता, पाप, पित्तविकार र वातविकार नाशक हुन्छ । यो थोरै अभिष्यन्दि (थलथले गुणले गरुङ्गोपनबाट रस निकाल्ने चौबीस थरी शिरा नामका नसाहरू थुनेर शरीरलाई भारी (गरुङ्गो) बनाउने द्रव्यलाई अभिष्यन्दी द्रव्य भनिन्छ) तथा कान्ति, ओज, तेज र लावण्य वर्धक हुन्छ । यसले स्वरलाई स्वच्छ पार्दछ तथा सम्झना शक्ति, दिमागको ग्रहण गर्ने क्षमता र आयुलाई बढाउँदछ । यसले बल दिन्छ । यो पचाउन कठिन हुन्छ । घिउले उदावर्त (अपानवायु माथितिर सरी मलमूत्रलाई पनि माथिमाथि तान्ने पेटको रोग । अपानवायु, दिसा, पिसाब, हाई आँसु, हाच्छिउँ, डकार, बान्ता, शुक्र, भोक, तिर्खा, निःश्वास र निद्रा आउन लाग्दा जबरजस्ती रोक्ने गरे यो रोग लाग्दछ । रोग लागिसकेपछि दिसा, पिसा र अपानवायु बन्द हुन्छ । पेट कराउने गर्दछ । शरीर कमजोर भई दुख्न थाल्दछ ।), , जरो, उन्माद (पागलपन, कडा रिस, मानसिक रोग) , शूल ((क) टाउको, हात, गोडा आदि कुनै पनि अङ्गमा हुने ज्यादा दुखाइ । (ख) वायुप्रकोपले हुने पेटको ज्यादा दुखाइ । (ग) वातरोग । गानु, गानो, गानुगोला, गोला ।), आनाह (पचेर अथवा नपची दूषित भएको मलमूत्र पेटमा रोकिएर हुने रोग) र घाउखटिरा नाश गर्दछ । यो चिल्लो हुन्छ । यसले कफविकार बढाउँदछ । यसले राक्षसबाधा, क्षयरोग, वीसर्प (शरीरमा ससाना फोका उठी जरो आउने छालाको एक रोग । सुके लुतो ।) र रक्तविकार हटाउँदछ ।

## गाईको घिउ

**गव्यं घृतं विशेषेण चक्षुष्यं वृष्यमग्निकृत् ॥४॥**
**स्वादु पाककरं शीतं वातपित्तकफापहम् ।**
**मेधालावण्यकान्त्योजस्तेजोवृद्धिकरं परम् ॥५॥**
**अलक्ष्मीपापरक्षोघ्नं वयसः स्थापकं गुरु ।**
**बल्यं पवित्रमायुष्यं सुमङ्गल्यं रसायनम् ॥६॥**
**सुगन्धं रोचनं चारु सर्वाज्येषु गुणाधिकम् ।**

गाईको घिउले विशेषगरी आँखालाई फाइदा गर्दछ । यो वीर्यवर्धक र पाचनशक्तिवर्धक हुन्छ । गाईको घिउ पचेपछि गुलियो हुन्छ । यसले शीतल गर्दछ तथा वातविकार, पित्तविकार र कफविकार नाश गर्दछ । यसले दिमागको ग्रहण गर्ने क्षमता, लावण्य, कान्ति, ओज र तेज धेरै नै बढाउँदछ । गाईको घिउले अलक्ष्मी, पाप र राक्षसबाधा हटाउँदछ । यसले उमेरलाई स्थिर राख्दछ । यो पचाउन कठिन हुन्छ । यसले बल दिन्छ । यो पवित्र हुन्छ । यसले आयु बढाउँदछ । यो मङ्गलदायक, रसायनी, सुगन्धी, रुचिकर.. र सबै खालका घिउमा उत्तम गुणको घिउ हुन्छ ।

## भैंसीको घिउ

**माहिषन्तु घृतं स्वादु पित्तरक्तानिलापहम् ॥७॥**
**शीतलं श्लेष्मलं वृष्यं गुरु स्वादु विपच्यते ।**

भैंसीको घिउ स्वादिलो तथा पित्तविकार, रक्तविकार र वातविकार नाशक हुन्छ । यसले शीतल गर्दछ तथा कफविकार र वीर्य बढाउँदछ । यो पचाउन कठिन र पचेपछि गुलियो हुन्छ ।

## बाख्राको घिउ

**आजमाज्यं करोत्यग्निं चक्षुष्यं बलवर्द्धनम् ॥८॥**
**कासे श्वासे क्षये चापि हितं पाके भवेत् कटु ।**

बाख्राको घिउ जठराग्नि बढाउने, आँखाका लागि हितकर, बलवर्धक तथा खोकी, दम र क्षयरोगमा लाभदायक हुन्छ । यो घिउ पचेपछि पिरो हुन्छ ।

## उँटको घिउ

**औष्ट्रं कटु घृतं पाके शोषकृमिविषापहम् ॥९॥**
**दीपनं कफवातघ्नं कुष्ठगुल्मोदरापहम् ।**

उँटको घिउ पचेपछि पिरो हुन्छ । यसले शरीर सुकाउने छ किसिमका क्षयरोय, पेटका कीरा र विषविकार नाश गर्दछ । यो दीपन तथा कफविकार, वातविकार, कुष्ठ, गुल्म र पेटका रोग नाशक हुन्छ ।

## भेडीको घिउ

**पाके लघ्वाविकं सर्पिः सर्वरोगविनाशनम् ॥१०॥**
**वृद्धिं करोति चास्थ्नां वा अश्मरीशर्कराऽपहम् ।**
**चक्षुष्यमग्निसंधुक्ष्यं वातदोषनिवारणम् ॥११॥**

भेडीको घिउ पचेपछि हलुका हुन्छ । यसले सबै रोग नाश गर्दछ । यसले हाड बढाउँदछ तथा पत्थरी र मधुमेह नाश गर्दछ । यो घिउले आँखालाई फाइदा गर्दछ, जठराग्निलाई बाल्दछ र वातविकारलाई नाश गर्दछ ।

## स्त्रीको घिउ

**कफेऽनिले योनिदोषे पित्ते रक्ते च तद्धितम् ।**
**चक्षुष्यमाज्यं स्त्रीणां वा सर्पिः स्यादमृतोपमम् ॥१२॥**

कफविकार, वातविकार, योनिजन्य रोग, पित्तविकार र रक्तविकारमा स्त्रीको घिउ हितकर हुन्छ । यो घिउ आँखाका लागि पनि फाइदाजनक हुन्छ । यो घिउ अमृतसमान हुन्छ ।

## घोडीको घिउ

**वृद्धिं करोति देहाग्नेर्लघु पाके विषापहम् ।**
**तर्पणं नेत्ररोगघ्नं दाहनुद् वडवाघृतम् ॥१३॥**

घोडीको घिउले शरीर र जठराग्निलाई बढाउँदछ । यो पचेपछि हलुका हुन्छ । यसले विषविकार नाश गर्दछ र तृप्ति दिन्छ । यो घिउले आँखाका रोग र डाह नाश गर्दछ ।

## दूधबाट निकालिएको घिउ

**घृतं दुग्धभवं ग्राहि शीतलं नेत्ररोगहृत् ।**
**निहन्ति पित्तदाहास्रमदमूर्च्छाभ्रमानिलान् ॥१४॥**

दूधबाट निकालिएको घिउ ग्राहि, शीतल गर्ने तथा आँखाका रोग, पित्तविकार, डाह, रक्तविकार, नसा, बेहोसी, भ्रम र वातविकार नाशक हुन्छ ।

## एकदिनको बासी दूधको घिउ

**हविर्ह्यस्तनदुग्धोत्थं तत्स्याद्धैयङ्गवीनकम् ।**
**हैयङ्गवीनं चक्षुष्यं दीपनं रुचिकृत्परम् ॥१५॥**
**बलकृद् बृंहणं वृष्यं विशेषाज्ज्वरनाशनम् ।**

एक दिनको बासी दूधबाट निकालिएको घिउलाई 'हैयङ्गवीन' भनिन्छ । यो घिउ आँखाका लागि हितकर, दीपन र अति नै रुचिकवर्धक हुन्छ । यसले बल दिन्छ । यो पौष्टिक हुन्छ र विशेषगरी यसले जरो नाश गर्दछ ।

## पुरानो घिउ

**वर्षादूर्ध्वं भवेदाज्यं पुराणं तत् त्रिदोषनुत् ॥१६॥**
**मूर्च्छाकुष्ठविषोन्मादापस्मारतिमिरापहम् ।**
**यथा यथाऽखिलं सर्पिः पुराणमधिकं भवेत् ॥१७॥**
**तथा तथा गुणैः स्वैः स्वैरधिकं तदुदाहृतम् ।**

एक वर्ष पुरानो घिउले त्रिदोष, बेहासी, कुष्ठ, विषविकार, उन्माद, छारेरोग र तिमिर रोग नाश गर्दछ माथि बताइएका घिउहरू जति जति पुरानो हुँदै जान्छन् त्यति त्यति गुनिला हुँदै जान्छन् ।

### ताजा घिउको प्रयोग

**योजयेन्नवमेवाज्यं भोजने तर्पणे श्रमे ॥१८॥**
**बलक्षये पाण्डुरोगे कामलानेत्ररोगयोः ।**

भोजन गर्दा, तर्पणमा (तृप्तिका लागि खाँदा), थकित हुँदा, बल कम हुँदा, पाण्डुरोगमा, कमलपित्तमा र आँखाका रोगमा नयाँ वा ताजा घिउ नै प्रयोग गर्नु पर्दछ ।

### धेरै घिउ खान नहुने अवस्था

**राजयक्ष्मणि बाले च वृद्धे श्लेष्मकृते गदे ॥१९॥**
**रोगे सोमे विषूच्याञ्च विबन्धे च मदात्यये ।**
**ज्वरे च दहने मन्दे न सर्पिर्बहु मन्यते ॥२०॥**

क्षयरोगमा, बालकका लागि, वृद्धका लागि, कफजन्य रोग हुँदा, आमजन्य रोग हुँदा, हैजा लाग्दा, दिसा गोटा पर्दा, मदात्ययमा, जरो आउँदा र पाचनशक्ति कमजोर हुँदा धेरै घिउ खानु फाइदाजनक हुँदैन ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे घृतवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको घिउवर्गको मोहन प्रसाद
सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ मूत्रवर्गः ॥
## (मूत्रवर्ग)

### गहुँत

**गोमूत्रं कटु तीक्ष्णोष्णं क्षारं तिक्तकषायकम् ।**
**लघ्वग्निदीपनं मेध्यं पित्तकृत्कफवातहृत् ॥१॥**

**शूलगुल्मोदरानाहकण्ड्वक्षिमुखरोगजित् ।**
**किलासगदवातामवस्तिरुक्कुष्ठनाशनम् ॥**
**कासश्वासापहं शोथकामलापाण्डुरोगहृत् ॥२॥**
**कण्डूकिलासगदशूलमुखाक्षिरोगान्गुल्मातिसारमरुदामयमूत्ररोधान् ।**
**कासं सकुष्ठजठरकृमिपाण्डुरोगान्गोमूत्रमेकमपि पीतमपाकरोति ॥३॥**
**सर्वेष्वपि च मूत्रेषु गोमूत्रं गुणतोऽधिकम् ।**
**अतोऽविशेषात्कथने मूत्रं गोमूत्रमुच्यते ॥४॥**
**प्लीहोदरश्वासकासशोथवर्चोग्रहापहम् ।**
**शूलगुल्मरुजाऽनाहकामलापाण्डुरोगहृत् ॥**
**कषायं तिक्ततीक्ष्णं च पूरणात्कर्णशूलहृत् ॥५॥**

गहुँत पिरो, तिक्खर, गर्मी गर्ने, नुनिलो, तीतो र टर्रो हुन्छ । यो पचाउन हलुका, पाचक अग्निलाई दीपन गर्ने, दिमागको ग्रहण गर्ने क्षमताका लागि हितकर, पित्तविकार बढाउने तथा कफविकार, वातविकार, शूल, गुल्म, पेटका रोग, आनाह, लुतो, आँखाका रोग, मुखका रोग, कुष्ठरोग विशेष (किलास), आमजन्य वातरोग, तल्लो पेटका रोग, कुष्ठरोग, खोकी, दम, सुजन, कमलपित्त र पाण्डुरोग नाशक हुन्छ । गहुँत मात्र पिउनाले पनि लुतो, किलास, शूल, मुखका रोग, आँखाका रोग, गुल्म, अतिसार, वातजन्य रोग, पिसाब रोकिने रोग, खोकी, कुष्ठरोग, पेटका रोग, पेटका कीरा र पाण्डुरोग नाश हुन्छ । सबै खालका मूत्रमा गहुँत नै बढी गुनिलो हुन्छ । यसैले जहाँ "मूत्र" शब्द प्रयोग गरिएको हुन्छ त्यहाँ गहुँतलाई नै भनिएको हो भनी बुझ्नु पर्दछ । गहुँतले फियोका रोग, पेटका रोग, दम, खोकी, सुजन, कब्जियत, ग्रहबाधा, शूल, गुल्म, आनाह, कमलपित्त, र पाण्डुरोग नाश गर्दछ । गहुँत टर्रो, तीतो र तिक्खर हुन्छ । यो कानमा हाल्नाले कर्णशूल नाश हुन्छ ।

## नरमूत्र

**नरमूत्रं गरं हन्ति सेवितं तद्रसायनम् ।**
**रक्तपामाहरं तीक्ष्णं सक्षारलवणं स्मृतम् ॥६॥**

नरमूत्रले गरविष (कृत्रिम विष) नाश गर्दछ । यो रसायनी हुन्छ । यसले रक्तविकार र पामारोग (धेरै पीप बगिरहने, धेरै पोल्ने र चिलाउने, ससाना बिमिरा आउने लुतो विशेष, भैंसे लुतो विशेष, यसलाई अठार थरीका कुष्ठरोगमध्येको एक मानिन्छ) नाश गर्दछ । यो तिक्खर, नुनिलो र क्षारयुक्त हुन्छ ।

## मूत्रको प्रयोग

**गोऽजाऽविमहिषीणां तु स्त्रीणां मूत्रं प्रशस्यते ।**
**खरोष्ट्रेभनराश्वानां पुंसां मूत्रं हितं स्मृतम् ॥७॥**

गाई, बाख्रा र भैंसीको स्त्रीजातिको तथा गदा, उँट, हात्ती, मानिस र घोडाको पुरुष जातिको मूत्र हितकर हुन्छ ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे मूत्रवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको मूत्रवर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ तैलवर्गः ॥

### तेलको परिभाषा र गुण

**तिलादिस्निग्धवस्तूनां स्नेहस्तैलमुदाहृतम् ।**
**तत्तु वातहरं सर्वं विशेषात्तिलसम्भवम् ॥१॥**

तिल आदि चिल्लो भएका वस्तुको चिल्लोलाई मुनिजनले तेल भनी बताएका छन् । सबै खालको तेलले वातविकार नाश गर्ने भएपनि तिलको तेलले विशेष रूपले वातविकार नाश गर्दछ ।

### तिलको तेल

**तिलतैलं गुरु स्थैर्यबलवर्णकरं सरम् ।**
**वृष्यं विकाशि विशदं मधुरं रसपाकयोः ॥२॥**
**सूक्ष्मं कषायानुरसं तिक्तं वातकफापहम् ।**
**वीर्येणोष्णं हिमं स्पर्शे बृंहणं रक्तपित्तकृत् ॥३॥**
**लेखनं बद्धविण्मूत्रं गर्भाशयविशोधनम् ।**
**दीपनं बुद्धिदं मेध्यं व्यवायि व्रणमेहनुत् ॥४॥**
**श्रोत्रयोनिशिरःशूलनाशनं लघुताकरम् ।**
**त्वच्यं केश्यं च चक्षुष्यमभ्यङ्गे भोजनेऽन्यथा ॥५॥**
**छिन्नभिन्नच्युतोत्पिष्टमथितक्षतपिच्चिते ।**
**भग्नस्फुटितविद्धाग्निदग्धविश्लिष्टदारिते ॥६॥**
**तथाऽभिहतनिर्भुग्नमृगव्याघ्रादिविक्षते ।**
**वस्तौ पानेऽन्नसंस्कारे नस्ये कर्णाक्षिपूरणे ॥७॥**
**सेकाभ्यङ्गावगाहेषु तिलतैलं प्रशस्यते ।**

तिलको तेल पचाउन कठिन, शरीरलाई स्थिर राख्ने, बलदायक, वर्णमा निखार लेराउने, मलमूत्र तलतिर सार्ने, वीर्यवर्धक, विकाशी, विशद र शुरुमा तथा पचेपछि पनि मिठो हुन्छ । यो सूक्ष्म गुणको, पहिले तीतो र पछि टर्रो, वातविकार र कफविकार नाशक, गर्मी गर्ने, छुँदा चिसो, पौष्टिक, रक्तपित्त गर्ने, लेखन गुणको, दिसापिसाबलाई रोक्ने र गर्भाशयलाई शुद्ध बनाउने गुणको हुन्छ । यो दीपन, बुद्धिदायक, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, व्यवायि तथा घाउखटिरा र प्रमेह नाशक हुन्छ । तिलको तेलले कान, योनि र टाउकाको शूल नाश गर्दछ । यसले शरीरलाई हल्का पार्दछ । यो तेल छाला, कपाल र आँखाका लागि दल्दा हितकर तथा खाँदा अहितकर हुन्छ । शरीरका कुनै अङ्ग चुँडिदा (छिन्न), छुट्टिँदा (भिन्न), झर्दा (च्युत), पिधिँदा (उत्पिष्ट), हुँडलिँदा (मथित), घाउ हुँदा (क्षत), च्यापिँदा (पिच्चित), टुटफुट हुँदा (भग्न), फुट्दा (स्फुटित),

प्वाल पर्दा (विद्ध), आगोले पोल्दा (अग्निदग्ध), फुल्दा (विश्लिष्ट), च्यार्तिंदा (दारित), चोट लाग्दा (अभिहत), बाङ्गिदा (निर्भुग्न) र बाघ आदि जनावरबाट घाइते हुँदा तिलको तेल लाभदायक हुन्छ । वस्तिकर्ममा, पिउन, अनाज पकाउन, नस लिन, कानमा हाल्न, आँखामा हाल्न, सेक्न, माड्न र उपचारका लागि डुब्न वा कुनै अङ्ग चोपल्न तिलको तेल हितकर हुन्छ ।

**रूक्षादिदुष्टः पवनः स्रोतः संकोचयेद् यदा ॥८॥**
**रसोऽसम्यग्वहन् कार्श्यं कुर्याद्रक्तान्यवर्द्धयन् ।**
**तेषु प्रवेष्टुं सरतासौक्ष्म्यस्निग्धत्वमार्दवैः ॥९॥**
**तैलं क्षमं रसं नेतुं कृशानां तेन बृंहणम् ।**
**व्यवायिसूक्ष्मतीक्ष्णोष्णसरत्वैर्मेदसः क्षयम् ॥१०॥**
**शनैः प्रकुरुते तैलं तेन लेखनमीरितम् ।**
**द्रुतं पुरीषं बध्नाति स्खलितं तत्प्रवर्त्तयेत् ॥११॥**
**ग्राहकं सारकञ्चापि तेन तैलमुदीरितम् ।**

यो तेल पौष्टिक पनि लेखन पनि कसरी हुन्छ ? रुखो पदार्थ खानाले जब शरीरको वायु विकृत भई रसको बाटोलाई छेक्न थाल्दछ तब शरीरमा रस राम्ररी बहन सक्दैन । यसले गर्दा रगत बढ्न पनि पाउँदैन र शरीर दुब्लाउन थाल्दछ । यसबेला तिलको तेलले ती खुम्चिएका नसालाई आफूमा भएको सार्ने, सूक्ष्मता, चिल्लोपना र नरमपना जस्ता गुणले भित्र छिरी रोकिएका सबै रसलाई यथास्थान लैजान समर्थ हुन्छ । यसैले यो तेललाई दुब्ला मानिसका लागि पौष्टिक (बृंहण) हुन्छ भनिएको हो । यसैगरी यो तेलमा हुने व्यवायी, सूक्ष्मता, तिक्खरपन, गर्मीपन र सार्ने गुणले गर्दा यसले विस्तारै विस्तारै बोसोलाई नाश गर्दछ । यसैले तिलको तेललाई लेखन गुणको हुन्छ भनिएको हो । यसले पातलो दिसालाई कस्दछ र आफ्नो ठाउँबाट सरिसकेको दिसालाई तलतिर धकेल्दछ । यसैले यो तेललाई क्रमशः ग्राही र सारक भनिएको हो ।

## पुरानो तेल

**घृतमब्दात्परं पक्वं हीनवीर्यं प्रजायते ॥१२॥**
**तैलं पक्वमपक्वं वा चिरस्थायि गुणाधिकम् ।**

एक वर्षभन्दा बढी भएको पुरानो घिउ पकाउँदा वीर्यहीन हुन्छ तर तेल पकाएको होस् वा काँचो जति जति पुरानो हुँदै जान्छ उति उति गुनिलो हुन्छ ।

## सर्सिउँको तेल

**दीपनं सार्षपं तैलं कटुपाकरसं लघु ॥१३॥**
**लेखनं स्पर्शवीर्य्योष्णं तीक्ष्णं पित्तास्रदूषकम् ।**
**कफमेदोऽनिलार्शोघ्नं शिरःकर्णामयापहम् ॥१४॥**
**कण्डूकुष्ठकृमिश्वित्रकोठदुष्टकृमिप्रणुत् ।**
**तद्वद्राजिकयोस्तैलं विशेषान्मूत्रकृच्छ्रकृत् ॥१५॥**

सर्सिउँको तेल दीपन तथा शुरुमा र पचेपछि पिरो हुन्छ । यो पचाउन हलुका हुन्छ । यो लेखन, छुँदा तातो, खाँदा गर्मी गर्ने, तिक्खर तथा पित्तविकार र रक्तविकार बढाउने गुणको हुन्छ । सर्सिउँको तेलले कफविकार, बोसोविकार, वातविकार, अल्काई, टाउकाका रोग, कानका रोग, लुतो, कुष्ठ, कीरा, सेतो कुष्ठ र खराब कीरा नाश गर्दछ । कालो र रातो रायोको तेलमा पनि यिनै गुण हुन्छन् । तर यसले विशेषतः मूत्रकृच्छ्र गराउँदछ ।

## तोरीको तेल

**तीक्ष्णोष्णं तुवरी तैलं लघु ग्राहि कफास्रजित् ।**
**बह्विकृद्विषहृत्कण्डूकुष्ठकोठकृमिप्रणुत् ॥१६॥**
**मेदोदोषापहं चापि व्रणशोथहरं परम् ।**

तोरीको तेल तिक्खर, गर्मी गर्ने, पचाउन सहज, ग्राहि, कफविकार नाशक, रक्तविकार नाशक, जठराग्नि बर्धक तथा विषविकार, लुतो, कुष्ठ, कोठका कीरा ?, बोसोका विकार, घाउखटिरा र अति सुजन नाशक हुन्छ ।

## आलसको तेल

**अतसीतैलमाग्नेयं स्निग्धोष्णं कफपित्तकृत् ॥१७॥**
**कटुपाकमचक्षुष्यं बल्यं वातहरं गुरु ।**
**मलकृद्रसतः स्वादु ग्राहि त्वग्दोषहृद् घनम् ॥१८॥**
**वस्तौ पाने तथाऽभ्यङ्गे नस्ये कर्णस्य पूरणे ।**
**अनुपानविधौ चापि प्रयोज्यं वातशान्तये ॥१९॥**

आलसको तेलमा अग्निको अंश बढी हुन्छ । यो चिल्लो, गर्मी गर्ने तथा कफविबार र पित्तविकार गर्ने गुणको हुन्छ । यो पचेपछि पिरो हुन्छ । यसले आँखालाई फाइदा गर्दैन । यो बलदायक, वातविकार नाशक र पचाउन कठिन हुन्छ । यसले दिसा बढाउँदछ । यो गुलियो, ग्राहि र छालाका रोग नाशक हुन्छ । आलसको तेल बाक्लो हुन्छ । यो तेल वस्तिकर्ममा पिउन, मालिस गर्न, नस लिन, कानमा हाल्न तथा वातविकार शान्त पार्ने उद्देश्यले पिउन प्रयोग गर्नु पर्दछ ।

## कुसुमको तेल

**कुसुम्भतैलमम्लं स्वादुष्णं गुरुविदाहि च ।**
**चक्षुर्भ्यामहितं बल्यं रक्तपित्तकफप्रदम् ॥२०॥**

कुसुमको तेल अमिलो, स्वादिलो, गर्मी गर्ने, पचाउन कठिन, विदाहि, आँखाका लागि फाइदा नगर्ने, बलदायक, तथा रक्तविकार, पित्तविकार र कफविकार गर्ने गुणको हुन्छ ।

## अफिमको तेल

**तैलं तु खसबीजानां बल्यं वृष्यं गुरुस्मृतम् ।**
**वातहृत्कफहृच्छीतं स्वादुपाकरसं च तत्॥२१॥**

अफिमको तेल बलदायक, वीर्यवर्धक, पचाउन कठिन, वातविकार नाशक, कफविकार नाशक, शीतल गर्ने र पचेपछि गुलियो हुने गुणको हुन्छ ।

## अँडिरको तेल

**एरण्डतैलं तीक्ष्णोष्णं दीपनं पिच्छिलं गुरु ।**
**वृष्यं त्वच्यं वयःस्थापि मेधाकान्तिबलप्रदम्॥२२॥**
**कषायानुरसं सूक्ष्मं योनिशुक्रविशोधनम् ।**
**विस्रं स्वादु रसे पाके सतिक्तं कटुकं रसम्॥२३॥**
**बिषमज्वरहृद्रोगपृष्ठगुह्यादिशूलनुत् ।**
**हन्ति वातोदरानाहगुल्माष्ठीलाकटिग्रहान्॥२४॥**
**वातशोणितविड्बन्धव्रध्नशोथामविद्रधीन् ।**
**आमवातगजेन्द्रस्य शरीरवनचारिणः॥२५॥**
**एक एव निहन्ताऽयमैरण्डस्नेहकेसरी ।**

अँडिरको तेल तिक्खर, गर्मी गर्ने, दीपन, लेस्याइलो, पचाउन कठिन, वीर्यवर्धक, छालाका लागि हितकर, उमेरलाई स्थिर राख्ने, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, कान्ति बढाउने, बलदायक, टर्रो, सूक्ष्म, योनि शुद्ध पार्ने, शुक्र शुद्ध पार्ने, गनाउने, तीतो, पिरो, पचेपछि गुलियो तथा विषमज्वर, मुटुका रोग, ढाडको शूल, गुदद्वार आदिको शूल, वातविकार, पेटका रोग, आनाह, गुल्म, अष्ठीला, कमर नचल्ने रोग, वातरक्त, कब्जियत, व्रध्न, सुजन, आमविकार र विद्रधि नाशक हुन्छ । अँडिरको तेलरूपी सिँहले शरीररूपी जङ्गलमा घुम्ने आमवातरूपी हात्तीलाई एक्लै नाश गर्दछ ।

## सालको तेल

**तैलं सर्जरसोद्भूतं विस्फोटव्रणनाशनम्॥२६॥**
**कुष्ठपामाकृमिहरं वातश्लेष्मामयापहम् ।**

सर्जरस (साल) को तेलले फोका, घाउ, कुष्ठ, पामा, कीरा, वातविकार र कफविकार नाश गर्दछ ।

## अन्य तेल

**तैलं स्वयोनिगुणकृद्वाग्भटेनाखिलं मतम्॥**
**अतः शेषस्य तैलस्य गुणा ज्ञेयाः स्वयोनिवत्॥२७॥**

सबै तेलमा त्यो जुन द्रव्यको तेल हो त्यसैको गुण हुन्छ । यसैले अन्य तेलका गुण त्यो द्रव्यको गुण अनुसार नै हुन्छ भनी जान्नू ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे तैलवर्गः समाप्तः ॥**

॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको तेलवर्गको मोहन प्रसाद सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अथ सन्धानवर्गः ॥
## (मदिरा वर्ग)

### काञ्जिक

**सन्धितं धान्यमण्डादि काञ्जिकं कथ्यते जनैः ।**
**काञ्जिकं भेदि तीक्ष्णोष्णं रोचनं पाचनं लघु ॥१॥**
**दाहज्वरहरं स्पर्शात्पानाद्वातकफापहम् ।**
**माषादिवटकैर्यत्तु क्रियते तद्गुणाधिकम् ॥२॥**
**लघु वातहरं तत्तु रोचनं पाचनं परम् ।**
**शूलाजीर्णविबन्धामनाशनं वस्तिशोधनम् ॥३॥**

अनाज, माड (मण्ड) आदिलाई पानी सहित कुनै भाँडामा तीन दिनसम्म मुख बन्द गरी राखिएको पदार्थलाई काँजी भनिन्छ । काँजीले दिसा खुकुलो पार्दछ । यो तिक्खर, गर्मी गर्ने, रुचिकर, पाचक र पचाउन हलुका हुन्छ । यो दल्नाले डाह र जरो तथा पिउनाले वातविकार र कफविकार नाश गर्दछ । मासको बारा आदिको काँजी बढी गुनिलो हुन्छ । यस्तो काँजी पचाउन हलुका, वातविकार नाशक, रुचिकर र अति नै पाचक हुन्छ । यसले शूल, अजीर्ण, कब्जियत र आमविकार नाश गर्दछ ।

**शोषमूर्च्छाभ्रमार्त्तानां मदकण्डूविशोषिणाम् ।**
**कुष्ठिनां रक्तपित्तिनां काञ्जिकं न प्रशस्यते ॥४॥**
**पाण्डुरोगे यक्ष्मणि च तथा शोषातुरेषु च ।**
**क्षतक्षीणे तथा श्रान्ते मन्दज्वरनिपीडिते ॥५॥**
**एतेषां न हितं प्रोक्तं काञ्जिकं दोषकारकम् ।**

छ किसिमका क्षयरोग लागेर शरीर सुकेका, बेहोस भइरहने, पागलपन हुने, मद (नसाले) सुकेका, लुतो आदिले ग्रस्त भएका, कुष्ठरोगी, रक्तपित्तका रोगी, पाण्डुरोगी, क्षयरोगी, सुकेनासका रोगी, चोटपटक लागेर थला परेका, परिश्रमले थकित र हल्का जरो आएका व्यक्तिका लागि काँजी हितकर हुँदैन, यसबेला काँजी खाँदा यसले उल्टो अनेक थरी रोग निकाल्दछ ।

### तुषोदक (अर्क विशेष)

**तुषोदकं यवैरामैः सतुषैः शकलीकृतैः ॥६॥**
**तुषाम्बु दीपनं हृद्यं पाण्डुकृमिगदापहम् ।**
**तीक्ष्णोष्णं पाचनं पित्तरक्तकृद्बस्तिशूलनुत् ॥७॥**

काँचो र भुस सहितको जौ पिँधेर निकालिने अर्कलाई 'तुषोदक' भनिन्छ । यो दीपन, मुटुका लागि हितकर तथा पाण्डु र कीराजन्य रोग नाशक हुन्छ । यो तिक्खर, गर्मी गर्ने, पाचन, पित्तविकार र रक्तविकार गर्ने तथा तल्लोपेटको शूल नाश गर्ने गुणको हुन्छ ।

## सौवीर

**सौवीरं तु यवैरामैः पक्वैर्वा निस्तुषैः कृतम् ।**
**गोधूमैरपि सौवीरमाचार्याः केचिदूचिरे ॥८॥**
**सौवीरं तु ग्रहण्यर्शःकफघ्नं भेदि दीपनम् ।**
**उदावर्त्ताङ्गमर्दास्थिशूलानाहेषु शस्यते ॥९॥**

काँचो अथवा पाकेको बोक्रा नभएको जौलाई टुक्रा पारी बनाइने अर्कलाई 'सौवीर' भनिन्छ । कुनै कुनै आचार्यले बोक्रा नभएको गहुँको अर्कलाई पनि 'सौवीर' भनेका छन् । यसले ग्रहणी (पाचक वा खाएको अन्न-जल पचाइदिने अग्नि अर्थात् जठराग्निको आधार भएकी नाभिस्थानभन्दा केही माथि ग्रहणी नाम भएकी एउटी अन्न-जल ग्रहण गर्ने नाडी रहन्छे । त्यो नाडीले अपक्व अन्न-जल लिएर पक्व गराई मल-मूत्ररूपमा परिणत पारेर अधोमार्गद्वारा निकालिदिन्छे । त्यस नाडीमा दोष सञ्चय हुन जाँदा खाएको अन्न-जल अपक्व नै निस्कन लाग्दछ अथवा पक्क्व भइगयो भने पनि धेरै पटक गरी निस्कन लाग्दछ । यस्तो रोगलाई ग्रहणीरोग भनिन्छ), अल्काई र कफविकार नाश गर्दछ अनि दिसा खुकुल्याउँदछ । यो दीपन (आम वा खाएको कुरा पचेर बनेको रसलाई नपचाउने तर पाचकाग्निलाई बाल्ने) हुन्छ । सौवीर उदावर्त (अपानवायु माथितिर सरी मलमूत्रलाई पनि माथिमाथि तान्ने पेटको रोग । अपानवायु, दिसा, पिसाब, हाई आँसु, हाच्छिउँ, डकार, बान्ता, शुक्र, भोक, तिर्खा, निःश्वास र निद्रा आउन लाग्दा जबरजस्ती रोक्ने गरे यो रोग लाग्दछ । रोग लागिसकेपछि दिसा, पिसाब र अपानवायु बन्द हुन्छ । पेट कराउने गर्दछ । शरीर कमजोर भई दुख्न थाल्दछ ।), आङको दुखाई, हाडको शूल र आनाह (पचेर अथवा नपची दूषित भएको मलमूत्र पेटमा रोकिएर हुने रोग) मा हितकर हुन्छ ।

## आरनाल (गहुँको अर्क विशेष)

**आरनालं तु गोधूमैरामैः स्यान्निस्तुषीकृतैः ।**
**पक्वैर्वा सन्धितैस्तत्तु सौवीरसदृशं गुणैः ॥१०॥**

काँचो वा पाकेको केलाएको गहुँको धुलोबाट बनाइने अर्कलाई 'आरनाल' भनिन्छ । आरनालको गुण सौवीर सरह हुन्छ ।

## धान्याम्ल (अर्कविशेष)

**धान्याम्लं शालिचूर्णं च कोद्रवादिकृतं भवेत् ।**
**धान्याम्लं धान्ययोनित्वाप्रीणनं लघु दीपनम्॥११॥**
**अरुचौ वातरोगेषु सर्वेष्वास्थापने हितम् ।**

मार्सी चामल, कोदो आमदिको धुलोबाट बनाइने अर्कलाई 'धान्याम्ल' भनिन्छ । धान्याम्ल अनाजबाट बनाइने हुनाले तृप्तिदायक, पचाउन हलुका र दीपन हुन्छ । यो अरुचिमा, वातरोगमा र सबै खालका आस्थापन वस्तिमा हितकर हुन्छ ।

## शिण्डाकी (अर्कविशेष)

**शिण्डाकी राजिकायुक्तैः स्यान्मूलकदलद्रवैः॥१२॥**
**सर्षपस्वरसैर्वाऽपि शालिपिष्टकसंयुतैः ।**
**शिण्डाकी रोचनी गुर्वी पित्तश्लेष्मकरी स्मृता॥१३॥**

पात सहितको मूला र रायो वा सर्सिउँ मिसाएर त्यसमा चामलको पिठो हाली बनाइने अर्कलाई "शिण्डाकी" भनिन्छ । यो अर्क रुचि जगाउने, पचाउन कठिन, पित्तविकार गर्ने र कफविकार गर्ने गुणको हुन्छ ।

## शुक्त (अर्कविशेष)

**कन्दमूलफलादीनि सस्नेहलवणानि च ।**
**यत्र द्रवेऽभिषूयन्ते तच्छुक्तमभिधीयते॥१४॥**
**शुक्तं कफघ्नं तीक्ष्णोष्णं रोचनं पाचनं लघु ।**
**पाण्डुकृमिहरं रूक्षं भेदनं रक्तपित्तकृत्॥१५॥**

कन्दमूल, फलफूल आदिमा चिल्लो र नुन मिसाएर निकालिने अर्कलाई "शुक्त" भनिन्छ । शुक्त कफनाशक, तिक्खर, गर्मी गर्ने, रीचकर, पाचक र पचाउन हलुका हुन्छ । यसले पाण्डु र कीरा नाश गर्दछ । यो रुखो भेदन र रक्तपित्त गर्ने गुणको हुन्छ ।

## आसुत (काँजी विशेष)

**कन्दमूलफलाढ्यं यत्तत्तु विज्ञेयमासुतम् ।**
**तद्रुच्यं पाचनं वातहरं लघु विशेषतः॥१६॥**

कन्दमूल र फलफूल समेत हालिएको काँजीलाई 'आसुत' भनिन्छ । यो रुचिकर, पाचक, वातविकार नाशक र विशेषतः पचाउन सहज हुन्छ ।

## मद्यका संस्कृत पर्यायवाची नामहरू

**मद्यन्तु सीधुमैरेयमिरा च मदिरा सुरा ।**
**कादम्बरी वारुणी च हालाऽपि बलवल्लभा ॥१७॥**

मद्य, सीधु, मैरेय, इरा, मदिरा, सुरा, कादम्बरी, वारुणी, हाला र बलवल्लभा : यी मदिराका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### मद्यको परिभाषा र प्रकार

**पेयं यन्मादकं लोकैस्तन्मद्यमभिधीयते ।**
**यथाऽरिष्टं सुरा सीधुरासवाद्यमनेकधा ॥१८॥**

पिउँदा नसा लगाउने द्रव्यलाई मानिसहरू 'मद्य' भन्दछन् । अरिष्ट, सुरा, सीधु, आसव आदि मद्यका अनेक प्रकार हुन्छन् ।

### मद्यका गुण र अवगुण

**मद्यं सर्वं भवेदुष्णं पित्तकृद्वातनाशनम् ।**
**भेदनं शीघ्रपाकं च रूक्षं कफहरं परम् ॥१९॥**
**अम्लं च दीपनं रुच्यं पाचनं चाशुकारि च ।**
**तीक्ष्णं सूक्ष्मं च विशदं व्यवायि च विकाशि च ॥२०॥**

सबै खालका मद्य गर्मी र पित्तविकार गर्ने, वातविकार नाशक, भेदन, चाँडै पच्ने, रुखा र धेरै नै कफविकार नाशक हुन्छन् । यी अमिला, दीपन, रुचिकर, पाचन, आशुकारी, तिक्खर, सूक्ष्म, विशद, व्यवायि र विकाशि हुन्छन् ।

### अरिष्ट (अर्कविशेष)

**पक्वौषधाम्बुसिद्धं यन्मद्यं तत्स्यादरिष्टकम् ।**

पकाइएको औषधी र पानीबाट निकालिने अर्कलाई 'अरिष्ट' भनिन्छ ।

**अरिष्टं लघुपाकेन सर्वतश्च गुणाधिकम् ॥२१॥**
**अरिष्टस्य गुणा ज्ञेया बीजद्रव्यगुणैः समाः ।**

अरिष्ट पचेपछि हलुका र सबैभन्दा बढी गुनिलो हुन्छ । अरिष्टको गुण जे द्रव्यले यो बनाइन्छ त्यही द्रव्यको गुणले युक्त हुन्छ ।

### सुरा

**शालिषष्टिकपिष्टादिकृतं मद्यं सुरा स्मृता ॥२२॥**
**सुरा गुर्वी बलस्तन्यपुष्टिमेदःकफप्रदा ।**
**ग्राहिणी शोथगुल्मार्शोग्रहणीमूत्रकृच्छ्रनुत् ॥२३॥**

मार्सी वा सठिया चामलको पीठो आदिबाट बनाइने अर्कलाई ‘सुरा’ भनिन्छ । सुरा पचाउन कठिन, बलबर्धक, दूधवर्धक, शरीरलाई पुष्टि गर्ने, बोसो बढाउने र कफ बढाउने गुणको हुन्छ । यो ग्राहि हुन्छ । यसले सुजन, गुल्म, अल्काई, ग्रहणी र मूत्रकृच्छ्र नाश गर्दछ ।

## वारुणी (अर्कविशेष)

**पुनर्नवाशिलापिष्टैर्विहिता वारुणी स्मृता ।**
**संहितैस्तालखर्जूररसैर्या साऽपि वारुणी ॥२४॥**
**सुरावद्वारुणी लघ्वी पीनसाध्मानशूलनुत् ।**

पुनर्नवा र मार्सी चामलको पिठो मिसाई बनाइने अर्कलाई “वारुणी” भनिन्छ । ताड र खजूरको रसको अर्कलाई पनि “वारुणी” भनिन्छ । सुराजस्तै वारुणीका गुण भएपनि यो सुराभन्दा बढी पचाउन सहज हुन्छ । विशेषतः यो पिनास, आध्मान र शूल नाशक हुन्छ ।

## पक्वरस सीधु र शीतरस सीधु (अर्कविशेष)

**इक्षोः पक्वै रसैः सिद्धः सीधुः पक्वरसश्च सः ॥२५॥**
**आमैस्तैरेव यः सीधुः स च शीतरसः स्मृतः ।**
**सीधुः पक्वरसः श्रेष्ठः स्वराग्निबलवर्णकृत् ॥२६॥**
**वातपित्तकरः सद्यः स्नेहनो रोचनो हरेत् ।**
**विबन्धमेदः शोफार्शः शोफोदरकफामयान् ॥२७॥**
**तस्मादल्पगुणः शीतरसः संलेखनः स्मृतः ।**

उखुको पकाइएको रसबाट बनाइने अर्कलाई ‘पक्वरस सीधु’ र काँचो रसबाट बनाइने अर्कलाई ‘शीतरस सिधु’ भनिन्छ । (यिनमा) पक्वरस सीधु श्रेष्ठ हुन्छ । यसले स्वर र वर्णमा निखार लेराउँदछ तथा पाचनशक्ति र बल बढाउँदछ । यो सीधुले वातविकार र पित्तविकार गर्दछ तथा तुरुन्त शरीरमा चिल्लोको मात्रा पूरा गर्दछ । यो रुचिकर हुन्छ । यसले विबन्ध, बोसोविकार, सुजन, अल्काई, पेटको सुजन र कफजन्य रोग नाश गर्दछ । शीतरस सीधुमा योभन्दा कम गुण हुन्छ । विशेषतः यो लेखन गुणको हुन्छ ।

## आसव (अर्कविशेष)

**यदपक्वौषधाम्बुभ्यां सिद्धं मद्यं स आसवः ॥२८॥**

काँचो औषधी र पानीबाट बनाइने अर्कलाई 'आसव' भनिन्छ ।

**आसवस्य गुणा ज्ञेया बीजद्रव्यगुणैः समाः ।**

जुन द्रव्य (ओखती) को आसव बनाइन्छ त्यही द्रव्यको गुण त्यो आसवमा हुन्छ ।

## नयाँ र पुरानो मद्यको गुणदोष

**मद्यं नवमभिष्यन्दि त्रिदोषजनकं सरम् ॥२९॥**
**अहृद्यं बृंहणं दाहि दुर्गन्धं विशदं गुरु ।**
**जीर्णं तदेव रोचिष्णु कृमिश्लेष्मानिलापहम् ॥३०॥**
**हृद्यं सुगन्धि गुणवल्लघु स्रोतोविशोधनम् ।**

नयाँ मदिरा अभिष्यन्दी, त्रिदोष गराउने, मलमूत्रलाई तलतिर सार्ने, मुटुका लागि अहितकर, पौष्टिक, डाहकारक, गनाउने, विशद र पचाउन कठिन हुने गुणको हुन्छ । त्यही मदिरा पुरानो भए रुचिकर तथा कीरा, कफविकार र वातविकार नाशक हुन्छ । यो मुटुका लागि हितकर, सुगन्धी, गुनिलो, पचाउन सहज र रस बहने नसाहरू सफा गर्ने गुणको हुन्छ ।

## त्रिगुण अनुसार मदिराको असर

**सात्त्विकेगीतहास्यादि राजसे साहासादिकम् ॥३१॥**
**तामसे निन्द्यकर्माणि निद्राञ्च मदिराऽचरेत् ।**

मदिराले सत्वगुण भएका मानिसलाई गाउन र हँसाउन (मनोरञ्जन गर्न), रजोगुणी मानिसलाई साहसिला काम गर्न तथा तमोगुणी मानिसलाई निन्दनीय कर्म गर्न र सुताउन उत्प्रेरित गर्दछ ।

## मदिरा सेवनका नियम

**विधिना मात्रया काले हितैरन्नैर्यथाबलम् ॥३२॥**
**प्रहृष्टो यः पिबेन्मद्यं तस्य स्यादमृतं यथा ।**
**किन्तु मद्यं स्वभावेन यथैवान्नं तथा स्मृतम् ॥**
**अयुक्तियुक्तं रोगाय युक्तियुक्तं यथाऽमृतम् ॥३३॥**

जो व्यक्ति प्रसन्न मुद्रामा हितकर अन्नका साथ, आफ्नो बल हेरी (पचाउने क्षमता), उचित समयमा, विधिपूर्वक, मात्रा मिलाएर मदिरा सेवन गर्दछ, उसलाई मदिरा अमृतसमान गुनिलो हुन्छ । किन कि मदिरामा जुन अन्न वा द्रव्यले मदिरा बनेको हुन्छ त्यही अन्न वा द्रव्यको गुण हुन्छ । जसरी अन्न पनि विधिपूर्वक नखाइए रोग उत्पन्न गर्ने र विधिपूर्वक खाइए अमृत समान गुनिलो हुन्छ त्यसरी नै मदिरालाई पनि सम्झनु पर्दछ ।

### मदिराको गन्ध हटाउने उपाय

**मुस्तैलवालुगदजीरकधान्यकैला यश्चर्वयन्सदसि वाचमभिव्यनक्ति ।**
**स्वाभाविकं मुखजमुज्झति पूतिगन्धं गन्धञ्च मद्यलशुनादि भवञ्च नूनम् ॥३४॥**

नागरमोथे, टिमुर, कूट, जीरा, धनियाँ र अलैँची चपाएर जो मदिरा पिएको मानिस सभामा गएर कुराकानी गर्दछ, उसको मुखको दुर्गन्ध नाश हुन्छ । यसले मदिरा, लसुन आदिको गन्ध पनि कम हुन्छ ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे सन्धानवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको मदिरावर्गको मोहन प्रसाद सापकोटाद्धारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## अथ मधुवर्गः
## (मह वर्ग)

### महका संस्कृत पर्यायवाची नामहरू

**मधु माक्षिक माध्वीकक्षौद्र सारघमीरितम् ।**
**मक्षिकावरटीभृङ्गवान्तं पुष्परसोद्भवम् ॥१॥**

मधु, माक्षिक, माध्वीक, क्षौद्र, सारघ, मक्षिकावान्त, वरटीवान्त, भृङ्गवान्त र पुष्परसोद्भव : यी महका संस्कृत पर्यायवाची नामहरू हुन् ।

### महका गुण र अवगुण

**मधु शीतं लघु स्वादु रूक्षं ग्राहि विलेखनम् ।**
**चक्षुष्यं दीपनं स्वर्यं व्रणशोधनरोपणम् ॥२॥**
**सौकुमार्यकरं सूक्ष्मं परं स्रोतोविशोधनम् ।**
**कषायानुरसं ह्लादि प्रसादजनकं परम् ॥३॥**
**वर्ण्यं मेधाकरं वृष्यं विशदं रोचनं हरेत् ।**
**कुष्ठार्शःकास पित्तास्र कफ मेह क्लमकृमीन् ॥४॥**

महले शीतल गर्दछ । यो पचाउन हलुका, स्वादिलो, रुखो, ग्राहि (पेटभित्रको अग्निलाई बाल्ने, "आम" आदिलाई पचाउने, गर्मीकारक हुनाले गर्दा जलले पैदा गर्ने कफ आदि दोष, धातु र मललाई सोस्ने गुणको) र लेखन (रस आदि धातु वा वात आदि दोषलाई भित्रभित्रै सुकाएर वा घटाएर शरीरबाट बाहिर निकाली दिने गुणको) हुन्छ । मह आँखाका लागि लाभदायक, दीपन (आम वा खाएको कुरा पचेर बनेको रसलाई नपचाउने तर पाचकाग्निलाई बाल्ने गुणको), स्वरलाई उत्तम बनाउने, घाउ प्रशोधक, घाउ भर्ने, शरीरलाई कोमल

बनाउने, सूक्ष्म, रस बहने नसालाई अति नै शुद्ध पार्ने, पचेपछि टर्रो, मनलाई आनन्द दिने, अति नै प्रसाद जनक (गुनिलो), वर्णमा निखार लेराउने, दिमागको ग्रहण गर्ने क्षमता बढाउने, वीर्यवर्धक र विशद (सफा) हुन्छ । यसले कुष्ठ, अल्काई, खोकी, पित्तविकार, रक्तविकार, कफविकार, प्रमेह (पिसाबसँग मिसिई वीर्य अथवा शरीरका अरू धातु पातलिएर जाने विभिन्न रोगहरू), क्लम (कुनै परिश्रम नगर्दा पनि शरीर थाकेर मन खिन्न हुनु) र कीरा नाशक हुन्छ ।

**मेदस्तृष्णावमिश्वास हिक्काऽतीसारविड्ग्रहान् ।**
**दाहक्षतक्षयांस्तत्तु योगवाह्यल्पवातलम् ॥५॥**

महले बोसो, तिर्खा, वाकवाकी, दम, बाडुली, अतीसार, कब्जियत, डाह, घाउ र क्षयरोग नाश गर्दछ । यो योगवाही (शरीर भित्र गर्मी गर्ने पदार्थसँग मिलेर अति गर्मी गर्ने र ठण्डी गर्ने पदार्थसँग मिली अति ठण्डी गर्ने) र थोरै वातविकार गर्ने गुणको हुन्छ ।

### महका प्रकार

**माक्षिकं भ्रामरं क्षौद्रं पौत्तिकंछात्रमित्यपि ।**
**आर्घ्यमौद्दालकं दालमित्यष्टौ मधुजातयः ॥६॥**

माक्षिक, भ्रामर, क्षौद्र, पौत्तिक, छात्र, आर्घ्य, औद्दालक र दाल : यी महका प्रकार हुन् ।

### माक्षिक मह

**मक्षिकाः पिङ्गवर्णास्तु महत्यो मधुमक्षिकाः ।**
**ताभिः कृतं तैलवर्णं माक्षिकं परिकीर्त्तितम् ॥७॥**

तामा रङका मधुमक्षिका नामका ठूला माहुरीले जम्मा गर्ने तेलजस्तो वर्णको महलाई माक्षिक भनिन्छ ।

**माक्षिकं मधुषु श्रेष्ठं नेत्रामयहरं लघु ।**
**कामलाऽर्शक्षतश्वासकासक्षयविनाशनम् ॥८॥**

महमध्येमा माक्षिक मह श्रेष्ठ हुन्छ । यसले आँखाका रोग नाश गर्दछ । यो पचाउन सहज हुन्छ । यो महले कमलपित्त, अल्काई, घाउ, दम, खोकी र क्षयरोग ठिक गर्दछ ।

### भ्रामर मह

**किञ्चित्सूक्ष्मैः प्रसिद्धेभ्यः षट्पदेभ्योऽलिभिश्चितम् ।**
**निर्मलं स्फटिकाभं यत्तन्मधु भ्रामरं स्मृतम् ॥९॥**

छ खुट्टा हुने भमराभन्दा केही साना भमराबाट सङ्कलित स्फटिक जस्तो निर्मल महलाई भ्रामर मह भनिन्छ ।

**भ्रामरं रक्तपित्तघ्नं मूत्रजाड्यकरं गुरु ।**
**स्वादुपाकमभिष्यन्दि विशेषात्पिच्छिलं हिमम् ॥१०॥**

भ्रामर मह रक्तपित्त नाशक, पिसाब रोक्ने, पचाउन कठिन, पचेपछि स्वादिलो, अभिष्यन्दि तथा विशेष गरी लेस्याइलो र शीतल गर्ने गुणको हुन्छ ।

### क्षौद्र मह

**मक्षिकाःकपिलाः सूक्ष्माः क्षुद्राऽऽख्यास्तत्कृतं मधु ।**
**मुनिभिः क्षौद्र मित्युक्तंतद्वर्णात्कपिलं भवेत् ॥**
**गुणैर्माक्षिकवत्क्षौद्रं विशेषान्मेहनाशनम् ॥११॥**

कैलो वर्णका ससाना “क्षुद्रा” नामका माहुरीबाट सङ्कलित कैलो वर्णको महलाई मुनिजनले क्षौद्र मह भनी बताएका छन् । यो मह गुणमा पहिले बताइएको माक्षिक मह सरह हुन्छ । तर यो विशेषतः प्रमेह नाशक हुन्छ ।

### पैत्तिक मह

**कृष्णा या मशकोपमा लघुतराः प्रायो महापीडिका**
**वृक्षाणां पृथुकोटरान्तरगताः पुष्पासवं कुर्वते ।**
**तास्तज्ज्ञैरिह पुत्तिका निगदितास्ताभिः कृतं सर्पिषा**
**तुल्यं यन्मधु तद्वनेचरजनैः संकीर्तितं पौत्तिकम् ॥१२॥**
**पौत्तिकं मधु रूक्षोष्णं पित्तदाहास्रवातकृत् ।**
**विदाहि मेहकृच्छ्रघ्नं ग्रन्थ्यादिक्षतशोषि च ॥१३॥**

प्रायः लामखुट्टेजस्ता अति साना साना, काला, चिल्दा अति दुख्ने, रूखका टोड्कामा बस्ने खालका माहुरीलाई थाहा पाउनेहरू पुत्तिका भन्दछन् । यस्ता माहुरीबाट सङ्कलित महलाई बनमा बसोबास गर्ने आदिवासीहरू पैत्तिक मह भन्ने गर्दछन् । यो मह रुखो, गर्मी गर्ने तथा पित्तविकार, डाह, रक्तविकार र वात्तविकार गर्ने गुणको हुन्छ । यो विदाहि हुन्छ । यसले प्रमेह र कृच्छ्र नाश गर्दछ तथा शरीरका गाँठागुँठी र घाउलाई सुकाउँदछ ।

### छात्र मह

**वरटाः कपिलाः पीताः प्रायो हिमवतो वने ।**
**कुर्वन्ति च्छत्रकाकारं तज्जं छात्रं मधु स्मृतम् ॥**

**छात्रं कपिलपीतं स्यात्पिच्छिलं शीतलं गुरु ॥१४॥**
**स्वादुपाकं कृमिश्वित्ररक्तपित्तप्रमेहजित् ।**
**भ्रमतृण्मोहविषहृत्तर्पणञ्चगुणाधिकम् ॥१५॥**

धेरैजसो हिमालय पर्वततिरका जङ्गलमा हुने कैला र पहेँला रङ्का माहुरीले छाता आकारका घार बनाउँदछन् , यस्तो घारको महलाई छात्र मह भनिन्छ । यो मह कैलो र पहेँलो मिश्रित रङ्को, लेस्याइलो, शीतल गर्ने, पचाउन कठिन, पचेपछि गुलियो, तृप्तिदायक, धेरै गुनिलो तथा कीरा, सेतो कुष्ठरोग, रक्तपित्त, प्रमेह, पागलपन, तिर्खा, मोह र विषविकार नाशक हुन्छ ।

## आर्घ्य मह

**मधूकवृक्षनिर्यासं जरत्कार्वाश्रभोद्भवम् ।**
**स्रवत्यार्घ्यं तदाख्यातं श्वेतकं मालवे पुनः ॥१६॥**
**तीक्ष्णतुण्डास्तु याः पीता मक्षिकाः षट्पदोपमाः ।**
**अर्घ्यास्तास्तत्कृतं यत्तदार्घ्यमित्यपरे जगुः ॥१७॥**
**आर्घ्यं मध्वतिचक्षुष्यं कफपित्तहरं परम् ।**
**कषायं कटुकं पाके तिक्तञ्च बलपुष्टिकृत् ॥१८॥**

जरत्कारु नामका ऋषिको आश्रममा उम्रिएको महुवा नामक रूखको चोप वा रसलाई आर्घ्य भनिन्छ । मालवा देशतिर यसैलाई श्वेतक भन्दछन् । तर अन्य केही आचार्य भमराजत्रा पहेँला र तिखो मुख गरेका माहुरीलाई अर्घ्या र ती माहुरीले सङ्कलन गरेको महलाई आर्घ्य भन्ने गर्दछन् । यो मह आँखाका लागि अति नै लाभदायक हुन्छ । यसले विशेषतः कफविकार र पित्तविकार नाश गर्दछ । यो शुरुमा टर्रो र तीतो तथा पचेपछि पिरो हुन्छ । यसले बल र पुष्टि दिन्छ ।

## औद्दालक मह

**प्रायो वल्मीकमध्यस्थाः कपिलाः स्वल्पकीटकाः ।**
**कुर्वन्ति कपिलं स्वल्पं तत्स्यादौद्दालकं मधु ॥१९॥**
**औद्दालकं रुचिकरं स्वर्यं कुष्ठविषापहम् ।**
**कपायमुष्णमम्लञ्च कटुपाकञ्च पित्तकृत् ॥२०॥**

अक्सर गरी धमिराको गोलाभित्र बस्ने कैला रङ्का ससाना कीराले थोरै मात्रामा सङ्कलन गर्ने कैलो रङ्को महलाई औद्दालक भनिन्छ । यो मह रुचिकारक, स्वरमा निखार लेराउने, टर्रो र अमिलो, पचेपछि पिरो तथा पित्तविकार बढाउने गुणको हुन्छ ।

## दाल मह

**संस्रुत्य पतितं पुष्पाद्यत्तु पत्रोपरि स्थितम् ।**

**मधुराम्लकषायञ्च तद्दालं मधु कीर्त्तितम् ॥२१॥**
**दालं मधु लघु प्रोक्तं दीपनीयं कफापहम् ।**
**कषायानुरसं रूक्षं रुच्यं छर्दिप्रमेहजित् ॥**
**अधिकं मधुरं स्निग्धं बृंहणं गुरु भारिकम् ॥२२॥**

फूलबाट झरी पातमा परेको गुलियो, अमिलो र टर्रो मिसिएको स्वादको पुष्परसलाई दाल भनिन्छ । पचेपछिको रस पचाउन हलुका हुन्छ । यो दीपन र कफनाशक हुन्छ । यसको पचेपछिको रसको स्वाद टर्रो हुन्छ । दाल रुखो, रुचिकर तथा वाकवाकी र प्रमेह नाशक हुन्छ । यो धेरै गुलियो, चिल्लो, पौष्टिक र तौलमा गह्रौं हुन्छ ।

## ताजा र पुरानो मह

**नवं मधुभवेत्पुष्ट्यै नातिश्लेष्महरं सरम् ।**
**पुराणं ग्राहकं रूक्षं मेदोघ्नमतिलेखनम् ॥२३॥**

ताजा मह पौष्टिक, थोरै कफनाशक र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ । पुरानो मह ग्राही, रुखो, बोसो नाशक र अति लेखन गुणको हुन्छ ।

**मधुनः शर्करायाश्च गुडस्यापि विशेषतः ।**
**एकसंवत्सरे वृत्ते पुराणत्वं स्मृतं बुधैः ॥२४॥**

विशेष गरी मह, चिनी र सखरलाई बनेको एक वर्ष बितेपछि विद्वानहरू पुरानो भन्ने गर्दछन् ।

## मह खाने नियम

**विषपुष्पादपि रसं सविषा भ्रमरादयः ।**
**गृहीत्वा मधु कुर्वन्ति तच्छीतं गुणवन्मधु ॥२५॥**
**विषान्वयात्तदुष्णन्तु द्रव्येणोष्णेन वा सह ।**
**उष्णार्त्तस्योष्णकाले च स्मृतं विषसमं मधु ॥२६॥**

विषालु खालका माहुरी आदि विषालु फूलबाट रस लिएर मह बनाउने गर्दछन्, यसैले शीतल मह नै गुणकारी हुन्छ । विषालु फूलसँग सम्बन्ध गाँसिएका कारण महलाई गर्मीगर्ने पदार्थमा मिसाएर खाए, गर्मी महिनामा खाए वा गर्मीका कारण रोग लागेका व्यक्तिले खाए विष समान हुन पुग्दछ ।

## मैन

**मयनं तु मधूच्छिष्टं मधुशेषं च सिक्थकम् ।**
**मध्वाधारो मदनकं मधूषितमति स्मृतम् ॥२७॥**

**मदनं मृदु सुस्निग्धं भूतघ्नं व्रणरोपणम् ।**
**भग्नसन्धानकृद्वातकुष्ठवीसर्परक्तजित् ॥२८॥**

मयन, मधूच्छिष्ट, मधुशेष, सिक्थक, मध्वाधार, मदनक र मधूषित : यी मैनका संस्कृत पर्यायवाची नामहरू हुन् । मैन नरम, चिल्लो, भूतबाधा नाशक, ग्रहबाधा नाशक, घाउ भर्ने, भाँचिएका हाड जोड्ने तथा वातविकार, कुष्ठ, वीसर्प र रक्तविकार नाश गर्ने गुणको हुन्छ ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे मधुवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको महवर्गको मोहन प्रसाद
सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥

## ॥ अथ इक्षुवर्गः ॥
## (उखुवर्ग)

### उखुका पर्यायवाची नाम र गुण

**इक्षुर्दीर्घच्छदः प्रोक्तस्तथा भूरिरसोऽपि च ।**
**गुडमूलोऽसिपत्रश्च तथा मधुतृणः स्मृतः ॥१॥**
**इक्षवो रक्तपित्तघ्ना बल्या वृष्याः कफप्रदाः ।**
**स्वादुपाकरसाः स्निग्धाः गुरवो मूत्रला हिमाः ॥२॥**

इक्षु, दीर्घच्छद, भूरिरस, गुडमूल, असिपत्र र मधुतृण : यी उखुका संस्कृत पर्यायवाची नामहरू हुन् । उखुले रक्तपित्त नाश गर्दछ । यो बलदायक, वीर्यवर्धक र कफविकार गर्ने गुणको हुन्छ । यो शुरुमा र पचेपछि पनि गुलियो हुन्छ । उखु चिल्लो, पचाउन कठिन, धेरै पिसाब लगाउने र शीतल गर्ने गुणको हुन्छ ।

### उखुका जात र गुण

**पौण्ड्रको भीरुकश्चापि वंशकः शतपोरकः ।**
**कान्तारतापसेक्षुश्च काण्डेक्षुः सूचिपत्रकः ॥३॥**
**नैपालो दीर्घपत्रश्च नीलपोरोऽथ कोशकृत् ।**
**मनोगुप्ता च इत्येता जातयस्तत्र कीर्त्तिताः ॥४॥**

पौण्ड्रक, भीरुक, वंशक, शतपोरक, कान्तार, तापसेक्षु, काण्डेक्षु, सूचिपत्रक, नैपाल, दीर्घपत्र, नीलपोर, कोशकृत् र मनोगुप्ता : यिनलाई उखुका जात भनी बताइएको छ ।

**वातपित्तप्रशमनो मधुरो रसपाकयोः ।**
**सुशीतो वृंहणो बल्यः पौण्ड्रको भीरुकस्तथा ॥५॥**

'पौण्ड्रक' र 'भीरुक' जातका उखुले वातविकार र पित्तविकार शान्त पार्दछ । यी उखु शुरुमा र पचेपछि पनि गुलिया हुन्छन् । यिनले शीतल गर्दछन् । यी पौष्टिक र बलदायक हुन्छन् ।

**कोशकारो गुरुः शीतो रक्तपित्तक्षयापहः ।**

'कोशकार' जातको उखु पचाउन कठिन, शीतल गर्ने तथा रक्तपित्त र क्षयरोग नाशक हुन्छ ।

**कान्तारेक्षुर्गुरुर्वृष्यः श्लेष्मलो वृंहणः सरः ॥६॥**

'कान्तार' जातको उखु पचाउन कठिन, वीर्यवर्धक, कफविकार गर्ने, पौष्टिक र मलमूत्रलाई तलतिर सार्ने गुणको हुन्छ ।

**दीर्घपोरः सुकठिनः सक्षारो वंशकः स्मृतः ।**

'वंशक' जातको उखु लामालामा आँख्ला भएको, अति साह्रो र नुनिलो हुन्छ ।

**शतपर्वा भवेत्किञ्चित्कोशकारगुणान्वितः ॥७॥**
**विशेषात्किञ्चिदुष्णश्च सक्षारः पवनापहः ।**

'शतपोरक' जातको उखुमा अन्य जातकोभन्दा बढी आँख्ला हुन्छ । यसका केही गुण कोशकार जातको उखुकै जस्ता हुन्छन् । यो विशेष गरी केही गर्मी गर्ने, नुनिलो र वातविकार नाशक हुन्छ ।

**तापसेक्षुर्भवेन्मृद्वी मधुरा श्लेष्मकोपनी ॥८॥**
**तर्पणी रुचिकृच्चापि वृष्या च बलकारिणी ।**

'तापसेक्षु' जातको उखु कमलो, गुलियो, कफविकार बढाउने, तृप्तिदायक, रुचिकर, वीर्यवर्धक र बलदायक हुन्छ ।

**एवं गुणैस्तु काण्डेक्षुः स तु वातप्रकोपणः ॥९॥**

'काण्डेक्षु' जातको उखुमा तापसेक्षुकै गुण हुन्छ । विशेष गरी यसले धेरै वातविकार बढाउँदछ ।

**सूचीपत्रो नीलपोरो नैपालो दीर्घपत्रकः ।**
**वातलाः कफपित्तघ्नाः सकषाया विदाहिनः ॥१०॥**

'सूचीपत्र', 'नीलपोर', 'नैपाल' र 'दीर्घपत्रक' जातका उखु वातविकार गर्ने, कफविकार तथा पित्तविकार नाश गर्ने, टर्रा र विदाही (पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्ने बनाउने) गुणका हुन्छन् ।

**मनोगुप्ता वातहरी तृष्णाऽऽमयविनाशिनी ।**

**सुशीता मधुराऽतीव रक्तपित्तप्रणाशिनी ॥११॥**

'मनोगुप्ता' जातको उखु वातविकार र तिर्खा रोग नाशक, शीतल गर्ने, गुलियो तथा धेरै मात्रामा रक्तपित्त नाशक हुन्छ ।

## कलिलो आदि उखुको गुण

**बालइक्षुः कफं कुर्य्यान्मेदोमेहकरश्च सः ।**
**युवा तु वातहृत् स्वादुरीषत्तीक्ष्णश्च पित्तनुत् ॥१२॥**
**रक्तपित्तहरो वृद्धः क्षतहृद् बलवीर्यकृत् ।**

कलिलो उखु कफविकार गर्ने, बोसोविकार गर्ने र प्रमेह रोग निकाल्ने गुणको हुन्छ । हुर्केको उखु वातविकार नाशक, स्वादिलो, केही तिक्खर र पित्तविकार नाशक हुन्छ । छिप्पिएको उखुले रक्तपित्त र घाउ ठिक गर्नुका साथै बल र वीर्य बढाउँदछ ।

## उखुमा हुने रस

**मूले तु मधुरोऽत्यर्थं मध्येऽपि मधुरः स्मृतः ॥१३॥**
**अग्रे ग्रन्थिषु विज्ञेय इक्षुः पटुरसोजनैः ।**

उखुको फेदतिरको भाग अति गुलियो, बीचको भाग गुलियो र टुप्पोतिरको भाग नुनिलो हुन्छ भनी जान्नू ।

## दाँतले खाइने उखुका गुण

**दन्तनिष्पीडितस्येक्षो रसः पित्तास्रनाशनः ॥१४॥**
**शर्करासमवीर्यः स्यादविदाही कफप्रदः ।**

दाँतले टोकेर चुसिएको उखुको रसले पित्तविकार र रक्तविकार नाश गर्दछ । यो सक्खर सरह वीर्यवर्धक, थोरै विदाही (पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्ने बनाउने) र कफविकार गर्ने गुणको हुन्छ ।

## कोलमा पेलिएको उखुको गुण

**मूलाग्रजन्तुग्रन्थ्यादिपीडनान्मलसङ्करात् ॥१५॥**
**किञ्चित्कालविधृत्या च विकृतिं याति यान्त्रिकः ।**
**तस्माद्विदाही विष्टम्भी गुरुः स्याद्यान्त्रिको रसः ॥१६॥**

उखुको फेद, बीचको भाग, आँख्ला आदि कोलमा पिसिँदा त्यसमा मल पनि मिसिने हुनाले कोलमा पेलिएको उखुको रस केही समय पछि बिग्रन्छ । यसैले यो रस विदाही (पित्तप्रकोपले हात, गोडा, छाती आदि पोल्ने बनाउने), विष्टम्भी (दिसा रोक्ने वा कब्जियत गर्ने) र पचाउन कठिन हुने गुणको हुन्छ ।

## उखुको बासी रस

**रसः पर्युषितो नेष्टो ह्यम्लो वातापहो गुरुः ।**
**कफपित्तकरः शोषी भेदनश्चातिमूत्रलः ॥१७॥**

उखुको बासी रस हितकर हुँदैन । यो अमिलो, वातविकार नाशक, पचाउन कठिन, कफविकार पित्तविकार गर्ने, शरीर सुकाउने, दिसा खुकुल्याउने र धेरै पिसाब लगाउने गुणको हुन्छ ।

## उखुको पकाइएको रस

**पक्वो रसो गुरुः स्निग्धः सुतीक्ष्णः कफवातनुत् ।**
**गुल्मानाहप्रशमनः किञ्चित्पित्तकरः स्मृतः ॥१८॥**

पकाइएको उखुको रस पचाउन कठिन, चिल्लो, तिक्खर, कफविकार र वातविकार नाशक, गुल्म (गानुगोला) र आनाह (पचेर अथवा नपची दूषित भएको मलमूत्र पेटमा रोकिएर हुने रोग) शान्त पार्ने एवं थोरै पित्तविकार गर्ने गुणको हुन्छ ।

## उखुको रसले बनाइएका पदार्थ

**इक्षोर्विकारास्तृड्दाहमूर्छापित्तास्रनाशनः ।**
**गुरवो मधुरा बल्याः स्निग्धा वातहराः सराः ॥१९॥**
**वृष्या मोहहराः शीता वृंहणा विषहारिणः ।**

उखुको रसले बनेका पदार्थले तिर्खा, डाह, बेहोसी, पित्तविकार र रक्तविकार नाश गर्दछ । यी पदार्थ पचाउन कठिन, गुलिया, बलदायक, चिल्ला, वातविकार नाशक र मलमूत्र तलतिर सार्ने गुणका हुन्छन् । यी वीर्यवर्धक, मोहनाशक, शीतल गर्ने, पौष्टिक र विषविकार नाशक हुन्छन् ।

## फाणित

**इक्षो रसस्तु यः पक्वः किञ्चिद्गाढो बहुद्रवः ॥२०॥**
**स एवेक्षुविकारेषु ख्यातः फाणितसंज्ञया ।**
**फाणितं गुर्वभिष्यन्दि वृंहणं कफशुक्रकृत् ॥२१॥**
**वातपित्तश्रमान्हन्ति मूत्रवस्तिविशोधनम् ।**

थोरै बाक्लो र पानीको भाग बढी भएको पकाएको उखुको रस (वा त्यसबाट बनाइएको पदार्थ) लाई 'फाणित' भनिन्छ । यो पचाउन कठिन, अभिष्यन्दि, पौष्टिक, कफविकार र शुक्र वृद्धि गर्ने तथा वातविकार, पित्तविकार र थकाई नाश गर्ने गुणको हुन्छ । यसले मूत्र र तल्लो पेटलाई प्रशोधन गर्दछ ।

## मत्स्यण्डी

**इक्षो रसो यः सम्पक्वो घनः किञ्चिद्द्रवान्वितः ॥२२॥**
**मन्दं यत्स्यन्दते तस्मात्तन्मत्स्यण्डी निगद्यते ।**
**मत्स्यण्डी भेदिनी बल्या लघ्वी पित्तानिलापहा ॥२३॥**
**मधुरा बृंहणी वृष्या रक्तदोषापहा स्मृता ।**

उखुको रस कम र गाढा भाग बढी हुने गरी पाकेको अवस्थालाई 'मत्स्यण्डी' भनिन्छ । मन्द मन्द तरिकाले रस खस्ने हुनाले यसलाई 'मत्स्यण्डी' भनिएको हो ।यो दिसा खुकुल्याउने, बलकारक, पचाउन सहज, पित्तविकार र वातविकार नाशक, गुलियो, पौष्टिक, वीर्यवर्धक र रक्तविकार नाशक हुन्छ भनिएको छ ।

## सखर

**इक्षो रसो यः सम्पक्वो जायते लोष्टवद् दृढः ॥२४॥**
**स गुडो गौडदेशे तु मत्स्यण्डयेव गुडो मतः ।**
**गुडो वृष्यो गुरुः स्निग्धो वातघ्नो मूत्रशोधनः ॥२५॥**
**नातिपित्तहरो मेदःकफकृमिबलप्रदः ।**

पकाउँदा पकाउँदा बाक्लो भएको र डल्ला पार्दा माटाको डल्लो जस्तो साह्रो हुने उखुको रसलाई 'गुड ( सखर)' भनिन्छ । गौड देशमा भने मत्स्यण्डीलाई नै गुड मान्दछन् । गुड वीर्यवर्धक, पचाउन कठिन, चिल्लो, वातविकार नाशक र मूत्र प्रशोधक हुन्छ । यसले धेरै वित्तविकार नाश पनि गर्दैन । यसले बोसो, कफ, कीरा र बल उत्पन्न गर्दछ ।

## पुरानो सखर

**गुडो जीर्णो लघुः पथ्योऽनभिष्यन्द्यग्निपुष्टिकृत् ॥२६॥**
**पित्तघ्नो मधुरो वृष्यो वातघ्नोऽसृक्प्रसादनः ।**

पुरानो सखर पचाउन सहज, पथ्य, अनभिष्यन्दि, पाचकाग्नि वर्धक, पुष्टिदायक, पित्तविकार नाशक, गुलियो, वीर्यवर्धक, वातविकार नाशक र रगत प्रशोधन गर्ने गुणको हुन्छ ।

## नयाँ सखर

**गुडो नवः कफश्वासकासकृमिकरोऽग्निकृत् ॥२७॥**

नयाँ सखरले कफविकार, दम, खोकी र कीरा बढाउँदछ तर जठराग्निलाई बाल्दछ ।

## सखर खाने विधि

**श्लेष्माणमाशु विनिहन्ति सहार्द्रकेण पित्तं निहन्ति च तदेव हरीतकीभिः ।**
**शुण्ठ्या समं हरति वातमशेषमित्थं दोषत्रयक्षयकराय नमो गुडाय ॥२८॥**

सखरलाई अदुवासँग खानाले तुरुन्त कफविकारलाई नाश गर्दछ । हर्रोसँग खानाले पित्तविकारलाई नाश गर्दछ । सुठोसँग खानाले सबै खालका वातविकार हटाउँदछ । यस्तो त्रिदोष नाशक सखरलाई नमस्कार छ ।

## खण्ड

**खण्डन्तु मधुरं वृष्यं चक्षुष्यं बृंहणं हिमम् ।**
**वातपित्तहरं स्निग्धं बल्यं वान्तिहरं परम् ॥२९॥**

'खण्ड (खाँड, पूरा सफा नगरिएको रातो रातो चिनी, काँचो चिनी) गुलियो, वीर्यवर्धक, आँखाका लागि हितकर, पौष्टिक, शीतल गर्ने, वात तथा पित्तविकार नाशक, चिल्लो, बलदायक र धेरै नै बाकवाकी नाशक हुन्छ ।

## चिनी

**खण्डन्तु सिकतारूपं सुश्वेतं शर्करा सिता ।**
**सिता सुमधुरा रुच्या वातपित्तास्रदाहहृत् ॥३०॥**
**मूर्च्छाच्छर्दिज्वरान्हन्ति सुशीता शुक्रकारिणी ।**

बालुवाजस्तै दानेदार र सेतो खाँडलाई चिनी (शर्करा वा सिता) भनिन्छ । चिनी गुलियो, रुचिकारक तथा वातविकार, पित्तविकार, रक्तविकार, डाह, बेहोसी, वाकवाकी, र जरो नाशक हुन्छ । यसले अति नै शीतल गर्दछ र शुक्र उत्पन्न गर्दछ ।

## फूलको रसको चिनी र मिस्री

**भवेत्पुष्पसिता शीता रक्तपित्तहरी लघुः ॥३१॥**
**सितोपला सरा लघ्वी वातपित्तहरी हिमा ।**

फूलबाट बनाइएको चिनी शीतल गर्ने, रक्तपित्त नाशक र पचाउन सहज हुन्छ । मिस्री (सितोपला) मलमूत्र तलतिर सार्ने, पचाउन सहज, वात तथा पित्तविकार नाशक र शीतल गर्ने गुणको हुन्छ ।

## महको चिनी

**मधुजा शर्करा रूक्षा कफपित्तहरा गुरुः ॥**
**छर्द्यतीसारतृड्दाहरक्तहृत्तुवरा हिमा ॥३२॥**

महबाट बनाइने चिनी रुखो, कफविकार तथा पित्तविकार नाशक, पचाउन कठिन तथा वाकवाकी, अतीसार, तिर्खा, डाह र रक्तविकार नाशक हुन्छ । यसले शीतल गर्दछ ।

## चिनी आदिका गुण

**यथा यथैषां नैर्मल्यं मधुरत्वं यथा यथा ।**
**स्नेहलाघवशैत्यादि सरत्वञ्च तथा तथा ॥३३॥**

जतिजति यी चिनी, सखर आदिमा निर्मलता र मिठास बढी बढी हुन्छ उती उती यिनमा चिल्लोपन, पचाउन सहज हुने गुण, शीतल गर्ने गुण र मलमूत्र तलतिर सार्ने गुण अधिक हुन्छ ।

**॥ इति श्रीमिश्रलटकन तनय श्रीमिश्रभाव विरचिते भावप्रकाशे मिश्रप्रकरणे इक्षुवर्गः समाप्तः ॥**
॥ श्रीमिश्रभावले लेखेको भावप्रकाश निघण्टुमा रहेको उखुवर्गको मोहन प्रसाद
सापकोटाद्वारा नेपालीमा गरिएको भावानुवाद समाप्त भएको छ ॥



## ॥ अनेकार्थवर्गः ॥
## ॥ अथ द्व्यर्थानि नामानि ॥
## (दुई अर्थ बुझाउने नामहरू)

(१) अग्निः - चित्रकः (चितु), भल्लातश्च (भलायो) । (२) अग्निमुखी :- भल्लातकी (भलायो), लाङ्गली च ( गुन्या-मधुरा) । (३) अग्निशिखम् :- कुङ्कुमं (केसर), कुसुम्भश्च (कुसुम) । (४) अङ्गारवल्ली :- भार्ङ्गी (चिण्डे), गुञ्जा च (रातीगेडी) । (५) अजशृङ्गी :- मेषशृङ्गी (भेडासिङ्गी), कर्कटशृङ्गी च (कर्कटशृङ्गी) । (६) अञ्जनम् :- स्रोतोञ्जनम् (कालो गाजल), सौवीरञ्च (सेतो गाजल) । (७) अपराजिता :- विष्णुक्रान्ता (अपराजिता), शालिपर्णी च (?) । (८) अमोघा :- विडङ्गं (वायविडङ्ग), पाटला च (पाडरी) । (९) अमृणालम् :- लामज्जकम् (लामज्जक), उशीरञ्च (खसको जरा) । (१०) अम्बुजः - कमलम् (कमल), इज्जलश्च (भुइँबेत) । (११) अरुणम् :- मञ्जिष्ठा (मजिठो), अतिविषा च (उत्तीस) । (१२) अश्मन्तकः - अम्ललोणिका (चरीअमिलो), कोविदारञ्च (कोइरालो) । (१३) आस्फोता :- अपराजिता, सारिवा च (सेतो अनन्तमूल) । (१४) उग्रगन्धा :- वचा ( बोजो), यवानी च (ज्वानो) । (१५) उत्तमा :- त्रिफला, सर्वतोभद्रा च (खमारी) । (१६) उदुम्बरः - जन्तुफलं (डुम्री), ताम्रञ्च (तामा) । (१७) ऐन्द्री :- इन्द्रवारुणी (ऐरेलु), इन्द्राणी च (अलैंची ?) । (१८) कटम्भरा :- कटका (पिर्रे ?), श्योनाकश्च (टटेलो) । (१९) कठिल्लकः - कारवेल्ल (करेलो), रक्तपुनर्नवा च (रातो पुनर्नवा) । (२०) कणा :- पिप्पली (पिप्ला), जीरकञ्च (सेतो जीरा) । (२१) कण्टकाढ्या :- कुब्जकः (बाह्रमासे गुलाफ), शाल्मली च (सिमल) । (२२) कतकम् :- बिडलवणम् (बिरे नुन ?), निर्मलीफलं च (निर्मली) । ( २३) कर्कशः - काम्पिल्यः (सिँदुरे वृक्ष), कासमर्दश्च (ठूलो ताप्रे) । (२४) कब(व)री :- बर्बरी (बाबरी), हिङ्गुपत्री

च (हिङ्गुपत्री) । (२५) कुटन्नटः - श्योनाकः (टटेलो), कैवर्तीमुस्तञ्च (सेतो मोथे) । (२६) कुण्डली :- गुडूची (गुर्जो), कोविदारश्च (कोइरालो) । (२७) कुनटी :- धनिका (धनियाँ), मनःशिला च (मनशिला) । (२८) कुमारी :- घृतकुमारिका (घिउकुमारी), शतपत्री च (गुलाफ ?) । (२९) कुम्भिका :- कट्फलः (काफल), वारिपर्णी च (जलकुम्भी) । (३०) कुलकः - पटोल (पर्बल), कुपीलुश्च (कुचिला) । (३१) कृमिघ्नः - विडङ्गः (वायविडङ्ग), हरिद्रा च (हलेदो) । (३२) कोशातकी :- महाकोशातकी (घिरौंलो), राजकोशातकी च (पाटे घिरौंलो) । (३३) गण्डीरः - गण्डारी (सागविशेष), मञ्जिष्ठा च (मजिठो) । (३४) गन्धफली :- प्रियङ्गुः ( दयाँलो), चम्पककलिका च (चाँपको कोपिला) । (३५) गान्धारी :- दुरालभा (लहरे दुरालभा), गन्धपलाशी च (कपुरहलेदो) । (३६) गोलोमी :- श्वेतदूर्वा (सेतो दूबो), वचा च (बोजो) । (३७) घोण्टा :- पूगः (सुपारी), बदरी च (बयर) । (३८) चन्द्रहासा :- गुडूची (गुर्जो), लक्ष्मणा च (सेतो फूल फुल्ने कण्टकारी) । (३९) चर्मकषा :- शातला (हात्तीकाने), मांसरोहिणी च (मांसरोहिणी) । (४०) चित्रकः - एरण्डः (अँडिर :), अनलनामा च (चितु) । (४१) चित्रा :- इन्द्रवारुणी (ऐरेलु), बृहदन्ती च (ठूलो अजयपाल) । (४२) तालपर्णी :- मुशली (मुसलीकन्द ?), मुरा च (कालो जटामसी ?) । (४३) तिलपर्णम् :- रक्तचन्दनम् (रक्तचन्दन), ग्रन्थिपर्णं च (भेडेकुरो ?) । (४४) तुण्डीकेरी :- कार्पासी (कपास), बिम्बी च (गोलकाँक्री) । (४५) तुवरी :- सौराष्ट्री (गोपीचन्दन), आढकी च (रहर) । (४६) तेजनः - शरः (ढड्डी), वेणुश्च (बाँस) । (४७) तेजनी :- तेजस्वती (तेजस्विनी), मूर्वा च (मरुई लहरो) । (४८) दन्तशठः - जम्बीरः (ज्यामिर), कपित्थश्च (कैथ) । (४९) दन्तशठाः - अम्लिका (अमिली), चाङ्गेरी च (चरीअमिलो) । (५०) द्राविडी :- शटी (कचूर), सूक्ष्मैला च (सुकुमेल) । (५१) दीप्यकः - यवानी (ज्वानो), अजमोदा (जङ्गली ज्वानुविशेष) च । (५२) दीर्घमूलः - यवासः (सिस्नु), शालिपर्णी च (शालपर्णी) । (५३) देवी :- मूर्वा (मरुई लहरो), स्पृक्का च (कपुरपाती) । ( ५४) धान्यम् :- धान्याकं (धनियाँ), शाल्यादि च (मार्सी आदि धान वा अनाज) । (५५) धीरा :- गुडूची ( गुर्जो), क्षीरकाकोली च (दूधे कल्छे लहरो) । (५६) नटः - श्योनाकः (टटेलो), अशोकश्च (अशोक) । (५७) नन्दिवृक्षः -अश्वत्थभेदः (लहरेपीपल), तूणिश्च (टुनी) । (५८) नागिनी :- ताम्बूली (पान), नागपुष्पी च ( कुकुरडाइनु) । (५९) पद्मा :- पद्मचारिणी (थलकमल), भार्ङ्गी च (चिण्डे) । (६०) पयः - क्षीरम् (दूध), उदकञ्च (पानी) । (६१) परिव्याधः - कर्णिकारः (काठे चाँप), जलवेतसश्च (पानीबेत) । (६२) पारावतपदी :- ज्योतिष्मती (मालकागुनु), काकजङ्घा च (काकजङ्घा) । (६३) पिच्छिला :- शाल्मली (सिमल), शिंशपा च ( सिसौ) । (६४) प्रियङ्गु :- फलिनी (दयाँलो), कङ्गुश्च (कागुनु) । (६५) पीलुपर्णी :- मूर्वा (मरुई लहरो), बिम्बी च (गोलकाँक्री) । (६६) पुष्पफलः - कपित्थः (कैथ), कूष्माण्डश्च (कुभिन्डो) । (६७) पोटगलः - नलः ( नर्कट), काशश्च (काँस) । (६८) बालपत्रः - खदिरः (खयर), यवासश्च (सिस्नु ?) । (६९) ब्राह्मणी :- भार्ङ्गी ( चिण्डे), स्पृक्का च (कपुरपाती) । (७०) भृङ्गः - भृङ्गराजः (भृङ्गीराज), त्वक् च (चिनिया तेजपात वा बेतलौरी) । (७१) मधुरः - जीवक (जीवक), जीवनीयगणश्च (जीवनीय गण) । (७२) मधूलिका :- मूर्वा (मरुई लहरो), जलयष्टी (जल-जेठीमधु) च । (७३) मन्दारः - श्वेतार्कः (सेतो आँक), महानिम्बश्च (बकाइनु ?) । (७४) मरुवकः - फणिज्जकः (मरुवा), पिण्डीतकश्च (मैदल) । (७५) मृदुरेचनी :-त्रिवृत् (सेतो निसोध), मार्कण्डिका च (बन परबर) । (७६) मोचा :- कदली (केरा), शाल्मलिश्च (सिमल) । (७७) यवफलः - कुटजः (ठूलोकुरो), वंशश्च (बाँस) । (७८) यक्षधूपः - सरलनिर्यासः (सल्लाको खोटो ?), रालश्च (सालधूप) । (७९) यज्ञियः - खदिरः (खयर), पलाशश्च (पलाँस) । (८०) रक्तपुष्पः - रक्तार्क (रातो आँक), कन्दुरी च (?) । (८१) रक्तफला :- स्वर्णवल्ली (सुनटिकी), वटश्च (बर) । (८२) रक्तबीजः - अरिष्टकः (रिट्ठो), कन्दुरी च (?) । ( ८३) राजपुत्रिका :- रेणुका (शीतलचिनी), जाती च (चमेली) । (८४) राजादनम् :- क्षीरिका (खिर्नी), प्रियालश्च (चिरौंजी) । (८५) रुचकम् :- सौवर्चलं (सौंचर नुन), बीजपूरकञ्च (बिमिरो) । (८६) रुहा :- दूर्वा ( दूबो), मांसरोहिणी च (मांसरोहिणी) । (८७) रोचनः - कम्पिल्लः (सिंदुरे वृक्ष), रोचना च (गोरोचन) । (८८) रोचना :- गोरोचना (गोरोचन), रक्तकह्लारश्च (रातो सौगन्धिक कमल) । (८९) लोणिका :- लोणीशाकं (?), चाङ्गेरीशाकञ्च (चरीअमिलाको साग) । (९०) लोहद्रावणी :- गण्डदूर्वा (घोडेदूबो), अम्लवेतसश्च (पदमचाल्नु ?) । (९१) वनस्पतिः - वटः (बर), नन्दिवृक्षश्च (लहरेपीपल) । (९२) वरतिक्तकः - पाठा (गानेगुर्जो), पर्पटश्च

